

॥ श्रीः ॥

# मनुस्मृतिः

सङ्कलन तथा भावानुवाद : मोहन प्रसाद सापकोटा

(भाषा : संस्कृत र नेपाली)

# दुई शब्द

पूर्वीय दर्शनको एक महत्वपूर्ण ग्रन्थ हो यो । सबभन्दा बढी विवादास्पद र सबभन्दा बढी पढिएको स्मृतिग्रन्थ पनि यही नै हो । यसमा उल्लेखित वर्ण, जात र लैङ्गिक विषयका कुरा नै सर्वाधिक विवादमा पर्ने गर्दछन् । मनुले सबभन्दा पहिले पृथ्वीमा सृष्टि भएको मानिस मै हुँ भनेका छन् । पहिले आफूले सृष्टिका केही कुरा बताएर त्यसपछि उपस्थित ऋषिमुनिलाई बाँकी धर्मशास्त्र बताउने जिम्मा उनले आफ्ना शिष्य एवं पुत्र भृगुलाई दिएको पाइन्छ ।

विवादरहीत न कुनै व्यक्ति हुन्छ न कुनै मत, त्यसमाथि धर्मशास्त्र निर्विवाद हुने झन् कुरै भएन । दृष्टि आआफ्ना हुन्छन्, छिद्रान्वेषी भए दोष कता छ भनेर खोजि गर्दछ भने तटस्थ विद्वान रहेछ भने गुण कता छ भनेर खोज्दछ । हरेक विधाका हरेक ग्रन्थ यसैगरी नै पढिन्छन् र टीकाटिप्पणी गरिन्छन् ।

कानुन समय सापेक्ष हुन्छ । नेपालकै कुरा गर्ने हो पनि कहिले अति कठोर, कहिले ठिकै त कहिले अति छाडा कानुन प्रचलनमा लेराइएका दृष्टान्त हामीले देख्यौं र भोग्यौं पनि । अहिलेको युगमा त मानिस कता कमजोरी छ भन्दै दुलो खोज्दै अपराध गरिरहने गर्दछ भने आजभन्दा हजारौं वर्ष अधिको समाजका लागि बनेको यो धार्मिक कानुनका बारेमा अहिलेको आँखाले मात्र हेर्नु मेरा विचारमा सही हुँदैन ।

हरेक शास्त्र फलाम जस्तै हुन्छ कसैले यसलाई पगालेर कुटो, कोदालो आदि बनाउँदछन् त कसैले खुकुरी, तरबार आदि बनाउँदछन् । मलाई भने हाम्रा हरेक शास्त्रहरू चिनी कारखाना र मदिरा कारखाना दुवैले खोज्दै हिँड्ने उखुजस्तै लाग्दछन् ।



यो ग्रन्थमा समाजका प्रायः सबै पक्षका बारेमा धेरै कुरा लेखिएका छन् । कुनै विषय अहिले पनि सान्दर्भिक छन्, कुनै विषय अहिले सान्दर्भिक छैनन् कि जस्ता लाग्दछन् । कुनै विषय भने मानवको अस्तित्व रहेसम्म सान्दर्भिक भइरहने खालका पनि छन् ।

मैले यो ग्रन्थ सङ्कलन र भावानुवाद गर्ने क्रममा मूलरूपमा नौ जना विद्वानहरुको संस्कृत भाषामा व्याख्या समावेश भएको ग्रन्थलाई आधार बनाएको छु । थप सहयोगका लागि भाष्यकार तुलसी राम शास्त्री तथा टीकाकार आचार्य वादरायणको पुस्तकलाई लिएको छु ।

ग्रन्थकारबाट "यस ग्रन्थमा यति श्लोक छन्" भनेर नलेखिएका प्रायः सबै प्राचीन ग्रन्थमा बेलाबेलामा श्लोक, सूत्र आदि थपघट हुने गर्दछन् र मनुस्मृति पनि यस मामिलामा अछुतो छैन । जतिसुकै आलोचना खेपे पनि यो पूर्वीय दर्शनको एक आधार ग्रन्थ थियो, छ र रहिरहनेछ ।

अन्य ग्रन्थ र परिवेशसँग तुलना गर्दै यसका अनेक विद्वानले अनेक थरी व्याख्या, आलोचना र समालोचना गरेका छन् । मैले भने अपवादमा बाहेक यस ग्रन्थमा जे लेखिएको छ त्यसलाई मात्र पस्कने जमर्को गरेको छु । व्याकरण, भाषाशैली आदिका दृष्टिले यस पुस्तकमा अनेकौं भूल भएका हुन सक्दछन् । गुरुजन तथा अन्य पाठक वृन्दबाट सुधार्न सहयोग हुने नै छ ।

**-sapkotamps731@gmail.com**

## विषयसूचि

# श्रीगणेशाय नमः

# मनुस्मृतिः

## ॥ अथ प्रथमोऽध्यायः ॥

## (पहिलो अध्याय)

## (सृष्टिवर्णन)

**मनुमेकाग्रमासीनमभिगम्य महर्षयः ।**
**प्रतिपूज्य यथान्यायमिदं वचनमब्रुवन् ॥१॥**

(प्राचीन कालमा एकदिन) एकाग्र भई बसेका मनुका नजिकै गएर महर्षिहरूले विधिपूर्वक (शास्त्रसम्मत तरिकाले) (उनलाई) पूजा (अभिवादन, उपासना आदि) गरी यो कुरा भन्न लागे...।



**भगवन् सर्ववर्णानां यथावदनुपूर्वशः ।**
**अन्तरप्रभवाणाञ्च धर्मान्नो वक्तुमर्हसि ॥२॥**

हे भगवन् ! हजुर सबै वर्ण (ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र) का अन्तर्सम्बन्धका असर र धर्म क्रमैले हामीलाई बताउन योग्य हुनुहुन्छ ।

**त्वमेको ह्यस्य सर्वस्य विधानस्य स्वयम्भुवः ।**
**अचिन्त्यस्याप्रमेयस्य कार्यतत्त्वार्थवित्प्रभो ॥३॥**

हे प्रभू ! हजुर नै त्यस्ता एक मात्र पुरुष हुनुहुन्छ जसले आफैं उत्पन्न, चिन्तन गर्न नसकिने (अप्रत्यक्ष) र नाप्न, यथार्थ रूप थाहा पाउन वा अनुमान गर्न नसकिने वेद (वा ब्रह्म) का विषयमा यथार्थ कुरा जानेको छ ।

**स तैः पृष्टस्तथा सम्यगमितौजा महात्मभिः ।**
**प्रत्युवाचार्च्य तान्सर्वान्महर्षीञ्च्छ्रूयतामिति ॥४॥**

यसरी शिष्टतापूर्वक अति तेजस्वी महर्षिहरूबाट प्रश्न सोधिएका मनुले ती सबै महर्षिहरूलाई यथायोग्य अभिवादन फर्काई “ल सुन्नु होस्” भन्नु भयो ।

**आसीदिदं तमोभूतमप्रज्ञातमलक्षणम् ।**
**अप्रतर्क्यं अविज्ञेयं प्रसुप्तमिव सर्वतः ॥५॥**

प्रलयकालमा यो संसार अन्धकाररूपी सूक्ष्म प्रकृतिमा बिलीन भएको हुनाले देखिँदैनथ्यो, कुनै लक्षण थिएन, त्यो अवस्था तर्कगर्ने क्षमताभन्दा बाहिरको अवस्था थियो, जान्नै नसकिने अवस्थामा थियो, लाग्दथ्यो कि संसार सुतिरहेको छ ।

**ततः स्वयम्भूर्भगवानव्यक्तो व्यञ्जयन्निदम् ।**
**महाभूतादिवृत्तौजाः प्रादुरासीत्तमोनुदः ॥६॥**



प्रलयकाल सकिएपछि आफ्नै इच्छाले शरीर धारण गर्न सक्ने एवं व्यक्त गर्न नसकिने भगवान्, पञ्चमहाभूत आदि मार्फत अन्धकारलाई चिर्दै प्रकट हुनुभयो ।

**योऽसावतीन्द्रियग्राह्यः सूक्ष्मोऽव्यक्तः सनातनः ।**
**सर्वभूतमयोऽचिन्त्यः स एव स्वयमुद्बभौ ॥७॥**

जो इन्द्रियले अनुभव गर्ने क्षमताभन्दा बाहिरका छन्, सूक्ष्म छन्, जान्न नसकिने छन्, जसको शुरु र अन्त नै छैन, जो सबै प्राणीमा निवास गर्दछन्, जसको चिन्तन गरेर पार लगाउनै सकिन्न त्यस्ता भगवान् आप से आप (मह आदि) कार्यकारूपमा प्रकट हुनु भयो ।

**सोऽभिध्याय शरीरात्स्वात्सिसृक्षुर्विविधाः प्रजाः ।**
**अप एव ससर्जादौ तासु वीर्यमवासृजत् ॥८॥**

आफ्नो शरीरबाट अनेक प्रकारका प्रजा सृष्टि गर्ने ति भगवान्ले पहिले ध्यानगरी पानीको सृष्टि गर्नुभयो र त्यही पानीमा आफ्नो शक्तिरूपी वीर्य सेचन गर्नुभयो ।

**तदण्डमभवद्धैमं सहस्रांशुसमप्रभम् ।**
**तस्मिञ्जज्ञे स्वयं ब्रह्मा सर्वलोकपितामहः ॥९॥**

यसरी जलमा भगवान्‌बाट आधान गरिएको शक्तिरूपी बीर्य भगवान् कै चाहना अनुरूप सुन जस्तो पहेँलो र सूर्यसमान तेजिलो फुलमा परिणत भयो । अनि त्यो फुलबाट संसारका पिता भगवान् ब्रह्मा आफैं उत्पन्न हुनुभयो ।

**आपो नारा इति प्रोक्ता आपो वै नरसूनवः ।**
**ता यदस्यायनं पूर्वं तेन नारायणः स्मृतः ॥१०॥**

पानीलाई “नारा” पनि भनिन्छ । नर नाम भएका परमात्माबाट सन्तानकारूपमा उत्पन्न भएको हुनाले पानीलाई यसो भनिएको हो । यही नारामा वास गर्ने हुँदा भगवान्लाई शास्त्रमा “नारायण” भनिएको हो ।



**यत्तत्कारणमव्यक्तं नित्यं सदसदात्मकम् ।**
**तद्विसृष्टः स पुरुषो लोके ब्रह्मेति कीर्त्यते ॥११॥**

जो सबै वस्तु (उत्पत्ति) का कारण हुन्, जसलाई बाहिरी इन्द्रियले थाहा पाउन सकिन्न, जो नित्य छन् तथा जो सत्य र असत्य वस्तुका आत्मारूपी छन्-यस्ता भगवान्ले रचना गर्नुभएका पुरुषलाई संसारमा “ब्रह्मा” भनी चिनिन्छ ।

**तस्मिन्नण्डे स भगवानुषित्वा परिवत्सरम् ।**
**स्वयमेवात्मनो ध्यानात्तदण्डं अकरोद्द्विधा ॥१२॥**

ती भगवान् ब्रह्मा त्यो फुलभित्र एक वर्षसम्म रहनु भयो र पछि ध्यान गरेर त्यो फुललाई दुई टुक्रा पार्नुभयो ।

**ताभ्यां स शकलाभ्याञ्च दिवं भूमिञ्च निर्ममे ।**
**मध्ये व्योम दिशश्चाष्टावपां स्थानञ्च शाश्वतम् ॥१३॥**

ब्रह्माले यसरी आफैंबाट फुटाइएको फुलको माथ्लो भागबाट स्वर्ग र तल्लो भागबाट पृथ्वीको रचना गर्नुभयो । यी दुई लोकको बीचमा आकाश, आठ दिशा र जलरहने स्थिर स्थान समुद्र पनि बनाउनु भयो ।

**उद्बबर्हात्मनश्चैव मनः सदसदात्मकम् ।**
**मनसश्चाप्यहङ्कारं अभिमन्तारमीश्वरम् ॥१४॥**

त्यसपछि ती परमात्मा ब्रह्माले सत्य र असत्यरूपलाई मनमा धारण गर्नु भयो । यसरी धारण गर्दा उहाँमा "म नै ईश्वर हुँ" भनी घमण्ड गर्ने अहङ्कार जन्मन पुग्यो ।

**महान्तमेव चात्मानं सर्वाणि त्रिगुणानि च ।**

**विषयाणां ग्रहीतॄणि शनैः पञ्चेन्द्रियाणि च ॥१५॥**

अहङ्कारबाट माया समेतको महतत्वलाई उत्पन्न गर्नु भयो । त्यसैबाट सबै सृष्टि तथा सत्व, रज एवं तम गुणले युक्त तथा शब्द, स्पर्श आदि विषयलाई ग्रहण गर्ने यस्ता पाँच इन्द्रियहरू बिस्तारै बिस्तारै रचना गर्नु भयो ।

**तेषां त्ववयवान्सूक्ष्मान्षण्णामप्यमितौजसाम् ।**
**सन्निवेश्यात्ममात्रासु सर्वभूतानि निर्ममे ॥१६॥**

उहाँले ती छ (पाँच ज्ञानेन्द्रिय र अहङ्कार) कुरा सूक्ष्म विकारकारूपमा शरीरमा छिराउँदै सबै जीवहरूको सृष्टि गर्नु भयो ।

**यन्मूर्त्यवयवाः सूक्ष्मास्तानीमान्याश्रयन्ति षट् ।**
**तस्माच्छरीमित्याहुस्तस्य मूर्तिं मनीषिणः ॥१७॥**

यी छ कुरा जुन् माया सहितको ब्रह्मको आश्रयमा रहन्छन् त्यसलाई अर्थात्
परमात्माको त्यो रूपलाई विद्वानहरू शरीर भन्दछन् ।

**तदाविशन्ति भूतानि महान्ति सह कर्मभिः ।**
**मनश्चावयवैः सूक्ष्मैः सर्वभूतकृदव्ययम् ॥१८॥**

(यसपछि) आफ्नो अंशरूप (आत्मा) मा सबै जीवका स्रष्टा एवं अविनाशी परमात्मा,
आ-आफ्ना विषय सहितका पञ्चमहाभूत तथा आआफ्ना सूक्ष्म अवयवसहितको मन,
उत्पन्न हुने र नासिने एक्त शरीरमा प्रवेश गर्दछन् ।

**तेषामिदं तु सप्तानां पुरुषाणां महौजसाम् ।**
**सूक्ष्माभ्यो मूर्तिमात्राभ्यः सम्भवत्यव्ययाद्व्ययम् ॥१९॥**

त्यसपछि अविनाशी परमात्मा अती शक्तिशाली पाँच इन्द्रिय, मन र अहङ्कार समेतका सात

तत्वलाई तन्मात्रासँग जोडी नाशवान् संसारको रचना गर्नु हुन्छ ।

**आद्याद्यस्य गुणं त्वेषां अवाप्नोति परः परः ।**
**यो यो यावतिथश्चैषां स स तावद्गुणः स्मृतः ॥२०॥**

यी पञ्चमहाभूतमा पहिलो पहिलोमा भएका गुण दोश्रो दोश्रोमा समावेश हुने गर्दछ ।
आकाशको गुण “शब्द” वायुमा, वायुको गुण “स्पर्श” अग्निमा, अग्निको गुण
“रूप” जलमा र जलको गुण “रस” पृथ्वीमा जाने गर्दछ । यसैले पृथ्वीमा
यी पाँच वटै गुण हुने गर्दछ । यसरी संख्यात्मक रूपमा पहिलो महाभूतमा
एक दोश्रोमा दुई गर्दै गुणको संख्या हुने गर्दछ ।

**सर्वेषां तु स नामानि कर्माणि च पृथक् पृथक् ।**
**वेदशब्देभ्य एवादौ पृथक्संस्थाश्च निर्ममे ॥२१॥**

भगवान् ब्रह्माले सृष्टिको शुरुमै यि पञ्चमहाभूतका (वा जीवको) बेग्लाबेग्लै नाम र
कर्म वेदसम्मत ढङ्गले व्यवस्था गरी स्थापना गर्नु भयो ।

**कर्मात्मनाञ्च देवानां सोऽसृजत्प्राणिनां प्रभुः ।**
**साध्यानाञ्च गणं सूक्ष्मं यज्ञं चैव सनातनम् ॥२२॥**

ती जीवका मालिकले कर्म नै स्वभाव भएका देवगण, सूक्ष्म साध्यगण र सनातन यज्ञलाई सृष्टि गर्नु भयो ।

**अग्निवायुरविभ्यस्तु त्रयं ब्रह्म सनातनम् ।**
**दुदोह यज्ञसिद्ध्यर्थं ऋग्यजुःसामलक्षणम् ॥२३॥**

यसपछि परमात्माले यज्ञलाई सफल बनाउन वा अग्निको निराकार स्वरूपलाई सनातन र व्यक्त रूप दिन तीन थरी देवता अग्नि, वायु र सूर्यबाट क्रमशः ऋग्वेद, यजुर्वेद र सामवेदलाई प्रकट गर्नु भयो वा प्रकाशमा लेराउनु भयो ।

**कालं कालविभक्तीश्च नक्षत्राणि ग्रहांस्तथा ।**

**सरितः सागराञ्शैलान्समानि विषमाणि च ॥२४॥**

यसपछि परमात्माले समयको विभाजन (कल्प, युग, वर्ष आदि) र नक्षत्र, ग्रह, समुद्र, पर्वत र अग्लो होचो जमिनको रचना गर्नु भयो ।

**तपो वाचं रतिञ्चैव कामञ्च क्रोधमेव च ।**
**सृष्टिं ससर्ज चैवेमां स्रष्टुमिच्छन्निमाः प्रजाः ॥२५॥**

जब भगवानले मानव सृष्टि गर्ने चाहना गर्नु भयो तब सृष्टिसँगै तप, वाणी (सरस्वती), रति (अनुराग, प्रेम), काम (भोगविलास) र क्रोधलाई पनि सृष्टि गर्नु भयो ।

**कर्मणाञ्च विवेकार्थं धर्माधर्मौ व्यवेचयत् ।**
**द्वन्द्वैरयोजयच्चेमाः सुखदुःखादिभिः प्रजाः ॥२६॥**

त्यसपछि कर्तव्य र अकर्तव्य जस्ता कर्मका गुण पहिल्याउन धर्म र अधर्मको स्वरूप

बनाउनु भयो । यसका साथै सुख र दुःख, प्रकाश र अन्धकार, लाभ र हानि, राग र द्वेष, हिंसा र अहिँसा, जीवन र मरण, यश र अवजस, सज्जन र दुर्जन तथा उत्थान र पतन जस्ता द्वन्द्वात्मक भावलाई मानिससँग जोडिदिनु भयो ।

**अण्व्यो मात्रा विनाशिन्यो दशार्धानान्तु याः स्मृताः ।**
**ताभिः सार्धमिदं सर्वं सम्भवत्यनुपूर्वशः ॥२७॥**

मानिस अतिसूक्ष्म नाशवान् तन्मात्रा रूप, रस आदिका माध्यमबाट उपरोक्त द्वन्द्वात्मक भावलाई भोग्ने गर्दछ । यो सँगसँगै सबै सृष्टि क्रमशः हुने गर्दछ ।

**यं तु कर्मणि यस्मिन्स न्ययुङ्क्त प्रथमं प्रभुः ।**
**स तदेव स्वयं भेजे सृज्यमानः पुनः पुनः ॥२८॥**

प्रलय हुनुभन्दा अघि जुन जुन जीवले जेजस्ता राम्रा नराम्रा कर्म गरेका थिए, प्रलय पछि पुनः सृष्टि हुँदा ती जीवलाई आआफ्ना कर्म अनुसारका त्यही त्यही शरीर प्राप्त भए ।



**हिंस्राहिंस्रे मृदुक्रूरे धर्माधर्मावृतानृते ।**
**यद्यस्य सोऽदधात्सर्गे तत्तस्य स्वयमाविशेत् ॥२९॥**

भगवानबाट जीवले पूर्वजन्ममा गरेका कर्मफलका आधारमा कसैलाई हिंस्रक त कसैलाई अहिंस्रक, कसैलाई नरम त कसैलाई क्रूर, कसैलाई धार्मिक त कसैलाई अधार्मिक एवं कसैलाई सत्य त कसैलाई असत्य धारण गराइयो ।

**यथर्तुलिङ्गान्यृतवः स्वयमेवर्तुपर्यये ।**
**स्वानि स्वान्यभिपद्यन्ते तथा कर्माणि देहिनः ॥३०॥**

जसरी एउटा ऋतु सकिएर अर्को ऋतु आउँदा स्वाभाविक किसिमले परिवर्तन हुने गर्दछ त्यसरी नै जीवले आफूले पूर्वजन्ममा गरेका कर्मफलका आधारमा नै यस जन्ममा उ सिँह, सर्प मानिस आदि भएर जन्मने गर्दछ ।
(यसमा भगवानको कुनै संलग्नता वा हस्तक्षेप हुँदैन, स्वतः हुन्छ) ।

**लोकानां तु विवृद्ध्यर्थं मुखबाहूरुपादतः ।**
**ब्राह्मणं क्षत्रियं वैश्यं शूद्रञ्च निरवर्तयत्॥३१॥**

ब्रह्माले सृष्टि वढाउन (वा चलाउन) मुखबाट ब्राह्मण, हातबाट क्षत्रिय, तिघ्राबाट वैश्य र गोडाबाट शूद्रलाई सृष्टि गर्नु भयो ।

**द्विधा कृत्वात्मनो देहमर्धेन पुरुषोऽभवत् ।**
**अर्धेन नारी तस्यां स विराजमसृजत्प्रभुः ॥३२॥**

भगवान् ब्रह्माले आफ्नो शरीरलाई दुई भाग गरी अलग्याएर आधालाई पुरुष र आधालाई नारी बनाउनु भयो ।

**तपस्तप्त्वासृजद्यं तु स स्वयं पुरुषो विराट् ।**
**तं मां वित्तास्य सर्वस्य स्रष्टारं द्विजसत्तमाः ॥३३॥**



हे श्रेष्ठ द्विजगण ! विराट् पुरुष भगवान्ले तपस्या गरेर त्यसरी आफ्नै आधा अङ्गबाट जुन पहिलो पुरुष बनाउनु भएको थियो, सबै सृष्टि अघि बढाउने त्यो पहिलो पुरुष म (मनु) नै हुँ ।

**अहं प्रजाः सिसृक्षुस्तु तपस्तप्त्वा सुदुश्चरम् ।**
**पतीन्प्रजानामसृजं महर्षीनादितो दश ॥३४॥**

मैले पनि भगवान्को चाहना अनुरूप सृष्टिलाई अघि बढाउन कठोर तपस्या गरेर पहिले दश जना प्रजापतिलाई सृष्टि गरेँ ।

**मरीचिमत्र्यङ्गिरसौ पुलस्त्यं पुलहं क्रतुम् ।**
**प्रचेतसं वसिष्ठं च भृगुं नारदमेव च ॥३५॥**

मैले सृष्टि गरेका ती दश प्रजापति वा महर्षिहरु मरीचि, अत्रि, अङ्गिरा, पुलस्त्य, पुलह, क्रतु, प्रचेता, वसिष्ठ, भृगु र नारद थिए ।

**एते मनूंस्तु सप्तान्यानसृजन्भूरितेजसः ।**
**देवान्देवनिकायांश्च महर्षींश्चामितौजसः ॥३६॥**

यी दश महर्षिहरूले सृष्टिलाई अघि बढाउँदै अन्य अति तेजस्वी सात मनु, देवता, तिनको वासस्थान, र ब्रह्मर्षिहरूलाई सृष्टि गरे ।

**यक्षरक्षःपिशाचांश्च गन्धर्वाप्सरसोऽसुरान् ।**
**नागान्सर्पान्सुपर्णांश्च पितृणांश्च पृथग्गणान् ॥३७॥**

यिनै दश महर्षिहरूले यक्ष, राक्षस, पिशाच, गन्धर्व, अप्सरा, दानव, हात्ती, सर्प, गरुड र पितृका बेग्लाबेग्लै समूह सृष्टि गरे ।

**विद्युतोऽशनिमेघांश्च रोहितेन्द्रधनूंषि च ।**
**उल्कानिर्घातकेतूंश्च ज्योतींष्युच्चावचानि च ॥३८॥**

आकाशमा चम्कने बिजुली, असिना (वा चटयाङ्ग), बादल, बेलाबेलामा आकाशमा देखिने रातोनीलो लौरोजस्तो रङ्गीबिरङ्गी छटा (रोहित), इन्द्रेनी, उल्का, भूकम्प-आँधी-चटयाङ्ग आदिको डरलाग्दो आवाज, पुच्छ्रेतारा र अनेकौं ताराहरू,...।

**किन्नरान्वानरान्मत्स्यान्विविधांश्च विहङ्गमान् ।**
**पशून्मृगान्मनुष्यांश्च व्यालांश्चोभयतोदतः ॥३९॥**

हिमालतिर रहने घोडाको जस्तो मुख भएका देवगण (किन्नर), बाँदर, माछा, अनेक प्रकारका चराहरू, अनेक प्रकारका पशुहरू, अनेक जातका मृगहरू, मानिस, हिंस्रक जनावर (वा सर्प) र तलमाथि दुबैतिर दाँत हुने जीव,..।

**कृमिकीटपतङ्गाँश्च यूकामक्षिकमत्कुणम् ।**
**सर्वञ्च दंशमशकं स्थावरञ्च पृथग्विधम् ॥४०॥**

जीवाणु, कीरा, पुतली आदि उड्ने कीरा, जुम्रा, भिँगा, उडुस, अनेक प्रकारका टोक्ने ससाना जीवहरू र स्थावरलाई (रुख, लहरा, घाँसपात आदि),...।

**एवमेतैरिदं सर्वं मन्नियोगान्महात्मभिः ।**
**यथाकर्म तपोयोगात्सृष्टं स्थावरजङ्गमम् ॥४१॥**

मैले उत्पन्न गरेका महर्षिहरुले मेरो आज्ञानुसार तपस्याको शक्तिबाट यो सारा स्थावरजङ्गम कर्म अनुसार सृष्टि गरे ।

**येषान्तु यादृषं कर्म भूतानामिह कीर्तितम् ।**
**तत्तथा वोऽभिधास्यामि क्रमयोगञ्च जन्मनि ॥४२॥**

संसारमा जुन जुन प्राणीका लागि जे जे कर्म बताइएको छ त्यो कर्मका बारेमा र ती प्राणीहरूको जन्मक्रमका बारेमा पनि म बताउँदछु ।



**पशवश्च मृगाश्चैव व्यालाश्चोभयतोदतः ।**
**रक्षांसि च पिशाचाश्च मनुष्याश्च जरायुजाः ॥४३॥**

आमाको पेटबाट सालनाल सहित जन्मने जीवलाई जरायुज भनिन्छ । गाई, भैंसी आदि जनावर; हरिण, कृष्णसार आदि मृग; सिँह, चितुवा आदिजस्ता हिँस्रक जनावर; तलमाथि दाँत हुने अन्य जनावर; राक्षसहरू; काँचो मासु खाने पिशाच आदि जस्ता जीवहरू र मानिस-यि जरायुज प्राणी हुन् ।

**अण्डजाः पक्षिणः सर्पा नक्रा मत्स्याश्च कच्छपाः ।**
**यानि चैव प्रकाराणि स्थलजान्यौदकानि च ॥४४॥**

माताको गर्भबाट फुलका रूपमा उत्पन्न भई पछि फुल फुटेर जन्मने जीवलाई अण्डज भनिन्छ । सबै चरा, सर्प, गोही, माछा, कछुवा आदि जस्ता स्थल र जलमा हुने प्राणी अण्डज प्राणी हुन् ।

**स्वेदजं दंशमशकं यूकामक्षिकमत्कुणम् ।**
**ऊष्मणश्चोपजायन्ते यच्चान्यत्किं चिदीदृषम् ॥४५॥**

पसिनाबाट उत्पन्न हुने प्राणीलाई स्वेदज प्राणी भनिन्छ । डाँस (जङ्गली झिँगा विशेष जो जङ्गलमा प्राय पशुको रगत चुस्ने गर्दछ, दंश), लामखुट्टे (मशक), जुका, झिङ्गा, उडुस आदि जस्ता बाफको तातोले जन्मने प्राणी स्वेदज प्राणी हुन् ।

**उद्भिज्जाः स्थावराः सर्वे बीजकाण्डप्ररोहिणः ।**
**ओषध्यः फलपाकान्ता बहुपुष्पफलोपगाः ॥४६॥**

जमिन (आफ्नो जन्मभूमि) लाई छेडेर (उद्भेदन गरेर) बाहिर निस्कने वृक्ष आदि जस्ता निर्जीव वा स्थिर कुरा (स्थावर) लाई उद्भिज भनिन्छ । यि बिउबाट उम्रने र हाँगाबाट उत्पन्न हुने गरी दुई किसिमका हुन्छन् ।

**अपुष्पाः फलवन्तो ये ते वनस्पतयः स्मृताः ।**

**पुष्पिणः फलिनश्चैव वृक्षास्तूभयतः स्मृताः ॥४७॥**

फूल नफुली फल लाग्ने विरुवालाई वनस्पति भनिन्छ ।
फूल र फल दुबै लाग्ने विरुवालाई वृक्ष भनिन्छ ।

**गुच्छगुल्मन्तु विविधं तथैव तृणजातयः ।**
**बीजकाण्डरुहाण्येव प्रताना वल्ल्य एव च ॥४८॥**

लहरा पनि नहुने र सोझो पनि नहुने विरुवा (गुच्छ); एउटै जराबाट धेरैवटा बोट उम्रने र झाङ्गिने विरुवा (गुल्म, झाडी); अनेक जातका घाँसपात; अनेक थरीका बिउ वा हाँगाबाट उम्रने विरुवा; रेसा निस्कने र धेरै फैलने फर्सी, तरुल आदि जस्ता लहरा (प्रतान) र गुर्जो आदि जस्ता लहरालाई उद्भिज भनिन्छ ।

**तमसा बहुरूपेण वेष्टिताः कर्महेतुना ।**
**अन्तःसंज्ञा भवन्त्येते सुखदुःखसमन्विताः ॥४९॥**

वृक्ष आदि आफ्ना कर्मफलका कारण नै यस्तो तमोगुणीरूपमा जन्मेका हुन् । यी नाशवान् स्थावरलाई पनि सुखदुःख हुन्छ तर ती त्यो कुरालाई व्यक्त गर्न सक्दैनन् ।

**एतदन्तास्तु गतयो ब्रह्माद्याः समुदाहृताः ।**
**घोरेऽस्मिन्भूतसंसारे नित्यं सततयायिनि ॥५०॥**

विभिन्न जीवले भरिएको यो नाशवान् एवं गतिशील संसारमा ब्रह्मादेखि वनस्पतिसम्मको अवस्था सधैं यस्तै नै रहने गर्दछ ।

**एवं सर्वं स सृष्ट्वेदं माञ्चाचिन्त्यपराक्रमः ।**
**आत्मन्यन्तर्दधे भूयः कालं कालेन पीडयन् ॥५१॥**

जसको शक्ति कति छ भनेर सोच्न पनि सकिन्न त्यस्ता परमात्माले उपयुक्त तरिकाले संसार सृष्टि गर्नु भयो । यही क्रममा उहाँले मलाई पनि सृष्टि गर्नु भयो । समय आएपछि यो सबै सृष्टि नासिन्छ र फेरी उहाँमै गएर मिसिन्छ ।



**यदा स देवो जागर्ति तदेवं चेष्टते जगत् ।**
**यदा स्वपिति शान्तात्मा तदा सर्वं निमीलति ॥५२॥**

जब परमात्मालाई सृष्टि गर्ने चाहना हुन्छ तब उहाँबाटै सारा संसार जाग्दछ (सृष्टि हुन्छ), जब उहाँको मन सृष्टिबाट निवृत्त हुन्छ तब सारा संसार नष्ट हुन्छ, उहाँमै गएर मिसिन्छ ।

**तस्मिन्स्वपिति तु स्वस्थे कर्मात्मानः शरीरिणः ।**
**स्वकर्मभ्यो निवर्तन्ते मनश्च ग्लानिमृच्छति ॥५३॥**

परमात्मालाई आत्म-आरामको अवस्था आएपछि (सुतेपछि) प्रलय हुन्छ, त्यसबेला कर्मबन्धनमा जेलिएका जीव पनि आआफ्ना कर्मबन्धनबाट केही समयका लागि

छुट्दछन्, तिनको मन तत्व पनि क्षीण हुन्छ । फेरी सृष्टि हुँदा ती जीव
फेरी कर्मफल भोग्न जन्मने गर्दछन् ।

**युगपत्तु प्रलीयन्ते यदा तस्मिन्महात्मनि ।**
**तदाऽयं सर्वभूतात्मा सुखं स्वपिति निर्वृतः ॥५४॥**

आँखा, कान आदि ज्ञानेन्द्रिय आआफ्ना विषय भोग्न तल्लिन नहुँदा पनि मन भने अनेक थरीका तानाबाना बुनिहरने गर्दछ । तर प्रलयकालमा यस्तो हुँदैन मन पनि शान्त हुने गर्दछ ।

**तमोऽयं तु समाश्रित्य चिरं तिष्ठति सेन्द्रियः ।**
**न च स्वं कुरुते कर्म तदोत्क्रामति मूर्तितः ॥५५॥**

जब जीव लामो समयसम्म इन्द्रियसहित सुषुप्ति (गाढा निद्रा) को अवस्थामा हुने गर्दछ तब त्यसबेला उ आफ्नो कर्म गरिरहेको हुँदैन र शरीरबाट पनि अलग्गिएर रहेको हुन्छ ।



**यदाणुमात्रिको भूत्वा बीजं स्थास्नु चरिष्णु च ।**
**समाविशति संसृष्टस्तदा मूर्तिं विमुञ्चति ॥५६॥**

जब सृष्टिको क्रम शुरु हुन्छ तब त्यो सुषुप्त जीव अत्यन्त सूक्ष्म भएर (अणुमात्रिक भएर) बीजमा प्रवेश गर्दछ र कर्म अनुसारका जुनीमा शरीर लिएर जन्मन पुग्दछ । (जीव, इन्द्रिय, मन, बुद्धि, वासना, कर्म, आयु र अविद्या यि आठ तत्वले युक्त भएपछि शरीर बन्दछ) ।

**एवं स जाग्रत्स्वप्नाभ्यामिदं सर्वं चराचरम् ।**
**सञ्जीवयति चाजस्रं प्रमापयति चाव्ययः ॥५७॥**

यसरी नै परमात्माले आफ्नो बिउँझिएको र सुतेको आदिजस्ता अवस्था अनुसार
सारा संसारको सृष्टि र विनाश गर्ने गर्दछन् ।

**इदं शास्त्रन्तु कृत्वासौ मामेव स्वयमादितः ।**
**विधिवद्ग्राहयामास मरीच्यादींस्त्वहं मुनीन् ॥५८॥**

मनुले भन्नु भयो-"सृष्टिको शुरुमा यो शास्त्र बनाई ब्रह्माले मलाई पढाउनु भएको थियो, त्यसपछि मैले यो शास्त्र मरीचि आदि मुनिलाई पढाएँ ।

**एतद्वोऽयं भृगुः शास्त्रं श्रावयिष्यत्यशेसतः ।**
**एतद्धि मत्तोऽधिजगे सर्वमेषोऽखिलं मुनिः ॥५९॥**

(त्यसैले अब) मबाट पढेका भृगु मुनिले हजुरहरूलाई यो सबै शास्त्र बताउने छन्" ।

**ततस्तथा स तेनोक्तो महर्षिमनुना भृगुः ।**
**तानब्रवीदृषीन्सर्वान्प्रीतात्मा श्रूयतामिति ॥६०॥**

यसपछि महर्षि भृगुले मनुका आदेशले खुशी हुँदै सबै ऋषिहरूलाई भन्नु भयो-"हजुरहरू सुन्नु होस्" ।



**स्वायम्भुवस्यास्य मनोः षड्वंश्या मनवोऽपरे ।**
**सृष्टवन्तः प्रजाः स्वाः स्वा महात्मानो महौजसः ॥६१॥**

यो स्वायम्भुव मनुको वंशमा उत्पन्न भएका अरु पनि छ जना मनुहरू छन् । ती अति पराक्रमी मनुहरूले पनि आआफ्ना सृष्टि गर्ने गर्दछन् ।

**स्वारोचिषश्चोत्तमश्च तामसो रैवतस्तथा ।**
**चाक्षुषश्च महातेजा विवस्वत्सुत एव च ॥६२॥**

स्वारोचिष, औत्तम, तामस, रैवत, चाक्षुष र वैवस्वत नामका ती मनु अति नै तेजस्वी छन् ।

**स्वायम्भुवाद्याः सप्तैते मनवो भूरितेजसः ।**
**स्वे स्वेऽन्तरे सर्वमिदमुत्पाद्यापुश्चराचरम् ॥६३॥**

स्वायम्भुव आदि सात मनु अति तेजस्वी भए जसले आआफ्ना अधिकार अनुसार
सारा चर अचर संसार रचना गरी पालनपोषण गरे ।

**निमेषा दश चाष्टौ च काष्ठा त्रिंशत्तु ताः कला ।**
**त्रिंशत्कला मुहूर्तः स्यादहोरात्रन्तु तावतः ॥६४॥**

आँखाका परेला झिमिक्क गर्ने समयलाई निमेष भनिन्छ । अठार निमेषको एक काष्ठा हुन्छ ।
तीस काष्ठाको एक कला हुन्छ । तीस कलाको एक मुहूर्त हुन्छ र
तीस मुहूर्तको एक दिनरात हुन्छ ।

**अहोरात्रे विभजते सूर्यो मानुषदैविके ।**
**रात्रिः स्वप्नाय भूतानां चेष्टायै कर्मणां अहः ॥६५॥**



मानिस र देवताका रात दिनको विभाजन सूर्यले गर्दछन् ।
जीवलाई सुत्न रात र कर्म गर्न दिन हुने गर्दछ ।

**पित्र्ये रात्र्यहनी मासः प्रविभागस्तु पक्षयोः ।**
**कर्मचेष्टास्वहः कृष्णः शुक्लः स्वप्नाय शर्वरी ॥६६॥**

पितृका रातदिनलाई कृष्ण र शुक्ल पक्ष गरी दुई पक्षमा विभाजन गरिएको हुन्छ र यसलाई
महिना भनिन्छ । पितृका लागि कर्म गर्न शुक्लपक्ष र सुत्न कृष्णपक्ष हुन्छ ।

**दैवे रात्र्यहनी वर्षं प्रविभागस्तयोः पुनः ।**
**अहस्तत्रोदगयनं रात्रिः स्याद्दक्षिणायनम् ॥६७॥**

यसरी नै फेरी देवताको रातदिन र वर्षको व्यवस्था गरिएको हुन्छ ।
उत्तरायण देवताको दिन र दक्षिणायण रात हुन्छ ।

व्याख्या: मानिसको एक वर्ष बराबर देवताको एक दिनरात हुन्छ । केही व्याख्याकारहरूले चन्द्रमालाई पितृलोक र सूर्यलाई देवलोक भनी बताएको पाइन्छ । आधुनिक विज्ञानले पृथ्वीको २९.५ दिन बराबर चन्द्रमामा एक दिन हुन्छ भनेको पाइन्छ । पितृ, देवता आदि मानवका नाङ्गा आँखाले देखिने कुरा होइनन् । कसैले यिनलाई देख्नु नदेख्नु पितृ र देवताको इच्छा र दर्शन लिनदिन तोकिएका नियममा भरपर्ने गर्दछ । पुराणहरूमा सूर्यको किरण मार्फत पैदा हुने अमृत पहिला पितृले ग्रहण गर्ने र पितृहरु मार्फत मानव र देवताले पाउँदछन् भनिएको छ । चन्द्रकिरणलाई अमृत पनि भनिन्छ । यसरी विश्लेषण गर्दा चन्द्रमाबाट परार्तन हुने सूर्य किरणलाई अमृत र परावर्तन गर्ने शक्तिलाई पितृ भनिएको देखिन्छ । सूर्य र चन्द्रमाको अनुपस्थितिमा सृष्टि चल्दैन । भविष्यमा कुनै विकल्प आविष्कार भएछ भनेपनि त्यो विकल्प यिनैको अर्को रूपको सहायताले नै बनाउन सम्भव हुन्छ, नत्र हुँदैन ।

**ब्राह्मस्य तु क्षपाहस्य यत्प्रमाणं समासतः ।**

**एकैकशो युगानां तु क्रमशस्तन्निबोधत ॥६८॥**

अब ब्रह्माका दिन र प्रत्येक युगका परिमाण संक्षेपमा क्रमैले बताउँदछु, सुन ।

**चत्वार्याहुः सहस्राणि वर्षाणां तत्कृतं युगम् ।**
**तस्य तावच्छती सन्ध्या सन्ध्यांशश्च तथाविधः ॥६९॥**

चार हजार वर्ष (दिव्य वर्ष) को सत्य युग हुन्छ । त्यसका त्यति नै सय बराबरका सन्ध्या र सन्ध्यांश हुन्छन् । (सत्ययुगको समय भनेको चार हजार आठ सय दिव्य वर्ष हो) ।

**इतरेषु ससन्ध्येषु ससन्ध्यांशेषु च त्रिषु ।**
**एकापायेन वर्तन्ते सहस्राणि शतानि च ॥७०॥**

अन्य तीन युगको समय सन्ध्या र सन्ध्यांश सहित हजार र सयमा एक एक घटाउँदा हुने वर्षका

हुन्छन् । अर्थात् त्रेता युग तीन हजार छ सय दिव्यवर्षको, द्वापरयुग दुई हजार चार सय दिव्यवर्षको र कलियुग एक हजार दुई सय दिव्यवर्षको हुन्छ ।

**यदेतत्परिसङ्ख्यातमादावेव चतुर्युगम् ।**
**एतद्द्वादशसाहस्रं देवानां युगमुच्यते ॥७१॥**

चतुर्युगको समय (त्रीचालीस लाख बीस हजार मानवीय वर्ष वा बाह्र हजार दिव्यवर्ष) लाई बाह्र हजारले गुणन गर्दा जति वर्ष हुन्छ त्यसलाई एक "दिव्य युग" हुन्छ ।

**दैविकानां युगानान्तु सहस्रं परिसङ्ख्यया ।**
**ब्राह्ममेकमहर्ज्ञेयं तावतीं रात्रिमेव च ॥७२॥**

एक हजार दिव्य युग बराबर भगवान् ब्रह्माको एक दिन र त्यति नै बराबरको एक रात हुन्छ ।

**तद्वै युगसहस्रान्तं ब्राह्मं पुण्यमहर्विदुः ।**
**रात्रिञ्च तावतीं एव तेऽहोरात्रविदो जनाः ॥७३॥**



ब्रह्माका दिन र रातमा भिन्नता थाहा पाउने विद्वान एवं विज्ञहरू ब्रह्माको आयु एक हजार दिव्य युगको हुन्छ भन्दछन् र ब्रह्माको दिनलाई "पुण्य दिवस" भन्दछन् । (ब्रह्माको एकदिनरात सकिँदा आठ अरब चौसठ्ठी करोड मानवीय वर्ष सकिन्छ) ।

**तस्य सोऽहर्निशस्यान्ते प्रसुप्तः प्रतिबुध्यते ।**
**प्रतिबुद्धश्च सृजति मनः सदसदात्मकम् ॥७४॥**

त्यो दिनरात सकिए पछि ब्रह्मा बिउँझिनु हुन्छ र सबभन्दा पहिले सङ्कल्प-विकल्पका आधार एवं सत् असत्का बारेमा चिन्तन गर्ने मनलाई सृष्टि गर्नु हुन्छ ।

**मनः सृष्टिं विकुरुते चोद्यमानं सिसृक्षया ।**
**आकाशञ्जायते तस्मात्तस्य शब्दं गुणं विदुः ॥७५॥**

ब्रह्माको सृष्टि गर्ने चाहनाबाट प्रेरित भई त्यो मनले प्रकृतिलाई विकृत पार्दछ र यसबाट आकाशको जन्म हुन पुग्दछ । यसको जानकारी शब्दबाट पाइन्छ, त्यसैले आकाशको गुण शब्द हुन पुग्दछ । (जीवले बोलेका कुरा जुन शून्यतामा बिलाउने गर्दछ त्यसैलाई आकाश भनिन्छ) ।

**आकाशात्तु विकुर्वाणात्सर्वगन्धवहः शुचिः ।**
**बलवाञ्जायते वायुः स वै स्पर्शगुणो मतः ॥७६॥**

आकाशमा विकार उत्पन्न भएपछि राम्रा नराम्रा सबै गन्ध सँगै उडाएर लैजाने पवित्र एवं शक्तिशाली वायुको जन्म हुन्छ । यसलाई स्पर्शबाट थाहा पाउन सकिन्छ । यसैले स्पर्शलाई वायुको गुण मानिने गर्दछ ।

**वायोरपि विकुर्वाणाद्विरोचिष्णु तमोनुदम् ।**
**ज्योतिरुत्पद्यते भास्वत्तद्रूपगुणमुच्यते ॥७७॥**



वायु विकृत भएपछि अन्धकार नाशक प्रकाशको उत्पत्ति हुन्छ । यो रूपबाट अर्थात् आँखाले देखेर थाहा हुन्छ, त्यसैले रूपलाई नै तेजको गुण मानिन्छ ।

**ज्योतिषश्च विकुर्वाणादापो रसगुणाः स्मृताः ।**
**अद्भ्यो गन्धगुणा भूमिरित्येषा सृष्टिरादितः ॥७८॥**

अग्निमा विकार आएपछि त्यसबाट जलको उत्पत्ति हुन्छ । यसलाई स्वादबाट थाहा पाइन्छ र रस पनि भनिन्छ । यसैले रसलाई जलको गुण  मानिन्छ । जलमा विकार आएपछि  पृथ्वीको उत्पत्ति हुन्छ, यो सुँघेर थाहा पाइन्छ त्यसैले गन्धलाई पृथ्वीको गुण मानिन्छ । सृष्टिक्रम यही हो ।

**यत्प्राग्द्वादशसाहस्रमुदितं दैविकं युगम् ।**
**तदेकसप्ततिगुणं मन्वन्तरमिहोच्यते ॥७९॥**

पहिले जुन मानवीय युगको बाह्र हजार युगको एक दिव्य युग हुने कुरा बताइयो, त्यस्ता

एकहत्तर देवयुगको एक मन्वन्तर हुन्छ ।

**मन्वन्तराण्यसङ्ख्यानि सर्गः संहार एव च ।**
**क्रीडन्निवैतत्कुरुते परमेष्ठी पुनः पुनः ॥८०॥**

मन्वन्तर, सृष्टि र प्रलय पनि असङ्ख्य छन् । ब्रह्मा ख्यालख्यालमै पटकपटक यिनलाई रचना गर्ने गर्नु हुन्छ ।

**चतुष्पात्सकलो धर्मः सत्यञ्चैव कृते युगे ।**
**नाधर्मेणागमः कश्चिन्मनुष्यान्प्रति वर्तते ॥८१॥**

सत्ययुगमा धर्म चारपाउको र सत्यरूपमा थियो । त्यसबेला अधर्मले मानिसलाई कुनै उपलब्धी हात लाग्दैनथ्यो ।

**इतरेष्वागमाद्धर्मः पादशस्त्ववरोपितः ।**

**चौरिकानृतमायाभिर्धर्मश्चापैति पादशः ॥८२॥**

बाँकी तीन युगमा क्रमशः चोरी, झुट र मायाका कारण धर्मका एक एक चरण खिइन्छन् ।

**अरोगाः सर्वसिद्धार्थाश्चतुर्वर्षशतायुषः ।**
**कृते त्रेतादिषु ह्येषामायुर्ह्रसति पादशः ॥८३॥**

सत्ययुगमा सबै मानिस निरोगी थिए । तिनले चाहेको कुरा सबै पूरा हुन्थ्यो । त्यसबेलाका मानिसको आयु चार सय वर्षको थियो । त्रेता आदि युग आएपछि यो आयु क्रमशः एक एक चौथाई कम हुने गर्दछ ।

**वेदोक्तमायुर्मर्त्यानामाशिषश्चैव कर्मणाम् ।**
**फलन्त्यनुयुगं लोके प्रभावश्च शरीरिणाम् ॥८४॥**

मानिसका वेदसम्मत आयु कर्मका फल र शरीरधारीका प्रभाव आदि जस्ता कुरा युग अनुसार थपघट हुने गर्दछन् ।

**अन्ये कृतयुगे धर्मास्त्रेतायां द्वापरेऽपरे ।**
**अन्ये कलियुगे नृणां युगह्रासानुरूपतः ॥८५॥**

युगमा आउने ह्रास अनुसार मानिसका सत्ययुगमा एकथरी, त्रेतामा अर्कै थरी, द्वापरमा अर्को थरी र कलिमा अर्को थरी धर्म हुने गर्दछ ।

**तपः परं कृतयुगे त्रेतायां ज्ञानमुच्यते ।**
**द्वापरे यज्ञमेवाहुर्दानमेकं कलौ युगे ॥८६॥**

सत्ययुगमा तपस्या, त्रेतायुगमा ज्ञान, द्वापरयुगमा यज्ञ र कलियुगमा दानलाई श्रेष्ठ धर्म मानिन्छ ।



**सर्वस्यास्य तु सर्गस्य गुह्यार्थं स महाद्युतिः ।**
**मुखबाहूरुपज्जानां पृथक्कर्माण्यकल्पयत् ॥८७॥**

परमात्माले सृष्टीका सबै काम सुव्यवस्थित गर्न मुख, हात, तिघ्रा र चरणबाट चार वर्ण उत्पन्न गरी तिनको बेग्लाबेग्लै कर्म-विभाजन गरे ।

**अध्यापनमध्ययनं यजनं याजनं तथा ।**
**दानं प्रतिग्रश्चैव ब्राह्मणानामकल्पयत् ॥८८॥**

वेदको अध्ययन र अध्यापन गर्नु, यज्ञ गर्नु र गराउनु तथा दान दिनु र लिनु ब्राह्मणका कर्तव्य कर्म हुन् ।

**प्रजानां रक्षणं दानमिज्याध्ययनमेव च ।**
**विषयेष्वप्रसक्तिश्च क्षत्रियस्य समादिशत् ॥८९॥**

प्रजा-रक्षा, दीनदुःखीलाई दान, यज्ञ, शास्त्रको अध्ययन र विषयमा आसक्त नहुनु आदि क्षत्रियका कर्तव्य कर्म हुन् ।

**पशूनां रक्षणं दानमिज्याऽध्ययनमेव च ।**
**वणिक्पथं कुसीदञ्च वैश्यस्य कृषिमेव च ॥९०॥**

पशुपालन गर्नु, व्यापार गर्नु, ऋण दिएर ब्याज खानु, दान दिनु, यज्ञ गर्नु, धर्मग्रन्थहरु पढ्नु, कृषि व्यवसाय गर्नु आदि वैश्यका कर्तव्य कर्म हुन् ।

**एकमेव तु शूद्रस्य प्रभुः कर्म समादिशत् ।**
**एतेषामेव वर्णानां शुश्रूषामनसूयया ॥९१॥**

परमात्माले शूद्रका लागि एउटै मात्र धर्म बताएका छन् : त्यो हो-कुनै ईर्ष्या, द्वेष तथा मनमा मलिन भाव नराखी तीनै वर्णको सेवा गर्नु ।



**ऊर्ध्वं नाभेर्मेध्यनरः पुरुषः परिकीर्तितः ।**
**तस्मान्मेध्यतमं त्वस्य मुखमुक्तं स्वयम्भुवा ॥९२॥**

पुरुष नाइटोभन्दा माथि पवित्र हुन्छ भनिएको छ त्यसमा पनि परमात्माले उसको मुखलाई अझ पवित्र भनेका छन् ।

**उत्तमाङ्गोद्भवाज्ज्यैष्ठाद्ब्रह्मणश्चैव धारणात् ।**
**सर्वस्यैवास्य सर्गस्य धर्मतो ब्राह्मणः प्रभुः ॥९३॥**

भगवानको उत्तम अङ्गबाट उत्पन्न भई ज्येष्ठ भएकाले तथा वेदको धारक र रक्षक भई श्रेष्ठ भएकाले ब्राह्मण संसारका धर्मतः मालिक हुन् ।

**तं हि स्वयम्भूःस्वादास्यात्तपस्तप्त्वाऽदितोऽसृजत् ।**
**हव्यकव्याभिवा ह्याय सर्वस्याऽस्य च गुप्तये ॥९४॥**

परमात्माले सृष्टिको शुरुमा तपोबलले निरन्तर हव्य र कव्य प्राप्त भइरहोस् र संसारको रक्षा होस् भनी मुखबाट पहिले ब्राह्मणलाई उत्पन्न गरेका हुन् ।

**यस्यास्येन सदाऽश्नन्ति हव्यानि त्रिदिवौकसः ।**
**कव्यानि चैव पितरः किं भूतमधिकं ततः ॥९५॥**

मुखबाट उच्चारित मन्त्रले नै तीनै लोकका देवताले हव्य र पितृले कव्य प्राप्त गर्ने हुनाले ब्राह्मणभन्दा श्रेष्ठ कुन प्राणी हुन सक्दछ र ! ।

**भूतानां प्राणिनः श्रेष्ठाः प्राणिनां बुद्धिजीविनः ।**
**बुद्धिमस्तु नराःश्रेष्ठा नरेषु ब्राह्मणाःस्मृताः ॥९६॥**



संसारका सबै जीवमा प्राणी श्रेष्ठ हुन्छ, प्राणीमध्येमा बुद्धि हुने जीव श्रेष्ठ हुन्छ, तीमध्येमा मानव श्रेष्ठ हुन्छ र मानवमध्येमा पनि बुद्धिमान ब्राह्मण सर्वश्रेष्ठ हुन् ।

**ब्राह्मणेषु च विद्वांसो विद्वत्सु कृतबुद्धयः ।**
**कृतबुद्धिसु कर्तारः कर्तृषु ब्रह्मवेदिनः ॥९७॥**

ब्राह्मणमा विद्वान, विद्वानमा सदाचार जान्ने, सदाचार जान्नेमा सदाचारी र सदाचारीमा पनि ब्रह्मतत्व जान्ने ब्राह्मण श्रेष्ठ हुन्छ ।

**उत्पत्तिरेव विप्रस्य मूर्तिर्धर्मस्य शाश्वती ।**
**स हि धर्मार्थमुत्पन्नो ब्रह्मभूयाय कल्पते ॥९८॥**

ब्रह्मज्ञ ब्राह्मणलाई त धर्मको साक्षात रुप मान्नु पर्दछ । धर्मार्थ उत्पन्न भएका कारणले ब्राह्मणलाई ब्रह्मरुप मानिएको छ ।

**ब्राह्मणो जायमानो हि पृथिव्यामधिजायते ।**
**ईश्वरः सर्वभूतानां धर्मकोषस्य गुप्तये ॥९९॥**

धर्मरुपी गुप्तधनको रक्षार्थ नै ईश्वरले ब्राह्मणलाई यस धरतीमा जन्माउँदछन् ।
यो कुरा सबै जीवका लागि सौभाग्य सूचक हुने गर्दछ ।

**सर्वं स्वं ब्राह्मणस्येदं यत्किञ्चिज्जगतीगतम् ।**
**श्रैष्ठयेनाभिजनेनेदं सर्वं वै ब्राह्मणोऽर्हति ॥१००॥**

ईश्वरले ब्राह्मणलाई सृष्टिको सर्वोत्तम प्राणी बनाई ब्रह्मविद्यामा पारङ्गत गर्न छानेकाले
उसले त्यो ऋण चुकाउन प्राणीमा विद्या प्रसार गरी माथि उठाउनु पर्दछ ।

**स्वमेव ब्राह्मणो भुङ्क्ते स्वं वस्ते स्वं ददाति च ।**
**आनृशंस्याद्ब्राह्मणस्य भुञ्जते हीतरे जनाः ॥१०१॥**

यदि ब्राह्मण अरुको भलाई गर्नमै लागि पर्दछ, धर्मपालन गर्न सबैलाई प्रेरित गर्दछ र

आत्मकल्याणको बाटोमा सबैलाई डोऱ्याउँदछ भने अरुले पनि उसको
पालनपोषण गर्नु कर्तव्य हुन्छ ।

**तस्य कर्मविवेकार्थं शेषाणामनुपूर्वशः ।**
**स्वायम्भुवो मनुर्धीमानिदं शास्त्रमकल्पयत् ॥१०२॥**

ती ब्राह्मण र बाँकी क्षत्रिय आदिका कर्म पनि थाहा पाउन बुद्धिमान् स्वायम्भुव
मनुले यो धर्मशास्त्र बनाउनु भएको हो ।

**विदुषा ब्राह्मणेनेमध्येतव्यं प्रयत्नतः ।**
**शिश्येभ्यश्च प्रवक्तव्यं सम्यङ्नान्येन केन चित् ॥१०३॥**

विद्वान ब्राह्मणले प्रयत्नपूर्वक यो शास्त्र पढ्नू र (योग्य) शिष्यलाई पढाउनू, अरुलाई होइन ।

**इदं शास्त्रमधीयानो ब्राह्मणः शंसितव्रतः ।**
**मनोवाग्देहजैर्नित्यं कर्मदोषैर्न लिप्यते ॥१०४॥**

यो शास्त्र पढी यस अनुसार कर्म गर्ने ब्राह्मण मन, वचन र शरीरले कहिल्यै पापमा लिप्त हुँदैन ।

**पुनाति पङ्क्तिं वंश्यांश्च सप्तसप्त परावरान् ।**
**पृथिवीं अपि चैवेमां कृत्स्नामेकोऽपि सोऽर्हति ॥१०५॥**

यो शास्त्र पढ्नेले अपवित्र पङ्क्तिलाई पवित्र पार्दछ, आफूभन्दा अघिका सात र पछिका सात पुस्तालाई पवित्र पार्दछ, यस्तो व्यक्ति सम्पूर्ण पृथ्वीका लागि पनि लिन योग्य हुन्छ ।

**इदं स्वस्त्ययनं श्रेष्ठं इदं बुद्धिविवर्धनम् ।**
**इदं यशस्यमायुष्यमिदं निःश्रेयसं परम् ॥१०६॥**

यो शास्त्र कल्याणदायक, बुद्धिवर्धक, यशदायक र आयुवर्धक हुनुका साथै मोक्षका लागि पनि सहयोगी छ ।

**अस्मिन्धर्मोऽखिलेनोक्तो गुणदोषौ च कर्मणाम् ।**
**चतुर्णामपि वर्णानां आचारश्चैव शाश्वतः ॥१०७॥**

यो स्मृतिमा सम्पूर्ण धर्मका बारेमा बताइएको छ । साथै, कर्मका गुण, दोष र चारै वर्णका परम्परागत आचारका बारेमा पनि उल्लेख गरिएको छ ।

**आचारः परमो धर्मः श्रुत्युक्तः स्मार्त एव च ।**
**तस्मादस्मिन्सदा युक्तो नित्यं स्यादात्मवान्द्विजः ॥१०८॥**

वेद र स्मृतिमा बताइएका आचार नै परम धर्म हुन् । यसैले आफ्नो कल्याण चाहने द्विजले सधैँ आचारवान् हुनु पर्दछ ।

**आचाराद्विच्युतो विप्रो न वेदफलमश्नुते ।**
**आचारेण तु संयुक्तः सम्पूर्णफलभाग्भवेत् ॥१०९॥**

आचारविहीन ब्राह्मणले वेदको फल पाउँदैन । जो आचारवान् छ उही त्यो फलको हकदार हुन्छ ।

**एवमाचारतो दृष्ट्वा धर्मस्य मुनयो गतिम् ।**
**सर्वस्य तपसो मूलमाचारञ्जगृहुः परम् ॥११०॥**

मुनिजनले आचारबाट धर्म प्राप्त हुन्छ भन्ने कुरा जानी धर्मको मूल आचारलाई ग्रहण गरेका थिए ।

**जगतश्च समुत्पत्तिं संस्कारविधिमेव च ।**
**व्रतचर्योपचारञ्च स्नानस्य च परं विधिम् ॥१११॥**
**दाराधिगमनञ्चैव विवाहानाञ्च लक्षणम् ।**
**महायज्ञविधानञ्च श्राद्धकल्पञ्च शाश्वतम् ॥११२॥**
**वृत्तीनां लक्षणञ्चैव स्नातकस्य व्रतानि च ।**
**भक्ष्याभक्ष्यञ्च शौचञ्च द्रव्याणां शुद्धिमेव च ॥११३॥**

संसारको उत्पत्ति, संस्कारका विधि, ब्रह्मचर्य व्रत, स्नान विधि, पत्नीगमन, विवाहका लक्षण, महायज्ञका विधि, परम्परागत श्राद्धका विधान, पेसाका लक्षण, स्नातकका व्रत, भक्ष्य र अभक्ष्य, शौच, द्रव्यको शुद्धि, ...।

**स्त्रीधर्मयोगं तापस्यं मोक्षं संन्यासमेव च ।**
**राज्ञश्च धर्ममखिलं कार्याणाञ्च विनिर्णयम् ॥११४॥**

स्त्रीका धर्म, तपस्वीका धर्म, मोक्ष, सन्यास धर्म, राजधर्म, मुद्दासम्बन्धी निर्णय,...।

**साक्षिप्रश्नविधानञ्च धर्मं स्त्रीपुंसयोरपि ।**
**विभागधर्मं द्यूतञ्च कण्टकानाञ्च शोधनम् ॥११५॥**

**वैश्यशूद्रोपचारञ्च सङ्कीर्णानाञ्च सम्भवम् ।**
**आपद्धर्मञ्च वर्णानां प्रायश्चित्तविधिं तथा ॥११६॥**

साछीका कुरा, स्त्री एवं पुरुषका धर्म र पाउने भाग, जुवाडे-चोर आदिको शुद्धि, वैश्य र शूद्रका धार्मिक अनुष्ठानका किसिम, वर्णसङ्करको उत्पत्ति, वर्णका आपत्कालीन धर्म, प्रायश्चितका विधि,...।

**संसारगमनञ्चैव त्रिविधं कर्मसम्भवम् ।**
**निःश्रेयसं कर्मणाञ्च गुणदोषपरीक्षणम् ॥११७॥**

उत्तम, मध्यम र अधम कर्म अनुसार हुने पुनर्जन्म, मोक्षको स्वरूप, कर्मका गुण र दोषको परीक्षा,...।

**देशधर्माञ्जातिधर्मान्कुलधर्मांश्च शाश्वतान् ।**
**पाषण्डगणधर्मांश्च शास्त्रेऽस्मिन्नुक्तवान्मनुः ॥११८॥**



परम्परागत देशधर्म (भौगोलिक प्रचलन), जातिधर्म, कुलधर्म, पाखण्डधर्म तथा गुणधर्मलाई मनुले यस शास्त्रमा बताएका छन् ।

**यथेदमुक्तवान् शास्त्रं पुरा पृष्टो मनुर्मया ।**
**तथेदं यूयमप्यद्य मत्सकाशान्निबोधत ॥११९॥**

मैले पहिले मनुलाई सोधनी गर्दा शास्त्रको जेजस्तो ज्ञान पाएको थिएँ त्यो त्यस्तै किसिमले हजुरहरूलाई बताउँदछु, सुन्नु हवस् ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां प्रथमोऽध्यायः ॥१॥**

*

**मनुस्मृति, पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

*

**शुरुदेखिको श्लोकको संख्याः-०+११९=११९**

*

# ॥ अथ द्वितीयोऽध्यायः ॥

## (दोश्रो अध्याय)

### (ब्रह्मचर्याश्रम)

**विद्वद्भिः सेवितः सद्भिर्नित्यमद्वेषरागिभिः ।**
**हृदयेनाभ्यनुज्ञातो यो धर्मस्तं निबोधत ॥१॥**

वेदज्ञ एवं रागद्वेष नभएका महात्माले जुन धर्मलाई अपनाए अनि जुन धर्मलाई मनन गरे त्यो धर्म सुन्नु होस् ।

**कामात्मता न प्रशस्ता न चैवेहास्त्यकामता ।**
**काम्यो हि वेदाधिगमः कर्मयोगश्च वैदिकः ॥२॥**

अत्यधिक आशक्ति वा विरक्ति दुबै ठिक होइनन्, किन कि वेदको प्राप्ति र वेद अनुसारका कर्म आशक्तिका योग्य हुन्छन् ।

**सङ्कल्पमूलः कामो वै यज्ञाः सङ्कल्पसम्भवाः ।**
**व्रतानि यमधर्माश्च सर्वे सङ्कल्पजाः स्मृताः ॥३॥**

सङ्कल्पबाट नै कुनै कर्म गर्ने इच्छा हुने गर्दछ, यज्ञ आदि सबै सङ्कल्पबाट नै हुने गर्दछन् । व्रत, नियम, धर्म : यी पनि सबै सङ्कल्पबाट नै हुने गर्दछन् ।

**अकामस्य क्रिया काचिद्दृश्यते नेह कर्हिचित् ।**
**यद्यद्धि कुरूते किञ्चित्तत्तत्कामस्य चेष्टितम् ॥४॥**

संसारमा कुनै पनि कर्म इच्छा बिना भएको कहिल्यै देखिने गर्दैन । अतः मानिस जेजति कर्म गर्दछ त्यो सबै कुनै चाहना भएर नै गर्ने गर्दछ ।

**तेषु सम्यग्वर्तमानो गच्छत्यमरलोकताम् ।**
**यथा सङ्कल्पिताश्चेह सर्वान्कामान्समश्नुते ॥५॥**

शास्त्रले बताएका ती कर्म राम्ररी गर्ने मानिस मोक्ष हुन्छ । जसजसले जुनजुन कर्म गर्दा जे जे सङ्कल्प गर्दछ त्यो कुनै न कुनै चाहना लिएर नै गर्ने गर्दछ ।

**वेदोऽखिलो धर्ममूलं स्मृतिशीले च तद्विताम् ।**
**आचारश्चैव साधूनामात्मनस्तुष्टिरेव च ॥६॥**

धर्मको मूल आधार वेद हो । त्यसपछि स्मृति र पुराणहरु र त्यसपछिको आधार सदाचारी पुरुषको आचरण हो ।

**यः कश्चित्कस्यचिद्धर्मो मनुना परिकीर्तितः ।**
**स सर्वोऽभिहितो वेदे सर्वज्ञानमयो हि सः ॥७॥**



मनुले (यो ग्रन्थमा) जसका लागि जेजस्तो धर्म बताएका छन्, त्यो सबै वेदसम्मत छ, किन कि उनलाई वेदका बारेमा सबै कुराको ज्ञान थियो ।

**सर्वं तु समवेक्ष्येदं निखिलं ज्ञानचक्षुषा ।**
**श्रुतिप्रमाण्यतो विद्वान्स्वधर्मे निविशेत वै ॥८॥**

विद्वानले यहाँ बताइएका सबै कुरा ज्ञानका आँखाले हेरी वेदका प्रमाणसँग तौलियोस् र धर्मप्रति श्रद्धा गरोस् ।

**श्रुतिस्मृत्युदितं धर्ममनुतिष्ठन् हि मानवः ।**
**इह कीर्तिमवाप्नोति प्रेत्य चानुत्तमं सुखम् ॥९॥**

वेद तथा शास्त्रद्वारा निर्धारित धर्मलाई पालना गर्ने मनुष्यले यस लोकमा यश र परलोकमा अत्युत्तम सुख प्राप्त गर्दछ ।

**श्रुतिस्तु वेदो विज्ञेयो धर्मशास्त्रं तु वै स्मृतिः ।**
**ते सर्वार्थेष्वभीमांस्ये ताभ्यां धर्मो हि निर्वभौ ॥१०॥**

श्रुति भन्नाले वेद र धर्मशास्त्र भन्नाले स्मृति भनी जान्नू । धर्मका सबै विषयमा अन्तिम निर्णायक यी दुवै हुने हुनाले यसैमा नै धर्म अडेको छ ।

**योऽवमन्येत ते मूले हेतुशास्त्राश्रयाद्द्विजः ।**
**स साधुभिर्बहिष्कार्यो नास्तिको वेदनिन्दकः ॥११॥**

कुतर्क गर्दै जुन द्विजले यी मूलधर्मलाई अपमान गर्दछ, त्यस्तो वेदनिन्दक नास्तिक साधुजनबाट बहिष्कार गर्न योग्य हुन्छ ।

**वेदः स्मृतिः सदाचारः स्वस्य च प्रियमात्मनः ।**
**एतच्चतुर्विधं प्राहुः साक्षाद्धर्मस्य लक्षणम् ॥१२॥**



वेद, धर्मशास्त्र, सत्पुरुषको आचरण र आफ्नू शुद्ध आत्मामध्ये पहिलोदेखि क्रमशः आचरण गर्नु नै धर्मको लक्षण हो ।

**अर्थकामेष्वसक्तानां धर्मज्ञानं विधीयते ।**
**धर्मं जिज्ञासमानानां प्रमाणं परमं श्रुतिः ॥१३॥**

अर्थ र काममा जो मानिस फसेको छैन, उसैलाई धर्मको उपदेश दिने विधान छ । जसलाई धर्मका बारेमा जिज्ञासा छ उसका लागि ठूलो (वा अन्तिम) प्रमाण वेद छ ।

**श्रुतिद्वैधं तु यत्र स्यात्तत्र धर्मावुभौस्मृतौ ।**
**उभावपि हि तौ धर्मौ सम्यगुक्तौ मनीषिभिः ॥१४॥**

वेदमा धर्मको कुनै विषयमा फरक विचार लेखिएको भेटिए पनि परिवेश अनुसार दुवै सही हुन्छन् भनी विद्वानहरुले बताएका छन् ।

**उदितेऽनुदिते चैव समयाध्युषिते तथा ।**
**सर्वथा वर्तते यज्ञ इतीयं वैदिको श्रुतिः ॥१५॥**

वेदमा एउटै विषयमा दुई थरीका कुरा उल्लेख भएको पाइए दुबै ग्राह्य हुन्छन् । जस्तैः कतै सूर्य उदाएपछि, कतै सूर्य नउदाउँदै त कतै सूर्य नक्षत्र नभएका बेलामा यज्ञ गर्ने विधान उल्लेख भएको हुन्छ ।

**निषेकादि श्मशानान्तो मन्त्रैर्यस्योदितो विधिः ।**
**तस्य शास्त्रेऽधिकारोऽस्मिन्ज्ञेयो नान्यस्य कस्यचित् ॥१६॥**

गर्भाधानदेखि अन्त्येष्टिसम्मका जुन जुन कर्मका वेदोक्त मन्त्र सहितका विधि यहाँ बताइएका छन् ती वेदसम्मत छन् ।

**सरस्वतीदृशद्वत्योर्देवनद्योर्यदन्तरम् ।**
**तं देवनिर्मितं देशं ब्रह्मावर्तं प्रचक्षते ॥१७॥**



सरस्वती र दृषद्वती : यी दुई देवनदीका बीचमा जुन देश छ त्यो देवताहरूबाट बनाइएको हो र यसलाई “ब्रह्मावर्त” भनिन्छ ।

**तस्मिन्देशे य आचारः पारम्पर्यक्रमागतः ।**
**वर्णानां सान्तरालानां स सदाचार उच्यते ॥१८॥**

त्यो देशमा विभिन्न वर्ण र वर्णसङ्करहरूको परम्परागत रूपमा चलेको जेजस्तो आचार छ, त्यसैलाई सदाचार भनिन्छ ।

**कुरुक्षेत्रं च मत्स्याश्च पञ्चालाः शूरसेनकाः ।**
**एष ब्रह्मर्षिदेशो वै ब्रह्मावर्तादनन्तरः ॥१९॥**

कुरुक्षेत्र, मत्स्य, पञ्चाल र शूरसेनक-यी ब्रह्मावर्तभन्दा पछिका “ब्रहर्षि देश” हुन् ।

**एतद्देशप्रसूतस्य सकाशादग्रजन्मनः ।**
**स्वं स्वं चरित्रं शिक्षेरन्पृथिव्यां सर्वमानवाः ॥२०॥**

यी देशमा जन्मेका ब्राह्मणहरुबाट पृथ्वीका सबै मानिसले
आआफ्ना चरित्रका बारेमा शिक्षा लिऊन् ।

**हिमवद्विन्ध्ययोर्मध्यं यत्प्राग्विनशनादपि ।**
**प्रत्यगेव प्रयागाच्च मध्यदेशः प्रकीर्तितः ॥२१॥**

हिमवत् र विन्ध्यका बीचमा रहेको सरस्वती नदीभन्दा पूर्व र प्रयागभन्दा
पश्चिमको भूभागलाई "मध्यदेश" भनिन्छ ।

**आसमुद्रात्तु वै पूर्वादासमुद्राच्च पश्चिमात् ।**
**तयोरेवान्तरं गिर्योरार्यावर्तं विदुर्बुधाः ॥२२॥**



पूर्वमा समुद्रदेखि पश्चिममा समुद्रसम्म तथा उत्तरमा हिमवत्देखि दक्षिणमा
विन्ध्यसम्मको भूभागलाई विद्वानहरूले "आर्यावर्त" भन्ने गर्दछन् ।

**कृष्णसारस्तु चरति मृगो यत्र स्वभावतः ।**
**स ज्ञेयो यज्ञियो देशो म्लेच्छदेशस्त्वतः परः ॥२३॥**

जहाँ कृष्णसार मृग स्वाभाविकरूपमा विचरण गर्दछ त्यो देश यज्ञ गर्न योग्य
देश हो, यस बाहेकका देश म्लेच्छ देश हुन् ।

**एतान् द्विजातयो देशान् संश्रयेरन् प्रयत्नतः ।**
**शूद्रस्तु यस्मिन्कस्मिन्वा निवसेद् वृत्तिकर्शितः ॥२४॥**

यी देशहरूमा द्विजातिले प्रयत्नपूर्वक बसोबास गर्नू, शूद्रहरू पेसाका
लागि यता उता बस्न सक्दछन् ।

**एषा धर्मस्य वो योनिः समासेन प्रकीर्तिता ।**
**सम्भवश्चास्य सर्वस्य वर्णधर्मान्निबोधत ॥२५॥**

मैले संक्षेपमा धर्मको उत्पत्तिका बारेमा बताएँ, अब वर्ण-धर्मका बारेमा बताउँदछु ।

**वैदिकैः कर्मभिः पुण्यैर्निषेकादिद्विजन्मनाम् ।**
**कार्यः शरीरसंस्कारः पावनः प्रेत्य चेह च ॥२६॥**

द्विजले वेद-विधिले सबै संस्कारहरु गरी आफ्नो शरीरलाई पवित्र मात्र बनाउने होइन
कि अरु शुभकर्महरु समेत गरी इहलोक र परलोक सुधार्नु पर्दछ ।

**गार्भैर्होमैर्जातकर्मचौडमौञ्जीनिबन्धनैः ।**
**बैजिकं गार्भिकं चैनो द्विजानामपमृज्यते ॥२७॥**

गर्भज प्राणीको शरीर वीर्य, रज र गर्भ-दोषहरुले जेलिने हुनाले शुद्धताका लागि

द्विजले गर्भाधान, जातकर्म, चूडाकर्म, उपनयन आदि संस्कारहरु गर्नुपर्दछ ।

**स्वाध्यायेन व्रतैर्होमैस्त्रैविद्येनेज्यया सुतैः ।**
**महायज्ञैश्च यज्ञैश्च ब्राह्मीयं क्रियते तनु ॥२८॥**

वेदादिको अध्ययन, व्रत, होम, तीन कालको सन्ध्योपासना, पितृऋणबाट मुक्त हुन गरिने
सन्तानोत्पादन, महायज्ञ र यज्ञले शरीर पवित्र हुन्छ ।

**प्राङ्नाभिवर्धनात्पुंसो जातकर्म विधीयते ।**
**मन्त्रवत्प्राशनं चास्य हिरण्यमधुसर्पिषाम् ॥२९॥**

नाल काट्नु पूर्व वालकको जातक संस्कार गर्नुपर्दछ । मन्त्र उच्चारण गर्दै सुनको
चम्चाले मह र घिउ मिसाएर चटाई अन्नप्राशन संस्कार गर्नू ।

**नामधेयं दशम्यां तु द्वादश्यां वाऽस्य कारयेत् ।**
**पुण्ये तिथौ मुहूर्ते वा नक्षत्रे वा गुणान्विते ॥३०॥**

वालक जन्मेको दश वा बाह्र दिनमा वा शुभ तिथि, मुहूर्त र नक्षत्रमा न्वारन गर्नु पर्दछ ।

**मङ्गल्यं ब्राह्मणस्य स्यात्क्षत्रियस्य बलान्वितम् ।**
**वैश्यस्य धनसंयुक्तं शूद्रस्य तु जुगुप्सितम् ॥३१॥**

न्वारनमा नाम राख्दा ब्राह्मणको मङ्गलसूचक, क्षत्रियको बलसूचक, वैश्यको धनसूचक र शूद्रको दास्यसूचक नाम राख्नु पर्दछ ।

**शर्मवद् ब्राह्मणस्य स्याद्राज्ञो रक्षासमन्वितम् ।**
**वैश्यस्य पुष्टिसंयुक्तं शूद्रस्य प्रेष्यसंयुतम् ॥३२॥**

ब्राह्मणको नाममा शर्मा, क्षत्रियको नाममा वर्मा आदि, वैश्यको नाममा गुप्त आदि र शूद्रको नाममा दास आदि जोडेर नाम राख्नु पर्दछ ।



**स्त्रीणां सुखोद्यमक्रूरं विस्पष्टार्थं मनोहरम् ।**
**मङ्गल्यं दीर्घवर्णान्तमाशीर्वादाभिधानवत् ॥३३॥**

स्त्रीको नाम राख्दा बोलाउन सजिलो, नरम कोमल र स्पष्ट अर्थ दिने, मनलाई आनन्द दिने, मङ्गलसूचक, अन्तमा दीर्घ वर्ण हुने र आशीर्वादात्मक नाम राख्नु पर्दछ ।

**चतुर्थे मासि कर्तव्यं शिशोर्निष्क्रमणं गृहात् ।**
**षष्ठेऽन्नप्राशनं मासि यद्वेष्टं मङ्गलं कुले ॥३४॥**

वालक जन्मेको चौथो महिनामा निष्क्रमण संस्कार गर्नु पर्दछ । छ महिनाको भएपछि वा परम्परा अनुसारको समय भएपछि अन्नप्राशन संस्कार गर्नु पर्दछ ।

**चूडाकर्म द्विजातीनां सर्वेषामेव धर्मतः ।**
**प्रथमेऽब्दे तृतीये वा कर्त्तव्यं श्रुतिनोदनात् ॥३५॥**

वेदको आज्ञा अनुसार वालक एक वर्ष वा तीन वर्षको भएपछि धर्मानुसार चूडाकर्म संस्कार गर्नु पर्दछ ।

**गर्भाष्टमेऽब्दे कुर्वीत ब्राह्मणस्योपनायनम् ।**
**गर्भादेकादशे राज्ञो गर्भात्तु द्वादशे विशः ॥३६॥**

गर्भ रहेको आठ वर्ष पुगेपछि ब्राह्मणको, एघार वर्ष पुगेपछि क्षत्रियको र बाह्र वर्ष पुगेपछि वैश्यको उपनयन संस्कार गर्नु पर्दछ ।

**ब्रह्मवर्चसकामस्य कार्यो विप्रस्य पञ्चमे ।**
**राज्ञो बलार्थिनः षष्ठे वैश्यस्येहार्थिनोऽष्टमे ॥३७॥**



ब्राह्मण, छेत्री र वैश्यले क्रमशः ब्रह्मतेजी, बली र दक्ष व्यापारी बनाउन बालकलाई क्रमशः पाँच, छ र आठ वर्षको उमेरमा गुरुकुलमा पढ्न पठाउनु पर्दछ ।

**आ षोडशाद्ब्राह्मणस्य सावित्री नातिवर्तते ।**
**आ द्वाविंशात्क्षत्रबन्धोरा चतुर्विंशतेर्विशः ॥३८॥**

ब्राह्मणको सोह्र वर्ष, क्षत्रियको बाईस वर्ष र वैश्यको चौबीस वर्षभित्र व्रतबन्ध गरिसक्नु पर्दछ ।

**अत ऊर्ध्वं त्रयोऽप्येते यथाकालमसंस्कृताः ।**
**सावित्रीपतिताः व्रात्या भवन्त्यार्यविगर्हिताः ॥३९॥**

समयमै व्रतबन्ध नगरी नित्य उपासना, स्वाध्याय, गायत्री जप आदिबाट वञ्चित रहेका द्विजपुत्रहरु पतित एवं भ्रष्ट भएर “व्रात्य” भनी चिनिन्छन् र शिष्टजनबाट निन्दित हुन्छन् ।

**नैतैरपुतैर्विधिवदापद्यपि हि कर्हिचित् ।**
**ब्राह्मान् यौनांश्च सम्बन्धान्नाचरेद् ब्राह्मणैः सह ॥४०॥**

यस्ता अपवित्र व्रात्यले विधिपूर्वक प्रायश्चित नगरेसम्म तिनका साथ
ब्राह्मणादिले विद्या र योनिको सम्बन्ध नगाँस्नू ।

**कार्ष्णरौरववास्तानि चर्माणि ब्रह्मचारिणः ।**
**वसिरन्नानुपूर्व्येण शाणक्षौमाविकानि च ॥४१॥**

(उपनयनमा) ब्रह्मचारी द्विजले क्रमशः कृष्णमृग, रुरुमृग र बोकाको छाला
लगाउनू । त्यो नपाए सन, आलस र ऊनी वस्त्र लगाउनू ।

**मौञ्जी त्रिवृत्समा श्लक्ष्णा कार्या विप्रस्य मेखला ।**
**क्षत्रियस्य तु मौर्वी ज्या वैश्यस्य शणतान्तवी ॥४२॥**



ब्राह्मणले कपासको तीन डोरे, कोमल, चिल्लो र छुँदा सुखद लाग्ने खालको; क्षत्रियले
मूर्वी(मुज) घाँसको ताँदोभैँ बलियो र वैश्यले सनको बलियो कन्धनी लगाउनु पर्दछ ।

**मुञ्जालाभे तु कर्त्तव्याः कुशाश्मन्तकबल्वजैः ।**
**त्रिवृत्ता ग्रन्थिनैकेन त्रिभिः पञ्चभिरेव वा ॥४३॥**

उल्लेखित वस्तु नपाइएमा क्रमशः कुश, अश्मन्तक (ढुङ्गा फोरेर पलाउने तीखा टुप्पा हुने घाँस)
र बाबियोको बाटेर तीन डोरो बनाइएको एवं तीन वा पाँच गाँठाको कन्धनी लगाउनु पर्दछ ।

**कार्पासमुपवीतं स्याद्विप्रस्योर्ध्ववृतं त्रिवृत् ।**
**शाणसूत्रमयं राज्ञो वैश्यस्याविकसौत्रिकम् ॥४४॥**

ब्राह्मणको जनै कपासले बनेको तीन डोरे, डोराको माथिल्लो भागमा गाँठो पारिएको,
क्षत्रियको जनै सनपाटको र वैश्यको जनै भेडाको ऊनको हुनुपर्दछ ।

**ब्राह्मणो बैल्वपालाशौ क्षत्रियो वाटखादिरौ ।**
**पैलवौदुम्बरौ वैश्यौ दण्डानर्हन्ति धर्मतः ॥४५॥**

ब्रह्मचारी ब्राह्मणको दण्ड बेल वा पलाशको, क्षत्रियको दण्ड वर वा खयरको
र वैश्यको दण्ड पीपल वा डुम्रीको हुनुपर्दछ ।

**केशान्तिको ब्राह्मणस्य दण्डः कार्यः प्रमाणतः ।**
**ललाटसम्मितो राज्ञःस्यात्तु नासान्तिको विशः ॥४६॥**

दण्डको लम्बाई क्रमशः ब्राह्मणको गोडादेखि कपालसम्म, क्षत्रियको गोडादेखि
निदारसम्म र वैश्यको गोडादेखि नाकसम्म पुग्ने हुनुपर्दछ ।

**ऋजवस्ते तु सर्वे स्युरव्रणाः सौम्यदर्शनाः ।**
**अनुद्वेगकरा नृणां सत्वचोऽनग्निदूषिताः ॥४७॥**



दण्ड बाङ्गोटिङ्गो नभई सिधा हुनुपर्दछ, दण्डमा गाँठागुँठी हुनुहुँदैन, हेर्नमा सुन्दर हुनुपर्दछ,
उद्वेग-भय-ग्लानी- दुःख उत्पन्न गर्ने हुनु हुँदैन, बोक्रो ताछिएको र आगोले पोलेको हुनु हुँदैन ।

**प्रतिगृह्येप्सितं दण्डमुपस्थाय च भाष्करम् ।**
**प्रदक्षिणं परीत्याग्निं चरेद्भैक्षं यथाविधिः ॥४८॥**

उपरोक्त दण्ड सूर्यलाई नमस्कार गर्दा, अग्निको परिक्रमा गर्दा र भिक्षा माग्दा साथमा हुनु पर्दछ ।

**भवत्पूर्वं चरेद्भैक्षमुपनीतो द्विजोत्तमः ।**
**भवन्मध्यं तु राजन्यो वैश्यस्तु भवदुत्तरम् ॥४९॥**

भिक्षा माग्दा ब्रह्मचारी ब्राह्मणले 'भवती भिक्षां देहि', क्षत्रियले 'भिक्षां भवती देहि' र वैश्यले
'भिक्षां देहि भवती' भन्नु पर्दछ ।

मातरं वा स्वसारं वा मातुर्वा भगिनीं निजाम् ।
भिक्षेत भिक्षां प्रथमं या चैनं नावमानयेत् ॥५०॥

ब्रह्मचारीले आफ्नू अनादर नहोस् भनी पहिले आफ्नी आमा, सानीआमा,
बहिनी आदिसँग भिक्षा माग्नु (लिनु) पर्दछ ।

समाहृत्य तु तद्भैक्षं यावदर्थममायया ।
निवेद्य गुरवेऽश्नीयादाचम्य प्राङ्मुखः शुचिः ॥५१॥

मागेर लेराएको भिक्षा संस्कार गरी पहिला गुरुलाई दिनु पर्दछ । त्यसपछि शुद्ध भई,
आचमन गरी पूर्वतिर फर्केर आफूले खानु पर्दछ ।

आयुष्यं प्राङ्मुखो भुङ्क्ते यशस्यं दक्षिणामुखः ।
श्रियं प्रत्यङ्मुखो भुङ्क्ते ऋतं भुङ्क्ते ह्युदङ्मुखः ॥५२॥



आयु चाहनेले पूर्वतिर, यश चाहनेले दक्षिणतिर, श्रीसम्पत्ति चाहनेले पश्चिमतिर र
सत्य चाहनेले उत्तरतिर फर्केर खाना खानु पर्दछ ।

उपस्पृश्य द्विजो नित्यमन्नमद्यात् समाहितः ।
भुक्त्वा चोपस्पेशेत्सम्यगद्भिः खानि स संस्पृशेत् ॥५३॥

द्विजले खाना खानुअघि बसी सावधान भई पहिले आचमन गर्नु पर्दछ । खाइ सकेपछि
पनि पुनः आचमन गरी चिसै हातले सबै अङ्ग स्पर्श गर्नु पर्दछ ।

पूजयेदशनं नित्यमद्याच्चैतदकुत्सयन् ।
दृष्ट्वा हृष्येत्प्रसीदेच्च प्रतिनन्देच्च सर्वशः ॥५४॥

सधैं भोजनको संस्कार गर्नु पर्दछ । भोजनलाई निन्दा गर्नु हुँदैन ।
प्रसन्न भई प्रशंसा गर्नु पर्दछ ।

**पूजितं ह्यशनं नित्यं बलमूर्जं च यच्छति ।**
**अपूजितं तु तद्भुक्तमुभयं नाशयेदिदम् ॥५५॥**

सुसंस्कृत अन्न खानाले बल र ऊर्जा दिन्छ भने असंस्कृत अन्न खानाले बल र ऊर्जा दुवै नाश गर्दछ ।

**नोच्छिष्टं कस्यचिद्दद्यान्नद्याच्चैव तथान्तरा ।**
**न चैवात्यशनं कुर्यान्न चोच्छिष्टः क्वचिद् व्रजेत् ॥५६॥**

आफ्नो जुठो कसैलाई दिन हुँदैन । रोकिई रोकिई खाना खान हुँदैन । धेरै खान हुँदैन । जुठै मुखले नचुठी कतै जान हुँदैन ।

**अनारोग्यमनायुष्यमस्वर्ग्यं चातिभोजनम् ।**
**अपुण्यं लोकविद्विष्टं तस्मात्तत्परिवर्जयेत् ॥५७॥**



धेरै खानाले निरोगिता, आयु र सुख प्राप्त हुँदैन । पुण्य पनि हुँदैन । लोकमा पनि “खञ्चुवा” भनेर निन्दित भइन्छ, त्यसैले धेरै नखानू ।

**ब्राह्मेण विप्रस्तीर्थेन नित्यकालमुपस्पृशेत् ।**
**कायत्रैदशिकाभ्यां वा न पित्र्येण कदाचन ॥५८॥**

ब्राह्मणले ब्रह्म, काय, प्राजापत्य वा देवतीर्थले आचमन गर्नू, पितृतीर्थले कहिल्यै पनि आचमन नगर्नू ।

**अङ्गुष्ठमूलस्य तले ब्राह्मं तीर्थं प्रचक्षते ।**
**कायमङ्गुलिमूलेऽग्रे दैवं पित्र्यं तयोरधः ॥५९॥**

बूढीऔंलाको फेदलाई ब्राह्मतीर्थ भनिन्छ । कान्छी औंलाको फेदलाई कायतीर्थ वा प्राजापत्यतीर्थ भनिन्छ । कान्छी औंलाको टुप्पोलाई देवतीर्थ भनिन्छ भने चोर र

बूढी औंलाको बीचको फेदलाई पितृतीर्थ भनिन्छ ।

**त्रिराचामेदपः पूर्वं द्वि प्रमृज्यात्ततो मुखम् ।**
**खानि चैव स्पृशेदद्भिरात्मनं शिर एव च ॥६०॥**

(अनुष्ठान शुरु गर्नु पूर्व द्विजले) पहिले तीन पटक आचमन गर्नू, दुई पटक मुख धुनू अनि आँखा, कान, नाक, जिब्रो तथा छालाका साथै हृदय र शिरलाई पनि चिसै हातले छुनू ।

**अनुष्णाभिरफेनाभिरद्भिस्तीर्थेन धर्मविद् ।**
**शौचेप्सुः सर्वदाऽऽचमेदेकान्ते प्रागुदङ्मुखः ॥६१॥**

अनुष्ठानमा आफूलाई शुद्ध र पवित्र पार्न चाहने धर्मशील व्यक्तिले पूर्व वा उत्तर फर्की बस्नू र सधैं तीर्थको फिँज नउठेको शीतल जलले नै आचमन गर्नू ।

**हृद्गाभिः पूयते विप्रः कण्ठगाभिस्तु भूमिपः ।**

**वैश्योऽद्भिः प्राशिताभिस्तु शूद्रः स्पृष्टाभिरन्ततः ॥६२॥**

जल हृदयमा पुगेपछि ब्राह्मण, जल घाँटीमा पुगेपछि क्षत्रिय, जल मुखमा परेपछि वैश्य र जलको स्पर्शमात्रले शूद्र पवित्र हुन्छ ।

**उद्धृते दक्षिणे पाणावुपवीत्युच्यते द्विजः ।**
**सव्ये प्राचीन आवीती निवीती कण्ठसज्जने ॥६३॥**

जनै दायाँ हातबाट निकालेर घाँटीबाट बायाँ हातमा राख्ने द्विजलाई उपवीती (अपसव्य), बायाँ हातबाट निकालेर दायाँ हातमा राख्नेलाई आवीती (सव्य) तथा दुईवटै हातबाट निकालेर घाँटीमा सिधा राख्नेलाई निवीती भनिन्छ ।

**मेखलामजिनं दण्डमुपवीतं कमण्डलुम् ।**
**अप्सु प्राश्य विनष्टानि गृह्णीतान्यानि मन्त्रवत् ॥६४॥**

मेखला, मृगचर्म, लौरो, जनै र कमण्डलु पुराना भए वा टुटफुट भए
जलमा सेलाउनू र मन्त्रपढी नयाँ ग्रहण गर्नू ।

**केशान्तः षोडशे वर्षे ब्राह्मणस्य विधीयते ।**
**राजन्यबन्धोर्द्वाविंशे वैश्यस्य द्व्यधिके ततः ॥६५॥**

ब्राह्मणको सोह्र वर्षमा केशान्त संस्कार गर्नुपर्ने विधान छ । क्षत्रियको बाईस वर्षमा र वैश्यको चौबीस वर्षमा गर्नू । (वेदको अध्ययन गर्न गुरुकुलमा बसेका बटुकको वेदाध्ययन सकेपछि गुरुकुलमै कपाल र दाह्री काट्ने संस्कारलाई केशान्त संस्कार भनिन्छ) ।

**अमन्त्रिका तु कार्येयं स्त्रीणामावृदशेषतः ।**
**संस्कारार्थं शरीरस्य यथाकालं यथाक्रमम् ॥६६॥**

स्त्रीको पनि तोकिएको समयमा र तोकिएकै क्रममा संस्कार गर्नू तर
तिनको संस्कारमा वेदमन्त्रको उच्चारण गर्न भने हुँदैन ।



**वैवाहिको विधिः स्त्रीणां संस्कारो वैदिकः स्मृतः ।**
**पतिसेवा गुरौ वासो, गृहार्थोऽग्निपरिक्रिया ॥६७॥**

बालकका संस्कार विधिहरु नै वालिकाका लागि पनि हुने छन् भनी शास्त्रले बताएको छ । विवाहपूर्व कन्यालाई पनि गुरुकुलमा बसेर पढ्न तथा बिहानबेलुकी यज्ञहोम आदि गर्न पूर्ण अधिकार छ । विवाहपछि भने स्त्रीले पतिसेवा र घर सम्भाल्ने (आदि जस्ता) थप कर्म गर्नु पर्दछ ।

**एष प्रोक्तो द्विजातीनां औपनायनिको विधिः ।**
**उत्पत्तिव्यञ्जकः पुण्यः कर्मयोगं निबोधत ॥६८॥**

द्विजातिको उपनयन-विधि बताइयो । यो संस्कारले जन्म-चिह्न र पुण्य दिन्छ ।
अब (यिनका) कर्तव्यका बारेमा सुन ।

**उपनीय गुरुः शिष्यं शिक्षयेच्छौचमादितः ।**
**आचारमग्निकार्यञ्च सन्ध्योपासनमेव च ॥६९॥**

गुरुले व्रतबन्ध गराएपछि शिष्यलाई पहिला शौच, आचारविचार, होम र सन्ध्योपासना आदिका बारेमा पढाउनु पर्दछ ।

**अध्येष्यमाणस्त्वाचान्तो यथाशास्त्रमुदङ्मुखः ।**
**ब्रह्माञ्जलिकृतोऽध्याप्यो लघुवासा जितेन्द्रियः ॥७०॥**

पढ्ने शिष्यले पनि पढ्न शुरु गर्नु अघि शास्त्रले बताएको विधिले आचमन गरी ब्रह्माञ्जली गरी उत्तरतिर फर्कनु, हलुका लुगा लगाउनु र जितेन्द्रिय भएर पढ्नु पर्दछ ।

**ब्रह्मारम्भेऽवसाने च पादौ ग्राह्यौ गुरोः सदा ।**
**संहत्य हस्तावध्येयं स हि ब्रह्माञ्जलिः स्मृतः ॥७१॥**



पढ्नु अघि र पढि सकेपछि आचार्यलाई श्रद्धापूर्वक प्रणाम गर्नू र निहुरी दुवै हातले चरण स्पर्श गर्नु भनेको “ब्रह्माञ्जली” हो ।

**व्यत्यस्तपाणिना कार्यमुपसङ्ग्रहणं गुरोः ।**
**सव्येन सव्यः स्प्रष्टव्यो दक्षिणेन च दक्षिणः ॥७२॥**

ब्रह्माञ्जली दिनु शिष्यको धर्म भएकोले पढ्नु अघि र पढि सकेपछि आचार्यलाई दाहिने हातले दाहिने गोडा र देब्रे हातले देब्रे गोडा छुनु पर्दछ ।

**अध्येष्यमाणं तु गुरुर्नित्यकालं अतन्द्रितः ।**
**अधीष्व भो इति ब्रूयाद्विरामोऽस्त्विति चारमेत् ॥७३॥**

अल्छि नगरी गुरुले पनि सधैँ पहिले पढ्न बसेका शिष्यलाई “हे शिष्य ! पढ” र अन्तमा “अब पढ्न छाड” भन्नु पर्दछ ।

**ब्रह्मणः प्रणवं कुर्यादादावन्ते च सर्वदा ।**
**स्रवत्येनोङ्कृतं पूर्वं परस्ताच्च विशीर्यति ॥७४॥**

वेद पढ्दा पढाइको शुरु र अन्तमा गुरुले शिष्यलाई "ॐ" भन्ने बानी बसाउनु पर्दछ । ॐ भन्ने गरे पढेको कुरा सम्झना भइरहन्छ ।

**प्राक्कूलान्पर्युपासीनः पवित्रैश्चैव पावितः ।**
**प्राणायामैस्त्रिभिः पूतस्ततः ॐकारमर्हति ॥७५॥**

शिष्यले टुप्पो अगिल्तिर पारी नघोच्ने गरी ओछ्याइएको कुशासनमा बसी, कुशकै औंठी लगाई, कुशले नै जल छर्की, आफूलाई पवित्र बनाउनू अनि तीन चोटी प्राणायाम गरी ॐ जप्न योग्य हुनु ।।

**अकारञ्चाप्युकारञ्च मकारञ्च प्रजापतिः ।**
**वेदत्रयान्निरदुहद्भूर्भुवः स्वरितीति च ॥७६॥**



ब्रह्माले तीन बेदबाट अकार, उकार र मकार तथा भूः, भुवः र स्वः-यी सार दोहेर निकालेका छन् ।

**त्रिभ्य एव तु वेदेभ्यः पादं पादमदूदुहत ।**
**तदित्यृचोऽस्याः सावित्र्याः परमेष्ठी प्रजापतिः ॥७७॥**

तीन वटै वेदलाई दोहेर ॐ बनाई सकेपछि फेरी प्रजापतिले वेदलाई दोहेर साररुपमा हरेक वेदबाट एक-एक पद (ऋग्वेदबाट 'तत्सवितुर्वरेण्यम्', यजुर्वेदबाट 'भर्गोदेवस्यधीमहि' तथा सामवेदबाट 'धियो यो नः प्रचोदयात्') निकालेर तीन वर्णको ॐ कार, तीन लोक जनाउने तीन व्याहृति र तीन पदको गायत्री मन्त्र सृजना गरे ।

**एतदक्षरमेतां च जपन् व्याहृतिपूर्विकाम् ।**
**सन्ध्ययोर्वेदविद्विप्रो वेदपुण्येन युज्यते ॥७८॥**

वेदविद् ब्राह्मणहरु दुवै सन्ध्यामा ॐकार र व्याहृति समेतको यो गायत्री
मन्त्र जपेर वेद पाठ गरेको पुण्य प्राप्त गर्दछन् ।

**सहस्रकृत्वस्त्वभ्यस्य बहिरेतत्त्रिकं द्विजः ।**
**महतोऽप्येनसो मासात् त्वचेवाऽहिर्विमुच्यते ॥७९॥**

जलाशयको स्वच्छ किनारमा आसनमा बसी एक महिनासम्म निरन्तर बिहानबेलुकी
गायत्री जप्ने ब्राह्मणलाई पापले काँचुलीले सर्पलाई छोडेझैं छोड्दछ ।

**एतयर्चा विसंयुक्तः काले च क्रियया स्वया ।**
**ब्रह्मक्षत्रियविड्योनिर्गर्हणां याति साधुषु ॥८०॥**

द्विज भएर पनि बिहानबेलुकी गायत्री मन्त्र नजप्ने तथा सन्ध्यावन्दन नगर्ने
व्यक्ति सज्जनद्वारा निन्दनीय हुन्छ र पतित मानिन्छ ।



**ओङ्कारपूर्विकास्तिस्रो महाव्याहृतयोऽव्ययाः ।**
**त्रिपदा चैव सावित्री विज्ञेयं ब्रह्मणो मुखम् ॥८१॥**

ॐकार भन्दापछि उच्चारण गरिने तीन व्याहृतिहरु कहिल्यै नष्ट नहुने सम्झनु पर्दछ ।
त्यसपछि उच्चारण हुने तीन पद ब्रह्माजीका तीन मुखबाट उच्चरित भएका
अत्यन्त पवित्र वाक्य हुन् भनी सम्झनु पर्दछ ।

**योऽधीतेऽहन्यहन्येतां त्रीणि वर्षाण्यतन्द्रितः ।**
**स ब्रह्म मरमभ्येति बायुभूतः खमूर्तिमान् ॥८२॥**

तीन वर्षसम्म लगातार गायत्री मन्त्र जप्ने मानिस पवित्र, अनायास ईश्वर प्राप्त गर्ने,
संसारबन्धनबाट मुक्त र वायु-गतिको हुन्छ तथा शरीर-बन्धनबाट
मुक्त भई आकाशाकार हुन्छ ।

**एकाक्षरं परं ब्रह्म प्राणायामाः परन्तपः ।**
**सावित्र्यास्तु परं नास्ति मौनात्सत्यं विशिष्यते ॥८३॥**

परब्रह्मको सर्वोत्कृष्ट पर्याय ॐकार, सर्वोत्कृष्ट तप प्राणायाम र सर्वोत्कृष्ट मन्त्र गायत्री हो । यी तीन वटै कुरा अद्वितीय छन् ।

**क्षरन्ति सर्वाः वैदिक्यो जुहोति-यजति-क्रियाः ।**
**अक्षरं त्वक्षरं ज्ञेयं ब्रह्म चैव प्रजापतिः ॥८४॥**

वेद अनुसार गरिने यज्ञयागादि सबै फलप्राप्ति भएपछि नासिन्छन् तर ॐकार ब्रह्मसमान अविनाशी एवं स्थायी हुन्छ ।

**विधियज्ञाज्जपयज्ञो विशिष्टो दशभिर्गुणैः ।**
**उपांशु स्याच्छतगुणः साहस्रो मानसः स्मृतः ॥८५॥**



विधिपूर्वक गरिने कुनै पनि यज्ञभन्दा ॐकारको जप गर्नु दश गुणा उत्तम हुन्छ । त्यसमा पनि उपांशु (एकान्तमा बसेर, एकाग्र भई, मुख नखोली, कुनै पनि रुपमा ओठले काम नलिई, सर्वथा मौन रहेर जिब्रोले गरिने) जप सय गुणा उत्तम हुन्छ । उपांशु जपभन्दा पनि मानस (ओठका साथसाथै जिब्रो पनि नचलाई मनबाट मात्र गरिने) ॐकारको जप हजार गुणा उत्तम हुन्छ ।

**येपाकयज्ञाश्चत्वारो विधियज्ञसमन्विताः ।**
**सर्वे ते जपयज्ञस्य कलां नार्हन्ति षोडशीम् ॥८६॥**

चार थरीका पाकयज्ञ (वैश्वदेव, बलिकर्म, नित्यश्राद्ध र अतिथि सेवा) तथा पौर्णमास आदि यज्ञ जपयज्ञको सोह्र भागको एक भाग जति पनि महत्व राख्दैनन् ।

**जप्येनैव तु संसिध्येद् ब्राह्मणो नात्र संशयः ।**
**कुर्यादन्यन्न वा कुर्यान्मैत्रो ब्राह्मण उच्यते ॥८७॥**

ब्राह्मणलाई जपयज्ञबाट सिद्धि प्राप्त हुने कुरामा कुनै शङ्का छैन । अरु यज्ञ गरोस्
नगरोस् तर जपयज्ञको प्रभावले नै उ लोकमा ब्राह्मण भनी चिनिन्छ ।

**इन्द्रियाणां विचरतां विषयेस्वपहारिषु ।**
**संयमे यत्नमातिष्ठेद्विद्वान् यन्तेव वाजिनाम् ॥८८॥**

जसरी एक कुशल सारथीले रथको गतिलाई सुचारु पार्न घोडालाई नियन्त्रण गर्दछ
त्यसरी नै व्यक्तिले जीवनको गति सुचारु पार्न इन्द्रियलाई नियन्त्रण गर्नु पर्दछ ।

**एकादशेन्द्रियाण्याहुर्यानि पूर्वे मनीषिणः ।**
**तानि सम्यक्प्रवक्ष्यामि यथावदनुपूर्वशः ॥८९॥**

पहिलेका मुनिजनले जुन एघार वटा इन्द्रियका बारेमा बताएका छन् त्यसलाई
म राम्ररी र क्रमैले बताउँदछु, सुन ।



**श्रोत्रं त्वक् चक्षुषी जिह्वा नासिका चैव पञ्चमी ।**
**पायूपस्थं हस्तपादं वाक्चैव दशमी स्मृता ॥९०॥**

कान, छाला, आँखा, जिब्रो, नाक, मलद्वार, मुतेन्द्रिय, हात, गोडा र मुख (वाणी)
गरी दश इन्द्रिय हुन्छन् ।

**बुद्धीन्द्रियाणि पञ्चैषां श्रोत्रादीन्यनुपूर्वशः ।**
**कर्मेन्द्रियाणि पञ्चैषां पाय्वादीनि प्रचक्षते ॥९१॥**

त्यसमध्ये कान आदि पाँच इन्द्रियलाई बुद्धीन्द्रिय वा ज्ञानेन्द्रिय र मलद्वार
आदि पाँच इन्द्रियलाई कर्मेन्द्रिय भनिन्छ ।

**एकादशं मनो ज्ञेयं स्वगुणेनोभयात्मकम् ।**
**यस्मिन् जिते जितावेतौ भवतः पञ्चकौ गणौ ॥९२॥**

एघारौं इन्द्रिय मन हो । आफ्नो विशिष्ट गुणले युक्त मन : यी दुवै थरी इन्द्रियको सञ्चालक हुन्छ । मन वशमा भएमा सवै इन्द्रिय वशमा हुन्छन् ।

**इन्द्रियाणां प्रसङ्गेन दोषमृच्छत्यसंशयम् ।**
**सन्नियम्य तु तान्येव ततः सिद्धिं नियच्छति ॥९३॥**

इन्द्रियको चपेटामा फसे निसन्देह दोषी होइन्छ ।
यसबाट आफूलाई रोकेमा त सिद्धि प्राप्त हुन्छ ।

**न जातु कामानामुपभोगेन शाम्यति ।**
**हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्धते ॥९४॥**

जसरी आगोमा घिउ हालेर आगो निभ्दैन झन् बढ्दछ, त्यसैगरी विषय भोग गरेर विषय भोग गर्ने इच्छा मर्दैन झन् झन् बढ्दछ ।



**यश्चैतान्प्राप्नुयात्सर्वान् यश्चैतान्केवलाँस्त्यजेत् ।**
**प्रापणात्सर्वकामानां परित्यागो विशिष्यते ॥९५॥**

यी सबै विषयको भोग गर्ने र यी सबैको त्याग मात्र गर्ने मानिसमध्ये कामनाको भोग गर्नेभन्दा त्याग गर्ने मानिस श्रेयस्कर हुन्छ ।

**न तथैतानि शक्यन्ते सन्नियन्तुमसेवया ।**
**विषयेषु प्रजुष्टानि यथा ज्ञानेन नित्यशः ॥९६॥**

विषय भोग नगरीकन पनि त्यसबाट हुने हानीका सम्बन्धमा ज्ञान भएमा छुटकारा प ाउन सकिन्छ अथवा इन्द्रियलाई नियन्त्रण गर्न सकिन्छ ।

**वेदास्त्यागश्च यज्ञाश्च नियमाश्च तपांसि च ।**
**न विप्रदुष्टभावस्य सिद्धिं गच्छन्ति कर्हिचित् ॥९७॥**

इन्द्रियको पासोमा परेपछि त्यसले वेदाध्ययन, दान, यज्ञ, नियम र तप आदिमा ध्यान लगाउन दिँदैन । फलतः मनमा दुष्ट विचार उत्पन्न भई कहिल्यै सिद्धि प्राप्त गर्न सकिँदैन ।

**श्रुत्वा स्पृष्ट्वा च दृष्ट्वा च भुक्त्वा घ्रात्वा च यो नरः ।**
**न हृष्यन्ति ग्लायति वा स विज्ञेयो जितेन्द्रियः ॥९८॥**

अनुकुल वा प्रतिकुल सुनेर, छोएर, हेरेर, खाएर वा सुँघेर जसलाई सुख वा दुःखको अनुभव हुँदैन, त्यो पुरुष नै जितेन्द्रिय पुरुष हो भनी सम्झनु पर्दछ ।

**इन्द्रियाणान्तु सर्वेषां यद्येकं क्षरतीन्द्रियम् ।**
**तेनास्य क्षरति प्रज्ञा दृतेः पात्रादिवोदकम् ॥९९॥**

मानिसका इन्द्रियमध्ये कुनै एउटा मात्र इन्द्रियको पनि विषयप्रति लगाव भयो भने त्यसले, सानो प्वाल परेको भाँडोबाट सबै पानी चुहिएझैं त्यसको बुद्धि चुहाउँदै नष्ट पार्दै जान्छ ।



**वशे कृत्वेन्द्रियग्रामं संयम्य च मनस्तथा ।**
**सर्वान्संध्याधयेदर्थानक्षिण्वन् योगतस्तनुम् ॥१००॥**

मानिसले योगद्वारा शरीरलाई कुनै कष्ट नपुऱ्याई दशै इन्द्रियलाई वशमा पार्ने र मनलाई संयमित बनाउने कामगरी धर्म, अर्थ, काम र मोक्षको सिद्धि प्राप्त गर्नु पर्दछ ।

**पूर्वां सन्ध्यां जपंस्तिष्ठेत्सावित्रीमाऽर्कदर्शनात् ।**
**पश्चिमां तु सदाऽऽसीत सम्यगृक्षविभावनात् ॥१०१॥**

बिहान (चार बजेदेखि) सूर्योदय नभएसम्म र साँझमा सूर्यास्त भएदेखि तारा नदेखिएसम्म गायत्री जप गरिरहनु पर्दछ ।

**पूर्वां सन्ध्यां जपंस्तिष्ठन्नैशमेनो व्यपोहति ।**
**पश्चिमां तु समासीनो मलं हन्ति दिवा कृतम् ॥१०२॥**

बिहानको जपले रातभरको र बेलुकीको जपले दिनभरको दुर्वासना (वा पाप) नाश हुन्छ ।

**न तिष्ठति तु यः पूर्वां नोपास्ते यश्च पश्चिमाम् ।**
**स शूद्रवद् बहिष्कार्यः सर्वस्माद् द्विजकर्मणः ॥१०३॥**

बिहान र बेलुकीको सन्ध्या नगर्ने ब्राह्मण, शूद्रलाईझैं कर्मबाट बहिष्कार गर्न योग्य हुन्छ ।

**अपां समीपे नियतो नैत्येकं विधिमास्थितः ।**
**सावित्रीमप्यधीयीत गत्वाऽरण्यं समाहितः ॥१०४॥**

जलाशयको नजिक एकान्त स्थलमा गएर एकाग्र चित्तले नित्यकर्म गरी र गायत्री जप्नु पर्दछ ।

**वेदोपकरणे चैव स्वाध्याये चैव नैत्यके ।**
**नानुरोधोऽस्त्यनध्याये होममन्त्रेषु चैव हि ॥१०५॥**



गुरुसँग वेद पढ्न, नित्य स्वाध्याय गर्न र यज्ञादिमा प्रयोग हुने मन्त्र उच्चारण गर्न अनध्यायमा पनि निषेध छैन भनिएको छ ।

**नैत्यके नास्तस्त्यनध्यायो ब्रह्मसत्रं हि तत्स्मृतम् ।**
**ब्रह्माहुतिहुतं पुण्यमनध्यायवषट्कृतम् ॥१०६॥**

नित्यकर्ममा अनध्याय हुँदैन किनकि यो ब्रह्मयज्ञ हो । फरक के छ भने अनध्यायमा नित्यकर्मको ब्रह्मयज्ञमा ब्रह्म आहुतिले होम गरी प्रत्येक आहुतिको अन्तमा 'स्वाहा' नभई 'वषट्' शब्द प्रयोग गर्नुपर्दछ ।

**यः स्वाध्यायमधीतेऽब्दं विधिना नियतः शुचिः ।**
**तस्य नित्यं क्षरत्येष पयो दधि घृतं मधु ॥१०७॥**

जसले एक वर्षसम्म नियममा रही विधिपूर्वक जलाशयको नजिकै एकान्तमा बसी

सन्ध्यावन्दन र गायत्री जप्दछ त्यसको घरमा दूध, दही, घिउ र महको वर्षा हुन्छ ।

**अग्नीन्धनं भैक्षाचर्यामधःशय्यां गुरोर्हितम् ।**
**आ समावर्तनात्कुर्यात्कृतोपनयनो द्विजः ॥१०८॥**

व्रतबन्ध गरेको द्विजले अध्ययन नसकिन्जेल नित्य होम, भिक्षाचरण, भूमिसयन, गुरुको हीत गर्ने आदि ब्रह्मचर्यका नियमहरु पालना गर्नु पर्दछ ।

**आचार्यपुत्रः शुश्रूषुर्ज्ञानदो धार्मिकः शुचिः ।**
**आप्तः शक्तोऽर्थदः साधुः स्वाऽध्याप्या दश धर्मतः ॥१०९॥**

आचार्य-पुत्र, गुरुकुलका पुराना सेवक, ज्ञानदाता, धार्मिक व्यक्ति, सदाचारी, सत्यवक्ता वा विश्वासिलो व्यक्ति, समर्थ, आर्थिक सहयोगी, साधु र हितकारी बन्धु-यी दशलाई पनि विश्वास गरेर तिनबाट धर्मशिक्षा ग्रहण गर्नुपर्दछ ।



**नापृष्टः कस्यचिद्ब्रूयान्न चान्यायेन पृच्छतः ।**
**जानन्नपि हि मेधावी जडवल्लोक आचरेत् ॥११०॥**

कसैले नसोधी कुनै कुरा नबताउनु, अन्यायपूर्वक सोधे पनि जवाफ नदिनु, बुद्धिमान भएपनि तिनका अगाडि केही पनि नजानेको जसरी बस्नु पर्दछ ।

**अधर्मेण च यः प्राह यश्चाधर्मेण पृच्छति ।**
**तयोरन्यतरः प्रैति विद्वेषं वाऽधिगच्छति ॥१११॥**

किन कि अर्धमपूर्वक जसले सोद्धछ वा जसले अधर्मपूर्वक जवाफ दिन्छ, ती दुईमध्ये एक मर्दछ वा द्वेषी हुने गर्दछ ।

**धर्मार्थौ यत्र न स्यातां शुश्रूषा वाऽपि तद्विधा ।**
**तत्र विद्या न वप्तव्या शुभं बीजमिवोषरे ॥११२॥**

जहाँ पढाएर धर्म, अर्थ वा श्रद्धा केही पनि पाइन्न त्यहाँ नपढाउनू, त्यहाँ दिइएको विद्यादान उन्नत बिउ लगेर मरुभूमीमा छर्नु जस्तै हुन्छ ।

**विद्ययैव समं कामं मर्तव्यं ब्रह्मवादिना ।**
**आपद्यपि हि घोरायां न त्वेनामिरिणे वपेत् ॥११३॥**

नपढाईकन मर्नु परे वा ठूलो आपत आए पनि अयोग्य शिष्यलाई नपढाउनू ।

**विद्या ब्राह्मणमेत्याह शेवधिष्टेऽस्मि रक्ष माम् ।**
**असूयकाय मां माऽदास्तथा स्यां वीर्यवत्तमा ॥११४॥**

सरस्वतीले आफ्नो संरक्षक ब्राह्मणसँग आएर भनिन् 'म तिम्रो सम्पत्ति हुँ । मेरो रक्षा गर । मलाई इर्ष्यालु, द्वेषी र उल्टो आचरण गर्ने व्यक्तिलाई नदेउ । यसो गर्दा म बलवान भइ रहन्छु" ।



**यमेव तु शुचिं विद्या नियतं ब्रह्मचारिणम् ।**
**तस्मै मां ब्रूहि विप्राय निधिपायाप्रमादिने ॥११५॥**

जो पवित्र छ, जसले इन्द्रियलाई जितेको छ, जो ब्रह्मचारी छ, जसले पढेको विद्यालाई संरक्षण र सम्वर्द्धन गर्न सक्छ त्यस्ता अप्रमादी शिष्यलाई देऊ' ।

**ब्रह्म यस्त्वननुज्ञातमधीयानादवाप्नुयात् ।**
**स ब्रह्मस्तेयसंयुक्तो नरकं प्रतिपद्यते ॥११६॥**

गुरुको अनुमति नलिई विद्यार्थीसँग जसले पढ्दछ उसले विद्या चोरेको पापमा नरक भोग्नु पर्दछ ।

**लौकिकं वैदिकं वाऽपि तथाऽऽध्यात्मिकमेव च ।**
**आददीत यतो ज्ञानं तं पूर्वमभिवादयेत् ॥११७॥**

लौकिक, कर्मकाण्ड र आध्यात्मिक विद्या पढाउने आचार्यलाई धेरै मान्यजनसँगै बसेको अवस्थामा सर्वप्रथम प्रणाम गर्नु पर्दछ ।

**सावित्रीमात्रसारोऽपि वरं विप्रः सुयन्त्रितः ।**
**नायन्त्रितस्त्रिवेदोऽपि सर्वाशी सर्वविक्रयः ॥११८॥**

वेदमन्त्रमध्ये गायत्री मन्त्र मात्र आउने वा गायत्री मन्त्र मात्र जप गर्ने ब्राह्मण पनि यदि जितेन्द्रिय छ भने शिष्यका अगाडि आदरणीय हुन्छ । तीन वटै वेद पढेको तर खान नहुने कुरा खाने र बेच्न नहुने कुरा बेच्ने ब्राह्मण तिनका अगाडि आदरणीय हुँदैन ।

**शय्यासनेऽध्याचरिते श्रेयसा न समाविशेत् ।**
**शय्यासनस्थश्चैवैनं प्रत्युत्थायाभिवादयेत् ॥११९॥**

शिष्यले मान्यजनको ओछ्यान-आसन प्रयोग नगर्नू, समान आसनमा नबस्नू अनि बसेको बेलामा मान्यजन आए आसन छोडी उठी प्रणाम गर्नू ।



**ऊर्ध्वं प्राणा ह्युत्क्रामन्ति यूनः स्थविर आयति ।**
**प्रत्यत्थानाभिवादाभ्यां पुनस्तान्प्रतिपद्यते ॥१२०॥**

मान्यजन आउँदा प्राण माथितिर उफ्रिन थाल्छ (मुटुको धडकन बढ्दछ) । बसेको स्थानबाट उठी झुकेर नमस्कार गर्दा प्राण पुनः पूर्वस्थितिमा फर्कन्छ ।(त्यसैले मान्यजनलाई उठेर अभिवादन गर्नू) ।

**अभिवादनशीलस्य नित्यं वृद्धोपसेविनः ।**
**चत्वारि तस्य वर्धन्ते आयुर्विद्या यशोबलम् ॥१२१॥**

सधैं वृद्धको सेवा र मान्यजनलाई अभिवादन गर्नेको आयु, विद्या, यश र बल गरी चार थोक बढ्दछ ।

**अभिवादात्परं विप्रो ज्यायांसमभिवादयन् ।**
**असौ नामाहमस्मीति स्वं नाम परिकीर्तयेत् ॥१२२॥**

ज्येष्ठ र श्रेष्ठ व्यक्तिलाई प्रणाम गरेपछि आफ्नो नाम बताउनू र आवश्यक परे थप परिचय समेत दिनू । (जस्तैः नमस्कार ! मेरो नाम हरि हो) ।

**नामधेयस्य ये केचिदभिवादं न जानते ।**
**तान्प्राज्ञोऽहमिति ब्रूयात् स्त्रियः सर्वास्तथैव च ॥१२३॥**

नाम वा परिचय दिन नजाने वा दिन आवश्यक नभए बुद्धिमानले नमस्कार भन्दै प्रणाम मात्र गर्नू । सबै मान्य स्त्रीलाई पनि यसैगरी अभिवादन गर्नू ।

**भोः शब्दं कीर्तयेदन्ते स्वस्य नाम्नोऽभिवादने ।**
**नाम्नां स्वरूपभावो हि भोभाव ऋषिभिः स्मृतः ॥१२४॥**



प्रणाम गर्दा नाम नलिनू "भो" भन्नू भनी ऋषिमुनीले बताएका छन् ।

**आयुष्मान् भव सौम्येति वाच्यो विप्रोऽभिवादने ।**
**अकाराश्चास्य नाम्नोऽन्ते वाच्यः पूर्वाक्षरः प्लुतः ॥१२५॥**

नमस्कारको प्रत्युत्तरमा ब्राह्मणले "आयुष्मान भव सौम्य !" भन्नू । नाम लिए लामो स्वरमा लिनू ।

**यो न वेत्त्यभिवादस्य विप्रः प्रत्यभिवादनम् ।**
**नाभिवाद्यः स विदुषा यथा शूद्रस्तथैव सः ॥१२६॥**

जो ब्राह्मण नमस्कारको प्रत्युत्तर दिन जान्दैन त्यो शूद्रतुल्य हो र (पुनः) नमस्कार गर्न लायक व्यक्ति होइन ।

**ब्राह्मणं कुशलं पृच्छेत्क्षत्रबन्धुमनामयम् ।**
**वैश्यं क्षेमं समागम्य शूद्रमारोग्यमेव च ॥१२७॥**

ब्राह्मण भए कुशलमङ्गल, छेत्री भए निरोगिता, वैश्य भए सुखदुःख र शुद्र भए आरोग्यको विषयमा सोध्नू ।

**अवाच्यो दीक्षितो नाम्ना यवीयानपि यो भवेत् ।**
**भोभवत्पूर्वकं त्वेनमभिभाषेत धर्मवित् ॥१२८॥**

दीक्षितलाई सानो भएपनि नामले नबोलाउनू । धर्मजान्नेले तिनलाई "भो" वा "तपाइँ" शब्दको प्रयोग गर्नू ।

**परपत्नी तु या स्त्री स्यादसम्बद्धा च योनितः ।**
**तां ब्रूयाद्भवतीत्येवं सुभगे भगिनीति च ॥१२९॥**



नातासम्बन्ध नभएका परस्त्रीहरुलाई सम्बोधन गर्दा पनि "तपाइँ, "भाग्यवती" वा "बहिनी" शब्दको प्रयोग गर्नु पर्दछ ।

**मातुलांश्च पितृव्यांश्च श्वशुरानृत्विजो गुरून् ।**
**असावहमिति ब्रूयात्प्रत्युत्थाय यवीयसः ॥१३०॥**

कम उमेरका मामा, काका, ठूलो बुबा, ससुरा, ऋत्विक र गुरुलाई पनि उठेर नमस्कार गर्नू र आफ्नो परिचय दिनू ।

**मातृष्वसा मातुलानी श्वश्रूरथ पितृष्वसा ।**
**सम्पूज्या गुरुपत्नीवत्समास्ताः गुरुभार्यया ॥१३१॥**

आमाका दिदीबहिनी, माइजू, सासू र फुपूहरु पनि गुरुपत्नीसमान पूजनीय हुन्छन् ।

**भ्रातुर्भार्योपसङ्ग्राह्या सवर्णाऽहन्यहन्यपि ।**
**विप्रोष्य तूपसङ्ग्राह्या ज्ञातिसम्बन्धियोषितः ॥१३२॥**

सजातीय जेठी भाउजूलाई प्रतिदिन प्रणाम गर्नू । अन्य नातेदार स्त्रीलाई परदेशबाट फर्कंदा प्रणाम गर्नू ।

**पितुर्भगिन्यां मातुश्च ज्यायस्यां च स्वसर्यपि ।**
**मातृवद्वृत्तिमातिष्ठेन्माता ताभ्यो गरीयसी ॥१३३॥**

पिताकी बहिनी, माताकी बहिनी र आफ्नी जेठी बहिनीलाई मातातुल्य आदरसत्कार गर्नुपर्दछ । तर, माताको स्थान यी तीन वटीको भन्दा माथि हुन्छ भन्नेकुरा सुनिश्चित छ ।

**दशाब्दाख्यं पौरसख्यं पञ्चाब्दाख्यं कलाभृताम् ।**
**त्र्यब्दपूर्वं श्रोत्रियाणां स्वल्पेनापि स्वयोनिषु ॥१३४॥**



एउटै ठाउँ (शहर)मा बसोबास गर्नेहरु दश वर्षको निरन्तर सङ्गतले साथीसाथी हुन्छन् । सङ्गीत, कला जान्ने भए पाँच वर्षको निरन्तर सङ्गतले साथीसाथी हुन्छन् । श्रोत्रिय भए तीन वर्षको र साख्ये नातेदार (वा सहोदर भए) एकैछिनको सङ्गतले साथीसाथी हुन्छन् ।

**ब्राह्मणं दशवर्षं तु शतवर्षं तु भूमिपम् ।**
**पितापुत्रौ विजानीयाद्ब्राह्मणस्तु तयोःपिता ॥१३५॥**

दश वर्षको ब्राह्मण र सय वर्षको क्षत्रिय (राजा) छन् भने पनि ती पितापुत्र समान हुन्छन्, ब्राह्मण पिता समान हुन्छ ।

**वित्तं बन्धुर्वयः कर्म विद्या भवति पञ्चमी ।**
**एतानि मानस्थानानि गरीयो यद्यदुत्तरम् ॥१३६॥**

सम्मानको आधार धर्मले कमाएको धन, नाता, आयु, कर्म र विद्या गरी पाँच थोक हुन् ।

यिमध्ये पछिल्लाको महत्व क्रमशः बढी हुन्छ ।

**पञ्चानां त्रिषु वर्णेषु भूयांसि गुणवन्ति च ।**
**यत्र स्युःसोऽत्रमानार्हः शूद्रोऽपि दशमीं गतः ॥१३७॥**

यी पाँच गुणमध्ये धेरै गुण हुने धेरै सम्माननीय हुन्छ ।
शूद्र पनि सय वर्षको हुँदा सम्माननीय हुन्छ ।

**चक्रिणो दशमीस्थस्य रोगिणो भारिणः स्त्रियाः ।**
**स्नातकस्य च राज्ञश्च पन्था देयो वरस्य च ॥१३८॥**

रथको रथी, सय वर्ष पुग्न लागेका वृद्ध, रोगी, भरिया, स्त्री, स्नातक, राजा र बेहुलालाई कतै भेट हुँदा बाटो छाड्ने गर्नु पर्दछ ।

**तेषां तु समवेतानां मान्यो स्नातकपार्थिवौ ।**

**राजस्नातकयोश्चैव स्नातको नृपमानभाक् ॥१३९॥**

एकैपटक भेटहुँदा पहिले राजा र स्नातकलाई प्राथमिकता दिनु पर्दछ । राजा र स्नातकको भेटहुँदा राजाले स्नातकलाई बाटो छाडिदिनु पर्दछ ।

**उपनीय तु यः शिष्यं वेदमध्यापयेद् द्विजः ।**
**सङ्कल्पं सरहस्यं च तमाचार्यं प्रचक्षते ॥१४०॥**

जसले उपनयन गराई, व्रत सिकाई वेद पढाउँछ त्यो आचार्य हो भनी जान्नू ।

**एकदेशं तु वेदस्य वेदाङ्गान्यपि वा पुनः ।**
**योऽध्यापयति वृत्त्यर्थमुपाध्यायःस उच्यते ॥१४१॥**

आजीविकाका लागि वेदको कुनै एक अंश, शाखा, कुनै एक वेद वा वेदका छ अङ्गमध्ये

कुनै एकको अध्यापन गर्नेलाई उपाध्याय भनिन्छ ।

**निषेकादीनि कर्माणि यः करोति यथाविधिः ।**
**सम्भावयति चान्नेन सः विप्रो गुरुरुच्यते ॥१४२॥**

शास्त्रोक्त विधिले शिष्यलाई गर्भाधानादि सोह्र संस्कार गराउने र अध्ययनकालमा अन्नादि खुवाउने ब्राह्मणलाई गुरु भनिन्छ ।

**अग्न्याधेयं पाकयज्ञानग्निष्टोमादिकान्मखान् ।**
**यःकरोति वृतो यस्य स तस्यर्त्विगिहोच्यते ॥१४३॥**

यज्ञमा अग्नि आवाहन वा पाक-बलिवैश्वदेव-अग्निष्टोम आदि यज्ञ सम्पन्नार्थ वरण गरिएको ब्राह्मणलाई ऋत्विक (ज्) भनिन्छ ।

**य आवृणोत्यवितथं ब्रह्मणा श्रवणावुभौ ।**

**स माता स पिता ज्ञेयस्तं न द्रुह्येत्कदाचन ॥१४४॥**

विधिले वेद पढाई शिष्यका दुवै कान पवित्र बनाउने ब्राह्मण मातापिता समान हुने हुनाले उनीसँग कहिल्यै द्रोह नगर्नू ।

**उपाध्यायान्दशाचार्य आचार्याणां शतं पिता ।**
**सहस्रं तु पितृन्माता गौरवेणातिरिच्यते ॥१४५॥**

दश जना उपाध्याय जत्तिको गौरव एक आचार्यमा, सय जना आचार्य जत्तिको गौरव एक पितामा र हजार पिता जत्तिको गौरव एक मातामा हुन्छ ।

**उत्पादकब्रह्मदात्रोर्गरीयान् ब्रह्मदः पिता ।**
**ब्रह्मजन्म हि विप्रस्य प्रेत्य चेह च शाश्वतम् ॥१४६॥**

जन्मदिनेलाई जस्तै वेद पढाउनेलाई पनि पिता भनिए पनि वेद पढाउने पिता ठूला हुन्छन् किनकि वेदको ज्ञानले नै यो लोक र परलोक सुध्रन्छ ।

**कामान्माता पिता चैनं यदुत्पादयतो मिथः ।**
**सम्भूतिं तस्य तां विद्याद्योनावभिजायते ॥१४७॥**

प्रायशःसन्तानको उद्देश्यले नभई मातापिताको वासनाको तृप्तीको लागि गरिने संभोगले अनायाश गर्भ रही उचित संरक्षण पछि बालक जन्मन्छ तर आचार्यले आफ्नो शिष्यलाई विधिपूर्वक विद्या पढाई सुशिक्षित बनाउँदछन्...।

**आचार्यस्त्वस्य यां जातिं विधिवद्वेदपारगः ।**
**उत्पादयति सावित्र्या सा सत्या साऽजराऽमरा ॥१४८॥**

बन्द र प्रकाशहीन नेत्रलाई दिव्यचक्षुमा बदलिदिन्छन्, गायत्री दिई द्विज बनाउँदछन् र अजर-अमर-शाश्वत ब्रह्मलाई साक्षातकार गराउन मद्दत गर्दछन् ।



**अल्पं वा बहु वा यस्य श्रुतस्योपकरोति यः ।**
**तमपीह गुरूं विद्याच्छ्रुतोपक्रियया तया ॥१४९॥**

ब्रह्मचारीले आचार्य बाहेकका धेरथोर वेद पढाउने उपाध्यायलाई पनि कृतज्ञतापूर्वक गुरूको रूपमा स्वीकार गरी आदरसम्मान गर्नु पर्दछ ।

**ब्राह्मस्य जन्मनः कर्त्ता स्वधर्मस्य च शासिता ।**
**बालोऽपि विप्रो वृद्धस्य पिता भवति धर्मतः ॥१५०॥**

शिष्यलाई ब्रह्मविद्या सिकाउने र द्विज बनाउने आचार्य, उमेरमा सानै भएपनि धर्मले पितासमान हुन्छन् ।

**अध्यापयामास पितृन् शिशुरङ्गिरसः कविः ।**
**पुत्रका इति होवाच ज्ञानेन परिगृह्य तान् ॥१५१॥**

कवि अङ्गिराका विद्वान पुत्रले जेठा तर ज्ञानमा कान्छा नातेदारलाई वेद पढाउँदा 'हे पुत्र !' भनी सम्बोधन गर्ने गर्दथे ।

**ते तमर्थमपृच्छन्त देवानागतमन्यवः ।**
**देवाश्चैतान् समेत्योचुर्न्याय्यं वः शिशुरुक्तवान् ॥१५२॥**

(त्यो देखी) नातेदारहरु अपमान महशुस गरी 'पुत्र' को अर्थ सोध्न देवतासमक्ष गए । देवताले भने कि "त्यो बालकले जे भनेको छ ठीक भनेको छ" ।

**अज्ञो भवति वै बालः पिता भवति मन्त्रदः ।**
**अज्ञं हि बाल इत्याहुः पितेत्येव तु मन्त्रदम् ॥१५३॥**



किनकि अज्ञानी भनेको बालक हो र मन्त्रदिने पिता हो ।
यसैले नजान्नेलाई बालक र मन्त्रदान दिनेलाई पिता भनिन्छ ।

**न हायनैर्न पलितैर्न वित्तेन न बन्धुभिः ।**
**ऋषयश्चक्रिरे धर्मं योऽनूचान स नो महान् ॥१५४॥**

उमेर बढी हुँदैमा, कपाल फुल्दैमा, धनी हुँदैमा वा नाताले ठूलो हुँदैमा कोही ठूलो हुँदैन, जो वेदाध्ययनले धर्मलाई जान्दछ र सो अनुसार आचरण गर्दछ त्यो नै हामी ऋषिमध्ये पनि ठूलो हुन्छ भन्ने व्यवस्था ऋषिहरुले नै गरेका हुन् ।

**विप्राणां ज्ञानतो ज्यैष्ठ्यं क्षत्रियाणां तु वीर्यत ।**
**वैश्यानां धान्यधनतः शूद्राणामेम जन्मतः ॥१५८॥**

उत्कृष्टताको आधार ब्राह्मणको ज्ञान, क्षत्रियको पराक्रम, वैश्यको धनधान्य र

शूद्रको जन्मले (कर्तव्य निर्वाह वा उमेर) हो ।

**न तेन वृद्धो भवति येनास्य पलितं शिरः ।**
**यो वै युवाऽप्यधीयानस्तं देवाःस्थविरं विदुः ॥१५६॥**

कपाल फुल्दैमा कोही बूढो हुँदैन, पढेको युवालाई पनि देवताले वृद्ध मानेका छन् ।

**यथा काष्ठमयो हस्ती यथा चर्ममयो मृगः ।**
**यश्च विप्रोऽनधीयानस्त्रयस्ते नाम बिभ्रति ॥१५७॥**

काठको हात्ती र छालाको मृगजस्तै अध्ययन नगरेको ब्राह्मण पनि नाममात्रको ब्राह्मण हुन्छ ।

**यथा षण्ढोऽफलः स्त्रीषु यथा गौर्गवि चाफला ।**
**यथा चाऽज्ञेऽफलं दानं तथा विप्रोऽनृचोऽफलः ॥१५८॥**



जसरी नपुंसक पुरुष स्त्रीका लागि, गोरु गाईका लागि र दान मूर्खका लागि दान निरर्थक हुन्छ त्यसैगरी वेदविद्याले रहित ब्राह्मणको जन्म र जीवन निरर्थक हुन्छ ।

**अहिंसयैव भूतानां कार्यं श्रेयोऽनुशासनम् ।**
**वाक् चैव मधुरा श्लक्ष्णा प्रयोज्या धर्ममिच्छता ॥१५९॥**

आफ्नु मन, वचन र कर्मले कुनै प्रकारको हानी वा कष्ट नपुर्‍याइकन अरुलाई सुशिक्षित पार्ने वा तिनको पथप्रदर्शन गर्ने विधि नै धर्मअनुसारको र चीरस्थायी विधि हो ।

**यस्य वाङ्मनसी शुद्धे सम्यग्गुप्ते च सर्वदा ।**
**स वै सर्वमवाप्नोति वेदान्तोपगतं फलम् ॥१६०॥**

जसको मन तथा बचन सदा शुद्ध र संयमित हुन्छ त्यसले यथार्थरुपमा वेदले बताएका सबै फलहरु प्राप्त गर्ने गर्दछ ।

**नारुन्तुदः स्यादार्त्तोऽपि न परद्रोहकर्मधीः ।**
**ययाऽस्योद्विजते वाचा नालोक्यां तामुदीरयेत् ॥१६१॥**

दबावमा पनि अर्कालाई चित्त दुख्ने कुरा नगर्नू । अरुसँग वैमनश्यता बढाउने बुद्धि नगर्नू । बोलेर अरु डराउने र लोकलाई अहीत गर्ने कुनै कुरा पनि नबोल्नू ।

**सम्मानाद्ब्राह्मणो नित्यमुद्विजेत विषादिव ।**
**अमृतस्येव चाकाङ्क्षेदवमानस्य सर्वदा ॥१६२॥**

ब्राह्मणले सधै सम्मानलाई विषसमान ठानी परित्याग गर्दै अपमानलाई अमृत ठानी स्वागत गर्नु पर्दछ ।

**सुखं ह्यवमतः शेते सुखं च प्रतिबुध्यते ।**
**सुखं चरति लोकेऽस्मिन्नवमन्ता विनश्यति ॥१६३॥**



अपमानको वास्ता नगर्ने सुखले सुत्दछ, उठ्दछ र दैनिक व्यवहार गर्दछ अनि त अपमानकर्ता नै पश्चातापको पापरुपी अग्नीमा जलेर नष्ट हुन्छ ।

**अनेन क्रमयोगेन संस्कृतात्मा द्विजः शनैः ।**
**गुरौ वसन् सञ्चिनुयाद्ब्रह्माधिगमिकं तपः ॥१६४॥**

यही क्रमले संस्कारित द्विजले आचार्यको संरक्षण र आज्ञा अनुसार आफ्नू जीवन चलाउँदै वेदविद्याको प्राप्तिका लागि कठोर साधना गर्नु पर्दछ ।

**तपोविशेषैर्विविधैर्व्रतैश्च विधिचोदितैः ।**
**वेदःकृत्स्नोऽधिगन्तव्यःसरहस्यो द्विजन्मना ॥१६५॥**

द्विजको शास्त्र बमोजिम यम-नियम आदि विशिष्ट तपसाधना तथा ब्रह्मचर्य आदि व्रतहरुको पालना र उपनिषद सहित वेदको ज्ञान प्राप्त गर्नु कर्तव्य हो ।

**वेदमेव सदाभ्यस्येत्तपस्तप्स्यन् द्विजोत्तमः ।**
**वेदाभ्यासो हि विप्रस्य तपः परमिहोच्यते ॥१६६॥**

साँच्चिनै तप गर्न चाहने ब्राह्मणले वेदको स्वाध्याय गर्नू, किनकि संसारमा वेदको ज्ञानभन्दा ठूलो लक्ष अर्को छैन । यो प्राप्त गर्नु नै जीवनको सर्वोत्तम र सर्वोच्च आदर्श बनाउनु हो ।

**आ हैव स नखाग्रेभ्यः परमं तप्यते तपः ।**
**यः स्रग्व्यपि द्विजोऽधीते स्वाध्यायं शक्तितोऽन्वहम् ॥१६७॥**

जो द्विज गृहस्थाश्रममा प्रवेश गरेर पनि नित्य यथाशक्ति वेदको अध्ययन गर्दछ, त्यसले निश्चय नै टुपीदेखि पैँतालासम्म परम (कठोर) तप गर्दछ ।

**योऽनधीत्य द्विजो वेदमन्यत्र कुरुते श्रमम् ।**
**स जीवन्नेव शूद्रत्वमाशु गच्छति सान्वयः ॥१६८॥**



जो द्विज वेद नपढी अन्य कर्म गर्न श्रम गर्दछ, त्यो जिवितै आफ्नू वंशसहित शूद्रतामा पुग्दछ ।

**मातुरग्रेऽधिजननं द्वितीयं मौञ्जिबन्धने ।**
**तृतीयं यज्ञदीक्षायां द्विजस्य श्रुतिचोदनात् ॥१६९॥**

द्विजको पहिलो जन्म आमाको कोखबाट दोश्रो जन्म कन्धनी बाँधेर र तेश्रो जन्म यज्ञ-दिक्षा लिएर (गृहस्थाश्रममा प्रवेश गरी पुरोहित वरण गरेर) हुन्छ भनेर वेदले बताएको छ ।

**तत्र यद् ब्रह्मजन्मास्य मौञ्जीबन्धनचिह्नितम् ।**
**तत्रास्य माता सावित्री पितात्वाचार्य उच्यते ॥१७०॥**

कन्धनी बाँधेर हुने दोश्रो ब्रह्मजन्ममा उसकी माता सावित्री र पिता आचार्य हुन्छन् ।

**वेद प्रदानादाचार्यं पितरं परिचक्षते ।**
**न ह्यस्मिन् युज्यते कर्म किञ्चिदामौञ्जिबन्धनात् ॥१७१॥**

यस अघि उसलाई वैदिक-कर्म विधिविधानले गर्ने कुनै अधिकार हुँदैन । यसैले वेद पढाई कर्मको अधिकार दिने आचार्यलाई दोश्रो पिता भनिएको हो ।

**नाभिव्याहरयेद् ब्रह्म स्वधानिनयनादृते ।**
**शूद्रेण हि समस्तास्तावद्यावद्वेदे न जायते ॥१७२॥**

उपनयनपूर्व वेदमन्त्र उच्चारण गर्ने कुनै अधिकार हुँदैन, पिताको मृत्युमा उच्चारण गरिने वेदमन्त्र अपवाद मात्र हो । उपनयन नगरिएसम्म बालक शूद्र हुन्छ र शूद्रलाई वेदपाठ गर्न निषेध छ ।

**कृतोपनयनस्यास्य व्रतादेशनमिष्यते ।**
**ब्रह्मणो ग्रहणं चैव क्रमेण विधिपूर्वकम् ॥१७३॥**



उपनयन पछि मात्र ब्रह्मचर्य व्रतका नियमहरु पालना गर्नू, उपनयन अघि पालना गर्नु कुनै पनि हालतमा उचित हुँदैन ।

**यद् यस्य विहितं चर्म यत्सूत्रं या च मेखला ।**
**यो दण्डो यच्च वसनं तत्तदस्य व्रतेष्वपि ॥१७४॥**

वर्णानुसार ब्रह्मचारीलाई व्रतबन्धमा जेजस्ता मृगचर्म, जनै, कन्दनी र दण्ड लगाइ दिएका छन् उसले गर्ने सबै व्रतमा त्यसैलाई धारण गर्नुपर्ने शास्त्रीय विधान छ ।

**सेवेतुमांस्तु नियमान्ब्रह्मचारी गुरौ वसन् ।**
**सन्नियम्येन्द्रियग्रामं तपोवृद्ध्यर्थमात्मनः ॥१७५॥**

ब्रह्मचारीले गुरुकुलमा रहँदा आफ्ना इन्द्रियलाई संयमित बनाई आफ्नै तपस्या बढाउन (तल उल्लेख भएका) नियमहरुको पालना गर्नु पर्दछ ।

**नित्यं स्नात्वा शुचिः कुर्याद्देवर्षिपितृतर्पणम् ।**
**देवताभ्यर्चनं चैव समिदाधानमेव च ॥१७६॥**

नित्य स्नानबाट शुद्ध र पवित्र भएपछि ऋषि र पितृलाई तर्पण गरी समिधा बटुलेर होम गर्दै देवताहरुको पूजाअर्चना गर्नु पर्दछ ।

**वर्जयेन्मधु मांसं च गन्धं माल्यं रसान् स्त्रियः ।**
**शुक्तानि यानि सर्वाणि प्राणिनां चैव हिंसनम् ॥१७७॥**

मद्य, मासु, सुगन्ध, पुष्पमाला, भुटिएका र सडेगलेका खाद्य, जीवहिँसा र स्त्रीको सङ्गत जस्ता कुराहरु सर्वथा त्याग्नु पर्दछ ।

**अभ्यङ्गमञ्जनं चाक्ष्णोरुपानच्छत्रधारणम् ।**
**कामं क्रोधं च लोभं च नर्तनं गीतवादनम् ॥१७८॥**



तेल-घिउ घस्ने; गाजल र जुत्ता लगाउने; छाता ओढ्ने; काम, क्रोध, र लोभमा लाग्ने तथा नाच, गान र बजान आदि जस्ता काम गर्न हुँदैन ।

**द्यूतं च जनवादं च परिवादं तथानृतम् ।**
**स्त्रीणां च प्रेक्षणालम्भावुपघातं परस्य च ॥१७९॥**

जुवा खेल्न, विवाद-कलह-ख्यालठट्टा-निन्दा-मिथ्याभाषण गर्न, स्त्रीलाई हेर्न-ख्यालठट्टा गर्न-मेलजोल बढाउन तथा कसैलाई शारीरिक वा मानसिक चोट पुर्‍याउन हुँदैन ।

**एकः शयीत सर्वत्र न रेतः स्कन्दयेत्क्वचित् ।**
**कामाद्धि स्कन्दयन् रेतो हिनस्ति व्रतमात्मनः ॥१८०॥**

जहाँ पनि एक्लै सुत्नू । वीर्यपात नगर्नू । विषयका बारेमा सोच्दै वीर्यपात गर्नेको ब्रह्मचर्य व्रत खण्डित भई उसको साधना नष्ट हुन्छ ।

**स्वप्ने सिक्त्वा ब्रह्मचारी द्विजः शुक्रमकामतः ।**
**स्नात्वाऽर्कमर्चयित्वा त्रिः पुनर्मामित्यृचं जपेत्॥१८१॥**

सपनामा अचानक वीर्यपात भएमा उठेर नुहाउनू, सूर्यको पूजा गर्नू र तीन पटक 'पुनर्मामिलेन्द्रियम्' ऋचाको पाठ गर्नू ।

**उदकुम्भं सुमनसो गोशकृन्मृत्तिकाकुशान् ।**
**आहरेद्यावदर्थानि भैक्षं चाहरहश्चरेत्॥१८२॥**

जलको घडा, फूल, गोबर, माटो, कुश र भिक्षा प्रत्येक दिन नयाँ लिएर आउनू अर्थात संग्रह गरेर नराख्नू ।

**वेदयज्ञैरहीतानां प्रशस्तानां स्वकर्मसु ।**
**ब्रह्मचार्याहरेद्भैक्षं गृहेभ्यः प्रयतोऽन्वहम्॥१८३॥**



नित्य वैदिक यज्ञ गर्ने, वेदपाठ गर्ने वा शास्त्र अनुसार नित्यकर्म गर्नेका घरबाट मात्र भिक्षा लेराउनू नगर्नेको घरबाट नलेराउनू ।

**गुरोः कुले न भिक्षेत न ज्ञातिकुलबन्धुषु ।**
**अलाभे त्वन्यगेहानां पूर्वं पूर्वं विवर्जयेत्॥१८४॥**

आफ्नो गुरुकुल, कुल र नजिक वा टाढाका नातेदार सँग भिक्षा नमाग्नू ।

**सर्वं वाऽपि चरेद् ग्रामं पूर्वोक्तानामसम्भवे ।**
**नियम्य प्रयतो वाचमभिशस्तांस्तु वर्जयेत्॥१८५॥**

अन्तबाट भिक्षा पाइएन भने क्रमशः छाडी यिसँग पनि भिक्षा माग्नू । यिबाट समेत भिक्षा नमिले पुरै गाउँका जोसुकैसँग भिक्षा माग्न सकिन्छ । तर, उसले आफ्नो वचनको दुरुपयोग गर्न र महापापीको अन्न ग्रहण गर्न भने हुँदैन ।

**दूरादाहृत्य समिधः सन्निदध्याद्विहायसि ।**
**सायंप्रातश्च जुहुयात्ताभिरग्निमतन्द्रितः ॥१८६॥**

समिधाहरु टाढाको वनबाट लेराएर कुनै अग्लो स्थानमा राख्नू र अल्छी नगरी दिनहुँ होम आदि गर्नू ।

**अकृत्वा भैक्षाचरणमसमिध्य च पावकम् ।**
**अनातुरः सप्तरात्रमवकीर्णिव्रतं चरेत् ॥१८७॥**

अस्वस्थ हुँदामा बाहेक भिक्षाटन र समिधाद्वारा होम नगर्ने ब्रह्मचारीको नग्न भएको ब्रह्मचर्य व्रतको उद्धारको लागि सात रातको अवकीर्णि नामको व्रत बस्नु पर्दछ ।

**भैक्षेण वर्त्तयेन्नित्यं नैकान्नादी भवेद्व्रती ।**
**भैक्षेण व्रतिनो वृत्तिरुपवाससमा स्मृता ॥१८८॥**



ब्रह्मचारीले सधैं भिक्षान्नले नै भोक मेटाउनु त्यो पनि एउटै घरको भिक्षाले होइन । श्रेष्ठ मुनीहरु भिक्षा-निवृत्तिलाई उपवास नै मान्दछन् ।

**व्रतवद्देवदैवत्ये पित्र्ये कर्मण्यथर्षिवत् ।**
**काममभ्यर्थितोऽश्नीयाद् व्रतमस्य न लुप्यते ॥१८९॥**

कुनै सदाचारी गृहस्थीले देव वा पितृकर्म गरी बोलाएको भोजमा एक घरमा एक दिन गई खाएर ब्रह्मचारीको व्रत तोर्डिंदैन ।

**ब्राह्मणस्यैव कर्मैतदुपदिष्टं मनीषिभिः ।**
**राजन्यवैश्ययोस्त्वेवं नैतत्कर्म विधीयते ॥१९०॥**

एक घरमा एक दिन भोजन गरेर व्रत खण्डित हुँदैन भनिएको ब्राह्मण ब्रह्मचारीलाई मात्र हो । क्षत्रिय र वैश्य ब्रह्मचारीलाई शास्त्रले यस्तो छुट दिएको छैन ।

**चोदितो गुरुणा नित्यमप्रचोदित एव वा ।**
**कुर्यादध्ययने यत्नमाचार्यस्य हितेषु च ॥१९१॥**

आचार्यको आदेश पर्खी वा नपर्खी नियमानुसार प्रतिदिन वेदाध्ययनमा र उनको सेवामा लागिरहनु पर्दछ ।

**शरीरं चैव वाचं च बुद्धीन्द्रियमनांसि च ।**
**नियम्य प्राञ्जलिस्तिष्ठेद्वीक्षमाणो गुरोर्मुखम् ॥१९२॥**

आफ्नो शरीर, बोली, मन, वुद्धि जस्ता सबै इन्द्रियलाई संयमित बनाई सदैव विनम्रतापूर्वक आचार्यको समीपमा नै बस्नु पर्दछ ।

**नित्यमुद्धृतपाणिः स्यात्साध्वाचारः सुसंवृतः ।**
**आस्यतामिति चोक्तःसन्नासीताभिमुखं गुरोः ॥१९३॥**



ओढ्नीबाट सधैं दाहिने हात बाहिर निकाली स्वस्थताको परिचय दिनू । आचार्यले बस्ने सङ्केत नगरेसम्म हात जोडी उनका अगाडि उभिइरहनू ।

**हीनान्नवस्त्रवेशः स्यात्सर्वदा गुरूसन्निधौ ।**
**उत्तिष्ठेत्प्रथमं चास्य चरमं चैव संविशेत् ॥१९४॥**

ब्रह्मचारीले खानपिन र पहिरन सादा र स्वच्छ गर्नु पर्दछ । आचार्य सुतेपछि सुत्ने र उनी उठ्नु अघि नै उठ्ने गर्नु पर्दछ ।

**प्रतिश्रवणसम्भाषे शयानो न समाचरेत् ।**
**नासीनो न च भुञ्जानो न तिष्ठन्न पराङ्मुखः ॥१९५॥**

आचार्यसँग सुतेर, उँघेर, पल्टेर वा बसेर र खाँदै कुराकानी नगर्नू तथा पीठ फर्काएर पनि कुराकानी नगर्नू ।

**आसीनस्य स्थितः कुर्यादभिगच्छंस्तु तिष्ठतः ।**
**प्रतयुद्गम्य त्वाव्रजतः पश्चाद्धावंस्तु धावतः ॥१९६॥**

आचार्य बसे आफू उठेर, उठे नजिकै गएर, आफूतिर आउन लागे उनितिरै गएर तथा हिँडिरहे पछिपछि लागेर कुराकानी गर्नू ।

**पराङ्मुखस्याभिमुखो दूरस्थस्यैत्य चान्तिकम् ।**
**प्रणम्य तु शयानस्य निदेशे चैव तिष्ठतः ॥१९७॥**

बोलाउँदा अन्त फर्केका भए सामुन्ने जानू, टाढा भए नगिचै पुग्नू र सुतिरहेका छन् भने नमस्कार गर्दै उभिइरहनू र उठेपछि नतमस्तक भई कुराकानी गर्नू ।

**नीचं शय्यासनं चास्य नित्यं स्याद् गुरुसन्निधौ ।**
**गुरोस्तु चक्षुर्विषये यथेष्टासनो भवेत् ॥१९८॥**



आफ्नो ओछ्यान-आसन गुरुको भन्दा तल बनाउनू । गुरुको भन्दा अग्लो आसनमा तथा अशिष्ट तरिकाले नबस्नू ।

**नोदाहरेदस्य नाम परोक्षमपि केवलम् ।**
**न चैवास्यानुकुर्वीत गतिभाषितचेष्टितम् ॥१९९॥**

गुरुका पछाडि पनि नाम नकाट्नू । शिष्यले भुलेर पनि उनको बोली वा व्यवहारको नक्कल नगर्नू ।

**गुरोर्यत्र परिवादो निन्दा वापि प्रवर्तते ।**
**कर्णौ तत्र पिधातव्यौ गन्तव्यं वा ततोऽन्यतः ॥२००॥**

जहाँ आचार्यको दोष वा निन्दा हुन्छ त्यहाँ कान थुन्नू वा त्यहाँबाट अन्तै हिँडिदिनू ।

**परिवादात्खरो भवति श्वा वै भवति निन्दकः ।**
**परिभोक्ता कृमिर्भवति कीटो भवति मत्सरीः ॥२०१॥**

आचार्यको निन्दा सुन्ने गधा, निन्दा गर्ने कुकुर, अनुचित द्रव्य भोग गर्ने कीरा
तथा डाहगर्ने शिष्य फोहोरको कीरा भएर जन्मन्छ ।

**दुरस्थो नार्चयेदेनं न क्रुद्धो नान्तिके स्त्रियाः ।**
**यानासनस्थश्चैवेनमवरुह्याभिवादयेत् ॥२०२॥**

टाढाबाट, रिसाएर वा पत्नीसँग बसेका बेलामा उनको पूजा नगर्नू । सवारीमा र कुनै आसनमा
बसेको बखत आचार्य आए ओर्लेर अभिवादन गर्नू ।

**प्रतिवातेऽनुवाते च नासीत गुरुणा सह ।**
**असंश्रवे चैव गुरोर्न किञ्चिदपि कीर्तयेत् ॥२०३॥**



आफूहुँदै आचार्यतिर वा आचार्यतिर हुँदै आफूतिर हावा चलिरहँदा नबस्नू ।
आचार्य सुन्न सक्दैनन् भने केही नबोल्नू ।

**गोऽश्वोष्ट्रयानप्रासादप्रस्तरेषु कटेषु च ।**
**आसीत् गुरुणा सार्द्धं शिलाफलकनौषु च ॥२०४॥**

विशेष स्थितिमा अर्थात बैल-घोडा-ऊँटका गाडा, छत, ढुङ्गा, गुन्द्री, ढुङ्गा वा
काठको चौकी तथा डुङ्गामा भने आचार्यसँगै बस्न हुन्छ ।

**गुरोर्गुरौ सन्निहिते गुरुवद्वृत्तिमाचरेत् ।**
**न चानिसृष्टो गुरुणा स्वान् गुरूनभिवादयेत् ॥२०५॥**

आचार्यका आचार्य भेटे आचार्यलाई झैं व्यवहार गर्नू । भेट्न आएका मातापितालाई पनि
आचार्यको आज्ञा लिएर मात्र भेट्नू ।

**विद्यागुरुष्वेवमेव नित्या वृत्तिः स्वयोनिषु ।**
**प्रतिषेधत्सु चाधर्माद्धितं चोपदिशत्स्वपि ॥२०६॥**

पिता, काका, मामा आदि आफन्त वा अधर्मबाट पर रही असल बाटो हिँड्न
प्रेरणा दिने सत्पुरुषलाई पनि आचार्यसरह सम्मान गर्नू ।

**श्रेयस्सु गुरुवद्वृत्तिं नित्यमेव समाचरेत् ।**
**गुरुपुत्रे तथाऽऽचार्ये गुरोश्चैव स्वबन्धुषु ॥२०७॥**

विद्यातप आदिमा जेठो र श्रेष्ठ, आचार्यका छोराछोरी, अन्य आचार्य तथा आचार्यका
नातेदार प्रति पनि आचार्यसरह सम्मान राख्नु पर्दछ ।

**बालः समानजन्मा वा शिष्यो वा यज्ञकर्मणि ।**
**अध्यापयन् गुरुसुतो गुरुवन्मानमर्हति ॥२०८॥**



समान वा कम उमेरको शिष्य वा आचार्यपुत्र यज्ञयागादिमा आमन्त्रित
भएर आएमा उसलाई पनि आचार्य सरह आदर गर्नू ।

**उत्सादनं च गात्राणां स्नापनोच्छिष्टभोजने ।**
**न कुर्याद्गुरुपुत्रस्य पादयोश्चावनेजनम् ॥२०९॥**

आचार्यपुत्रले पिताका शिष्यबाट तेल घसाउन, नुहाउन, गोडा
धुवाउन तथा जुठो खुवाउन हुँदैन ।

**गुरुवत्प्रतिपूज्याः स्युः सवर्णाः गुरुयोषितः ।**
**असवर्णास्तु सम्पूज्याः प्रत्युत्थानाभिवादनैः ॥२१०॥**

सजातीय आचार्यपत्नीलाई आचार्यसरह पूजा गर्नू, भिन्न जातकी भए उठेर नमस्कार गर्नू ।

**अभ्यञ्जनं स्नापनं च गात्रोत्सादनमेव च ।**
**गुरुपत्न्याः न कार्याणि केशानां च प्रसाधनम् ॥२११॥**

आचार्य पत्नीको सेवा गर्ने निहुँमा उनका शरीरमा क्रीम वा तेल दल्न, नुहाइदिन, कपाल धोइबाटी गरी दिन र शरीर मिची दिन कहिल्यै हुँदैन ।

**गुरुपत्नी तु युवतिर्नाभिवाद्येह पादयोः ।**
**पूर्णविंशतिवर्षेण गुणदोषौ विजानता ॥२१२॥**

बीस वर्षको उमेरमा सबै गुणदोष जान्ने भइसक्ने हुनाले तरुनी आचार्यपत्नीको चरण छोएर प्रणाम नगर्नु, भुईं छोएर प्रणाम गर्नू ।

**स्वभाव एष नारीणां नराणामिह दूषणम् ।**
**अतोऽर्थान्न प्रमाद्यन्ति प्रमदासु विपश्चितः ॥२१३॥**



स्त्री स्वभावैले पुरुषलाई दोष लगाउने हुन्छन् त्यसैले विद्वानहरु स्त्रीप्रति उन्मत्त हुँदैनन् सावधान हुन्छन् ।

**अविद्वांसमलं लोके विद्वांसमपि वा पुनः ।**
**प्रमदा ह्युत्पथं नेतुं कामक्रोधवशानुगम् ॥२१४॥**

कामक्रोधको वशमा परेको व्यक्ति विद्वान वा मूर्ख जे भएपनि उसलाई कुमार्गतिर लैजान स्त्री समर्थ हुन्छन् ।

**मात्रा स्वस्रा दुहित्रा वा न विविक्तासनो भवेत् ।**
**बलवानिन्द्रियग्रामो विद्वांसमपि कर्षति ॥२१५॥**

अती बलवान् इन्द्रियका गणले जस्तोसुकै विद्वानलाई पनि आफ्नो जालमा पार्न सक्ने हुनाले माता, बहिनी र छोरीका साथमा पनि एकान्तमा लामो समय नबस्नू ।

**कामं तु गुरुपत्नीनां युवतीनां युवा भुवि ।**
**विधिवद्वन्दनं कुर्यादसावहमिति ब्रुवन् ॥२१६॥**

आचार्यपत्नी युवती छिन् र शिष्य पनि युवक छ भने त जमिन छोएर पनि शिष्यले नमस्कार नगर्नू, आफ्नो नाम र गोत्र भनी शिर झुकाएर नमस्कार गर्नू ।

**विप्रोष्य पादग्रहणमन्वहं चाभिवादनम् ।**
**गुरुदारेषु कुर्वीत सतां धर्ममनुस्मरन् ॥२१७॥**

प्रवासबाट फर्किएको युवक ब्रह्मचारीले पूज्यजनलाई चरणस्पर्श गरेर र युवती आचार्यपत्नीलाई टाउको निहुर्‍याएर वा भुईं छोएर प्रणाम गरे पुग्दछ ।

**यथा खनन् खनित्रेण नरो वार्यधिगच्छति ।**
**तथा गुरुगतां विद्यां शुश्रूषुरधिगच्छति ॥२१८॥**



कोदालो लिएर जमिन खन्दै जाँदा पानी अवश्य पाइए झैं आचार्यको सेवा गर्दै जाँदा विद्या अवश्य पाइन्छ ।

**मुण्डो वा जटिलो वा स्यादथवा स्याच्छिखाजटः ।**
**नेनं ग्रामेऽभिनिम्लोचेत्सूर्यो नाभ्युदियात् क्वचित् ॥२१९॥**

ब्रह्मचारीले कपाल खौरन वा जटापाल्न सक्दछ । ब्रह्मचारीले गाऊँमा गएका बेलामा उतै सूर्यास्त र सूर्योदय कहिल्यै नपार्नू अर्थात् कतै जानु परेमा सूर्योदय पछि नित्यकर्म गरेर मात्र जानू र सन्ध्याकाल हुनु अगाडी नै फर्कनू ।

**तं चेदभ्युदयात्सूर्यः शयानं कामचारतः ।**
**निम्नोचेद्वाऽप्यविज्ञानाज्जपन्नुपवसेद्दिनम् ॥२२०॥**

सामान्य स्थितिमा सूर्योदय पूर्व उठ्नू र सूर्यास्त पछि सुत्नू । यो नियम मिचेमा पूरा दिन

उपवास बसी गायत्री जपगरी प्रायश्चित गर्नू ।

**सूर्येण ह्यभिनिम्लुक्तः शयानोऽभ्युदितश्च यः ।**
**प्रायश्चित्तमकुर्वाणो युक्तः स्यान्महतैनसा ॥२२१॥**

सूर्योदय र सूर्यास्तमा जो सुतिरहन्छ जप र प्रायश्चित गर्दैन त्यो पहापापले युक्त हुन्छ ।

**आचम्य प्रयतो नित्यमुभे सन्ध्ये समाहितः ।**
**शुचौ देशे जपञ्जप्यमुपासीत यथाविधिः ॥२२२॥**

प्रत्येक दिन दुवै सन्ध्यामा पवित्र स्थानमा बसी आचमन गरेर
एकाग्रचित्तले विधिपूर्वक जप गर्नू ।

**यदि स्त्री यद्यवरजः श्रेयः किञ्चित्समाचरेत् ।**
**तत्सवमाचरेद्युक्तो यत्र चास्य रमेन्मनः ॥२२३॥**



स्त्री र शूद्रले पनि कुलपरम्परा अनुसार गर्दै आएको र मनलाई आनन्द दिने
नियमको अनुसरण र पालना गर्दै जानुपर्दछ ।

**धर्मार्थावुच्यते श्रेयः कामार्थौ धर्म एव च ।**
**अर्थ एवेह वा श्रेयस्त्रिवर्ग इति तु स्थितिः ॥२२४॥**

कोही धर्म र अर्थलाई त कोही काम र अर्थलाई त कोही धर्म र कामलाई श्रेय मान्दछन् ।
कोही धर्मलाई, कोही अर्थलाई त कोही कामलाई श्रेय मान्दछन्
तर धर्म, अर्थ र काम नै श्रेय हो ।

**आचार्यश्च पिता चैव माता भ्राता च पूर्वजः ।**
**नार्त्तेनाप्यवमन्तव्याः ब्राह्मणेन विशेषतः ॥२२५॥**

चारै वर्णका व्यक्ति अफ विशेष गरेर ब्राह्मणले दुःखकष्ट सहेर पनि आचार्य,
पिता, माता र जेठो दाजुलाई कहिल्यै कष्ट र पीडा नदिनू ।

**आचार्यो ब्राह्मणो मूर्तिः पिता मूर्तिः प्रजापतेः ।**
**माता पृथिव्या मूर्तिस्तु भ्राता स्वो मूर्तिरात्मनः ॥२२६॥**

आचार्य वेदका, पिता प्रजापतिका, माता पृथ्वीका र सहोदर भाइहरु आफ्नै प्रतिमूर्ति हुन् ।

**यं मातापितरौ क्लेशं सहेते सम्भवे नृणाम् ।**
**न तस्य निष्कृतिः शक्या कर्तुं वर्षशतैरपि ॥२२७॥**

जन्म र पालन गर्ने आमाबाबुले जुन दुःख र कष्ट सहेका हुन्छन्
त्यो सय वर्षमा पनि तिर्न सकिन्न ।

**तयोर्नित्यं प्रियं कुर्यादाचार्यस्य च सर्वदा ।**

**तेष्वेव त्रिषु तुष्टेषु तपः सर्वं समाप्यते ॥२२८॥**

त्यसैले यी तीनलाई प्रिय लाग्ने वा यिनको अनुमोदनका काममात्र गर्नू । यी तीन खुसी
भए भने सबै तपस्या र साधना स्वतः सिद्ध र सम्पन्न हुन्छन् ।

**तेषां त्रयाणां शुश्रूषा परमं तप उच्यते ।**
**न तैरनभ्यनुज्ञातो धर्ममन्यं समाचरेत् ॥२२९॥**

यी तीनको सेवा गर्नु परम तपस्या हो । यी तीनको आज्ञा नलिई ब्रह्मचारीले कुनै धर्मकार्य नगर्नू ।

**त एव हि त्रयो लोकास्त एव त्रय आश्रमाः ।**
**त एव हि त्रयो वेदास्त एवोक्तास्त्रयोऽग्नयः ॥२३०॥**

ब्रह्मचारीले पिता, माता र गुरुलाई तीन लोक (भू, भुव, स्व), तीन आश्रम (गृहस्थ, वानप्रस्थ र

सन्यास), तीन वेद (ऋक, साम र यजु) तथा तीन अग्नि (दावानल, जठानल, र अनल) समझिनु पर्दछ ।

**पिता वै गार्हपत्योऽग्निर्माताऽग्निर्दक्षिणः स्मृतः ।**
**गुरुरावहनीयस्तु साऽग्नित्रेता गरीयसी ॥२३१॥**

पितालाई गार्हपत्य अग्नि, मातालाई दक्षिणाग्नि र गुरुलाई आवहनीय अग्नि सम्झनू । अर्थात् यी तीनको सेवा गर्नु भनेको तीन अग्निको सेवागर्नु सरह हो ।

**त्रिष्वप्रमाद्यन्नेतेषु त्रीन् लोकान् विजयेद्गृही ।**
**दीप्यमानः स्ववपुषा देववद्दिवि मोदते ॥२३२॥**

प्रमाद र उपेक्षा नगरी मनैले निष्ठापूर्वक जुन असल गृहस्थीले यी तीनको सेवा गरिरहन्छ, यो जन्ममा त्यो तीनै लोकको विजेता हुन्छ मृत्यु पछि देवताले जस्तै स्वर्गलोकको दिव्यसुख प्राप्त गर्दछ ।



**इमं लोकं मातृभक्त्या पितृभक्त्या तु मध्यमम् ।**
**गुरुशुश्रूषया त्वेवं ब्रह्मलोकं समश्नुते ॥२३३॥**

मातृभक्तिले पृथ्वीलोकका, पितृभक्तिले अन्तरिक्षलोकका तथा गुरुभक्तिले ब्रह्मलोकका दुर्लभ सुख भोग गर्न पाउँदछ ।

**सर्वे तस्यादृताः धर्मा यस्यैते त्रय आदृताः ।**
**अनादृतास्तु यस्यैते सर्वास्तस्याऽफलाः क्रियाः ॥२३४॥**

यी तीनको सेवा र आदर गर्नेलाई सबै धर्मकर्मले चिताएको फल दिन्छन् भने यी तीनको अनादर गर्नेले गरेको धर्मकर्मले कुनै फल पाउँदैन ।

**यावत्त्रयस्ते जीवेयुस्तावन्नान्यं समाचरेत् ।**
**तेष्वेव नित्यं शुश्रूषां कुर्यात्प्रियहिते रतः ॥२३५॥**

असल गृहस्थीले यी तीन जीवित हुँदै कुनै अन्य धार्मिक कर्म गर्नु आवश्यक छैन । यी तीनको सेवा गरी प्रसन्न पार्नुजस्तो ठूलो धर्म अरु कुनै छँदै छैन ।

**तेषामनुपरोधेन पारत्र्यं यद्यदाचरेत् ।**
**तत्तन्निवेदयेत्तेभ्यो मनोवचनकर्मभिः ॥२३६॥**

परलोक सुधार्न गृहस्थले गर्ने सबै अनुष्ठान यिनको अनुमतिमा गर्नू र त्यसको फल मन, वचन र कर्मले यिनलाई नै समर्पण गर्नू ।

**त्रिष्वेतेष्विति कृत्यं हि पुरुषस्य समाप्यते ।**
**एष धर्मः परः साक्षादुपधर्मोऽन्य उच्यते ॥२३७॥**



यी तीनको सेवा गर्नु नै परम पुरुषार्थ र सर्वोत्तम धर्म हो जसका अगाडि अरु सबै धर्म नगण्य हुन्छन् ।

**श्रद्दधानः शुभां विद्यामाददीतावरादपि ।**
**अन्यादपि परं धर्मं स्त्रीरत्नं दुष्कुलादपि ॥२३८॥**

श्रद्धायुक्त उत्तम विद्या शूद्रसँग पनि पढ्नु हुन्छ, चाण्डालसँग पनि धर्म सिक्नु हुन्छ र स्त्रीरत्न नीच कुलको पनि ग्रहण गर्न हुन्छ ।

**विषादप्यमृतं ग्राह्यं बालादपि सुभाषितम् ।**
**अमित्रादपि सद्वृत्तममेध्यादपि काञ्चनम् ॥२३९॥**

विषबाट पनि अमृत लिन, बालकसँग पनि हितकारी वचन लिन, शत्रुबाट पनि राम्रो काम लिन र फोहोरबाट पनि सुन लिन हुन्छ ।

**स्त्रियो रत्नान्यथो विद्या धर्मः शौचं सुभाषितम् ।**
**विविधानि च शिल्पानि समादेयानि सर्वतः ॥२४०॥**

स्त्री, रत्न, विद्या, धर्म, शौच, राम्रा कुरा र अनेक थरी शिल्पविद्या सबैसँग सिक्न (वा लिन) हुन्छ ।

**अब्राह्मणादध्ययनमापत्काले विधीयते ।**
**अनुव्रज्या च शुश्रूषा यावदध्ययनं गुरोः ॥२४१॥**

शास्त्रमा ब्राह्मण नपाए छेत्री र वैश्यसँग शिक्षा लिन सकिने तथा शिक्षा ग्रहणको
अवधिभरी गुरुसमान नै सेवा गर्नुपर्ने भनिएको छ ।

**नाब्राह्मणे गुरौ शिष्यो वासमात्यन्तिकं वसेत् ।**
**ब्राह्मणे वाननूचाने काङ्क्षन्गतिमनुत्तमाम् ॥२४२॥**

ब्राह्मण बाहेकले पढ्न गुरुकुलमा बस्नै पर्ने अनीवार्यता छैन । यसैगरी, प्रकाण्ड विद्वान
नभएका ब्राह्मणलाई गुरुले गुरुकुलमा बस्ने नबस्ने आफैं निर्णय गर्न सक्दछन् ।



**यदि त्वात्यन्तिकं वासः रोचयेत गुरोः कुले ।**
**युक्तः परिचरेदेनमाशरीरविमोक्षणात् ॥२४३॥**

गुरुकुलमा बस्न मन पराउनेले सारा जीवन त्यहाँ नै बस्न र गुरुको सेवा गर्न स्वतन्त्र हुन्छ ।

**आ समाप्तेः शरीरस्य यस्तु शुश्रूषते गुरुम् ।**
**सःगच्छत्यञ्जसा विप्रो ब्रह्मणःसद्यःशाश्वतम् ॥२४४॥**

आमरण गुरुको सेवागर्ने शिष्यले अनायास नै ब्रह्मलोक र परमपद प्राप्त गर्दछ ।

**न पूर्वं गुरवे किञ्चिदुपकुर्वीत धर्मवित् ।**
**स्नास्यंस्तु गुरुणाऽऽज्ञप्तः शक्त्या गुर्वर्थमाहरेत् ॥२४५॥**

धर्मवेत्ता ब्रह्मचारीले गुरुको आज्ञा नलिई कुनै कार्य नगर्नु तर आफू र गुरुलाई नुहाउने पानी लेराउन भने आज्ञा चाहिन्न ।

**क्षेत्रं हिरण्यं गामश्वं छत्रोपानहमासनम् ।**
**धान्यं शाकं च वासांसि गुरवे प्रीतिमावहेत् ॥२४६॥**

(वेदाध्ययन सकेपछि) पृथ्वी, सुन, गाई, घोडा, छाता, जुत्ता, आसनी, अनाज, सागपात र वस्त्र प्रीतिपूर्वक गुरुलाई चढाउनू ।

**आचार्ये तु खलु प्रेते गुरुपुत्रे गुणान्विते ।**
**गुरुदारे सपिण्डे वा गुरुवद्वृत्तिमाचरेत् ॥२४७॥**

आचार्यको मृत्यु हुँदा उनका विद्वान छोराहरु प्रति, ती नभए आचार्यपत्नीप्रति र ती पनि नभए आचार्यका आफन्तप्रति गुरुकै भाव राखी यथोचित आदरसत्कार गरी उपहार दिनु पर्दछ ।



**एतेष्वविद्यमानेषु स्नानासनविहारवान् ।**
**प्रयुञ्जानोऽग्निशुश्रूषां साधयेद्देहमात्मनः ॥२४८॥**

यी सबै नहुँदा शिष्यले स्नान, ध्यान तथा होम आदिले आफ्नो शरीर साधना गर्दै आफूलाई ब्रह्मप्राप्तिको बाटोमा लैजानू ।

**एवं चरति यो विप्रो ब्रह्मचर्यमविप्लुतः ।**
**स गच्छत्युत्तमस्थानं न चेह जायते पुनः ॥२४९॥**

यसरी ब्रह्मचर्य व्रत गर्ने द्विज ब्रह्मलोक जान्छ । उसले जन्ममरणको भोग गरिरहनु पर्दैन ।

इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां द्वितीयोऽध्यायः ॥२॥

✷

मनुस्मृति, दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।

✷

शुरुदेखिको श्लोकको संख्या:-११९+२४९=३६८

✷

# ॥ अथ तृतीयोऽध्यायः ॥
## (विवाह एवं श्राद्ध)

**षट्त्रिंशदाब्दिकं चर्यं गुरौ त्रैवेदिकं व्रतम् ।**
**तदर्धिकं पादिकं वा ग्रहणान्तिकमेव वा ॥१॥**

गुरुकुलमा बसेर छत्तीस वर्षसम्म तीन वेद पढ्नू अथवा अठार वर्षसम्म अथवा नौ वर्षसम्म अथवा सकिञ्जेल वेद पढ्नू र पढिञ्जेलसम्म ब्रह्मचर्यमा रहनू ।

**वेदानधीत्य वेदौ वा वेदं वाऽपि यथाक्रमम् ।**
**अविप्लुतब्रह्मचर्यो गृहस्थाश्रमवासयेत् ॥२॥**

ब्रह्मचर्य व्रत खण्डित हुन नदिई ब्रह्मचारीले तीन, दुई वा एक वेदमा निपुण भई आफ्नो वंशपरम्परा अनुसार गृहस्थाश्रममा प्रवेश गर्नू ।



**तं प्रतीतं स्वधर्मेण ब्रह्मदायहरं पितुः ।**
**स्रग्विणं तल्प आसीनमर्हयेत्प्रथमं गवा ॥३॥**

शिक्षा समाप्त गरी गुरुकुलबाट फर्कने छोरालाई पिताले धर्मानुसार सम्पत्तिको उत्तराधिकारी मान्दै, पलङमा बसाई माला लगाई दिएर गाई आदि सार्थक उपहार दिने काम गरी स्वागत गर्नू ।

**गुरुणाऽनुमतः स्नात्वा समावृत्तो यथाविधिः ।**
**उद्वहेत द्विजो भार्यां सवर्णां लक्षणान्विताम् ॥४॥**

ब्रह्मचर्याश्रम पछि, गुरुको आज्ञा लिई, स्नान गरी, घर फर्की आफ्नै वर्णकी सुलक्षणा कन्यालाई द्विजले विवाह गर्नु पर्दछ ।

**असपिण्डा च या मातुरसगोत्रा च या पितुः ।**
**सा प्रशस्ता द्विजातीनां दारकर्मण्यमैथुनी ॥५॥**

मातापट्टि असपिण्डी (सात पुस्ता भित्र नपर्ने) र पितापट्टि असगोत्री कन्यालाई विवाह गरी मैथुन गर्नु द्विजातिका लागि श्रेयस्कर हुन्छ ।

**महान्त्यपि समृद्धानि गोऽजाविधनधान्यतः।**
**स्त्रीसम्बन्धे दशैतानि कुलानि परिवर्जयेत् ॥६॥**

गाई, भेडाबाख्रा, धनसम्पत्ति आदिले ठूला भएपनि वैवाहिक सम्बन्ध गाँस्नका लागि निम्न दश कुललाई परित्याग गर्नू ।

**हीनक्रियं निष्पुरुषं निश्छन्दो रोमशार्शसम् ।**
**क्षय्यामयाव्यपस्मारिश्वित्रिकुष्ठिकुलानि च ॥७॥**



संस्कारलाई उपेक्षा गर्ने, नपुंसक, वेद नपढ्ने, शरीरमा बाक्ला रौं हुने, अलकाईका रोगी, क्षयरोगी, मन्दाग्निका रोगी, छारेरोगी, श्वेतकुष्ठी र गलितकुष्ठीको कुललाई विवाहमा परित्याग गर्नू ।

**नोद्वहेत्कपिलां कन्यां नाधिकाङ्गीं न रोगिणीम् ।**
**नालोमिकां नातिलोमां न वाचालं न पिङ्गलाम् ॥८॥**

हलुका रातो रङ्गकी, हुनुपर्ने भन्दा अधिक अङ्ग भएकी, रोगी, धेरै रौं भएकी, कर्कशा (चोथाले) र कैली कन्या विवाह नगर्नू ।

**नर्क्षवृक्षनदीनाम्नीं नान्त्यपर्वतनामिकाम् ।**
**न पक्ष्यहिप्रेष्यनाम्नीं न च भीषणनामिकाम् ॥९॥**

अश्विनी, भरणी आदि नक्षत्रको; वर, पीपल आदि रुखको; गङ्गा, सरस्वती आदि नदीको; पर्वतको;

'क' आदि वर्गको अन्तिम अक्षर (ङ, ञ, ण, न, म) बाट शुरु भएको; चराको र सर्पको नाम भएकी तथा डरलाग्दो र हेय अर्थ बुझाउने (दीना, पतिता) नाम भएकी कन्यासँग विवाह नगर्नू ।

**अव्यङ्गाङ्गीं सौम्यनाम्नीं हंसवारणगामिनीम् ।**
**तनुलोमकेशदशनां मृद्वङ्गीमुद्वहेत्स्त्रियम् ॥१०॥**

गठिलो र सुन्दर अङ्ग भएकी; मधुर, प्रिय र रोचक नाम भएकी; हाँस वा हात्तीको जस्तै हिँडाई भएकी; शरीरमा पातला रौँ भएकी; सुन्दर रचमकिलो कपाल भएकी; मोतीका दानाजस्ता दाँत भएकी र कोमल एवं आकर्षक शरीर भएकी कन्यालाई विवाह गर्नु पर्दछ ।

**यस्यास्तु न भवेद्भ्राता न विज्ञायेत वै (वा) पिता ।**
**नोपयेच्छेत तां प्राज्ञः पुत्रिकाधर्मसङ्कया ॥११॥**

दाजुभाइ नहुने कन्याका साथ पनि विवाह नगर्नु किनकि आफ्नो पहिलो पुत्र दत्तक पुत्रका रुपमा कन्याका पितालाई दिनुपर्ने हुन सक्दछ ।



**सवर्णाग्रे द्विजातीनां प्रशस्ता दारकर्मणि ।**
**कामतस्तु प्रवृत्तानामिमाः स्युः क्रमशोऽवराः ॥१२॥**

द्विजातिहरुले आफ्नै वर्णकी कन्यासँग विवाह गर्नु श्रेयस्कर हुन्छ । कामवासना मेटाउन परेपनि एक वर्ण तलकी कन्यासँग मात्र विवाह गर्नु उत्तम हुन्छ ।

**शूद्रैव भार्या शूद्रस्य सा च स्वा च विशः स्मृते ।**
**ते च स्वा चैव राज्ञश्च ताश्च स्वा चाऽग्रजन्मनः ॥१३॥**

शूद्रले शूद्रालाई मात्र पत्नी बनाउने अधिकार छ । वैश्यले वैश्या र शूद्रालाई पत्नी बनाउने अधिकार छ । क्षत्रियले क्षत्रिया, वैश्या र शूद्रालाई पत्नी बनाउन सक्छ । ब्राह्मणले चारै वर्णका कन्यालाई पत्नी बनाउन सक्दछ ।

**न ब्राह्मणक्षत्रिययोरापद्यपि हि तिष्ठतोः ।**
**कस्मिंश्चिदपि वृत्तान्ते शूद्रा भार्योपदिश्यते ॥१४॥**

ब्राह्मण तथा क्षत्रियले जस्तो सुकै आपत आइपरे पनि शूद्रालाई
पत्नी नबनाउनू भनी बताइएको छ ।

**हीनजातिस्त्रियं मोहादुद्वहन्तो द्विजातयः ।**
**कुलान्येव नयन्त्याशु ससन्तानानि शूद्रताम् ॥१५॥**

द्विजातिले मोहवश निम्न जातकी कन्यासँग विवाह गरेमा
सन्तानसहित कुल नै शूद्रत्वमा पुग्दछ ।

**शूद्रावेदी पतत्यत्रेरुतथ्यतनयस्य च ।**
**शौनकस्य सुतोत्पत्त्या तदपत्यया भृगोः ॥१६॥**



अत्रि तथा उतथ्यका पुत्र उशनाको विचारमा शूद्रासँग विवाह गर्ने द्विज तत्काल पतित हुन्छ ।
शौनक भने शूद्राको गर्भबाट सन्तान उत्पन्न गराउने द्विज पतित हुन्छ भन्दछन् ।
शूद्राका दर-सन्तान भएपछि कुल पतित हुन्छ भनी भृगु बताउँदछन् ।

**शूद्रां शयनमारोप्य ब्राह्मणो यात्यधोगतिम् ।**
**जनयित्वा सुतं तस्यां ब्राह्मण्यादेव हीयते ॥१७॥**

शूद्रकन्यासँग सुत्ने विप्रले अधोगति प्राप्त गर्दछ र सन्तान नै
जन्माएमा त ब्राह्मणत्वबाट पनि पतित हुन्छ ।

**दैवपित्र्यातिथेयानि तत्प्रधानानि यस्य तु ।**
**नाश्नन्ति पितृदेवास्तन्न च स्वर्गं स गच्छति ॥१८॥**

शूद्रपत्नीको मुख्य भूमिका भएका ब्राह्मण पतिले गरेका देव-पितृकर्म देवता र

पितृले ग्रहण गर्दैनन् त्यसैले उसले स्वर्ग प्राप्त गर्न सक्दैन ।

**वृषलीफेनपीतस्य निःश्वासोपहतस्य च ।**
**तस्यां चैव प्रसूतस्य निष्कृतिर्न विधीयते ॥१९॥**

शूद्र कन्यालाई म्वाई खाने, उनको जुठो श्वास हुल्ने वा ओठ चुस्ने ब्राह्मण
र तिनका सन्तानको पनि कहिल्यै कल्याण हुँदैन ।

**चतुर्णामपि वर्णानां प्रेत्य चेह हिताहितान् ।**
**अष्टाविमान्समासेन स्त्रीविवाहान्निबोधत ॥२०॥**

चारैवर्णका राम्रा नराम्रा गरी आठ प्रकारका विवाहका विधिहरू हुन्छन् ।

**ब्राह्मो दैवस्तथैवार्षः प्रजापत्यस्तथाऽऽसुरः ।**
**गान्धर्वो राक्षसश्चैव पैशाचश्चाष्टमोऽधमः ॥२१॥**



ब्राह्म, दैव, आर्ष, प्राजापत्य, आसुर, गान्धर्व, राक्षस र अती निन्दनीय
पैशाच गरी आठ प्रकारका विवाह विधिहरू हुन्छन् ।

**यो यस्य धर्म्यो वर्णस्य गुणदोषौ च यस्य यौ ।**
**तद्वः सर्वं प्रवक्ष्यामि प्रसवे च गुणागुणान् ॥२२॥**

अब म कुन विधिका विवाह कुन वर्णका लागि योग्य छ, कुन विवाहका के कस्ता गुण र दोषहरू
छन् तथा कुन विवाहबाट जन्मने सन्तानमा के कस्ता गुण र दोष हुन्छन् त्यो बताउँदछु ।

**षडानुपूर्व्या विप्रस्य क्षत्रस्य चतुरोऽवरान् ।**
**विट्शूद्रयोस्तु तानेव विद्याद्धर्म्यानराक्षसान् ॥२३॥**

ब्राह्मणका लागि शुरुका छ र अरु वर्णका लागि शुरुका चार विधि शास्त्रसम्मत

हुन्छन् तर राक्षस विधि कुनै वर्णका लागि पनि योग्य हुँदैन ।

**चतुरो ब्राह्मणस्याद्यान्प्रशस्तान्कवयो विदुः ।**
**राक्षसं क्षत्रियस्यैकमासुरं वैश्यशूद्रयोः ॥२४॥**

प्राचीन ऋषिहरुले ब्राह्मणका लागि प्रथम चार विधि बताएका छन् । क्षत्रियलाई
राक्षस र वैश्य एवं शूद्रलाई आसुर विधिको पनि अनुमति छ ।

**पञ्चानां तु त्रयो धर्म्याः द्वावधर्म्यौ स्मृताविह ।**
**पैशाचश्चासुरश्चैव न कर्तव्यौ कदाचन ॥२५॥**

उल्लेखित आठमध्ये शुरुका पाँच र त्यसमा पनि शुरुका तीन विधि नै उत्तम हुनाले शास्त्रसम्मत
विधि हुन् । आसुर र गान्धर्व अधार्मिक हुन् । तर पैशाच र आसुर विधि कहिल्यै नअपनाउनू ।

**पृथक्पृथक्वा मिश्रौ वा विवाहो पूर्वचोदितौ ।**

**गान्धर्वो राक्षसश्चैव धर्म्यौ क्षत्रस्य तौ स्मृतौ ॥२६॥**

बताइएका बेग्लाबेग्लै वा मिश्रित विवाहका विधिहरुमध्ये क्षत्रियले
गान्धर्व विधि र राक्षस विधि पनि अपनाउन सक्दछ ।

**आच्छाद्य चार्चयित्वा च श्रुतशीलवते स्वयम् ।**
**आहूय दानं कन्यायाः ब्राह्मो धर्मः प्रकीर्तितः ॥२७॥**

विद्वान र सदाचारी युवकलाई आदरपूर्वक निमन्त्रणा गरी वरको रुपमा स्वीकार्दै वस्त्र-आभूषणले
सिँगारिएकी आफ्नी कन्या ससम्मान समर्पित गर्नु "ब्राह्म विवाह" हो ।

**यज्ञे तु वितते सम्यगृत्विजे कर्म कुर्वते ।**
**अलङ्कृत्य सुतादानं दैवं धर्मं प्रचक्षते ॥२८॥**

यज्ञ गर्दा उपस्थित भएमध्येका असल ऋत्विज् (यज्ञ गराउन आमन्त्रित वा उपस्थित कुल पुरोहित बाहेकका ब्राह्मण) लाई वस्त्र-आभूषणले सिँगारिएकी आफ्नी कन्या विवाह गरेर दिने विवाहको विधिलाई "दैव विवाह" भनिन्छ ।

**एकं गोमिथुनं द्वे वा वरदाराय धर्मतः ।**
**कन्याप्रदानं विधिवदार्षो धर्मः स उच्यते ॥२९॥**

वरपक्षसँग एक वा दुई गाई वा गोरु लिई विधिपस्र्वक आफ्नी कन्या प्रदान गर्नुलाई "आर्ष विवाह" भनिन्छ ।

**सहोभौ चरतां धर्ममिति वाचानुभाष्य च ।**
**कन्याप्रदानमभ्यर्च्य प्राजापत्यो विधि स्मृतः ॥३०॥**

कन्यादान गर्दा 'तिमीहरु दुबैले सँगै मिलेर धर्म अनुसार आचरण गर्नु' भनी सत्कारपूर्वक कन्यादान गर्ने विधिलाई "प्राजापत्य विवाह" भनिन्छ ।



**ज्ञातिभ्यो द्रविणं दत्त्वा कन्यायै चैव शक्तितः ।**
**कन्याऽऽप्रदानं स्वाच्छन्द्यादासुरो धर्म उच्यते ॥३१॥**

कन्याले वा कन्यापक्षले वरसँग तिनको गच्छे अनुसार धन लिई कन्याप्रदान गरी गरिने विवाहको विधिलाई "आसुर विवाह" भनिन्छ ।

**इच्छयाऽन्योन्यसंयोगः कन्यायाश्च वरस्य च ।**
**गान्धर्वः स तु विज्ञेयो मैथुन्यः कामसम्भवः ॥३२॥**

केटाकेटीले एक-आपसमा स्वेच्छाले कामाशक्त भई वा विषयवासनामा रमाई प्रेम सम्बन्ध गाँसी गर्ने विवाहको विधिलाई "गान्धर्व विवाह" भनिन्छ ।

**हत्वा छित्त्वा च भित्त्वा च क्रोशन्तीं रुदतीं गृहात् ।**
**प्रसह्य कन्याहरणं राक्षसो विधिरुच्यते ॥३३॥**

कन्याको संरक्षकलाई मारेर, कन्याका हातगोडामा चोट पुऱ्याएर, उनको वासस्थान आदि नष्ट गरेर, रुँदै गाली गरिरहेकी कन्यालाई हरण गरी आफ्नो अधिकारमा लिई गरिने विवाहलाई "राक्षस विवाह" भनिन्छ ।

**सुप्तां मत्तां प्रमत्तां वा रहो यत्रोपगच्छति ।**
**स पापिष्ठो विवाहानां पैशाचः प्रथितोऽधमः ॥३४॥**

निदाइरहेकी, अर्द्धमूर्छित वा अर्द्धनिद्रामा परेकी कन्यालाई जवर्जस्ती विवाह गर्नुलाई अत्यन्त अधम "पैशाच विवाह" भनिन्छ ।

**अद्भिरेव द्विजाग्र्याणां कन्यादानं विशिष्यते ।**
**इतरेषां तु वर्णानामितरेतरकाम्यया ॥३५॥**



ब्राह्मणको कन्यादान जलले (जल समाएर) गर्नु श्रेयस्कर हुन्छ ।
अरु वर्णले परस्परको सहमतिका कुनै विधिले गर्नु पर्दछ ।

**यो यस्यैषां विवाहानां मनुना कीर्तितो गुणः ।**
**सर्वं शृणुत तं विप्राः सर्वं कीर्तयतो मम ॥३६॥**

हे ब्राह्मण हो ! मनुले जुन जुन विवाह विधिका जे जे गुण बताएका छन्, ती सबै मबाट सुन ।

**दश पूर्वान्परान्वंश्यानात्मानं चेकविंशकम् ।**
**ब्राह्मीपुत्रः सुकृतकृन्मोचयत्येनसः पितृन् ॥३७॥**

ब्राह्मविवाहबाट उत्पन्न सुपुत्रले पिता आदि अघिल्ला दश र पुत्र आदि पछिल्ला दश तथा आफू समेत गरी एक्काईस कुलको उद्धार गर्दछ ।

**दैवोढाजः सुतश्चैव सप्त सप्त परावरान् ।**
**आर्षोढाजः सुतस्त्रीन् षट्षट् कायोढजः सुतः ॥३८॥**

यसैगरी दैवविवाहबाट उत्पन्न सुपुत्रले सात, सात गरी पन्ध्र कुलको; आर्ष विवाहबाट उत्पन्न सुपुत्रले तीन, तीन गरी सात कुलको तथा प्राजापत्य विवाहबाट उत्पन्न सुपुत्रले छ, छ गरी तेह्र कुलको उद्धार गर्दछ ।

**ब्राह्मादिषु विवाहेषु चतुर्ष्वेवानुपूर्वशः ।**
**ब्रह्मवर्चसिनः पुत्रा जायन्ते शिष्टसम्मताः ॥३९॥**

ब्राह्म आदि शुरुका चार विधिबाट गरिने विवाहबाट तेजस्वी, ओजस्वी, सदाचारी हुनाले लोकप्रख्यात र यशस्वी,... ।

**रूपसत्त्वगुणोपेता धनवन्तो यशस्विनः ।**
**पर्याप्तभोगा धर्मिष्ठा जीवन्ति च शतं समाः ॥४०॥**



रुप-सौन्दर्य-बल-शक्ति-धैर्य-दृढता आदि गुणले सम्पन्न, धनवान, अनाशक्त भई संसारको भोग गर्ने, स्वस्थ्य तथा दीर्घायु भएको पुत्र उत्पन्न भई सय वर्ष बाँची अन्तमा मोक्ष प्राप्त गर्दछ ।

**इतरेषु तु शिष्टेषु नृशंसानृतवादिनः ।**
**जायन्ते दुर्विवाहेषु ब्रह्मधर्मद्विषः सुताः ॥४१॥**

अन्तिम चार विधिका विवाहले त प्रायः क्रूर, मिथ्यावादी, धर्म तथा तत्त्वज्ञान-विरोधी, दुराचारी, चरित्रभ्रष्ट र निर्लज्ज सन्तान जन्मन्छ ।

**अनिन्दितैः स्त्रीविवाहैरनिन्द्या भवति प्रजा ।**
**निन्दितैर्निन्दिताः नृणां तस्मान्निन्द्यान्विवर्जयेत् ॥४२॥**

मनुष्यले विवाहमा असल विधि अपनाएमा असल र खराब विधि अपनाएमा खराब सन्तान

जन्मन्छन् । यसैले निन्दनीय विवाहका विधिलाई त्याग गर्नु पर्दछ ।

**पाणिग्रहणसंस्कारः सवर्णासूपदिश्यते ।**
**असवर्णास्वयं ज्ञेयो विधिरुद्वाहकर्मणि ॥४३॥**

पाणिग्रहण संस्कार समान वर्णको विवाहमा मात्र हुन्छ । अन्तर वर्णको विवाहमा यो विधि तल उल्लेख भए अनुसार जान्नू ।

**शरः क्षत्रियया ग्राह्यः प्रतोदो वैश्यकन्यया ।**
**वसनस्य दशा ग्राह्या शूद्रयोत्कृष्टवेदने ॥४४॥**

आफूभन्दा तल्लो वर्णकी कन्यासँग विवाह गर्दा जल होइन कि क्षत्रिणीले वाण, वैश्याले कोर्रा तथा शूद्राले वस्त्र समाउनू ।

**ऋतुकालाभिगामी स्यात्स्वदारनिरतः सदा ।**

**पर्ववर्जं व्रजेच्चैनां तद्व्रतो रतिकाम्यया ॥४५॥**

आफ्नै पत्नीका साथ ऋतुकालमा वार्नुपर्ने पर्वहरु वारेर सहवास गर्नु पर्दछ ।

**ऋतुः स्वावाभिकः स्त्रीणां रात्रयः षोडश स्मृताः ।**
**चतुर्भिरितरैः सार्धमहोभिः सद्विगर्हितैः ॥४६॥**

स्वाभाविक ऋतुकाल सोह्र रातको हुन्छ जसमा असल मनुष्यले निन्दनीय मानेका शुरुका चार रात पनि समावेश भएका हुन्छन् ।

**तासामाद्याश्चतस्रस्तु निन्दितैकादशी च या ।**
**त्रयोदशी च शेषास्तु प्रशस्ता दशरात्रयः ॥४७॥**

ती सोह्र रातमा पनि शुरुका चार रात र एकादशी तथा त्रयोदशीलाई छोडेर बाँकी

दश रातमा सहवास गर्नु श्रेयस्कर हुन्छ ।

**युग्मासु पुत्रा जायन्ते स्त्रियोऽयुग्मासु रात्रिषु ।**
**तस्माद्युग्मासु पुत्रार्थी संविशेदार्तवे स्त्रियम् ॥४८॥**

जोर रातको सहवासले पुत्र र बिजोर रातको सहवासले पुत्री जन्मने हुनाले पुत्र चाहने पुरुषले जोर रातमा ऋतुमती स्त्रीका साथ सहवास गर्नू ।

**पुमान्पुंसोऽधिके शुक्रे स्त्री भवत्यधिके स्त्रियाः ।**
**समेऽपुमान्पुंस्त्रियौ वा क्षीणेऽल्पे च विपर्ययः ॥४९॥**

बीर्य बलियो भए पुत्र हुन्छ । रज बलियो भए पुत्री हुन्छे । बराबर भए एक एक वटा छोराछोरी (जुम्ल्याहा) वा नपुंसक जन्मन्छ । वीर्य पातलो र कम भएमा सन्तानको उत्पत्ति नै हुँदैन ।

**निन्द्यास्वष्टासु चान्यासु स्त्रियो रात्रिषु वर्जयन् ।**

**ब्रह्मचार्येव भवति यत्र तत्राश्रमे वसन् ॥५०॥**

ऋतुकालका शुरुका निन्दनीय चार रात तथा एकादशी, त्रयोदशी, पूर्णिमा र औँसी गरी आठ रात बारी स्त्रीभोग गर्ने गृहस्थलाई ब्रह्मचारी नै मानिन्छ ।

**न कन्यायाः पिता विद्वान्गृह्णीयाच्छुल्कमण्वपि ।**
**गृह्णञ्छुल्कं हि लोभेन स्यान्नरोऽपत्यविक्रयी ॥५१॥**

कन्याका पिताले कन्यादान गर्दा एक पैसा पनि नलिनू । लोभले पैसा लिन्छ भने उसले आफ्नी छोरी बेचेको ठहर्दछ ।

**स्त्रीधनानि तु ये मोहादुपजीवन्ति बान्धवाः ।**
**नारीयानानि वस्त्रं वा ते पापाःयान्त्यधोगतिम् ॥५२॥**

मोहवश कुनै स्त्रीको धन वा वस्त्र उपभोग गर्ने बन्धुवान्धवहरु पापी भई अधोगति तिर जान्छन् ।

**आर्षे गोमिथुनं शुल्कं केचिदाहुर्मृषैव तत् ।**
**अल्पोऽप्येवं महान्वाऽपि तावानेव स विक्रयः ॥५३॥**

कसैले आर्ष विधिको विवाहमा दुई गाई लिन हुन्छ पनि भन्दछन् तर धेरथोर
जति धन लिए पनि त्यो छोरी बेच्नु नै हुन्छ ।

**यासां नाददते शुल्कं त्रातयो न स विक्रयः ।**
**अर्हणं तत्कुमारीणामानृशंस्यं च केवलम् ॥५४॥**

कन्यादानको बदलामा कुनै शुल्क नलिँदा बेचेको हुँदैन केवल भगवानको पूजा
गरेको हुन्छ र त्यसैमा मानवता पनि झल्किन्छ ।

**पितृभिर्भ्रातृभिश्चैता पतिभिर्देवरैस्तथा ।**

**पूज्या भूषयितव्याश्च बहुकल्याणमीप्सुभिः ॥५५॥**

भलाई चाहने पिता, दाजुभाई, पति, देवर आदिले वस्त्र, गहना आदिले
विवाहमा कन्याको पूजा गर्नु पर्दछ ।

**यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवताः ।**
**यत्रैतास्तु न पूज्यन्ते सर्वास्तत्राफलाः क्रियाः ॥५६॥**

जहाँ नारीको पूजा हुन्छ त्यहाँ देवताहरु बसोबास गर्दछन्, जहाँ गरिँदैन
त्यहाँ गरिने सबै धर्मकर्महरु निष्फल हुन्छन् ।

**शोचन्ति जामयो यत्र विनश्यत्याशु तत्कुलम् ।**
**न शोचन्ति तु यत्रैता वर्धते तद्धि सर्वदा ॥५७॥**

जुन कुलमा स्त्रीहरु दुःखी हुन्छन् त्यो कुलको चाँडै नाश हुन्छ ।
जुन कुलमा स्त्रीहरू दुःखी हुँदैनन् त्यो कुल सधैं बढ्दछ ।

**जामयो यानि गेहानि शपन्त्यप्रति पूजिताः ।**
**तानि कृत्याहतानीव विनश्यन्ति समन्ततः ॥५८॥**

जुन घरलाई अपमान सहन नसकी स्त्रीहरुले श्राप दिन्छन् त्यो घर विषप्रयोग
आदि विपत्तिमा परी नाश भएर जान्छ ।

**तस्मादेताः सदा पूज्याः भूषणाच्छादनाशनैः ।**
**भूतिकामैर्नरैर्नित्यं सत्कारेषूत्सवेषु च ॥५९॥**

त्यसैले ऐश्वर्य चाहने पुरुषले वस्त्र, गहना आदिले कुनै शुभ कर्म वा
विवाह आदिमा स्त्रीहरुलाई सत्कार गर्ने गर्नुपर्दछ ।



**सन्तुष्टो भार्यया भर्त्ता भर्त्रा भार्या तथैव च ।**
**यस्मिन्नेव कुले नित्यं कल्याणं तत्र वै ध्रुवम् ॥६०॥**

जुन कुलमा रहेका पतिहरु आफ्ना पत्नीदेखि र पत्नीहरु आफ्ना पतिदेखि
प्रसन्न हुन्छन् त्यो कुलको निश्चय नै कल्याण हुन्छ ।

**यदि हि स्त्री न रोचेत पुमांसं न प्रमोदयेत् ।**
**अप्रमोदात्पुनः पुंसः प्रजनं न प्रवर्त्तते ॥६१॥**

यदि स्त्रीलाई प्रसन्न राख्न सकिएन भने तिनले आफ्ना पतिलाई वंश
चलाउन (पनि) सहयोग गर्दिनन् ।

**स्त्रियां तु रोचमानायां सर्वं तद्रोचते कुलम् ।**
**तस्यां त्वरोचमानायां सर्वमेव न रोचते ॥६२॥**

स्त्री वस्त्रादिले शोभित हुँदा कुल नै शोभित हुन्छ भने स्त्री खिन्न हुँदा कुल नै खिन्न हुने गर्दछ ।

**कुविवाहैः क्रियालोपैर्वेदानध्ययनेन च ।**
**कुलान्यकुलतां यान्ति ब्राह्मणातिक्रमेण च ॥६३॥**

खोट भएको विवाहले, कर्महरु नगर्नाले, वेद नपढ्नाले र ब्राह्मणको आज्ञा नमान्नाले असल कुल पनि निन्दित कुल हुन पुग्दछ ।

**शिल्पेन व्यवहारेण शूद्रापत्यैश्च केवलैः ।**
**गोभिरश्वैश्च यानैश्च कृष्या राजोपसेवया ॥६४॥**

शिल्पकला अपनाउनाले, व्यापार गर्नाले, शूद्राबाट सन्तान जन्माउनाले, गाई-घोडा-रथ आदि बाहनबाट जीवन चलाउनाले, कृषिकर्मबाट जीवन चलाउनाले, राजाको सेवा स्वीकार्नाले,...।

**अयाज्ययाजनैश्चैव नास्तिक्येन च कर्मणाम् ।**

**कुलान्याशु विनश्यन्ति यानि हीनानि मन्त्रतः ॥६५॥**

चाण्डाल आदिको पुरेत बन्नाले, वेदप्रति अनादर गर्नाले र वेदमन्त्र नजान्नाले निश्चय नै कुलको नाश हुन्छ ।

**मन्त्रतस्तु समृद्धानि कुलान्यल्पधनान्यपि ।**
**कुलसंख्यां च गच्छन्ति कर्षन्ति च महद्यशः ॥६६॥**

जहाँ उपरोक्त कर्म गर्ने महान कुल पतित हुन्छन् त्यहीँ वेद अनुसार चल्ने गरिब र निम्न कुल पनि महान भनी चिनिन थाल्दछन् ।

**वैवाहिकेऽग्नौ कुर्वीत गृह्यं कर्म यथाविधि ।**
**पञ्चयज्ञविधानं च पङ्क्तिं चान्वाहिकीं गृही ॥६७॥**

गृह्यसूत्रमा बताइएका बिहानबेलुकीका होम आदि, पञ्चयज्ञ अन्तर्गतको
बलिवैश्वदेव र नित्य पकाउने काम गृहस्थले वैवाहिक अग्निमै गर्नू ।

**पञ्चसूना गृहस्थस्य चुल्ली पेषण्युपस्करः ।**
**कण्डनी चोदकुम्भश्च वध्यते यस्तु वाहयन्॥६८॥**

गृहस्थले चूलो, जाँतो, कूचो, ओखल-मुसल र पानीका भाँडाको प्रयोग गर्दा जीव
हिँसा हुन्छ भन्ने जानी यी कुराको सकेसम्म कम प्रयोग गर्नु पर्दछ ।

**तासां क्रमेण सर्वासां निष्कृत्यर्थं महर्षिभिः ।**
**पञ्च क्लृप्ता महायज्ञाः प्रत्यहं गृहमेधिनाम्॥६९॥**

यो पापबाट छुटकाराका लागि गृहस्थले पाँच महायज्ञ (ब्रह्म, पितृ, देव,भूत तथा मनुष्य)
गर्नुपर्दछ भनेर मुनिहरुले बताएका छन् ।



**अध्यापनं ब्रह्मयज्ञः पितृयज्ञस्तु तर्पणम् ।**
**होमो दैवो बलिर्भौतो नृयज्ञोऽतिथिपूजनम्॥७०॥**

वेदको अध्ययन-अध्यापनलाई ब्रह्मयज्ञ, पितृको श्राद्धतर्पणलाई पितृयज्ञ, होमलाई देवयज्ञ,
बलिवैश्वदेवलाई भूतयज्ञ र अतिथिको सेवालाई मनुष्ययज्ञ भनिन्छ ।

**पञ्चैतान्यो महायज्ञान्न हापयति शक्तितः ।**
**स गृहेऽपि वसन्नित्यं सूनादोषैर्न लिप्यते॥७१॥**

यी पाँच महायज्ञ यथाशक्ति पालनगर्ने र कहिल्यै नत्याग्ने व्यक्तिलाई पदार्थको
प्रयोगले लाग्ने हिंसाजन्य दोष लाग्दैन ।

**देवतातिथिभृत्यानां पितृणामात्मनश्च यः ।**
**न निर्वपति पञ्चानामुच्छ्वसन्न स जीवति॥७२॥**

देवता, अतिथि, सेवक, मातापिता तथा परिवारजनलाई आवश्यक भोजन पनि व्यवस्था गर्न नसक्ने गृहस्थलाई जीवित होइन मरेसरह मान्नुपर्दछ ।

**अहुतं च हुतं चैव तथा प्रहुतमेव च ।**
**ब्राह्म्यं हुतं प्राशितं च पञ्चयज्ञान्प्रचक्षते ॥७३॥**

मुनीजनले अहुत, हुत, प्रहुत, ब्रह्महुत र प्राशितगरी पाँच किसिमका यज्ञ बताएका छन् ।

**जपोऽहुतो हुतो होमः प्रहुतो भौतिको बलिः ।**
**ब्राह्म्यं हुतं द्विजाग्र्यार्चा प्राहितं पितृतर्पणम् ॥७४॥**

जप अहुत, हवन हुत, पञ्चमहाभूतलाई बलि दिनु प्रहुत, ब्राह्मणलाई पहिले पूजा गर्नु ब्रह्महुत तथा जीवित पितृको सेवा र पितृको श्राद्धतर्पण प्राशित यज्ञ हो ।

**स्वाध्याये नित्ययुक्तः स्याद्दैवे चैवेह कर्मणि ।**

**देवकर्मणि युक्तो हि बिभर्तीदं चराचरम् ॥७५॥**

गृहस्थले सदैव नित्य स्वाध्याय र यज्ञादि सम्पन्न गर्न लागिरहनु पर्दछ किनकि यज्ञहोम आदिले नै यो संसारको पालन-पोषण हुन्छ ।

**अग्नौ प्रास्ताहुतिः सम्यगादित्यमुपतिष्ठते ।**
**आदित्याज्जायते वृष्टिर्वृष्टेरन्नं ततः प्रजाः ॥७६॥**

यज्ञको आहुति (सुगन्ध) सूर्यसम्म पुग्दछ, सूर्यबाट वर्षा हुन्छ, वर्षाबाट अन्न हुन्छ र अन्नबाट प्रजाको पालनपोषण हुन्छ ।

**यथा वायुं समाश्रित्य वर्तन्ते सर्वजन्तवः ।**
**तथा गृहस्थमाश्रित्य वर्तन्ते सर्व आश्रमाः ॥७७॥**

जसरी वायुको आश्रय लिएर सबै प्राणीहरू बाँच्दछन् त्यसरी नै
गृहस्थाश्रमीको आश्रयमा अरु सबै आश्रमका मानिस बाँचिरहेका हुन्छन् ।

**यस्मात्त्रयोऽप्याश्रमिणो ज्ञानेनान्नेन चान्वहम् ।**
**गृहस्थेनैव धार्यन्ते तस्माज्ज्येष्ठाश्रमो गृहम् ॥७८॥**

सबै आश्रमीहरु गृहस्थाश्रमीकै कृपाले ज्ञान पाउन समर्थ हुने गर्दछन् ।
त्यसैले गृहस्थाश्रमलाई जेठो आश्रम मानिन्छ ।

**स संधार्यः प्रयत्नेन स्वर्गमक्षयमिच्छता ।**
**सुखं चेहेच्छता नित्यं योऽधार्यो दुर्बलेन्द्रियैः ॥७९॥**

जुन आश्रमलाई कमजोर इन्द्रिय हुनेले धारण गर्न सक्दैन, त्यो गृहस्थाश्रमलाई
यसलोकमा सुख र परलोकमा मोक्ष चाहनेले प्रयत्नपूर्वक धारण गर्नु पर्दछ ।



**ऋषयः पितरो देवा भूतान्यतिथयस्तथा ।**
**आशासते कुटुम्बिभ्यस्तेभ्यः कार्यं विजानता ॥८०॥**

ऋषि, पितृ, देवता, अन्य जीव र अतिथि-यी सबै आफन्तसँग आश गर्दछन् ।
यो जानी गृहस्थले पञ्चयज्ञ गर्नु पर्दछ ।

**स्वाध्यायेनार्चयेतर्षीन्होमैर्देवान्यथाविधि ।**
**पितृन् श्राद्धैश्च नृनन्नैर्भूतानि बलिकर्मणा ॥८१॥**

स्वाध्यायले ऋषिहरूलाई, होमले देवताहरूलाई, श्राद्धले पितृहरूलाई, अन्नले मनुष्य
(अतिथि) हरूलाई र बलिकर्मले अन्य प्राणीलाई सत्कार गर्नु पर्दछ ।

**कुर्यादहरहः श्राद्धमन्नाद्येनोदकेन वा ।**
**पयोमूलफलैर्वापि पितृभ्यः प्रीतिमावहन् ॥८२॥**

पितृको आशिर्वाद चाहने मानिसले हरेक दिन अनाज, जल, दूध,
कन्दमूल र फलफूलले श्राद्ध गर्ने गरोस् ।

**एकमप्याशयेद्विप्रं पित्रर्थे पाञ्चयज्ञिके ।**
**न चैवात्राशयेत्कञ्चिद्वैश्वदेवं प्रति द्विजम् ॥८३॥**

पञ्चयज्ञमध्येको एक पितृयज्ञ (श्राद्ध) मा एकजना मात्र भएपनि ब्राह्मणलाई
भोजन गराउनू तर वैश्वदेवमा कसैलाई नखुवाउनू ।

**वैश्वदेवस्य सिद्धस्य गृह्येऽग्नौ विधिपूर्वकम् ।**
**आभ्यः कुर्याद्देवताभ्यो ब्राह्मणो होममन्वहम् ॥८४॥**

ब्राह्मणले गृह्यअग्निमा प्रतिदिन सिद्ध वैश्वदेवलाई हवि प्रदानगर्दै होम गर्ने गर्नु पर्दछ ।

**अग्ने सोमस्य चैवादौ तयोश्चैव समस्तयोः ।**

**विश्वेभ्यश्चैव देवेभ्यो धन्वन्तराय एव च ॥८५॥**

अग्नि (अग्नये स्वाहा), सोम (सोमाय स्वाहा), दुबैलाई एकैपटक (अग्निसोमाभ्यां स्वाहा), विश्वदेव (विश्वोभ्ये देवेभ्यः स्वाहा), धन्वन्तरि (धन्वन्तरये स्वाहा) भनी नित्य होम हाल्नु पर्दछ ।

**कुह्वै चैवानुमत्यै च प्रजापतय एव च ।**
**सह द्यावापृथिव्योश्च तथा स्विष्टकृतेऽन्ततः ॥८६॥**

औंसीका दिनमा सो दिनका देवता (कुह्वै स्वाहा), पूर्णिमाका दिनमा सो दिनका देवता (अनुमत्यै स्वाहा), ब्रह्मालाई (प्रजापतये स्वाहा), द्यावापृथ्वीलाई (द्यावापृथिवीभ्यां स्वाहा) तथा स्विष्टकृत अग्निलाई (स्विष्टकृते स्वाहा) भनी बेग्लाबेग्लै आहुती दिनुपर्दछ ।

**एवं सम्यग्घविर्हुत्वा सर्वदिक्षु प्रदक्षिणम् ।**
**इन्द्रान्तकाप्पतीन्दुभ्यः सानुगेभ्यो बलिं हरेत् ॥८७॥**

विधिपूर्वक होम गरेपछि पूर्व-पश्चिम-उत्तर-दक्षिण चारै दिशामा क्रमैले अनुग
सहित इन्द्र, वरुण, सोम र यमलाई बलि दिनु पर्दछ ।

**मरुद्भ्य इति तु द्वारि क्षिपेदप्स्वद्भ्य इत्यपि ।**
**वनस्पतिभ्य इत्येवं मुसलोलूखले हरेत् ॥८८॥**

यसैगरी मूलढोकामा (मरूद्भ्यः स्वाहा), जलमा (अद्भ्यः स्वाहा) र ओखल-मुसलमा
(वनस्पतिभ्यः स्वाहा) भनी बलि दिनु पर्दछ ।

**उच्छीर्षके श्रियै कुर्याद्भद्रकाल्यै तु पादतः ।**
**ब्रह्मवास्तोष्पतिभ्यां तु वास्तुमध्ये बलिं हरेत् ॥८९॥**

छानामा (श्रियै स्वाहा), जमिनमा (भद्रकाल्यै स्वाहा) र मझेरीमा
(ब्रह्मणे वास्तोष्पतये च स्वाहा) भनी बलि दिनु पर्दछ ।



**विश्वेभ्यश्च देवेभ्यो बलिमाकाश उत्क्षिपेत् ।**
**दिवाचरेभ्यो भूतेभ्यो नक्तञ्चारिभ्य एव च ॥९०॥**

यसैगरी सबै देवतालाई (विश्वेदेवेभ्यः स्वाहा) तथा दिन र रातमा विचरण गर्ने भूतप्रेत आदि
प्राणिहरुलाई (दिवाचरेभ्यः नक्तंचारिभ्यः एव स्वाहा) भनी बलि दिनु पर्दछ ।

**पृष्ठवास्तुनि कुर्वीत बलिं सर्वात्म (न्न) भूतये ।**
**पितृभ्यो बलिशेषं तु सर्वं दक्षिणतो हरेत् ॥९१॥**

भूतलाई (सर्वात्म भूतये स्वाहा) घरको पछिल्तिर र पितृलाई (पितृभ्यः स्वाहा)
भनी दक्षिण दिशामा बलि दिनु पर्दछ ।

**शुनां च पतितानां च श्वपचां पापरोगिणाम् ।**
**वायसानां कृमीणां च शनकैर्निर्वपेद्भुवि ॥९२॥**

कुकुर, पतित, चाण्डाल, पापरोग आदिबाट पीडित, काग तथा कीरा-फटयाङ्ग्राका लागि पृथ्वीको कुनै सफास्थानमा बलि दिनु पर्दछ ।

**एवं यः सर्वभूतानि ब्राह्मणो नित्यमर्चति ।**
**स गच्छति परं स्थानं तेजोमूर्तिः पथर्जुना ॥९३॥**

यसरी सबै देवता, पितृ, भूत र कीरालाई बलि दिई तिनको पूजा गर्ने ब्राह्मण सरल मार्गबाट ज्योतिर्मय लोकमा जान्छ ।

**कृत्वैतद्बलिकर्मैवमतिथिं पूर्वमाशयेत् ।**
**भिक्षां च भिक्षवे दद्याद्विधिवद् ब्रह्मचारिणे ॥९४॥**

बलिकर्म सकिएपछि उपस्थित अतिथिलाई भोजन गराउनु पर्दछ । ढोकामा आएको ब्रह्मचारीलाई भिक्षा पनि दिनु पर्दछ ।



**यत्पुण्यफलमाप्नोति गां दत्त्वा विधिवद्गुरोः ।**
**तत्पुण्यफलमाप्नोति भिक्षां दत्त्वा द्विजो गृही ॥९५॥**

शिष्यले आफ्नो गुरुलाई श्रद्धाले गाई अर्पण गर्दा पाउने जति पुण्य गृहस्थले ढोकामा आएको ब्रह्मचारीलाई भिक्षा दिनाले प्राप्त गर्दछ ।

**भिक्षामप्युदपात्रं वा सत्कृत्य विधिपूर्वकम् ।**
**वेदतत्त्वार्थविदुषे ब्राह्मणायोपपादयेत् ॥९६॥**

वेदतत्त्व जान्ने आचारशील ब्राह्मणले विधि एवं आदरपूर्वक भिक्षा दिनु, अरु कुरा दिन समर्थ नभए केवल जल दिनाले पनि गृहस्थले पुण्य कमाउँदछ ।

**नश्यन्ति हव्यकव्यानि नराणामविजानताम् ।**
**भस्मीभूतेषु विप्रेषु मोहाद्दत्तानि दातृभिः ॥९७॥**

जसरी आगो निस्तेज भएपछि खरानी हुन्छ, त्यस्तै ब्राह्मणत्व नभएका ब्राह्मणलाई अनजानमा दिइएको दानले पनि दाताको हव्यकव्य कर्म भष्म हुन्छ ।

**विद्यातपः समृद्धेषु हुतं विप्रमुखाग्निषु ।**
**निस्तारयति दुर्गाच्च महतश्चैव किल्बिषात् ॥९८॥**

विद्या र तपमा धनी ब्राह्मणलाई पस्किएको खाना र अग्निमा देवतालाई दिइएको आहुतिले गृहस्थलाई ठूला पाप र आपत्तिबाट छुटाउँदछ ।

**सम्प्राप्ताय त्वतिथये प्रदद्यादासनोदके ।**
**अन्नं चैव यथाशक्ति संस्कृत्य विधिपूर्वकम् ॥९९॥**

संयोगले आइपुगेका अतिथिलाई आफ्नो गच्छे अनुसारको आसन, जल र भोजन दिई विधिपूर्वक स्वागत गर्नु गृहस्थको धर्म हो ।



**शिलानप्युञ्छतो नित्यं पञ्चाग्नीनपि जुह्वतः ।**
**सर्वं सुकृतमादत्ते ब्राह्मणेऽनर्चितो वसन् ॥१००॥**

शिला खोजेको अन्नले पेट पाल्ने र दैनिक पञ्चाग्नि होम गर्ने पुण्यात्मा ब्राह्मणका घरबाट कुनै अतिथि अपहेलित भएर फर्केमा उसले गरेका पनि सबै पुण्य नष्ट हुन्छ ।

**तृणानि भूमिरुदकं वाक्चतुर्थी सूनृता ।**
**एतान्यपि सतां गेहे नोच्छिद्यन्ते कदाचन ॥१०१॥**

अतिथिलाई दिने अरु कुरा नभए पनि बस्ने सफा जमिन, पिउने शीतल जल, मीठो बोली तथा कुशल-मङ्गलको सोधनी जस्ता चार कुराहरु गरी सत्कार गर्न सकिन्छ र यी कुराको कतै अभाव पनि हुँदैन ।

**एकरात्रं तु निवसन्नतिथिर्ब्राह्मणः स्मृतः ।**
**अनित्यं हि स्थितो यस्मात्तस्मादतिथिरुच्यते ॥१०२॥**

केवल एक रातका लागि कसैको घरमा आश्रय लिने अतिथि ब्राह्मण नै बुद्धिमान ब्राह्मण हो, किनकि अतिथिको अर्थ नै 'अनित्य ठेगान भएको' भन्ने हुन्छ ।

**नैकग्रामीणमतिथिं विप्रं साङ्गतिकं तथा ।**
**उपस्थितं गृहे विद्याद्भार्या यत्राग्नयोऽपि वा ॥१०३॥**

एउटै गाउँका गाऊँले, सहपाठी मित्र, आमन्त्रित पुरोहित तथा भेट्न आएकी पत्नीलाई पनि अतिथि भनिँदैन ।

**(उपासते ये गृहस्थाः परपाकमबुद्धयः ।**
**तेन ते प्रेत्य पशुतां व्रजन्त्यन्नादिदायिनः ॥**



सित्तैंमा अर्काको अन्न खान पाउने दुर्भावनाले अरुका घरमा पाउना लाग्ने व्यक्तिले आफूले गरेको त्यो नीचकर्मको ऋण चुकाउन मरेपछि त्यही घरको पशु भएर जन्मी अन्नदाताको सेवा गर्नु पर्दछ) ।

**परपाकान्नपुष्टस्य सततं गृहमेधिनः ।**
**दत्तमिष्टं तपोऽधीतं यस्यान्नं तस्य तद्भवेत् ॥१०४॥**

सधैं अरुको पकाइएको अन्न खाएर मोटाएको गृहस्थीले जे दान दिन्छ वा जुन तपस्या गर्दछ त्यो सबैको फल जसको अन्न उसले खाएको हो त्यसैले पाउँदछ ।

**अप्रणोद्योऽतिथिः सायं सूर्योढो गृहमेधिना ।**
**काले प्राप्तस्त्वकाले वा नास्यानश्नन्गृहे वसेत् ॥१०५॥**

सूर्यास्त पछि साँझपख खाने बेलामा वा खाइसकेपछि आउने अतिथिलाई

पनि भोजन गराउनु गृहस्थको धर्म हो ।

**न वै स्वयं तदश्नीयादतिथिं यन्न भोजयेत् ।**
**धन्यं यशस्यमायुष्यं स्वर्ग्यं वाऽतिथिपूजनम् ॥१०६॥**

अतिथिलाई नदिई आफू नखानू किन कि अतिथि-पूजनले
धनधान्य, यश, दीर्घायु र स्वर्ग पाइन्छ ।

**आसनावसथौ शय्यामनुव्रज्यामुपासनम् ।**
**उत्तमेषूत्तमं कुर्याद्धीने हीनं समे समम् ॥१०७॥**

अतिथिको स्तरअनुसार भूमि (बस्ने ठाउँ), आसन, ओछ्यान र
भोजन दिई तिनको अभिवादन गर्नुपर्दछ ।

**वैश्वदेवे तु निर्वृत्ते यद्यन्योऽतिथिराव्रजेत् ।**

**तस्याप्यन्नं यथाशक्ति प्रदद्यान्न बलिं हरेत् ॥१०८॥**

बलिवैश्वदेव विधिले अतिथि-सेवा सकिएपछि अर्को अतिथि आए बलिवैश्वदेव
फेरी नगर्नू तर अतिथिलाई भोजन भने अवश्य गराउनू ।

**न भोजनार्थं स्वे विप्रः कुलगोत्रे निवेदयेत् ।**
**भोजनार्थे हि ते शंसन्वान्ताशीत्युच्यते बुधैः ॥१०९॥**

भोजनका लागि आफ्नो कुल र गोत्रको नाम नबेच्नू, त्यसरी खानु छाद
खानु सरह हुन्छ भनेर विद्वानहरू भन्दछन् ।

**न ब्राह्मणस्य त्वतिथिर्गृहे राजन्य उच्यते ।**
**वैश्यशूद्रौ सखा चैव ज्ञातयो गुरुरेव च ॥११०॥**

ब्राह्मणका घरमा आउने क्षत्रिय, वैश्य, शूद्र, मित्र, नातेदार तथा गुरुलाई अतिथि मानिदैन किनकि यिनको त आउनेजाने काम भइरहन्छ ।

**यदि त्वतिथिधर्मेण क्षत्रियो गृहमाव्रजेत् ।**
**युक्तवत्सु च विप्रेषु कामं तमपि भोजयेत् ॥१११॥**

अपरिचित कुनै छेत्री ब्राह्मणको घरमा अतिथि बनेर आयो भने उसको गोत्र आदिको परवाह नगरी सत्कार गर्नु पर्दछ ।

**वैश्यशूद्रावपि प्राप्तौ कुटुम्बेऽतिथिधर्मिणौ ।**
**भोजयेत्सह भृत्यैस्तावानृशंस्यं प्रयोजयन् ॥११२॥**

आएका वैश्य वा शूद्र अतिथिलाई पनि घरका सेवक वा साना व्यक्तिलाई झैँ दया र स्नेहभाव राखी भोजन आदिले सन्तुष्ट गराउनु पर्दछ ।



**इतरानपि सख्यादीन्सम्प्रीत्या गृहमागतान् ।**
**प्रकृत्यान्नं यथाशक्ति भोजयेत्सह भार्यया ॥११३॥**

अतिथिलाई गरे जसरी नै आउने मित्रलाई पनि स्वागत सत्कार गर्नू र पत्नीको सहायताले जलपान, भोजन आदि गराउनू ।

**सुवासिनीः कुमारीश्चः रोगिणीः गर्भिणीः स्त्रियः ।**
**अतिथिभ्योऽन्वगेवैतान् भोजयेदविचारयन् ॥११४॥**

कुमारी दिदीबहिनी, रोगीणी र गर्भवतीलाई अतिथिभन्दा पहिले खुवाउन कुनै सङ्कोच नमान्नू ।

**अदत्त्वा तु य एतेभ्यः पूर्वं भुङ्क्तेऽविचक्षणः ।**
**स भुञ्जानो न जानाति श्वगृध्रैर्जग्धिमात्मनः ॥११५॥**

यिनलाई नखुवाई खाने मूर्खलाई यो अपराधले गर्दा मरेपछि उ कुकुर
र गिद्धको भोजन बन्नुपर्दछ भन्ने कुरा के थाहा ? ।

**भुक्तवत्स्वथ विप्रेषु स्वेषु भृत्येषु चैव हि ।**
**भुञ्जीयातां ततः पश्चादवशिष्टं तु दम्पती ॥११६॥**

विवेकी गृहस्थ दम्पत्तीले ब्राह्मण, आश्रित-परिवार सदस्य र सेवक अघाएपछि
मात्र आफूले खानु पर्दछ ।

**देवानृषीन्मनुष्यांश्च पितृन्गृह्याश्च देवताः ।**
**पूजयित्वा ततः पश्चाद्गृहस्थः शेषभुग्भवेत् ॥११७॥**

गृहस्थले देवता, ऋषि, पितृ, आश्रित, परिवार सदस्य र सेवकलाई खुवाएर
बाँकी रहेको खाना आफूले खानु उचित हुन्छ ।



**अघं सः केवलं भुङ्क्ते यः पचत्यात्मकारणात् ।**
**यज्ञशिष्टाशनं ह्येतत्सतामन्नं विधीयते ॥११८॥**

आफ्नो मात्रै पेटको चिन्ता गर्नेले खाएको भोजनले त पाप थुपार्ने काम मात्र हुने हुनाले
चरित्रवान सज्जनहरु देवता, अतिथि आदिलाई खुवाई बाँकी भोजनलाई नै
साँचो अर्थमा खान योग्य भोजन मान्दछन् ।

**राजर्त्विक्स्नातकगुरून्प्रियश्वशुरमातुलान् ।**
**अर्हयेन्मधुपर्केण परिसंवत्सरात्पुनः ॥११९॥**

राजा, ऋत्विज्, स्नातक, गुरू, मित्र, ससुरा र मामा एक वर्षपछि आए पुनः मधुपर्कले पूजा गर्नू ।

**राजा च श्रोत्रियश्चैव यज्ञकर्मण्युपस्थितौ ।**
**मधुपर्केण संपूज्यौ न त्वयज्ञ इति स्थितिः ॥१२०॥**

राजा र स्नातक कुनै यज्ञ गर्दा मात्र मधुपर्कले पूज्न योग्य हुन्छन् यज्ञ नहुँदा आए हुँदैनन्, यही नै शास्त्रीय विधान छ ।

**सायंत्वन्नस्य सिद्धस्य पत्न्यमन्त्रं बलिंहरेत् ।**
**वैश्वदेवं हि नामैतत्सायंप्रातर्विधीयते ॥१२१॥**

शास्त्रको मत छ कि गृहस्थ दम्पतीले प्रतिदिन बिहानबेलुकी बलिवैश्वदेव यज्ञ गर्नुपर्दछ तर स्त्रीले बेलुकाको यज्ञ सम्पन्न गर्दा मन्त्र पढ्न हुँदैन ।

**पितृयज्ञं तु निर्वर्त्य विप्रश्चन्द्रक्षयेऽग्निमान् ।**
**पिण्डान्वाहार्यकं श्राद्धं कुर्यान्मासानुमासिकम् ॥१२२॥**

यज्ञयागादि गर्ने असल गृहस्थी ब्राह्मणले प्रत्येक औंसीमा पितृश्राद्ध तथा पिण्डदान अवश्य गर्नु पर्दछ ।



**(न निर्वपति यः श्राद्धं प्रमीतपितृको द्विजः ।**
**इन्दुक्षये मासि मासि प्रयश्चित्ती भवेत्तु सः ॥**

औंसीमा पितृका लागि श्राद्धतर्पण र पिण्डदान नगर्ने द्विज प्रायश्चित नगर्दासम्म चन्द्रमाजस्तै प्रतिदिन खिइँदै जान्छ ।)

**पितृणां मासिकं श्राद्धमन्वाहार्यं विदुर्बुधाः ।**
**तच्चामिषेण कर्तव्यं प्रशस्तेन प्रयत्नतः ॥१२३॥**

पितृका लागि हरेक महिना गरिने श्राद्धलाई "अन्वाहार्य" भनिन्छ । विवेकशील र धर्मनिष्ठ गृहस्थले उत्तम भोज्यपदार्थले अन्वाहार्य अवश्य गर्नू ।

**तत्र ये भोजनीयाः स्युर्ये च वर्ज्या द्विजोत्तमाः ।**
**यावन्तश्चैव यैश्चान्नैस्तान्प्रवक्ष्यामशेषतः ॥१२४॥**

हे श्रेष्ठ द्विजगण ! श्राद्धमा कसलाई बोलाएर खुवाउनु हुन्छ, कसलाई हुँदैन, कति जनालाई खुवाउनु हुन्छ र के के खुवाउनु हुन्छ अब म त्यो सबै कुरा बताउँदछु ।

**द्वौ दैवे पितृकृत्ये त्रीनेकैकमुभयत्र वा ।**
**भोजयेत्सुसमृद्धोऽपि न प्रवर्तेत विस्तरे ॥१२५॥**

यज्ञमा दुई र श्राद्धमा तीन वा दुवैमा एक जना ब्राह्मणलाई भोजन गराउनू, समृद्धले पनि संख्या नथप्नू ।

**सत्क्रियां देशकालौ च शौचं ब्राह्मणसम्पदः ।**
**पञ्चैतान्विस्तरो हन्ति तस्मान्नेहेत विस्तरम् ॥१२६॥**

धेरैलाई बोलाउँदा पाँच प्रकारको हानी हुन्छ । कर्म शुद्ध रहँदैन, स्थानको पवित्रता सुरक्षित रहन सक्दैन, समय शुद्धिको पालना हुन सक्दैन, व्यक्तिको पवित्रता स्थिर रहन पाउँदैन र आचारवानलाई महत्व दिन सम्भव हुँदैन । त्यसैले अनावश्यक संख्या थप्नु हुँदैन ।



**प्रथिता प्रेतकृत्यैषा पित्र्यं नाम विधुक्षये ।**
**तस्मिन्युक्तस्यैति नित्यं प्रेत्कृत्यैव लौकिकी ॥१२७॥**

औंसीमा पितृका निमित्त गरिने श्राद्धकर्मलाई प्रेतकृत्य भनिन्छ । प्रेतकृत्यलाई श्रद्धाले गर्ने गृहस्थले नित्य गरिने भनी बताइएको लौकिक श्राद्धको फल पनि पाउँदछ ।

**श्रोत्रियायैव देयानि हव्यकव्यानि दातृभिः ।**
**अर्हत्तमाय विप्राय तस्मै दत्तं महाफलम् ॥१२८॥**

हव्यकव्यको दान वैदिक ब्राह्मणलाई नै दिनू, जति योग्य ब्राह्मण हुन्छ उति बढी पुण्य हुन्छ ।

**एकैकमपि विद्वांसं दैवे पित्र्ये च भोजयेत् ।**
**पुष्कलं फलमाप्नोति नामन्त्रज्ञान्बहूनपि ॥१२९॥**

देवपितृकार्यमा धेरै मूर्ख ब्राह्मणहरुलाई भन्दा एउटै विद्वान ब्राह्मणलाई भोजन गराउनु बढी पुण्यदायक हुन्छ ।

**दूरादेव परीक्षेत ब्राह्मणं वेदपारगम् ।**
**तीर्थं तद्धव्यकव्यानां प्रदाने सोऽतिथि स्मृतः ॥१३०॥**

आचार र वेदज्ञान बुझ्की ब्राह्मण निम्ता गर्नू, त्यो नै वास्तवमा हव्यकव्यको अधिकारी र अतिथि सरह हुन्छ भनिएको छ ।

**सहस्रं हि सहस्राणामनृचां यत्र भुञ्जते ।**
**एकस्तान्मन्त्रवित्प्रीतः सर्वानर्हति धर्मतः ॥१३१॥**

लाखौं मूर्ख ब्राह्मणहरु भोजनादिले तृप्त-सन्तुष्ट हुँदा भन्दा एकमात्र वेदजान्ने सदाचारी ब्राह्मणले देवकर्म र पितृकर्ममा भोजन गरी तृप्त हुँदा सो यज्ञ पूर्ण सफल हुन्छ ।



**ज्ञानोत्कृष्टाय देयानि कव्यानि च हवींषि च ।**
**न हि हस्तावसृग्दिग्धौ रुधिरेणैव शुध्यतः ॥१३२॥**

जसरी रगत लागेको हात रगतले धोएर सफा हुँदैन पानीले नै धुनु पर्दछ, त्यसरी नै मूर्खलाई हव्यकव्य दिएर लाभ पाईंदैन उत्कृष्ट र ज्ञानीलाई नै दिनु पर्दछ ।

**यावतो ग्रसते ग्रासान्हव्यकव्येष्वमन्त्रवित् ।**
**तावतो ग्रसते प्रेतो दीप्तशूलष्टर्चयोगुडान् ॥१३३॥**

देवपितृ कार्यमा अयोग्य ब्राह्मणले जति गाँस खान्छ त्यति नै फलामका ताता डल्ला जजमानका देवता र पितृहरुले तथा त्यस अयोग्य ब्राह्मणले मरेपछि चपाउनु पर्दछ ।

**ज्ञाननिष्ठा द्विजाः केचित्तपोनिष्ठास्तथापरे ।**
**तपःस्वाध्यायनिष्ठाश्च कर्मनिष्ठास्तथापरे ॥१३४॥**

संसारमा वेदविद्यामा पारङ्गत, कठिन तपस्वी, तप साधना र वेदाध्ययनशील र कर्मकाण्डी गरी चार थरी आदर्श-ब्राह्मण पाइन्छन् ।

**ज्ञाननिष्ठेषु कव्यानि प्रतिष्ठाप्यानि यत्नतः ।**
**हव्यानि तु यथान्यायं सर्वेष्वेव चतुर्ष्वपि ॥१३५॥**

श्राद्धमा ज्ञानीलाई नै खोजी निम्ता गर्नुपर्दछ । यज्ञ आदिमा भने चारै थरी ब्राह्मणलाई आवश्यकता हेरी निम्ता गर्न सकिन्छ ।

**अश्रोत्रियः पिता यस्य पुत्रः स्याद्वेदपारगः ।**
**अश्रोत्रियो वा पुत्रःस्यात्पिता स्याद्वेदपारगः ॥१३६॥**

वेद नजान्ने ती बाबुहरु जसका छोरा वेदमा पारङ्गत हुन्छन् र वेद नजान्ने ती छोराहरु जसका बाबु वेदमा पारङ्गत हुन्छन्...।



**ज्यायांसमनयोर्विद्याद्यस्य स्याच्छ्रोत्रियः पिता ।**
**मन्त्रसम्पूजनार्थं तु सत्कारमितरोऽर्हति ॥१३७॥**

यी मध्येमा त्यसलाई श्रेष्ठ जान्नु जसका पिता श्रोत्रिय हुन्छन् । तर वेदपूजाका लागि भने दोश्रो थरीका योग्य हुन्छन् ।

**न श्राद्धे भोजयेन्मित्रं धनैः कार्योऽस्य सङ्ग्रहः ।**
**नारिं न मित्रं यं विद्यात्तं श्राद्धे भोजयेद्द्विजम् ॥१३८॥**

मित्रलाई खुवाउन वा आर्थिक सहायता दिन श्राद्धकर्मलाई बहाना नबनाउनु, श्राद्धको निमन्त्रणामा शत्रुता र मित्रतालाई आधार बनाउन हुँदैन । न मित्र न शत्रू यस्ता तटस्थ द्विजलाई श्राद्धमा निम्ता गरेर भोजन गराउनु पर्दछ ।

**यस्य मित्रप्रधानानि श्राद्धानि च हवींषि च ।**
**तस्य प्रेत्य फलं नास्ति श्राद्धेषु च हविःषु च ॥१३९॥**

श्राद्धमा वा यज्ञमा मित्रलाई बोलाएर भोजन गराउनेका पितृ र देवताले केही पाउँदैनन् र गर्नेले पनि कुनै फल पाउँदैन ।

**यः सङ्गतानि कुरुते मोहाच्छ्राद्धे मानवः ।**
**स स्वर्गाच्च्यवते लोकाच्छ्राद्धमित्रो द्विजाधमः ॥१४०॥**

श्राद्धलाई अनजानमा मित्रता स्थापित गर्ने वा मित्रता सुदृढ बनाउने माध्यम बनाउने मूर्ख स्वर्गबाट तलतिर खस्दछ ।

**सम्भोजनी साऽभिहिता पैशाची दक्षिणा द्विजैः ।**
**इहैवास्ते तु सा लोके गौरन्धेवैकवेश्मनि ॥१४१॥**



द्विजका बीचमा हुने यस्तो दान कर्मलाई पैशाची दान भनिएको छ । यो लोकाकृति जोगाउने खालको वा पेसाजस्तो कर्मले अन्धी गाई कतै जान नसकी एउटै स्थानमा बसेजस्तै यो लोकमा मात्र फाइदा दिन्छ, परलोकमा दिँदैन ।

**यथेरिणे बीजमुप्त्वा न वप्ता लभते फलम् ।**
**तथाऽनृचे हविर्दत्त्वा न दाता लभते फलम् ॥१४२॥**

जसरी बाँझोमा बिउ छरेर उब्जनी पाइँदैन त्यसरी नै मूर्ख ब्राह्मणलाई हवि दिएर दिनेले केही फल पाउँदैन ।

**दातृन्प्रतिगृहीतृंश्च कुरुते फलभागिनः ।**
**विदुषे दक्षिणां दत्त्वा विधिवत्प्रेत्य चेह च ॥१४३॥**

विद्वान ब्राह्मणलाई विधिले सङ्कल्प आदि गरी श्रद्धाले भोजन र दक्षिणा दिँदा

दिनेलिने दुबैले यसलोक र परलोकमा अनन्त फल पाउँदछन् ।

**कामं श्राद्धेऽर्चयेन्मित्रं नाभिरुपमपि त्वरिम् ।**
**द्विषता हि हविर्भुक्तं भवति प्रेत्य निष्फलम् ॥१४४॥**

श्राद्धमा बरु मित्रलाई डाक्नु परे डाक्नु तर जतिसुकै विद्वान भएपनि शत्रु-ब्राह्मणलाई नडाक्नू किन कि द्वेषभावले खाइएको वा ख्वाइएको हवि निष्फल हुन्छ ।

**यत्नेन भोजयेच्छ्राद्धे बह्वृचं वेदपारगम् ।**
**शाखान्तगमथाध्वर्युं छन्दोगं तु समाप्तिकम् ॥१४५॥**

ऋग्वेद, यजुर्वेद वा सामवेदमा पूर्ण निपुण अथवा वेदाध्ययन सकेका ब्राह्मणलाई श्राद्धमा निम्ता दिएपछि यत्नपूर्वक कुनै भूलचूक हुन नदिई तिनलाई भोजन गराउनू ।

**एषामन्यतमो यस्य भुञ्जीत श्राद्धमर्चितः ।**

**पितृणां तस्य तृप्तिःस्याच्छाश्वती साप्तपौरुषी ॥१४६॥**

तीन वा एक वेदको पूर्ण ज्ञानी ब्राह्मणले गरेको श्राद्धको भोजनले तथा तिनले पाएको स्वागत-सत्कारको सन्तुष्टीले यजमानका सात पुस्ताको उद्धारभई यजमान कृतकृत्य हुन्छ ।

**एष वै प्रथमः कल्पः प्रदाने हव्यकव्ययोः ।**
**अनुकल्पस्त्वयं ज्ञेयः सदा सद्भिरनुष्ठितः ॥१४७॥**

हे ऋषिहरू हो ! देव र पितृकर्मका बारेमा जे जे बताइयो त्यो प्रथमकल्प हो । सज्जनद्वारा अपनाइने अन्य (यसपछि बताइने) अनुष्ठानलाई अनुकल्प भनी जान ।

**मातामहं मातुलं च स्वस्त्रीयं श्वसुरं गुरुम् ।**
**दौहित्रं विट्पतिं बन्धुमृत्विग्याज्यौ च भोजयेत् ॥१४८॥**

श्राद्धमा आमाका पिता, मामा, भाञ्जा, ससुरा, गुरु, छोरीको छोरो, ज्वाईं, बन्धु, ऋत्विक र याज्ञिकलाई सत्कार गरी भोजन गराउनु पर्दछ ।

**न ब्राह्मणं परीक्षेत दैवे कर्माणि धर्मवित् ।**
**पित्र्ये कर्मणि तु प्राप्ते परीक्षेत प्रयत्नतः ॥१४९॥**

देवकर्ममा बोलाइने ब्राह्मणको योग्यता नजाँचे पनि पितृकर्ममा बोलाइनेको योग्यता मेहनतले जाँच्नु पर्दछ ।

**ये स्तेनपतितक्लीबाः ये च नास्तिकवृत्तयः ।**
**तान् हव्यकव्ययोर्विप्राननर्हान्मनुरब्रवीत् ॥१५०॥**

देव-पितृकार्यमा चोर-पतित-नपुंसक र नास्तिक ब्राह्मण-लाई निम्ता नगर्नु भनी मनुले बताएका छन् ।



**जटिलं चानधीयानं दुर्बलं कितवं तथा ।**
**याजयन्ति च ये पूगांस्तांश्च श्राद्धे न भोजयेत् ॥१५१॥**

जटापाली तपस्वीको ढोंग देखाउने, वेद नपढ्ने, रोग र चिन्ताले दुब्लाएका, जुवाडे र धेरै व्रत-उपवास गरी जजमान ठग्नेलाई श्राद्धमा निम्ता गरेर नखुवाउनू ।

**चिकित्सकान्देवलकान्मांसविक्रयिणस्तथा ।**
**विपणेन च जीवन्तो वर्ज्याः स्युर्हव्यकव्ययोः ॥१५२॥**

चिकित्सक, पुजारी, मासु बेच्ने र व्यापारीलाई पनि देव तथा पितृकार्यमा बोलाएर नखुवाउनू ।

**प्रेष्यो ग्रामस्य राज्ञश्च कुनखी श्यावदन्तकः ।**
**प्रतिरोद्धा गुरोश्चैव त्यक्ताग्निर्वार्धुषिस्तथा ॥१५३॥**

गाऊँ वा राजाका दूत, विकृत नङका, काला दाँतका, गुरु-अवहेलक,
अग्निहोम आदि नगर्ने, ब्याजजीवि,... ।

**यक्ष्मी च पशुपालश्च परिवेत्ता निराकृतिः ।**
**ब्रह्मद्विट् परिवित्तिश्च गणाभ्यन्तर एव च ॥१५४॥**

क्षयरोगी, पशुपालक-वृत्तिका, परिवेत्ता, नित्यकर्म गर्नमा अल्छी, ब्राह्मणको रिस गर्ने,
परिवित्ति, सार्वजनिक सम्पत्ती आफ्नोलागि प्रयोग गर्ने,...।

**कुशीलवोऽवकीर्णी च वृषलीपतिरेव च ।**
**पौनर्भवश्च काणश्च यस्य चोपपतिर्गृहे ॥१५५॥**

अभिनेता, खण्डित ब्रह्मचारी, शूद्राको पति, पौनर्भव, कानु, घरमै पत्नीको प्रेमी राख्ने,...।

**भृतकाध्यापको यश्च भृतकाध्यापितस्तथा ।**

**शूद्रशिष्यो गुरुश्चैव वाग्दुष्टः कुण्डगोलकौ ॥१५६॥**

पढाएको पैसा लिने, पढेको पैसा दिने, शूद्रको शिष्य, शूद्रको गुरु, दुष्ट-बोली बोल्ने, कुण्ड,
गोलक,...।

**अकारणपरित्यक्ता मातापित्रोर्गुरोस्तथा ।**
**ब्राह्मैर्यौनैश्च सम्बन्धैः संयोगं पतितैर्गतः ॥१५७॥**

गुरु तथा मातापितालाई अकारण त्याग्ने, पतितजन्माका साथ गुरु-शिष्यको वा विवाह आदिको
सम्बन्ध गाँस्ने,...।

**अगारदाही गरदः कुण्डाशी सोमविक्रयी ।**
**समुद्रयायी बन्दी च तैलिकः कूटकारकः ॥१५८॥**

आफ्नो वा अरुको घर जलाएर तमाशा हेर्ने, विष खुवाउने, कुण्डको अन्न खाने, सोमरस बेचबिखन गर्ने, समुद्रपारी हिँडडुल गर्ने, राजाको स्तुति गाउने, तेलको व्यापारी, झुटो साक्षी बस्ने,...।

**पित्रा विवदमानश्च कितवो मद्यपस्तथा ।**
**पापरोग्यभिशस्तश्च दाम्भिको रसविक्रयी ॥१५९॥**

मातापितासँग झगडा गर्ने, जुवाडे वा धूर्त, जाँडरक्सी खाने, कुष्ठरोगी, कलङ्कित, घमण्डी, रस बिक्री गर्ने,...।

**धनुःशराणां कर्त्ता च यश्चाग्रेदिधिषूपतिः ।**
**मित्रध्रुग्द्यूतवृत्तिश्च पुत्राचार्यस्तथैव च ॥१६०॥**

धनुष-बाण बनाउने, अग्रेदिधिषूपति (दीदिको भन्दा पहिले विवाह भएकी बहिनीको पति), मित्रद्रोही, जुवाबाट रोजगारी चलाउने, छोरोसँग पढ्ने,...।



**भ्रामरीगण्डमाली च श्वित्र्यथो पिशुनस्तथा ।**
**उन्मत्तोऽन्धश्च वर्ज्याः स्युर्वेदनिन्दक एव च ॥१६१॥**

छारेरोगी, गाँडे, श्वेतकुष्ठी, चुक्लीखोर, पागल, अन्धो र वेदनिन्दक सबै हव्यकव्यमा छाड्न योग्य हुन्छन् ।

**हस्तिगोश्वोष्ट्रदमको नक्षत्रैर्यश्च जीवति ।**
**पक्षिणां पोषको यश्च युद्धाचार्यस्तथैव च ॥१६२॥**

हात्ती, गाई, घोडा, ऊँट आदि पशुको प्रशिक्षक, ज्यौतिषविद्याको व्यापारबाट पेट पाल्ने, चरा पाल्ने, युद्धकलाको प्रशिक्षक,...।

**स्रोतसां भेदको यश्च तेषां चावरणे रतः।**
**गृहसंवेशको दूतो वृक्षारोपक एव च॥१६३॥**

नदीखोलाको तटबन्द भत्काउने, नदीखोलाको प्रवाहलाई अर्कैतिर फर्काउने, वास्तु-कलाबाट जीवन धान्ने, दूत, वृक्ष रोप्ने,...।

**श्वक्रीडी श्येनजीवी च कन्यादूषक एव च ।**
**हिंस्रो वृषलवृत्तिश्च गणानां चैव याजकः ॥१६४॥**

कुकुरसँग खेलबाड गर्ने, बाज चरा खरिदबिक्री गर्ने वा लडाएर पैसा कमाउने, कुमारी केटीलाई बलात्कार गर्दै हिँड्ने, जीवको हिंसा गर्ने, शूद्रकर्म गर्ने, भगवान शिवका गणको उपासना गर्ने,...।

**आचारहीनः क्लीबश्च नित्यं याचनकस्तथा ।**
**कृषीजीवी श्लीपदी च सद्भिर्निन्दित एव च॥१६५॥**



आचारभ्रष्ट, नपुंसक, नित्य भिक्षा माग्ने (लोभी र अभागी), कृषक, गोडा सुन्निने रोग (हात्तीपाइले) लागेको, सत्पुरुषद्वारा निन्दित,...।

**औरभ्रिको माहिषिकः परपूर्वापतिस्तथा ।**
**प्रेतनिर्यातकश्चैव वर्जनीयाः प्रयत्नतः ॥१६६॥**

भेडापालक, भैंसीपालक, दोश्रोपटक विवाहिता स्त्रीको पति र प्रेतकर्म गराएर धन जम्मा गर्नेलाई श्राद्धमा यत्नपूर्वक छाड्नु पर्दछ ।

**एतान्विगर्हिताचारानपाङ्क्तेयान्द्विजाधमान् ।**
**द्विजातिप्रवरो विद्वानुभयत्र विवर्जयेत्॥१६७॥**

विद्वान ब्राह्मणले उल्लेखित निन्दनीय ब्राह्मणलाई आफ्नो जाती तथा पङ्क्तिबाट सधैंका लागि बहिष्कार गर्नुपर्दछ जसले गर्दा कसैले पनि तिनलाई यज्ञ-श्राद्ध

आदिमा निमन्त्रणा गर्न पाउने छैनन् ।

**ब्राह्मणो ह्यनधीयानस्तृणाग्निरिव शाम्यति ।**
**तस्मै हव्यं न दातव्यं न हि भस्मनि हूयते ॥१६८॥**

घुस्यानको आगोले ताप नदिए झैं अनध्यायी, दुराचारी ब्राह्मण तेजहीन हुने हुनाले केही फल दिन सक्दैनन्, तिनलाई हवि दिनु खरानीमा होम गर्नु सरह हो ।

**अपङ्क्तयदाने यो दातुर्भवत्यूर्ध्वं फलोदयः ।**
**दैवे कर्मणि पित्र्ये वा तत्प्रवक्ष्याम्यशेषतः ॥१६९॥**

उपर्युक्त पतित एवं निषिद्ध ब्राह्मणहरूलाई अनजानमा वा दुराग्रहले देव तथा पितृ कार्यमा बोलाई दान दिएमा हुने दोषका बारेमा म यथासमय सबै कुरा बताउने नै छु ।

**अव्रतैर्यद्द्विजैर्भुक्तं परिवेत्रादिभिस्तथा ।**

**अपाङ्क्तैयैर्यदन्यैश्च तद्वै रक्षांसि भुञ्जते ॥१७०॥**

वेदको उल्लङ्घन गर्ने, कालो धन थुपार्ने तथा दुष्ट भई समाजबाट बहिष्कृत व्यक्तिले दिएको निम्ता मानी खाएको भोजन "राक्षसी भोजन" हुन्छ ।

**दाराग्निहोत्रसंयोगं कुरुते योऽग्रजे स्थिते ।**
**परिवेत्ता स विज्ञेयः परिवित्तिस्तु पूर्वजः ॥१७१॥**

दाजुभन्दा पहिले विवाह, होम आदि कर्म गर्ने भाइलाई "परिवेत्ता" भनिन्छ भने परिवेत्ताको दाजुलाई "परिवित्ति" भनिन्छ ।

**परिवित्तिः परीवेत्ता ययाच परिविद्यते ।**
**सर्वे ते नरकं यान्ति दातृयाजक पञ्चमाः ॥१७२॥**

परिवेत्ता, परिवित्ति, परिवेत्तासँग विवाह गर्ने केटी, कन्यादान गर्ने पिता र विवाह गराउने पुरोहित गरी पाँचै जनाले नरक भोग गर्नुपर्दछ ।

**भ्रातुर्मृतस्य भार्यायां योऽनुरज्येत कामतः ।**
**धर्मेणापि नियुक्तानां स ज्ञेयो दिधिषूपतिः ॥१७३॥**

विधवा भाइबुहारीसँग गोप्य सम्पर्क गर्ने वा धर्म अनुसार नियोगविधिले प्रकटरुपमै सन्तान उत्पन्न गर्ने व्यक्तिलाई "दिधिषूपति" भनिन्छ ।

**परदारेषु जायेते द्वौ सुतौ कुण्डगोलकौ ।**
**पत्यौ जीवति कुण्डः स्यान्मृते भर्तरि गोलकः ॥१७४॥**

परस्त्रीबाट जन्मिने सन्तान "कुण्ड" र "गोलक" हुन्छ । परपुरुषबाट लोग्ने छँदै जन्मिने सन्तानलाई 'कुण्ड' र विधवाले जन्माउने सन्तानलाई 'गोलक' भनिन्छ ।



**ते तु जाताः परक्षेत्रे प्राणिनः प्रेत्य चेह च ।**
**दत्तानि हव्यकव्यानि नाशयन्ति प्रदायिनाम् ॥१७५॥**

कुण्डगोलकले दाताको हव्य र कव्य यस लोक र परलोकमा नष्ट गर्दछन् ।

**अपङ्क्त्यो यावतः पङ्क्त्यान् भुञ्जानाननुपश्यति ।**
**तावतां न फलं तत्र दाता प्राप्नोति बालिशः ॥१७६॥**

ब्राह्मणत्वबाट पतित कुण्ड, गोलक आदि जति श्रोत्रिय ब्राह्मणका निम्तामा देखिन्छन् त्यति नै कम फल श्रोत्रियले पाउँदछ ।

**वीक्ष्यान्धो नवतेः काणः षष्टेः श्वित्री शतस्य च ।**
**पापरोगी सहस्रस्य दातुर्नाशयते फलम् ॥१७७॥**

सत्य जानेर पनि कुण्ड, गोलकले दिएको निमन्त्रणा मानी अन्न ग्रहण गर्ने अन्धोले असी, कानोले नब्बे, कोढीले सय तथा दुष्ट पापीले हजार जना वेदपाठी ब्राह्मणलाई भोजन गराई कमाएको पुण्यलाई नष्ट पार्दछ ।

**यावतः संस्पृशेदङ्गैर्ब्राह्मणाञ्छूद्रयाजकः ।**
**तावतां न भवेद्दातुः फलं दानस्य पौर्तिकम् ॥१७८॥**

कुण्ड, गोलक वा शूद्र याज्ञिक बने पनि, तिनले असंख्य यज्ञयागादि गरे पनि, असंख्य ब्राह्मणका पाउ धोए पनि वा जतिसुकै अनाथलाई भोजनादिले सन्तुष्ट पारे पनि तिनको सद्गति हुँदैन र समाजमा प्रतिष्ठा पाउन पनि सक्दैनन् ।

**वेदविच्चापि विप्रोऽस्य लोभात्कृत्वा प्रतिग्रहम् ।**
**विनाशं व्रजति क्षिप्रमामपात्रमिवाम्भसि ॥१७९॥**

कुण्ड गोलकको निम्ता मान्ने वेदज्ञ ब्राह्मण पनि त्यसरी नै नष्ट हुन्छ जसरी काँचो माटोको भाँडो पानीमा परेपछि नष्ट हुन्छ ।



**सोमविक्रयिणे विष्ठा भिषजे पूयशोणितम् ।**
**नष्टं देवलके दत्तमप्रतिष्ठं तु वार्धुषौ ॥१८०॥**

यस्ता व्यक्तिबाट लिइने दान सोमरस पिउनेका लागि विष्ठा, वैद्यका लागि पिप-रगत, पुजारीका लागि विनाशी-द्रव्य र ब्याज खानेका लागि प्रतिष्ठानाशक हुन्छ ।

**यत्तु वाणिजके दत्तं नेह नामुत्र तद्भवेत् ।**
**भस्मनीव हुतं हव्यं तथा पौनर्भवे द्विजे ॥१८१॥**

पौनर्भव तथा व्यापारी-ब्राह्मणलाई दान दिने कार्य, खरानीमा होम गर्नु सरह नै निष्फल कार्य हुन् ।

**इतरेषु त्वपङ्क्त्येषु यथोद्दिष्टेष्वसाधुषु ।**
**मेदोऽसृङ्मांसमज्जास्थि वदन्त्यन्नं मनीषिणः ॥१८२॥**

जातिभ्रष्ट असाधु ब्राह्मणलाई दिइएको अन्न अभक्ष हुने हुनाले त्यो खानेले
रगत, मासु, बोसो र हाड खाएसरह हुन्छ ।

**अपङ्क्त्योपहता पङ्क्तिः पाव्यते यैर्द्विजोत्तमैः ।**
**तान्निबोधत कात्स्न्र्येन द्विजाग्र्यान्पङ्क्तिपावनान् ॥१८३॥**

जातिबाट च्यूत गराइएका ब्राह्मण प्रायश्चितले पुनः सम्माननीय भई पङ्क्तिपावन हुन्छन् ।

**अग्र्याः सर्वेषु वेदेषु सर्वप्रवचनेषु च ।**
**श्रोत्रियान्वयजाश्चैव विज्ञेयाः पङ्क्तिपावनाः ॥१८४॥**

पङ्क्तिपावन ब्राह्मण ती हुन् जसको घरमा प्रायः परम्परादेखि नै वेदको अध्ययन, अध्यापन वा
प्रवचन हुन्छ अनि जो वेदमा पोख्त हुनाले श्रोत्रिय भनी समाजमा प्रतिष्ठित छन् ।

**त्रिणाचिकेतः पञ्चाग्निस्त्रिसुपर्णाः षडङ्गवित् ।**
**ब्रह्मदेयानुसन्तानो ज्येष्ठसामग एव च ॥१८५॥**

कठोपनिषदका व्रत गर्ने, पञ्चाग्नि ताप्ने, ऋग्वेदको ब्राह्मव्रत गर्ने, वेदका छ अङ्गमा दक्ष, ब्राह्म विवाह
गर्ने कुलमा उत्पन्न वा सामवेदको आरण्यकको पालना गर्ने ब्राह्मणले मात्र अन्य पतित ब्राह्मण र
बन्धुबान्धबको उद्धार गर्ने सामर्थ्य राख्दछ ।

**वेदार्थवित्प्रवक्ता च ब्रह्मचारी सहस्रदः ।**
**शतायुश्चैव विज्ञेयाः ब्राह्मणाः पङ्क्तिपावनाः ॥१८६॥**

यसैगरी वेदको तत्व एवं मर्म जान्ने र अरुलाई सिकाउने, हजारौं गाईदान गर्ने वा सय वर्षको
लामो आयु भएका ब्राह्मणहरु पनि पतित ब्राह्मणको उद्धार गर्न समर्थ हुन्छन् ।

**पूर्वेद्युरपरेद्युर्वा श्राद्धकर्मण्युपस्थिते ।**
**निमन्त्रयीत त्र्यवरान्सम्यग्विप्रान् यथोदितान् ॥१८७॥**

श्राद्धमा सामर्थ्य अनुसार तीन वा दुई वा एक मात्र गुणसम्पन्न ब्राह्मणलाई एक दिन अगाडि वा सोही दिन सबेरै आदरपूर्वक निमन्त्रणा गर्नुपर्दछ ।

**निमन्त्रितो द्विजः पित्र्ये नियतात्मा भवेत्सदा ।**
**न च छन्दांस्यधीयीत यस्य श्राद्धं च तद्भवेत् ॥१८८॥**

श्राद्धमा निमन्त्रित ब्राह्मणले पनि सो रात ब्रह्मचर्यमा रहनु पर्दछ ।
यजमान र पुरोहितले सो दिन वेद नपढ्नू ।

**निमन्त्रितान् हि पितर उपतिष्ठन्ति तान् द्विजान् ।**
**वायुवच्चानुगच्छन्ति तथासीनानुपासते ॥१८९॥**



निमन्त्रणा स्वीकारेपछि ब्राह्मणका नजिक यजमानका पितृहरु आउँदछन् । यजमानको घरतर्फ हिँड्दा वायुरुपमा पछिपछि लाग्दछन् र यजमानका घरमा पुगी आसनमा बसेपछि धैर्यतापूर्वक उसैको आसपासमा बस्दछन् ।

**केतितस्तु यथान्यायं हव्यकव्ये द्विजोत्तमः ।**
**कथञ्चिदप्यतिक्रामन् पापः सूकरतां व्रजेत् ॥१९०॥**

अरुले दिएको निम्ता मानी हव्यकव्यमा नजाने व्यक्ति पापी हुन्छ र मरेपछि सुँगुर हुन्छ भनी विद्वानहरूले भनेका छन् ।

**आमन्त्रितस्तु यः श्राद्धे वृषल्या सह मोदते ।**
**दातुर्यद्दुष्कृतं किञ्चित्तत्सर्वं प्रतिपद्यते ॥१९१॥**

श्राद्धको निम्तालु ब्राह्मण शूद्रासँग सुते यजमानका सबै पाप बोकी दण्ड भोग्दछ ।

**अक्रोधनाः शौचपराः सततं ब्रह्मचारिणः ।**
**न्यस्तशस्त्राः महाभागाः पितरः पूर्वदेवताः ॥१९२॥**

अक्रोधी, पवित्र, ब्रह्मचर्यमा रहने, अहिंसक जस्ता दिव्य गुणले सम्पन्न भई तेजस्वी एवं देवतुल्य लक्षणका महानुभावलाई नै पितृ भनिन्छ ।

**यस्मादुत्पत्तिरेतेषां सर्वेषामप्यशेषतः ।**
**ये च यैरुपचर्याः स्युर्नियमैस्तान्निबोधत ॥१९३॥**

(अब म) सम्पूर्ण पितृको उत्पत्ति र तिनलाई पूजा गर्ने विधि वा नियमका बारेमा सबै कुरा बताउँदछु, हजुरहरू सुन्नु होस् ।

**मनो हैरण्यगर्भस्य ये मरीच्यादयः सुताः ।**
**तेषामृषीणां सर्वेषां पुत्राः पितृगणाः स्मृताः ॥१९४॥**



स्वायम्भुव मनुका मरीचि आदि सबै ऋषिहरूका पुत्रहरूलाई पितृगण भनिएको छ ।

**विराट्सुताः सोमसदः साध्यानां पितरः स्मृताः ।**
**अग्निष्वात्ताश्च देवानां मारीचा लोकविश्रुताः ॥१९५॥**

प्रजापति विराटका सोमसद पुत्रहरुलाई साध्या[१]हरुका र प्रजापति मरीचिका प्रख्यात पुत्रहरुलाई अग्निष्वात्त[२]का पितृ बताइएको छ ।

(१ एक थरी विशिष्ट जातिका देवता । २ अग्निद्वारा आहुति ग्रहण गर्ने एक थरी विशिष्ट जातिका देवता ।)

**दैत्यदानवयक्षाणां गन्धर्वोरगरक्षसाम् ।**
**सुपर्णकिन्नराणां च स्मृता बर्हिषदोऽत्रिजाः ॥१९६॥**

प्रजापति अत्रिका बर्हिषद् पुत्रहरुलाई दैत्य-दानव-गन्धर्व-यक्ष-सर्प-राक्षस-किन्नर र गरुड जातिका चराहरुका पितृ बताइको छ ।

**सोमपा नाम विप्राणां क्षत्रियाणां हविर्भुजः ।**
**वैश्यानामाज्यपा नाम शूद्राणां तु सुकालिनः ॥१९७॥**

ब्राह्मणका पितृ सोमपा, क्षत्रियका पितृ हविर्भूज, वैश्यका पितृ आज्यपा र शूद्रका पितृ सुकालिन हुन् ।

**सोमपास्तु कवेः पुत्राः हविष्मन्तोऽङ्गिरः सुताः ।**
**पुलस्त्यस्याज्यपाः पुत्रा वसिष्ठस्य सुकालिनः ॥१९८॥**

सोमपाका पिता भृगु, हविर्भुजका अङ्गिरा, आज्यपाका पिता पुलस्त्य र सुकालिनका पिता वसिष्ठ ऋषि हुन् ।

**अनग्निदग्धानग्निदग्धान्काव्यान्बर्हिषदस्तथा ।**
**अग्निष्वात्तांश्च सौम्यांश्च विप्राणामेव निर्दिशेत् ॥१९९॥**



अनग्निदग्ध, अग्निदग्ध, काव्य, शुक्राचार्य, बर्हिषद्, अग्निष्वात्त तथा सौम्य नामका देवर्षिहरुलाई ब्राह्मणका पितृ भनिएको छ ।

**य एते तु गणाः मुख्याः पितॄणां परिकीर्तिताः ।**
**तेषामपीह विज्ञेयं पुत्रपौत्रमनन्तकम् ॥२००॥**

यि पितृका मुख्य-मुख्य गणहरु हुन् यो संसारमा पितृबाट उत्पन्न असंख्य एवं अनन्त छोरानातीहरुको त गणना गरेर साध्य नै हुन्न ।

**ऋषिभ्यः पितरो जाताः पितृभ्यो देवमानवाः ।**
**देवेभ्यस्तु जगत्सर्वं चरं स्थाण्वनुपूर्वशः ॥२०१॥**

ऋषिहरुबाट पितृहरूको तथा पितृहरुबाट देवता र मानवको उत्पत्ति भएको हो । देवताहरूबाटै संसारका सम्पूर्ण जड र चेतनशील प्राणीहरुको उत्पत्ति भएको हो ।

**राजतैर्भाजनैरेषामथो वा रजतान्वितैः ।**
**वार्यपि श्रद्धया दत्तमक्षयायोपकल्पते ॥२०२॥**

शुद्ध चाँदीले बनेको वा चाँदीले मोरिएको भाँडाले श्रद्धापूर्वक तर्पण
गर्नाले मात्र पनि अक्षय फल प्राप्त हुन्छ ।

**दैवकार्याद्द्विजातीनां पितृकार्यं विशिष्यते ।**
**दैवं हि पितृकार्यस्य पूर्वमाप्यायनं स्मृतम् ॥२०३॥**

द्विजातिलाई देवभन्दा पितृकार्य विशिष्ट छ । ऋषिहरुले देवकार्यलाई पितृकार्यको
पूर्वभाग मात्र मानेका छन् ।

**तेषामारक्षभूतं तु पूर्वं दैवं नियोजयेत् ।**
**रक्षांसि विप्रलुम्पन्ति श्राद्धमारक्षवर्जितम् ॥२०४॥**



श्राद्ध गर्नुभन्दा पहिले पितृका रक्षक देवताको स्थापना गर्नू
नत्र राक्षसहरु श्राद्ध नष्ट गर्न सफल हुन्छन् ।

**दैवाद्यन्तं तदीहेत पित्राद्यन्तं न तद्भवेत् ।**
**पित्राद्यन्तं त्वीहमानःक्षिप्रं नश्यति सान्वयः ॥२०६॥**

श्राद्धको शुरुमा देवताको प्रतिष्ठा र अन्तमा देवताको विसर्जनका पूजा आदिका
विधिहरु गर्नुपर्दछ । देवताको उपेक्षा गर्ने यजमान वंशसहित नाश हुन्छ ।

**शुचिं देशं विविक्तं च गोमयेनोपलेपयेत् ।**
**दक्षिणाप्रवणं चैव प्रयत्नेनोपपादयेत् ॥२०६॥**

पितृश्राद्धका लागि पवित्र एकान्तस्थल छानी गोबरले लिप्नुपर्दछ र त्यसको दक्षिणपट्टि
सावधानीपूर्वक एउटा वेदी बनाउनु पर्दछ ।

**अवकाशेषु चोक्षेषु नदीतीरेषु चैव हि ।**
**विविक्तेषु च तुष्यन्ति दत्तेन पितरः सदा ॥२०७॥**

तीर्थस्थल, नदीका किनार वा एकान्तस्थल लगायतका विस्तृतस्थानमा
श्राद्ध-तर्पण गर्नाले पितृहरु सजिलैसँग प्रसन्न हुन्छन् ।

**आसनेषूपक्लृप्तेषु बर्हिष्मत्सु पृथक् पृथक् ।**
**उपस्पृष्टोदकान्सम्यग्विप्रांतानुपवेशयेत् ॥२०८॥**

शुद्ध, पवित्र, एकान्त र विस्तृत स्थानमा सुन्दर आसन ओछ्याई आमन्त्रित
ब्राह्मणहरुलाई बेग्लाबेग्लै आदरपूर्वक बसाउनू ।

**उपवेश्य तु तान्विप्रानासनेष्वजुगुप्सितान् ।**
**गन्धमाल्यैः सुरभिभिरर्चयेद्देव पूर्वकम् ॥२०९॥**



त्यसपछि पहिले देवकार्य गर्ने र त्यसपछि पितृकार्य गर्ने ब्राह्मणलाई चन्दन,
माला आदिले पूजा गर्नु पर्दछ ।

**तेषामुदकमानीय सपवित्रांस्तिलानपि ।**
**अग्नौ कुर्यादनुज्ञातो ब्राह्मणो ब्राह्मणैः सह ॥२१०॥**

अनि शुद्ध जलले आचमन दिनु कुशको औंठी लगाई तिल दिनू ।
त्यसपछि ब्राह्मणको अनुमतिमा उनीसँगै होम गर्नु पर्दछ ।

**अग्नेः सोमयमाभ्यां च कृत्वाऽऽऽप्यायनमादितः ।**
**हविर्दानेन विधिवत्पश्चात्सन्तर्पयेत्पितृन् ॥२११॥**

होमपछि अग्नि, सोम, र यम आदि देवताको पूजाअर्चना गरी फेरी पितृहरुलाई
हवि दिँदै विधिपूर्वक तर्पण गर्नु पर्दछ ।

**अग्न्यभावे तु विप्रस्य पाणावेवोपपादयेत् ।**
**यो ह्यग्निः स द्विजो विप्रैर्मन्त्रदर्शिभिरुच्यते ॥२१२॥**

केहीगरी अग्निको अभावमा होम गर्न सम्भव नभए पितृका लागि समर्पण गरिएको आहुति आमन्त्रित ब्राह्मणको हातमा राखिदिनु पर्दछ । किनकि मन्त्रद्रष्टा ऋषिहरुले अग्नि र ब्राह्मणमा फरक हुँदैन भनेका छन् ।

**अक्रोधनान्सुप्रसादान्वदन्त्येतान् पुरातनाः ।**
**लोकस्याप्यायने युक्तान् श्राद्धे देवान् द्विजोत्तमान् ॥२१३॥**

अक्रोधी, प्रसन्न रहने, ज्ञानी, प्रौढ, लोकहितमा व्यस्त एवं उज्ज्वल तथा यशस्वी कुलका ब्राह्मण श्राद्धमा उपयुक्त हुन्छन् ।

**अपसव्यमग्नौ कृत्वा सर्वमावृत्परिक्रमम् ।**
**अपसव्येन हस्तेन निर्वपेदुदकं भुवि ॥२१४॥**



होम सकिए पछि वेदीलाई पूरै ढाकी वायाँ हातले भुईंमा पानी छर्कनु पर्दछ ।

**त्रींस्तु तस्माद्धविःशेषात्पिण्डान्कृत्वा समाहितः ।**
**औदकेनैव विधिना निर्वपेद्दक्षिणामुखः ॥२१५॥**

श्राद्धकर्ताले दक्षिणतिर फर्की, पूर्ण साबधान भई हविका तीन पिण्ड बनाउनु र त्यसमाथि जल छर्की कुश माथि राख्नु पर्दछ ।

**न्युप्य पिण्डांस्ततस्तांस्तु प्रयतो विधिपूर्वकम् ।**
**तेषु दर्भेषु तं हस्तं निर्मृज्याल्लेपभागिनाम् ॥२१६॥**

कुशमाथि पिण्ड राखिसकेपछि हातमा लागेका (सिता आदि) कुशले माडेर पुछी त्यो कुशलाई पिण्डमा राख्नु पर्दछ । यसो गर्नाले लेपभागी पितृहरू तृप्त हुन्छन् ।

**आचम्योदक्परावृत्य त्रिराचम्य शनैरसून् ।**
**षड्तूंश्च नमस्कुर्यात्पितृनेव च मन्त्रवत् ॥२१७॥**

त्यसपछि उत्तरतिर फर्की तीन पटक आचमन गर्नु, प्राणायाम गर्नु, पितृ एवं छ वटा ऋतुलाई सम्झेर समन्त्र नमस्कार गर्नु पर्दछ । यी कार्य बिस्तारै र मन लगाएर गर्नु पर्दछ ।

**उदकं निनयेच्छेषं शनैः पिण्डान्तिके पुनः ।**
**अवजिघ्रेच्च तान्पिण्डान्यथान्युप्तान्समाहितः ॥२१८॥**

आचमन गरी बाँकी बचेको जललाई पिण्ड नजिक पोखी दिनु पर्दछ । यसपछि जुन क्रममा पिण्ड राखिएको थियो त्यही क्रमले आत्मियता देखाउँदै संयमतापूर्वक सुँघ्नु पर्दछ ।

**पिण्डेभ्यः स्वल्पिकां मात्रां समादायानुपूर्वशः ।**
**तानेव विप्रानासीनान्विधिवत् पूर्वमाशयेत् ॥२१९॥**



जमिनमा राखिएका तीन पिण्डबाट अत्यन्त साबधान भई (फुट्न हुन्न) अलि अलि खानेकुरा निकाली खानका लागि ब्राह्मणहरूलाई अर्पण गर्नु पर्दछ ।

**ध्रियमाणे तु पितरि पूर्वेषां एव निर्वपेत् ।**
**विप्रवद्वाऽपि तं श्राद्धे स्वकं पितरमाशयेत् ॥२२०॥**

पिता जीवित भए हजुरबा, कुप्राबा आदि पहिलेका पितृलाई पिण्डदान गर्नु पर्दछ । जीवित पितालाई ब्राह्मणसरह आदरसत्कार गरी भोजन गराउनु पर्दछ ।

**पिता यस्य तु वृत्तः स्याज्जीवेच्चापि पितामहः ।**
**पितुः स नाम सङ्कीर्त्य कीर्तयेत्प्रपितामहम् ॥२२१॥**

पिता परलोक गएका तर हजुरबा जीवित नै भए श्राद्ध गर्दा छोराले पिताको नाम लिएपछि कुप्राबा आदिको नाम लिनु पर्दछ । हजुरबालाई ब्राह्मणसरह आदरसत्कार गरी भोजन गराउनु पर्दछ ।

**पितामहो वा तच्छ्राद्धं भुञ्जीतेत्यब्रवीन्मनुः ।**
**कामं वा समनुज्ञातः स्वयमेव समाचरेत् ॥२२२॥**

पिता परलोक गएका तर हजुरबा जिउँदै हुँदा श्राद्धकर्ताले श्राद्धको भोजन हजुरबालाई नै खुवाउनु पर्दछ । उनी खान सहमत नभए उनले भने अनुसार गर्नु पर्दछ ।

**तेषां दत्वा तु हस्तेषु सपवित्रं तिलोदकम् ।**
**तत्पिण्डाग्रं प्रयच्छेत्तु स्वधैषामस्त्विति ब्रुवन् ॥२२३॥**

श्राद्धमा निमन्त्रित ब्राह्मणले पहिले जजमानलाई हातमा कुशको औंठी र पवित्र लिन लगाउनु पर्दछ । त्यसपछि पितृका नाम र गोत्र आदि उच्चारण गर्दै "अमुकाय पितरे स्वधा" भन्दै ( पवित्रको) अगिल्तिरबाट पिण्ड दिनु पर्दछ ।

**पाणिभ्यां तूपसंगृह्य स्वयमन्नस्य वर्द्धितम् ।**
**विप्रान्तिके पितृन् ध्यायन् शनकैरुपनिक्षिपेत् ॥२२४॥**



पक्वान्नले भरिएका भाँडा हातमा लिई "मे वृद्धिः अस्तु" भन्दै पितृलाई सम्झँदै विस्तारै समर्पणको भावनाले ब्राह्मणका नजिकै राख्नु पर्दछ ।

**उभयोर्हस्तयोर्मुक्तं यदन्नमुपनीयते ।**
**तद्विप्रलुम्पन्त्यसुराः सहसा दुष्टचेतसः ॥२२५॥**

उनको रेखदेखमा श्राद्धका खानेकुरा नराख्दा दुष्टात्मा असुरहरूले ती कुरा उछिट्ट्याउँछन् ।

**गुणांश्च सूपशाकाद्यान् पयो दधि घृतं मधु ।**
**विन्यसेत्प्रयतः पूर्वं भूमावेव समाहितः ॥२२६॥**

साग, दाल, अचार, दूध, दही, घिउ र मह आदिका भरि भाँडाहरु ब्राह्मणका समिप भुईंमा राख्नाले सुगन्ध र दर्शनले उनको मन प्रसन्न हुन्छ र
ध्यानलगाएर श्राद्धकर्म गराउन तिर लाग्दछन् ।

**भक्ष्यं भोज्यं च विविधं मूलानि च फलानि च ।**
**हृद्यानि चैव मांसानि पानानि सुरभीणि च ॥२२७॥**

खानेपिउने परिकार, कन्दमूल, फलफूल, मासु, उत्कृष्ट पेयपदार्थ तथा अरु सुगन्धित पदार्थका भाँडा ब्राह्मणका नजिकै जमिनमा राख्नु पर्दछ ।

**उपनीय तु तत्सर्वं शनकैः सुसमाहितः ।**
**परिवेषयेत प्रयतो गुणान्सर्वान्प्रचोदयान् ॥२२८॥**

सबैथोक ल्याएर उत्साह र शुद्ध भावले राखी खाद्यको गुणको वर्णन गर्दै ब्राह्मणलाई खान अनुरोध गर्नु र एकएक गरी सबै चिज पस्किनु पर्दछ ।

**नाश्रुमापातयेज्जातु न कुप्येन्नानृतं वदेत् ।**
**न पादेन स्पृशेदन्नं न चैतदवधूनयेत् ॥२२९॥**



श्राद्धका दिन जजमानले रुन-कराउन, रिसाउन, भूटो बोल्न र अन्नलाई गोडाले छुन हुँदैन । अन्नलाई छरपष्ट पार्न हुँदैन ।

**अश्रुं गमयति प्रेतान् कोपोऽरीननृतं शुनः ।**
**पादस्पर्शस्तु रक्षांसि दुष्कृतीनवधूननम् ॥२३०॥**

पितृको अन्न रुनाले प्रेतले, रिसाउनाले शत्रुले, भूटो बोल्नाले कुकुरले, गोडाले छुनाले राक्षसले र छर्नाले अन्य पापी जीवले प्राप्त गर्दछन् ।

**यद्यद्रोचते विप्रेभ्यस्तत्तद्द्याद्मत्सरः ।**
**ब्रह्मोद्याश्च कथा कुर्यात्पितृणामेतदीप्सितम् ॥२३१॥**

ब्राह्मणको रुचिका भोजन नै पस्किनु पर्दछ । भोजनका समयमा कुनै इर्ष्या नराखी ईश्वरको ध्यान र धर्म सम्बन्धी कुराहरु गर्नु पर्दछ । यसले पितृ प्रसन्न हुन्छन् ।

**स्वध्यायं श्रावयेत्पित्र्ये धर्मशास्त्राणि चैव हि ।**
**आख्यानानीतिहासांश्च पुराणान्यखिलानि च ॥२३२॥**

श्राद्धका दिन ब्राह्मणका मुखबाट वेद, धर्मशास्त्र, रामायण, महाभारत, पुराण आदिको प्रवचन र रोचक प्रसङ्ग सुन्नु पर्दछ ।

**हर्षयेद्ब्राह्मणांस्तुष्टो भोजयेच्च शनैः शनैः ।**
**अन्नाद्येनासकृच्चैतान्गुणैश्च परिचोदयेत् ॥२३३॥**

प्रसन्न भई गुण वर्णन गर्दै विस्तारै ब्राह्मणहरुलाई सन्तुष्ट पार्दै भोजन गराउनु पर्दछ।

**व्रतस्थमपि दौहित्रं श्राद्धे यत्नेन भोजयेत् ।**
**कुतपं चासनं दद्यात्तिलैश्च विकिरेन्महीम् ॥२३४॥**

व्रत बसेको (छोरीको छोरो) नातीले खान नमाने पनि करले खुवाउनु, उत्तम ऊनी आसनीमा बसाउनू र श्राद्धस्थलमा तिल छर्कनू ।

**त्रीणि श्राद्धे पवित्राणि  दौहित्रः कुतपस्तिलाः ।**
**त्रीणि चात्र प्रशंसन्ति शौचमक्रोधमत्वराम् ॥२३५॥**

श्राद्धमा उत्तम ऊनको आसन, नाती छोरीको छोरो) ले गरेको भोजन र तिल छर्कने काम अति उत्तम मानिने हुनाले यिनको उपयोग शुद्ध, संयम र नहतारिई गर्नु पर्दछ ।

**अत्युष्णं सर्वमन्नं स्याद्भुञ्जीरंस्ते च वाग्यताः ।**
**न च द्विजातयो ब्रूयुर्दात्रा पृष्टा हविर्गुणान् ॥२३६॥**

ब्राह्मणलाई तातो भोजन गराउनु र ब्राह्मणले पनि मौन भई भोजन गर्नू । सोधे पनि नबोल्नू (खाइ सकेपछि मात्र बोल्नू) ।

**यावदुष्मा भवत्यन्ने यावदश्नन्ति वाग्यताः ।**
**पितरस्तावदश्नन्ति यावन्नोक्ताः हविर्गुणाः ॥२३७॥**

भोजन तातो र स्वादिष्ट भएसम्म, ब्राह्मणहरु मौन रहेसम्म र भोजन
गरिरहेसम्म पितृहरु भोजन गर्दछन् ।

**यद्वेष्टितशिरा भुङ्क्ते यद्भुङ्क्ते दक्षिणाभिमुखः ।**
**सोपानत्कश्च यद्भुङ्क्ते तद्वै रक्षांसि भुञ्जते ॥२३८॥**

शिरमा वस्त्र ओढी, दक्षिणतिर फर्की वा जुत्ता लगाई खानेको अन्न पितृले ग्रहण गर्दैनन् र
सङ्कल्पित अन्न राक्षसहरुलाई प्राप्त हुन्छ ।

**चण्डालश्च वराहश्च कुक्कुटः श्वा तथैव च ।**
**रजस्वला च षण्ढश्च नेक्षेरन्नश्नतो द्विजान् ॥२३९॥**



भोजन गरिरहेका ब्राह्मणमा र पकाएर तयार भएको भोजनमा चाण्डाल, सुँगुर,
कुखुरा, कुकुर, परसरेकी स्त्री र नपुंसकको दृष्टि पर्न हुँदैन ।

**होमे प्रदाने भोज्ये च यदेभिरभिवीक्ष्यते ।**
**दैवे हविषि पित्र्ये वा तद्गच्छत्ययथातथम् ॥२४०॥**

यिनको दृष्टिले होम, श्राद्ध-भोजन, पूजा तथा तर्पण आदि सबै
शुभ तथा पुण्य अनुष्ठानहरु निष्फल हुन्छन् ।

**घ्राणेन शूकरो हन्ति पक्षवातेन कुक्कुटः ।**
**श्वा तु दृष्टिनिपातेन स्पर्शेनावरवर्णजः ॥२४१॥**

सुँगुरले सुँघे, कुखुराको पँखेटाको हावा लागे, कुकुरले हेरे र शूद्रले छोए मात्र
पनि अन्न अभक्ष्य हुन्छ र गरिएको पुण्यकर्म निष्फल हुन्छ ।

**खञ्जो वा यदि वा काणो दातुः प्रेष्योऽपि वा भवेत् ।**
**हीनातिरिक्तगात्रो वा तमप्यपनयेत्पुनः ॥२४२॥**

सन्देश ल्याउने भए पनि लङ्गडा, काना, शूद्र वा अन्त्यज र धेरै वा थोरै अङ्ग हुनेहरुलाई भान्छाको आसपासमा पर्न नदिनू ।

**ब्राह्मणं भिक्षुकं वाऽपि भोजनार्थमुपस्थितम् ।**
**ब्राह्मणैरभ्यनुज्ञातः शक्तितः प्रतिपूजयेत् ॥२४३॥**

निम्तालु ब्राह्मणलाई खुवाइरहँदा अन्य ब्राह्मण वा भिक्षुक आई भोजन मागे ब्राह्मणको अनुमतिले आगन्तुकको यथोचित स्वागत गर्नु पर्दछ ।

**सार्ववर्णिकमन्नाद्यं सन्नीयाप्लाव्य वारिणा ।**
**समुत्सृजेद्भुक्तवतामग्रतो विकिरन् भुवि ॥२४४॥**



ब्राह्मण-भोजन पछि छरिएको, पोखिएको वा जुठो अन्नलाई जम्मा गरी पानी छर्केर शुद्धपारी कुशमाथि फिँजाउनु (विकिर) पर्दछ ।

**असंस्कृतप्रमीतानां त्यागिनां कुलयोषिताम् ।**
**उच्छिष्टं भागधेयं स्याद्दर्भेषु विकिरश्च यः ॥२४५॥**

संस्कारगर्न अयोग्य बालकको त्याग, मरेका व्यक्तिको त्याग, अर्काले भोगेकी स्त्रीको त्याग र कुशमाथिको अन्नको त्याग नै विकिर हो ।

**उच्छेषणं भूमिगतमजिह्मस्याशठस्य च ।**
**दासवर्गस्य तत्पित्र्ये भागधेयं प्रचक्षते ॥२४६॥**

श्राद्धमा बचेको वा जुठो अन्न सरल र सदाचारी दासहरुलाई दिनु पर्दछ ।

**आ सपिण्डक्रियाकर्म द्विजातेः संस्थितस्य तु ।**
**अदैवं भोजयेच्छ्राद्धं पिण्डमेकं तु निर्वपेत् ॥२४७॥**

द्विजातिले श्राद्ध सकेर बलिवैश्वदेव नगर्नू र पितृलाई एक भन्दा बढी पिण्ड नदिनू ।
ब्राह्मणले भोजन पछि श्राद्ध सकिएको सम्भनू ।

**सहपिण्डक्रियायां तु कृतायां अस्य धर्मतः ।**
**अनयैवावृता कार्यं पिण्डनिर्वपनं सुतैः ॥२४८॥**

यसरी सपिण्डीबाट मृतक सपिण्डीको श्राद्ध गरेपछि अरु कुनै सपिण्डीको श्राद्ध
गर्नु परेपनि यसैगरी पिण्डदान आदि गर्नुपर्दछ ।

**श्राद्धं भुक्त्वा यः उच्छिष्टं वृषलाय प्रयच्छति ।**
**स मूढो नरकं याति कालसूत्रमवाक् शिराः ॥२४९॥**



श्राद्धमा पस्किएको खाना आधा खाई जुठो शूद्रलाई दिने मूर्ख ब्राह्मणले मृत्युपछि
कालसूत्र नाम गरिएको नरकमा उधमुन्टो पारेर यातना दिँदा पनि लाटो
भएर बस्नुपर्दछ, दुःख प्रकट गर्न पनि सक्दैन ।

**श्राद्धभुग्वृषलीतल्पं तदहर्योऽधिगच्छति ।**
**तस्याः पुरीषे तं माषं पितरस्तस्य शेरते ॥२५०॥**

श्राद्धको भोजनपछि वेश्यागमन गर्नेका पितृहरुले एक महिनासम्म
तिनै वेश्याको मलमूत्र सेवन गर्नुपर्दछ ।

**पृष्ट्वा स्वादतमित्येवं तृप्तानाचायमेत सः ।**
**आचान्तांश्चानुजानीयादभितो रम्यतामिति ॥२५१॥**

ब्राह्मणहरुले खाना बुत्याई सकेपछि "तपाईहरु तृप्त हुनु भो ?" भनेर सोध्नू । "हामीले भोजन
गरी सक्यौं, तृप्त भयौं" भन्ने जवाफ दिएपछि जजमानले आचमन गर्न र चुठ्न जल दिनू र

ब्राह्मणहरुलाई विश्राम गर्न दिनू ।

**स्वधाऽस्त्वित्येवं तं ब्रूयुर्ब्राह्मणास्तदन्तरम् ।**
**स्वधाकारः परा ह्याशीः सर्वेषु पितृकर्मसु ॥२५२॥**

तृप्त ब्राह्मणले जजमाजलाई "तुभ्यं स्वधा अस्तु (तिम्रो कल्याण होस्)" भनी आशिर्वाद दिँदै मङ्गलको कामना गर्नू । श्राद्धआदि कर्ममा "स्वधा" भनी आशिर्वाद दिनु नै उत्तम हुन्छ ।

**ततो भुक्तवतां तेषामन्नशेषं निवेदयेत् ।**
**यथा ब्रूयुस्तथा कुर्यादनुज्ञातस्ततो द्विजैः ॥२५३॥**

ब्राह्मणबाट आशिर्वचन लिइसकेपछि विनम्रतापूर्वक "बाँकी भोजन के गरौं ?" भनी ब्राह्मणलाई नै सोध्नु र उनको निर्देशन अनुसार गर्नु पर्दछ ।

**पित्र्ये स्वदितमित्येव वाच्यं गोष्ठे तु सुशृतम् ।**

**सम्पन्नमित्यभ्युदये दैवे रुचितमित्यपि ॥२५४॥**

भोजनको प्रशंसा गर्दा श्राद्धमा "स्वदितम्", सभामा "सुघृतम्", भोजमा "सम्पन्नम्" र देवकर्ममा "रुचितम्" भन्नुपर्दछ ।

**अपराह्णस्तथादर्भः वास्तुसम्पादनं तिलाः ।**
**सृष्टिर्मृष्टिर्द्विजाश्चाग्र्याः श्राद्धकर्मसु सम्पदः ॥२५५॥**

श्राद्धमा दोपहर, कुश, गोबरद्वारा लिपिएको श्राद्धस्थल, तिल, उदारतापूर्वक दान दिनका लागि अन्न, अन्नको संस्कार र योग्य विद्वान ब्राह्मण हुनु अनीवार्य छ ।

**दर्भाः पवित्रं पूर्वाह्णो हविष्याणि च सर्वशः ।**
**पवित्रं यच्च पूर्वोक्तं विज्ञेया हव्यसम्पदः ॥२५६॥**

देवकर्मका लागि कुश, पवित्र, दिनको प्रथम प्रहर, गोबरले लिपिएको

स्थल र चरु हुनु अनीवार्य छ ।

**मुन्यन्नानि पयः सोमो मांसं यच्चानुपस्कृतम् ।**
**अक्षारलवणं चैव प्रकृत्या हविरुच्यते ॥२५७॥**

मुनिजनको प्रिय अन्न, दूध, सोमरस, काँचो मासु र सिंधे नुनलाई हवि भनिन्छ ।

**विसर्ज्यं ब्राह्मणांस्तांस्तु प्रयतो विधिपूर्वकम् ।**
**दक्षिणां दिशमाकांक्षन्याचेतेमान्वरान्पितृन् ॥२५८॥**

ब्राह्मण-विदाई पछि पितृ सामु उपस्थित छन् भन्ने सम्फी, दक्षिण फर्की, एकाग्र भई, नबोली मनमनै सोचेको वर माग्नु पर्दछ ।

**दातारो नोभिऽवर्धन्तां वेदाः सन्ततिरेव च ।**
**श्रद्धा च नो मा व्यगमद् बहु देयं च नोऽस्त्विति ॥२५९॥**



प्रार्थना गर्दै "कुलमा उदार-विद्वान-समृद्ध पुत्र जन्मी वंश विस्तार होस् । परिवारमा सम्पन्नता र श्रद्धाको भावना रहिरहोस् र हाम्रो कुलको यश फिँजियोस्"-भन्नु पर्दछ ।

**एवं निर्वपणं कृत्वा पिण्डांस्तांस्तदनन्तरम् ।**
**गां विप्रमजमग्निं वा प्राशयेदप्सु वा क्षिपेत् ॥२६०॥**

पितृलाई प्रार्थना गरेपछि पिण्ड गाई, ब्राह्मण वा बोकालाई खुवाउनू वा अग्निमा अथवा जलाशयमा विसर्जन गर्नु (सेलाउनू) ।

**पिण्डनिर्वपणं केचित्परस्तादेव कुर्वते ।**
**वयोभिः खादयन्त्यन्ये प्रक्षिपन्त्यनलेऽप्सु वा ॥२६१॥**

केही विद्वानले श्राद्धको पिण्ड ब्राह्मणलाई खुवाउने वा दान गर्ने, चराहरूलाई खुवाउने, आगोमा हाल्ने वा जलमा सेलाउने कुरा पनि गरेका छन् ।

**पतिव्रता धर्मपत्नी पितृपूजनतत्परा ।**
**मध्यमं तु ततः पिण्डमद्यात्सम्यक् सुतार्थिनी ॥२६२॥**

पतिव्रता धर्मपत्नी जो श्राद्धमा पूरा विश्वास गर्दछे र सन्तान चाहन्छे, उसले बीचको पिण्ड श्रद्धापूर्वक आफैं खानु पर्दछ ।

**आयुष्मन्तं सुतं सूते यशोमेधासमन्वितम् ।**
**धनवन्तं प्रजावन्तं सात्त्विकं धार्मिकं तथा ॥२६३॥**

पुत्रको चाहना गरी बीचको पिण्ड खाने स्त्रीले दीर्घायुको, यशस्वी, बुद्धिमान्, धनी, वंशवर्धक, सत्वगुणी र धर्मात्मा पुत्र पाउँदछे ।

**प्रक्षाल्य हस्तावाचम्य ज्ञातिप्रायं प्रकल्पयेत् ।**
**ज्ञातिभ्यः सत्कृतं दत्त्वा बान्धवानपि भोजयेत् ॥२६४॥**



सन्तुष्ट ब्राह्मणको विदाइ पछि जजमानले हातधोई आचमन गरेर आफ्ना नाताकुटुम्बलाई आदरपूर्वक बोलाई भोजन गराउनु पर्दछ ।

**उच्छेषणं तु तत्तिष्ठेद्यावद्विप्राः विसर्जिताः ।**
**ततो गृहबलिं कुर्यादिति धर्मो व्यवस्थितः ॥२६५॥**

ब्राह्मणले खाई बाँकी भोजन ती बिदा भई नगएसम्म राख्नू । बिदा भएर गएपछि मात्र बचेको भोजन विश्वदेवहरुलाई बलिरुपमा दिनू ।

**हविर्यच्चिररात्राय यच्चानन्त्याय कल्पते ।**
**पितृभ्यो विधिवद्दत्तं तत्प्रवक्ष्याम्यशेषतः ॥२६६॥**

अब म विधिपूर्वक दिइने के के कुराबाट पितृहरू कति समयसम्म तृप्त हुन्छन् त्यसका बारेमा सबै बताउँदछु ।

**तिलैर्व्रीहियवैर्माषैरद्भिर्मूलफलेन वा ।**
**दत्तेन मासं तृप्यन्ति विधिवत्पितरो नृणाम् ॥२६७॥**

विधि र श्रद्धाले दिइएको तिल, चामल, जौ, माष, शुद्ध जल, मीठा कन्दमूल र
स्वादिष्ट फलफूलले मानिसका पितृहरु एक महिनासम्म सन्तुष्ट रहन्छन् ।

**द्वौ मासौ मत्स्यमांसेन त्रीन्मासान् हारिणेन तु ।**
**औरभ्रेणाथ चतुरः शाकुनेनाथ पञ्च वै ॥२६८॥**

पितृहरु माछाको मासुले दुई, हरिणकोले तीन, भेडाकोले चार र चराकोले
पाँच महिना सम्म तृप्त रहन्छन् ।

**षण्मासांश्छागमांसेन पार्षतेन च सप्त वै ।**
**अष्टावैणेयमांसेन रौरवेण नवैव तु ॥२६९॥**



बोकाको मासुले छ, मृगकोले सात, ऐण-मृगकोले आठ र
रुरुमृगकोले नौ महिनासम्म तृप्त हुन्छन् ।

**दशमासांस्तु तृप्यन्ति वराहमहिषामिषैः ।**
**शशकूर्मयोस्तु मांसेन मासानेकादशैव तु ॥२७०॥**

पितृहरु बँदेल र राँगाको मासुले दश महिनासम्म र खरायो वा कछुवाको मासुले एघार
महिनासम्म तृप्त हुन्छन् भनिएको छ ।

**संवत्सरं तु गव्येन पयसा पायसेन च ।**
**वार्ध्रीणसस्य मांसेन तृप्तिर्द्वादशवार्षिकी ॥२७१॥**

गाईको दूध वा खीरले एक वर्षसम्म र लामा कान भएको बोकाको
मासुले बाह्र वर्षसम्म तृप्त हुन्छन् ।

**कालशाकं महाशल्काः खड्गलोहामिषं मधु ।**
**आनन्त्यायैव कल्प्यन्ते मुन्यन्नानि च सर्वशः ॥२७२॥**

कालशाक र महाशल्क नामका माछा, गैंडा र रातो बोकाको मासु तथा मुनीहरुलाई अर्पण गरिने अन्नले श्राद्ध गर्नाले अनन्त कालसम्म पितृहरु तृप्त हुन्छन् ।

**यत्किञ्चिन्मधुना मिश्रं प्रदद्यात्तु त्रयोदशीम् ।**
**तदप्यक्षयमेव स्याद्वर्षासु च मघासु च ॥२७३॥**

वर्षाऋतुको मघा नक्षत्रमा पर्ने त्रयोदशीमा मधुपर्कले युक्त पदार्थ पितृका लागि भनी ब्राह्मणलाई खुवाउनाले पितृले अक्षय तृप्ति पाउँदछन् ।

**अपि न स कुले भूयाद्यो नो दद्यात्त्रयोदशीम् ।**
**पायसं मधुसर्पिर्भ्यां प्राक्छाये कुञ्जरस्य च ॥२७४॥**



पितृहरु आफ्नो वंशमा सूर्योदय अगावै कुनै दिन हाथी दान गर्ने तथा आफूलाई मह र घिउ मिसिएको खीर खुवाउने सन्तान जन्मियोस भनी प्रार्थना गरिरहन्छन् ।

**यद्यद्ददाति विधिवत्सम्यक् श्रद्धासमन्वितः ।**
**तत्तत्पितृणां भवति परत्रानन्तमक्षयम् ॥२७५॥**

विधिपूर्वक र श्रद्धाले पितृका खातिर ब्राह्मणलाई दिइएका पदार्थले पितृहरु परलोकमा अनन्त सुख र अक्षय तृप्ति प्राप्त गर्दछन् ।

**कृष्णपक्षे दशम्यादौ वर्जयित्वा चतुर्दशीम् ।**
**श्राद्धे प्रशस्तास्तिथयो यथैता न तथेतराः ॥२७६॥**

श्राद्धगर्न कृष्णपक्षका परेवा, दशमी र चतुर्दशी बाहेक अन्य बाह्र तिथीहरु शुद्ध हुन्छन् ।

**युक्षु कुर्वन् दिनर्क्षेषु सर्वान्कामान्समश्नुते ।**
**अयुक्षु तु पितॄन्सर्वान्प्रजां प्राप्नोति पुष्कलाम् ॥२७७॥**

तिथी वा नक्षत्र जुधेका दिनमा गरेको श्राद्धले सबै कामना पुरा हुन्छन् ।
एक्लो तिथि वा नक्षात्रमा श्राद्ध गर्नाले उत्तम फल पाइन्छ ।

**यथा चैवापरः पक्षः पूर्वपक्षाद्विशिष्यते ।**
**तथा श्राद्धस्य पूर्वाह्णादपराह्णो विशिष्यते ॥२७८॥**

शुक्लपक्षाभन्दा कृष्णपक्ष र दिनको पूर्वाह्नमा भन्दा अपराह्नमा श्राद्ध गर्नु उत्तम हुन्छ ।

**प्राचीनावीतिना सम्यगपसव्यमतन्द्रिणा ।**
**पित्र्यमा निधनात्कार्यं विधिवद्दर्भपाणिना ॥२७९॥**

अपसव्य भई कुश लिएर दक्षिण फर्की शास्त्रले बताए अनुसार

ध्यानपूर्वक अल्छी नगरी श्राद्ध गर्नु पर्दछ ।

**रात्रौ श्राद्धं न कुर्वीत राक्षसी कीर्तिता हि सा ।**
**सन्ध्ययोरुभयोश्चैव सूर्ये चैवाचिरोदते ॥२८०॥**

रातमा श्राद्ध नगर्नू किन कि यसको फल राक्षसले पाउँदछन् । यसैगरी दुवै
सन्ध्यामा र अपराह्न बितेपछि पनि श्राद्ध गर्नु हुँदैन ।

**अनेन विधिना श्राद्धं त्रिरब्दस्येह निर्वपेत् ।**
**हेमन्तग्रीष्मवर्षासु पाञ्चयज्ञिकमन्वहम् ॥२८१॥**

पञ्चयज्ञ अन्तर्गत दिनहुँ पितृ-यज्ञ गर्ने विधान भन्दा बाहेक वर्षमा तीन पटक
हेमन्त, ग्रीष्म र वर्षा ऋतुमा श्राद्ध गर्नुपर्दछ ।

**न पैतृयज्ञियो होमो लौकिकेऽग्नौ विधीयते ।**
**न दर्शेन बिना श्राद्धमाहिताग्नेर्द्विजन्मनः ॥२८२॥**

पितृयज्ञ लौकिक अग्निमा गर्ने विधान छैन । ब्राह्मणले आहिताग्निले
औंसीमा मात्र पितृयज्ञ गराउनू ।

**यदेव तर्पयत्यद्भिः पितृन्स्नात्वा द्विजोत्तमः ।**
**तेनैव कृत्स्नमाप्नोति पितृयज्ञक्रियाफलम् ॥२८३॥**

हरेक दिन नुहाएर पितृहरुलाई तर्पण गर्ने द्विजले त श्राद्ध गरेकै जति पुण्य कमाएको हुन्छ ।

**वसून्वदन्ति तु पितृन् रुद्रांश्चैव पितामहान् ।**
**प्रपितामहांस्तथादित्यान् श्रुतिरेषा सनातनी ॥२८४॥**

वेदमा पितृहरुलाई वसु, पितामहलाई रुद्र र प्रपितामहलाई आदित्य मानिंदै आएको छ ।

**विघसाशीः भवेन्नित्यं नित्यं वामृतभोजनः ।**
**विघसो भुक्तशेषं तु यज्ञशेषं तथाऽमृतम् ॥२८५॥**



ब्राह्मणहरुलाई खुवाई बाँकी रहेको श्राद्धको भोजनलाई विघस तथा यज्ञमा होमगरेपछि र प्रसाद बाँडेपछि बाँकी रहेको प्रसादलाई अमृत भनिन्छ । ब्राह्मणलाई खुवाए पछि यि दुबै थोकको सेवन गर्ने अधिकार द्विजातिलाई हुन्छ ।

**एतद्वोऽभिहितं सर्वं विधानं पाञ्चयज्ञिकम् ।**
**द्विजातिमुख्यवृत्तीनां विधानं श्रूयतामिति ॥२८६॥**

हे द्विजगण ! मैले हजुरहरूलाई पञ्चयज्ञका सबै विधि संक्षेपमा भने ।
अब द्विजका पेसाका बारेमा बताउनेछु, सुन्दै जानु होला ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां तृतीयोऽध्यायः ॥३॥**

✷

**मनुस्मृति, तेश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

**शुरुदेखिको श्लोकको संख्याः-३६८+२८६=६५४**

✷

# ॥ अथ चतुर्थोऽध्यायः ॥

## (वर्ण अनुसारका पेसा)

**चतुर्थमायुषो भागमुषित्वाऽऽद्यं गुरौ द्विजाः ।**
**द्वितीयमायुषो भागं कृतदारो गृहे वसेत् ॥१॥**

द्विजले आयुको एक चौथाई (पच्चीस वर्ष) वर्षसम्म गुरुकुलमा बसेर अध्ययन गर्नू ।
दोश्रो एक चौथाई वर्षमा बिहे गरी घरमा बस्नू ।

**अद्रोहेणैव भूतानामल्पद्रोहेण वा पुनः ।**
**या वृत्तिस्तां समास्थाय विप्रो जीवेदनापदि ॥२॥**

सङ्कटमा बाहेक ब्राह्मणले जीवन निर्वाहका लागि अरु प्राणीलाई कुनै प्रकारको कष्ट नपुग्ने वा कम कष्ट पुग्ने पेसा गर्नु पर्दछ ।



**यात्रामात्रप्रसिद्ध्यर्थं स्वैः कर्मभिरगर्हितैः ।**
**अक्लेशेन शरीरस्य कुर्वीत धनसञ्चयम् ॥३॥**

जीवन चलाउन र परिवार पाल्न ब्राह्मणले सधैं शरीरलाई कष्ट नपुग्ने सरल कार्यबाट धन आर्जन गर्नु पर्दछ ।

**ऋतामृताभ्यां जीवेत्तु मृतेन प्रमृतेन वा ।**
**सत्यानृताभ्यामपि वा न श्ववृत्त्या कदाचन ॥४॥**

ब्राह्मणले सधैं ऋत, अमृत, मृत-अमृत र सत्य-अनृतद्वारा जीवन निर्वाह गर्नु पर्दछ ।
उसले श्वानवृत्ति कहिल्यै अपनाउनु हुँदैन ।

**ऋतमुञ्छशिलं ज्ञेयममृतं स्वादयाचितम् ।**
**मृतं तु याचितं भैक्षं प्रमृतं कर्षणं स्मृतम् ॥५॥**

'उञ्छ' र 'शिल' बाट जीवन निर्वाह गर्नु 'ऋत', केही नमागी जे पाइन्छ त्यसैले जीवन चलाउनुलाई 'अमृत', भिक्षाले जीवन निर्वा गर्नुलाई 'मृत' र कृषिकर्मले जीवन चलाउनुलाई 'प्रमृत' भनिन्छ ।

नोट :- खेतबारीमा लगाइएका बालीनाली किसानले काटेर वा खनेर लगिसकेपछि त्यहाँ खसेका वा बचेका अनाजलाई उञ्छ (सिला) भनिन्छ । यसैगरी खेतबारीमा छुटेका अनाजलाई शिल भनिन्छ ।

**सत्यानृतं तु वाणिज्यं तेन चैवापि जीव्यते ।**
**सेवा श्ववृत्तिराख्याता तस्मात्तां परिवर्जयेत्॥६॥**

व्यापार 'सत्यानृत' र नोकरी 'श्वानवृत्ति' हो । ब्राह्मणले जीवन धान्न अरु पाँच वृत्ति अपनाए पनि श्वानवृत्ति नअपनाउनू ।

**कुशूलधान्यको वा स्यात्कुम्भीधान्यक एव वा ।**

**त्र्यहैहिको वाऽपि भवेदश्वस्तनिक एव वा॥७॥**

चाहिएजति, एक हप्तालाई पुग्ने गरी, तीन दिनलाई पुग्ने गरी र भोलीको समेत चिन्ता नगरी आजलाई मात्र पुग्ने किसिमले अन्न सञ्चय गर्नेगरी चार थरी ब्राह्मण आदरणीय र प्रतिष्ठित मानिन्छन् ।

**चतुर्णामपि चैतेषां द्विजानां गृहमेधिनाम् ।**
**ज्यायान्परः परोज्ञेयो धर्मतो लोकजित्तमः॥८॥**

महिनौ वा वर्षौंका लागि अन्न सञ्चयगर्नेको भन्दा यी चार थरी ब्राह्मणको महत्व क्रमशः बढी हुन्छ ।

**षट्कर्मैको भवत्येषां त्रिभिरन्यः प्रवर्तते ।**
**द्वाभ्यामेकश्चतुर्थस्तु ब्रह्मसत्रेण जीवति॥९॥**

यी छ बाहेक अन्य तीन अध्यापन, यजन र कर्मकाण्डमध्ये एक, दुई वा तीन वटै कर्म अपनाउने खालका ब्राह्मण पनि हुन्छन् । तर, कोही भने सारा समय ब्रह्मचिन्तनमा लगाउने खालका विलक्षण ब्राह्मण पनि हुन्छन् ।

**वर्तयंश्च शिलोञ्छाभ्यामग्निहोत्रपरायणः ।**
**इष्टीः पार्वायणान्तीयाः केवला निर्वपेत्सदा ॥१०॥**

ब्राह्मणका लागि शिलोञ्छवृत्ति सर्वोत्तम विधान हो । यसका साथै उसले नित्य बिहानबेलुकी यज्ञ र विशेष पर्वहरुमा विशेष यज्ञ पनि गर्नु पर्दछ ।

**न लोकवृत्तं वर्तेत वृत्तिहेतोः कथञ्चन ।**
**अजिह्मामशठां शुद्धां जीवेद्ब्राह्मणजीविकाम् ॥११॥**

ब्राह्मणले अरुको जस्तो छलकपट गरेर, धोखा दिएर वा बेइमानी गरेर होइनकी शुद्ध, निश्चल, पवित्र र सात्विक तरिकाले जीवन बिताउनु पर्दछ ।



**संतोषं परमास्थाय सुखार्थी संयतो भवेत् ।**
**संतोषमूलं हि सुखं दुःखमूलं विपर्ययः ॥१२॥**

जीवनमा सुख चाहने ब्राह्मणले संयमता र सन्तोषी हुनू । सुखको जरो भनेकै सन्तोष हो । दुःखको जरो असन्तोष हो ।

**अतोऽन्यतमया वृत्त्या जीवंस्तु स्नातको द्विजः ।**
**स्वर्गायुष्ययशस्यानि व्रतानीमानि धारयेत् ॥१३॥**

गुरुकुलबाट अध्ययन सकी गृहस्थाश्रमममा फर्केका द्विजले जीवन धान्न कुनै एक पेसा अपनाई स्वर्ग, आयु र यश प्रदायक व्रतहरूको पालना गर्नुपर्दछ ।

**वेदोदितं स्वकं कर्म नित्यं कुर्यादतन्द्रितः ।**
**तद्धि कुर्वन्यथाशक्ति प्राप्नोति परमां गतिम् ॥१४॥**

वेदले बताएका कामकर्तव्य अल्छी नगरी पूर्ण श्रद्धाभक्तिका साथ गर्नु पर्दछ ।
यथाशक्ति यसो गर्नाले उ मोक्ष हुन्छ ।

**नेहेतार्थान्प्रसङ्गेन न विरुद्धेन कर्मणा ।**
**न कल्पमानेष्वर्थेषु नार्त्यामपि यतस्ततः ॥१५॥**

सामान्य अवस्थाको त कुरै छोडौं विषम परिस्थितिमा पनि ब्राह्मणले गाउने-बजाउने आदि जस्ता निन्दनीय कार्यहरु गरी धन कमाउन हुँदैन ।

**इन्द्रियार्थेषु सर्वेषु न प्रसज्येत कामतः ।**
**अतिप्रसक्तिं चैतेषां मनसा सन्निवर्तयेत् ॥१६॥**



सबै इन्द्रियलाई विषयमा आशक्त हुन नदिनू । मनलाई नियन्त्रण गरी मन मार्फत यिनलाई नियन्त्रण गर्ने अभ्यास गर्नू ।

**सर्वान्परित्यजेदर्थान् स्वाध्यायस्य विरोधिनः ।**
**यथा तथा यापयंस्तु सा ह्यस्य कृतकृत्यता ॥१७॥**

स्वाध्यायका बाटामा आइपर्ने सबै काम र विषयलाई परित्याग गर्नू । स्वाध्याय नै जीवन सार्थक बनाउने माध्यम भएकोले यसको निरन्तरताको लागि प्रयाश गर्नू ।

**वयसः कर्मणोऽर्थस्य श्रुतस्याभिजनस्य च ।**
**वेषवाग्बुद्धिसारूप्यं आचरन्विचरेदिह ॥१८॥**

ब्राह्मणले (वा अरुले) आफ्नो आयु, कर्म, आर्थिक स्थिति, अध्ययन र कुलपरम्परा अनुसारकै पहिरन गर्नु पर्दछ । परिस्थिति अनुसार बोल्ने तथा ज्ञानका कुरा मात्र गर्ने हुनु र यसका लागि

आफूलाई योग्य बनाउनु पर्दछ ।

**बुद्धिवृद्धिकराण्याशु धन्यानि च हितानि च ।**
**नित्यं शास्त्राण्यवेक्षेत निगमांश्चैव वैदिकान् ॥१९॥**

गुरुकुलबाट फर्केपछि बुद्धि बढाउने, धन कमाउन मद्दत गर्ने, शरीरका लागि लाभकारी तथा वेदका मर्म र तत्वलाई बुझाउने खालका शास्त्र दिनहुँ पढ्ने गर्नु पर्दछ ।

**यथा यथा हि पुरुषः शास्त्रं समधिगच्छति ।**
**तथा तथा विजानाति विज्ञानं चास्य रोचते ॥२०॥**

मानिस जतिजति शास्त्र पढ्दै जान्छ उतीउती धर्म र शास्त्रका रहस्य बुझ्न उसलाई सजिलो हुन्छ, अझ गहिराईमा जाने चाहनामा वृद्धि हुन्छ । यसैले पनि दिनहुँ स्वाध्याय गर्नु भनिएको हो ।

**ऋषियज्ञं देवयज्ञं भूतयज्ञं च सर्वदा ।**

**नृयज्ञं पितृयज्ञं च यथाशक्ति न हापयेत् ॥२१॥**

गृहस्थी भएपछि उसले यथाशक्ति स्वाध्याय, यज्ञ, बलिकर्म, अतिथिसत्कार र सन्तान जन्माउने कार्य गर्नू, नछाड्नू ।

**एतानेके महायज्ञान्यज्ञशास्त्रविदो जनाः ।**
**अनीहमानाः सततमिन्द्रियेष्वेव जुह्वति ॥२२॥**

यज्ञसम्बन्धी शास्त्र जान्ने विद्वानहरू पञ्चयज्ञले नै मानिस संयमित हुन समर्थ हुने हुँदा अरु केही गर्नै पर्दैन पनि भन्दछन् । त्यसैले पञ्चयज्ञलाई उपेक्षा नगर्नू ।

**वाच्येके जुह्वति प्राणं प्राणे वाचं च सर्वदा ।**
**वाचि प्राणे च पश्यन्तो यज्ञनिर्वृत्तिमक्षयाम् ॥२३॥**

कतिपय विद्वान् वाणीलाई प्राणमा र प्राणलाई वाणीमा होम गर्ने अर्थात् संयिमत हुने गर्दछन् र यज्ञ मार्फत प्राप्त हुने यस्तो संयमिमतालाई सिद्धि प्राप्त भएको मान्दछन् ।

**ज्ञानेनैवापरे विप्रा यजन्ते तैर्मखैः सदा ।**
**ज्ञानमूलां क्रियां एषां पश्यन्तो ज्ञानचक्षुषा ॥२४॥**

अरु कतिपय ज्ञानका आँखाले सबै कर्मलाई हेर्ने विद्वानहरू ज्ञान पाउनुलाई नै यज्ञको फल पाउनु मान्दछन् । यी ज्ञान पाउन नै यज्ञ आदि गर्ने गर्दछन् ।

**अग्निहोत्रं च जुहुयादाद्यन्ते द्युनिशोः सदा ।**
**दर्शेन चार्धमासान्ते पौर्णामासेन चैव हि ॥२५॥**

ब्राह्मणले दिनहुँ सूर्योदय र सूर्यास्त हुनु पूर्व अग्निमा हवन गर्नु पर्दछ ।
साथै, औंसी र पूर्णिमामा पनि हवन गर्नुपर्दछ ।



**सस्यान्ते नवसस्येष्ट्या तथर्त्वन्ते द्विजोऽध्वरैः ।**
**पशुना त्वयनान्ते तु समान्ते सौमिकैर्मखैः ॥२६॥**

नयाँ अन्न भित्र्याउने बेलामा नवान्नले, हरेक ऋतु सकिन लाग्दा घिउले र हरेक अयन शुरु हुँदा पशुबलिले यज्ञ गर्नुपर्दछ ।

**नानिष्ट्वा नवसस्येष्ट्या पशुना चाग्निमान् द्विजः ।**
**नवान्नमद्यान्मांसं वा दीर्घमायुर्जिजीविषुः ॥२७॥**

लामो आयु चाहनेले नयाँ अन्न र पशुको मासु यज्ञ नगरी नखानू ।

**नवेनानर्चिता ह्यस्य पशुहव्येन चाग्नयः ।**
**प्राणानेवात्तुमिच्छन्ति नवान्नामिषगर्धिनः ॥२८॥**

होम नगरी नयाँ अन्न र पशुको मासु खाने ब्राह्मण यसैको आशमा रहेका अग्निदेवताको भोजन बन्न पुग्दछ । अतः आफ्नो कल्याण चाहनेले नयाँ अन्न र पशुको मासु यज्ञ-होम नगरी खानु उचित हुँदैन ।

**आसनाशनशय्याभिरद्भिर्मूलफलेन वा ।**
**नास्य कश्चिद्वसेद्गेहे शक्तितोऽनर्चितोऽतिथिः ॥२९॥**

बस्ने आसन, खाने भोजन, सुत्ने ओछ्यान, तिर्खा मेट्ने शीतल-मिठो पानी र ऋतु अनुसारका फल-कन्दमूल पनि नहुने घरमा सामान्यतः अतिथि बन्न (पाहुना लाग्न) जानु हुँदैन ।

**पाषण्डिनो विकर्मस्थान्बैडालवृत्तिकाञ्छठान् ।**
**हैतुकान्बकवृत्तींश्च वाङ्मात्रेणापि नार्चयेत् ॥३०॥**

पाखण्डी, निषिद्ध कर्म गर्ने, ठग्ने, दुष्ट, वेद-श्रद्धाहीन र मुखका ढौंगीलाई बोलीले पनि अतिथिको रुपमा स्वागत नगर्नू ।



**वेदविद्याव्रतस्नाताञ्छ्रोत्रियान् गृहमेधिनः ।**
**पूजयेद्धव्यकव्येन विपरीतांश्च वर्जयेत् ॥३१॥**

गुरुकुलबाट फर्की वेद पढ्न र यज्ञादि गर्न नछाडेको अतिथि आए यथोचित स्वागतसत्कार गर्नू तर यसको उल्टो स्वभावका आए उपेक्षा गर्नू ।

**शक्तितोऽपचमानेभ्यो दातव्यं गृहमेधिना ।**
**संविभागश्च भूतेभ्यः कर्तव्योऽनुपरोधतः ॥३२॥**

स्वयंपाकी (आफैंले पकाएको मात्र खाने) विशिष्ट अतिथिलाई पनि तिनले जे खान्छन् त्यो पेट भरी पुग्ने दिनू र अन्य अतिथिलाई पनि आवश्यकता हेरी समान खाद्य पदार्थ दिनू ।

**राजतो धनमन्विच्छेत्संसीदन्स्नातकः क्षुधा ।**
**याज्यान्तेवासिनोर्वापि न त्वन्यत इति स्थितिः ॥३३॥**

स्नातकले पेसा नपाई अभाव र भोकले पिडित हुँदा राजा, जजमान वा आफ्नो शिष्यसँग धन माग्नू, यी बाहेक अरुसँग केही कुरा पनि नमाग्नू ।

**न सीदेत्स्नातको विप्रः क्षुधासक्तः कथञ्चन ।**
**न जीर्णमलवद्वासा भवेच्च विभवे सति ॥३४॥**

सामर्थ्य नहुँदा पनि स्नातक ब्राह्मणले भोकै कहिल्यै नबस्नू । पुगिसरि आउने ब्राह्मणले जीर्ण र मलिन वस्त्र धारण नगर्नू ।

**क्लृप्तकेशनखश्मश्रुर्दान्तः शुक्लाम्बरः शुचिः ।**
**स्वाध्याये चैव युक्तः स्यान्नित्यमात्महितेषु च ॥३५॥**

कपाल, नङ र दाह्री काटी सफा सेता लुगा लगाउनू, शुद्ध हुनू, संयमित भई स्वाध्याय गर्नू र सधैं आत्मकल्याणका बारेमा सोच्ने गर्नू ।



**वैणवीं धारयेद्यष्टिं सोदकं च कमण्डलुम् ।**
**यज्ञोपवीतं वेदं च शुभे रौक्मे च कुण्डले ॥३६॥**

बाँसको लौरो, पानीले भरिएको कमण्डलु, जनै र वेदको पुस्तक साथमा राख्ने गर्नू । दुवै कानमा सुनका कुण्डल लगाउनू ।

**नेक्षेतोद्यन्तमादित्यं नास्तं यान्तं कदाचन ।**
**नोपसृष्टं न वारिस्थं न मध्यं नभसो गतम् ॥३७॥**

उदयास्तकालीन, मध्य आकाशका र ग्रहणलागेका सूर्यचन्द्रलाई तथा जलमा वा जलको छायाँमा चन्द्रसूर्यको प्रतिबिम्बलाई नहेर्नू ।

**न लङ्घयेद्वत्सतन्त्रीं न प्रधावेच्च वर्षति ।**
**न चोदके निरीक्षेत स्वरुपमिति धारणा ॥३८॥**

बाँधिएको बाच्छाबाच्छीको दाम्लो ननाघ्नु, वर्षामा बेस्सरी नदौडिनू तथा
पानीमा आफ्नो छायाँ नहेर्नू ।

**मृदं गां दैवतं विप्रं घृतं मधु चतुष्पथम् ।**
**प्रदक्षिणानि कुर्वीत प्रज्ञातांश्च वनस्पतीन् ॥३९॥**

माटाको ढिस्को (धमिराको गोलो), गाई, ब्राह्मण, घिउ वा महको भण्डार, नगरको चौबाटो र
प्रसिद्ध तथा उपयोगी रुखलाई विद्वानले सधैं परिक्रमा गर्नू यानी दाहिने पारेर हिँड्नू ।

**नोपगच्छेत्प्रमत्तोऽपि स्त्रियमार्तवदर्शने ।**
**समानशयने चैव न शयीत तया सह ॥४०॥**

कामपीडित पुरुष छ भने पनि रजस्वला स्त्रीसँग त के कुरा, उनी सुतेको
नजिकैको ओछ्यानमा पनि नसुत्नू ।



**रजसाऽभिलुप्तां नारीं नरस्य ह्युपगच्छतः ।**
**प्रज्ञा तेजो बलं चक्षुरायुश्चैव प्रहीयते ॥४१॥**

रजस्वला भएकी स्त्रीलाई सम्भोग गर्ने पुरुषको बुद्धि, तेज, बल, दृष्टि र आयु घट्दछ ।

**तां विवर्जयतस्तस्य रजसा समभिप्लुताम् ।**
**प्रज्ञा तेजो बलं चक्षुरायुश्चैव प्रवर्धते ॥४२॥**

रजस्वला भएकी स्त्रीलाई सम्भोग नगर्ने पुरुषको बुद्धि, तेज, बल, दृष्टि र आयु बढ्दछ ।

**नाश्नीयाद्भार्यया सार्द्धं नैनामीक्षेत चाश्नतीम् ।**
**क्षुवतीं जृम्भमाणां वान्न चासीनां यथासुखम् ॥४३॥**

पत्नीका साथ नखानू र खाएको पनि नहेर्नू । हाच्छिउँ गरिरहेकी, हाई गरिरहेकी, निर्धक्कसँग आराम गरिरहेकी,..।

**नाञ्जयन्तीं स्वके नेत्रे न चाभ्यक्तामनावृताम् ।**
**न पश्येत्प्रसवन्तीं च तेजःकामो द्विजोत्तमः ॥४४॥**

गाजल लगाइरहेकी, निर्वस्त्र भई शरीरमा मालिश गरिरहेकी र सुत्केरी भइरहेकी आफ्नी पत्नीलाई पनि नहेर्नू ।

**नान्नमद्यादेकवासा न नग्नः स्नानमाचरेत् ।**
**न मूत्रं पथि कुर्वीत न भस्मनि न गोव्रजे ॥४५॥**

एउटै मात्र वस्त्र लगाएर नखानू । नाङ्गै भएर स्नान नगर्नू । मानिस ओहोरदोहोर गर्ने बाटोमा, खरानीमा, गाईगोठमा,..।



**न फालकृष्टे न जले न चित्यां न च पर्वते ।**
**न जीर्णदेवायतने न वल्मीके कदाचन ॥४६॥**

बिउ छर्न जोतेर ठिक्क पारिएको खेतमा, जलमा, चितास्थलमा, पर्वतमा, मन्दिरको खण्डहरमा, धमिराको गोलोमा,..।

**न ससत्त्वेषु गर्तेषु गच्छन्नपि च स्थितः ।**
**न नदीतीरमासाद्य न च पर्वतमस्तके ॥४७॥**

जनावर बस्ने दुलोमा, हिँड्दाहिँड्दै, उभिएर, नदीको किनारमा र पर्वतको टुप्पोमा कहिल्यै मूत्रत्याग नगर्नू ।

**वाय्वग्निविप्रमादित्यमपः पश्यंस्तथैव गाः ।**
**न कदाचित्कुर्वीत विण्मूत्रस्य विसर्जनम् ॥४८॥**

वायु, अग्नि, जल, सूर्य, गाई र ब्राह्मण आदिको दर्शन गर्दै मलमूत्र त्याग नगर्नू ।

**तिरस्कृत्योच्चरेत्काष्ठलोष्ठपत्रतृणादि च ।**
**नियम्य प्रयतो वाचं संवीताङ्गोऽवगुण्ठितः ॥४९॥**

दिसा गरेर काठ, माटो, पातपतिङ्गर, घाँस आदिले छोप्नू । दिसागर्दा टुक्रुक्क बस्नू, टाउकोमा कपडा बेर्नू र नबोल्नू ।

**मूत्रोच्चारसमुत्सर्गं दिवा कुर्यादुदङ्मुखः ।**
**दक्षिणाभिमुखो रात्रौ सन्ध्ययोश्च यथा दिवः ॥५०॥**

दिन र सन्ध्यामा उत्तर तथा रातमा दक्षिण फर्केर दिसापिसाब गर्नू ।

**छायायामन्धकारे वा रात्रवहनि वा द्विजः ।**

**यथासुखमुखः कुर्यात्प्राणबाधाभयेषु च ॥५१॥**

ग्रहण लागेको समयमा, रातको अन्धकारमा, तथा कुनै कारणले आकाश बादलले ढाकी दिशाको अत्तोपत्तो नहुने भएमा आफ्नो शरीर रक्षालाई ध्यानमाराखी जता फर्केर दिसापिसाब गर्दा पनि हुन्छ ।

**प्रत्यग्निं प्रतिसूर्यं च प्रतिसोमोदकद्विजम् ।**
**प्रतिगां प्रतिवातं च प्रज्ञा नश्यति मेहतः ॥५२॥**

अग्नि, सूर्य, चन्द्र, जल, वायु, गाई तथा ब्राह्मणका अघिल्तिर मलमूत्र त्याग गर्ने व्यक्तिको बुद्धि र शक्ति तत्काल नष्ट हुन्छ ।

**नाग्निं मुखेनोपधमेन्नग्नां नेक्षेत च स्त्रियम् ।**
**नामेध्यं प्रक्षिपेदग्नौ न च पादौ प्रतापयेत् ॥५३॥**

मुखले फुकेर आगो नबाल्नू । नाङ्गी स्त्रीलाई नहेर्नू । अग्निमा मलमूत्र नफ्याँक्नू । आगोमा गोडा नसेकाउनू ।

**अधस्तान्नोपदध्याच्च न चैनमभिलङ्घयेत् ।**
**न चैनं पादतः कुर्यान्न प्राणबाधामाचरेत् ॥५४॥**

काठका सामान मुनी आगो नबाल्नू । अग्नीलाई ननाघ्नू । आगोमाथि गोडा नराख्नू । यस्ता खालका प्राणसङ्कट हुने अरु कुनै काम पनि नगर्नू ।

**नाश्नीयात्सन्धिवेलायां न गच्छेन्नापि संविशेत् ।**
**न चैव प्रलिखेद्भूमिं नात्मनोऽपहरेत्स्रजम् ॥५५॥**

सन्ध्याका समयमा भोजन र यात्रा नगर्नू, नसुत्नू । जमिनमा धर्का नकोर्नू । आफूले लगाएको माला (आफैं) ननिकाल्नू ।



**नाप्सु मूत्रं पुरीषं वा ष्ठीवनं वा समुत्सृजेत् ।**
**अमेध्यमलिप्तमन्यद्वा लोहितं वा विषाणि वा ॥५६॥**

जलमा मलमूत्र नबगाउनू । पानीमा थूक, रगत, विष र फोहोरमैला नफ्याँक्नू ।

**नैकः शून्यगृहे स्वप्यान्न श्रेयांसं प्रबोधयेत् ।**
**नोदक्ययाऽभिभाषेत यज्ञं गच्छेन्न चावृतः ॥५७॥**

एक्लै एकान्तको निर्जन घरमा नसुत्नू । आफूभन्दा ठूला सुतेका व्यक्तिलाई नजगाउनू । परसरेकी स्त्रीसँग कुराकानी नगर्नू । नबोलाइएको यज्ञमा नजानू ।

**अग्न्यगारे गवां गोष्ठे ब्राह्मणानां च सन्निधौ ।**
**स्वाध्याये भोजने चैव दक्षिणं पाणिमुद्धरेत् ॥५८॥**

यज्ञशाला, गौशाला, ब्राह्मणहरूको सभामा, वेद पढ्दा र खाना खाँदा दाहिने हात माथि उठाउनू (दाहिने हातको प्रयोग गर्नू) ।

**न वारयेद् गां धयन्तीं न चाचक्षीत कस्यचित् ।**
**न दिवीन्द्रायुधं दृष्ट्वा कस्यचिद्दर्शयेद् बुधः ॥५९॥**

पानी पिइरहेकी गाईलाई नधपाउनू, धपाउन नदिनू । आकाशमा इन्द्रेणी देखे पनि अरुलाई नदेखाउनू ।

**नाधार्मिके वसेद् ग्रामे न व्याधिबहुले भृशम् ।**
**नैकः प्रपद्येताध्वानं न चिरं पर्वते वसेत् ॥६०॥**

रोगग्रस्त र अधार्मिक गाऊँमा र धेरै समयसम्म पर्वतमा नबस्नू । एक्लै यात्रा नगर्नू ।



**न शूद्रराज्ये निवसेन्नाधार्मिकजनावृते ।**
**न पाषण्डिगणाक्रान्ते नोपसृष्टेऽन्त्यजैर्नृभिः ॥६१॥**

शूद्रराजाका राज्यमा र अधार्मिक, पाखण्डी तथा चाण्डालले घेरिएको प्रदेशमा नबस्नू ।

**न भुञ्जीतोद्धृतस्नेहं नातिसौहित्यमाचरेत् ।**
**नातिप्रगे नातिसायं न सायं प्रातराशितः ॥६२॥**

चिल्लोपन निकालिएका वस्तु नखानू । धेरै नखानू । सूर्योदय र सूर्यास्तको समयमा नखानू । बिहानकोले पेट भरिएको अवस्था (नपचेको) मा बेलुका नखानू ।

**न कुर्वीत वृथा चेष्टां न वार्यञ्जलिना पिबेत् ।**
**नोत्सङ्गे भक्षयेद्भक्ष्यान्नं जातु स्यात्कुतूहली ॥६३॥**

व्यर्थका काममा ध्यान नलगाउनू । अँजुलीले पानी नपिउनू । खानेकुरा काखमा राखेर नखानू । बकम्फुसे गफमा समय खेर नफाल्नू ।

**न नृत्येन्नैव गायेन वादित्राणि वादयेत् ।**
**नास्फोटयेन्न च क्ष्वेडेन्न च रक्तो विरोधयेत् ॥६४॥**

त्यत्तिकै नाच्न, गाउन, बाजा बजाउन, ताली पिट्न, तोते बेली बोल्न र सुख-दुखमा गधा कराए जसरी कराउन हुँदैन ।

**न पादौ धावयेत्कांस्ये कदाचिदपि भाजने ।**
**न भिन्नभाण्डे भुञ्जीत न भावप्रदुषिते ॥६५॥**

काँसको भाँडामा गोडा नहाल्नू, नधुनू । टुटेफुटेको वा अपवित्र भाँडामा र प्रदुषित विचार राख्ने (शत्रु) कहाँ गएर नखानू ।



**उपानहौ च वासश्च धृतमन्यैर्न धारयेत् ।**
**उपवीतमलङ्कारं स्रजं करकमेव च ॥६६॥**

जुत्ता, वस्त्र, जनै, गहनागुरिया, माला र कमण्डलु अरुले प्रयोग गरेको प्रयोग नगर्नू ।

**नाविनीतैर्व्रजेद्धुर्यैर्न च क्षुधाव्याधिपीडितैः ।**
**न भिन्नश्रृङ्गाक्षिरखुरैर्न वालधिविरूपितैः ॥६७॥**

बिग्रेको, भोको, रोगी, सिङ फुक्लेको वा काटिएको, दूषित आँखा भएको र खुर बिग्रिएको जनावरलाई रथ, गाडा आदिमा नजोत्नू ।

**विनीतैस्तु व्रजेन्नित्यमाशुगैर्लक्षणान्वितैः ।**
**वर्णरुपोपसम्पन्नैः प्रतादेनाक्षिपन्भृशम् ॥६८॥**

राम्ररी सधाइएको, छिटोछरितो, सुन्दर रुपरङ्गको, दर्शनीय र शुभ लक्षणको जनावरलाई जोत्नू । अनावश्यकरुपमा यिनलाई कोर्रा नहिर्काउनू ।

**बालातपः प्रेतधूमो वर्ज्यं भिन्नं तथाऽऽसनम् ।**
**न च्छिन्द्यान्नखरोमाणि दन्तैर्नोत्पाटयेन्नखान् ॥६९॥**

उदीयमान सूर्यको प्रकाशको र चिताको धुवाँको सेवन नगर्नू । टुटेफुटेको आसन प्रयोग नगर्नू । नङ-रौं नउखेल्नू । दाँतले नङ नटोक्नू ।

**न मृल्लोष्ठं च मृद्नीयान्न च्छिन्द्यात्करजैस्तृणम् ।**
**न कर्म निष्फलं कुर्यान्नायत्यामसुखोदयम् ॥७०॥**

माटाको भाँडा प्रयोग नगर्नू गरे पनि माझेर पुनः प्रयोग नगर्नू । नङले घाँसपात नचिमोट्नू । निरर्थक वा भविष्यमा दुःख पाइने खालका काम गर्नतिर ध्यान नलगाउनू ।



**लोष्टमर्दी तृणच्छेदी नखखादी च यो नरः ।**
**विनाशं व्रजत्याशु सूचकोऽशुचिरेव सः ॥७१॥**

माटाका सामान धोएर पुनः प्रयोग गर्ने, नङले घाँसपात चिमोट्ने र नङ टोक्नेको चाँडै पतन हुन्छ । यी कार्यलाई दरिद्रताको सूचक मानिन्छ ।

**न विगृह्य कथां कुर्याद्बहिर्माल्यं न धारयेत् ।**
**गवां च यानं पृष्ठेन सर्वथैव विगर्हितम् ॥७२॥**

आफ्नो कुराका लागि अरुसँग झगडा नगर्नू । माला फुकालेर फेरी नलगाउनू । गाईगोरुको पिठिउँमा कदापि नबस्नू ।

**अद्वारेण च नातीयाद्ग्रामं वा वेश्म वा वृतम् ।**
**रात्रौ च वृक्षमूलानि दूरतः परिवर्जयेत् ॥७३॥**

गाऊँ वा घरमा छिर्दा मूलढोकाबाट मात्र छिर्नू, छिर्ने चोर बाटो नअपनाउनू ।
रातमा रुखको फेदलाई परैबाट त्याग्नू ।

**नाक्षैर्दीव्येत्कदाचित्तु स्वयं नोपानहौ हरेत् ।**
**शयनस्थो न भुञ्जीत न पाणिस्थं न चासने ॥७४॥**

कहिल्यै जुवा नखेल्नू । हातमा आफ्नो जुत्ता लिएर नहिँड्नू । सुतेर, नाङ्गो हातमा
राखेर वा बस्ने आसन माथि राखेर खानेकुरा नखानू ।

**सर्वं च तिलसम्बद्धं नाद्यादस्तमिते रवौ ।**
**न च नग्नः शयीतेह न चोच्छिष्टः क्वचिद्व्रजेत् ॥७५॥**

सूर्यास्तपछि तिल हालिएका कुनै पनि कुरा नखानू । नाङ्गै नसुत्नू । जूठै (नचुठी) कतै नजानू ।

**आर्द्रपादस्तु भुञ्जीत नार्द्रपादस्तु संविशेत् ।**
**आर्द्रपादस्तु भुञ्जानोः दीर्घमायुरवाप्नुयात् ॥७६॥**



धोएको चिसो गोडा नपुछी खाना खानू तर चिसै गोडा लिएर नसुत्नू ।
चिसो गोडा नपुछी खाना खानाले आयु बढ्दछ ।

**अचक्षुर्विषयं दुर्गं न प्रपद्येत कर्हिचित् ।**
**न विण्मूत्रमुदीक्षेत न बाहुभ्यां नदीं तरेत् ॥७७॥**

थाहा नपाएको किल्लामा प्रवेश नगर्नू । मलमूत्र नहेर्नू । पौडी खेलेर नदी नतर्नू ।

**अधितिष्ठेन्न केशांस्तु न भस्मास्थिकपालिकाः ।**
**न कार्पासास्थि न तुषान्दीर्घमायुर्जिजीविषुः ॥७८॥**

लामो आयु चाहनेले कपाल, खरानी, अस्थि, खप्पर, कपासको थुप्रो र भुसमाथि नबस्नू ।

**न संवसेच्च पतितैर्न चाण्डालैर्न पुल्कसैः ।**
**न मूर्खैर्नावलिप्तैश्च नान्त्यैर्नान्त्यावसायिभिः ॥७९॥**

चाण्डाल, पुल्कस (निषादको वीर्य र शूद्रको गर्भबाट जन्मेको सन्तान), मूर्ख, धन र विद्याको अहङ्कारी, अछूत तथा अन्त्यावसायी (चाण्डालको वीर्य र निषाद स्त्रीबाट जन्मेको सन्तान) सँग निवास र सङ्गत नगर्नू ।

**न शूद्राय मतिं दद्यान्नोच्छिष्टं न हविष्कृतम् ।**
**न चास्योपदिशेद्धर्मं न चास्य व्रतमादिशेत् ॥८०॥**

शूद्रलाई कुनै प्रकारको सल्लाह, धर्मोपदेश, व्रत अनुष्ठान आदिका विधिका बारेमा उपदेश नदिनू ।

**यो ह्यस्य धर्ममाचष्टे यश्चैवादिशति व्रतम् ।**
**सोऽसंवृतं नामः तमः सह तेनैव मज्जति ॥८१॥**



शूद्रलाई धर्मोपदेश गर्ने व्यक्ति शूद्रसँगै असंवृत नामको नरकमा परेर दुःख पाउँदछ ।

**न संहताभ्यां पाणिभ्यां कण्डूयेदात्मनः शिरः ।**
**न स्पृशेच्चैतदुच्छिष्टो न च स्नायाद्विना ततः ॥८२॥**

दुवै हातले एकैपटक कपाल नकन्याउनू । जूठो हातले आफ्नो कपाल नकन्याउनू र नछुनू, शिरमा पानि नहाली ननुहाउनू ।

**केशग्रहान्प्रहारांश्च शिरस्येतान्विवर्जयेत् ।**
**शिरः स्नातश्च तैलेन नाङ्गं किञ्चिदपि स्पृशेत् ॥८३॥**

कपाल तान्ने, समाउने, भुत्ल्याउने र शिरमा चोट पुर्‍याउने काम नगर्नू । कपालमा तेल लगाएर त्यही हातले शरीरका अरु अङ्ग नछुनू ।

**न राज्ञः प्रतिगृह्णीयादराजन्यप्रसूतितः ।**
**सूनाचक्रध्वजवतां वेशेनैव च जीवताम् ॥८४॥**

क्षत्रिय बाहेकका राजाबाट दानदक्षिणा नलिनू । यस्ता राजाको पुरोहित बनेर, यज्ञ आदि गराएर वा दक्षिणा आदि लिएर सम्बन्ध नबढाउनू ।

**दशसूनासमं चक्रं दशचक्रसमो ध्वजः ।**
**दशध्वजसमो वेशो दशवेशसमो नृपः ॥८५॥**

एक रथारोही राजा दश हिंसक समान तथा एक क्षत्रियेतर राजा दश बहुरुपी समान निकृष्ट र निन्दित हुने  हुनाले यस्ता राजासँग पुरोहित्याइँ गरी दक्षिणा लिनु महापाप हुन्छ ।

**दशसूनासहस्राणि यो वाहयति सौनिकः ।**
**तेन तुल्यःस्मृतो राजा घोरस्तस्य प्रतिग्रहः ॥८६॥**



दश हजार प्राणि हत्या गर्ने जीव सौनिक हुन्छ । क्षत्रियेतर राजा त सौनिकभन्दा पनि निकृष्ट हुने हुनाले उसँग दान लिनु भनेको कुनै प्रायश्चित नै नहुने पाप कमाउनु हो ।

**यो राज्ञः प्रतिगृह्णाति लुब्धस्योच्छास्त्रवर्तिनः ।**
**सः पर्यायेण यातीमान्नरकानेकविंशतिम् ॥८७॥**

यस्तो निकृष्ट राजासँग लोभवश वा दरिद्रताको कारण दानदक्षिणा स्वीकार गर्ने ब्राह्मण एक्काईस वटा घोर नरकमा पर्दछ ।

**तामिस्रमन्धतामिस्रं महारौरवरौरवौ ।**
**नरकं कालसूत्रं च महानरकमेव च ॥८८॥**
**सञ्जीवनं महावीचिं तपनं सम्प्रतापनम् ।**
**संहातं च सकाकोलं कुड्मलं पूतिमृत्तिकम् ॥८९॥**

**लोहशङ्कुमृजीषं च पन्थानं शाल्मलीं नदीम् ।**
**असिपत्रवनं चैव लोहदारकमेव च ॥९०॥**

ती एक्काईस वटा नरक तामिस्र, अन्धतामिस्र, रौरव, महारौरव, नरक, कालसूत्र, संजीवन, महावीचि, तपन, संप्रतापन, संहात, सकाकोल, कुड्मल, पूतिमृत्तिका, लोहशंकु, ऋजीष, पन्थान, शाल्मली नदी, असिपत्र वन र लोहदारक हुन् ।

**एतद्विदन्तो विद्वांसो ब्राह्मणाः ब्रह्मवादिनः ।**
**न राज्ञःप्रतिगृह्णान्ति प्रेत्यश्रेयोऽभिकांक्षिणः ॥९१॥**

यो तथ्य जान्ने ब्रह्मवेत्ता ब्राह्मणहरु भुलेर पनि क्षत्रियेतर राजाबाट कुनै दान-दक्षिणा लिँदैनन् ।

**ब्राह्मे मुहूर्ते बुध्येत धर्मार्थौ चानुचिन्तयेत् ।**
**कायक्लेशांश्च तन्मूलान्वेदतत्त्वार्थं एव च ॥९२॥**



बिहान ब्राह्ममुहूर्तमा उठ्नू । त्यसपछि धर्म र अर्थका बारेमा सोच्नू । यसमा खर्च हुने परिश्रम र धनका बारेमा पनि सोच्नू जसले गर्दा निश्चिन्त भएर स्वाध्याय र तत्वज्ञानतिर लाग्न सकियोस् ।

**उत्थायावश्यकं कृत्वा कृतशौचः समाहितः ।**
**पूर्वां संध्यां जपंस्तिष्ठेत्स्वकाले चापरां चिरम् ॥९३॥**

(ब्राह्मणले) बिहान उठि सकेपछि शौच सकी एकाग्र भएर समयमै बिहानको सन्ध्योपासना र जप गर्नु पर्दछ ।

**ऋषयो दीर्घसंध्यत्वाद्दीर्घमायुरवाप्नुयुः ।**
**प्रज्ञां यशश्च कीर्तिं च ब्रह्मवर्चसमेव च ॥९४॥**

ऋषिमुनिहरूले सन्ध्योपासनाकै कारण आयु, बुद्धि, यश, कीर्ति र ब्रह्मतेज प्राप्त गरेका हुन् ।

**श्रावण्यां प्रौष्ठपद्यां वाऽप्युपाकृत्य यथाविधिः ।**
**युक्तच्छन्दांस्यधीयीत मासान्विप्रोऽर्धपञ्चमान् ॥९५॥**

बुद्धिमान ब्राह्मणले श्रावण वा भाद्र पूर्णिमामा उपाकर्म गर्नू र चार महिना आधा (वर्षाकालका चौमास) सम्म एकाग्रचित्त भएर वेदको अध्ययन गर्नू ।

**पुष्ये तु च्छन्दसां कुर्याद्बहिरुत्सर्जनं द्विजः ।**
**माघशुक्लस्य वा प्राप्ते पूर्वाह्णे प्रथमेऽहनि ॥९६॥**

पुष्य नक्षत्रमा पर्ने पूर्णिमामा वा माघ शुक्ल परेवाका दिन पूर्वाह्णमा गाऊँबाट बाहिर आई वेदपाठको उत्सर्ग गरेको घोषणा गर्नू ।

**यथाशास्त्रं तु कृत्वैवमुत्सर्गं छन्दसा बहिः ।**
**विरमेत्पक्षिणीं रात्रिं तदेवैकमहर्निशम् ॥९७॥**



वेदपाठ त्यागेको घोषणा गरेको दिन कुनै पनि अरु शास्त्र-ग्रन्थको अध्ययन गर्नु हुँदैन ।

**अत ऊर्ध्वं तु छन्दांसि शुक्लेषु नियतः पठेत् ।**
**वेदाङ्गानि च सर्वाणि कृष्णपक्षेषु सम्पठेत् ॥९८॥**

नित्यको वेदपाठलाई त्यागे पनि ब्राह्मणले शुक्लपक्षमा वेद र कृष्णपक्षमा वेदाङ्गहरुको अध्ययन गर्ने बानी गरिनै रहनू ।

**नाविस्पष्टमधीयीत न शुद्रजनसन्निधौ ।**
**न निशान्ते परिश्रान्तो ब्रह्माधीत्य पुनःस्वपेत् ॥९९॥**

शूद्रका नजिकै अष्पष्टसँग पनि वेदपाठ नगर्नू । ब्राह्ममुहूर्तमा वेदपाठ गरी थाकेर पुनः नसुत्नू ।

**यथोदितेन विधिना नित्यं छन्दस्कृतं पठेत् ।**
**ब्रह्मच्छन्दस्कृतं चैव द्विजो युक्तो ह्यनापदि ॥१००॥**

प्रतिदिन विधिविधानले वेदपाठ गर्नू । सामान्य परिस्थितिमा वेदपाठ र गायत्री जपलाई उपेक्षा नगर्नू, आफ्नो नियम पालनामा सधैं सजग बन्नू ।

**इमान्नित्यमनध्यायानधीयानो विवर्जयेत् ।**
**अध्यापनं च कुर्वाणः शिष्याणां विधिपूर्वकम् ॥१०१॥**

यी (तल दिइएका) अनध्यायमा निष्ठावान ब्राह्मणले वेद नपढ्नू र शिष्यलाई पनि नपढाउनू ।

**कर्णश्रवेऽनिले रात्रौ दिवा पांसुसमूहने ।**
**एतौ वर्षास्वनध्यायवध्यायज्ञाः प्रचक्षते ॥१०२॥**

वर्षा ऋतुका कानै खाने आवाज आउने रात र आँधी चल्ने दिनमा वेदपाठ नगर्नू ।

**विद्युत्स्तनितवर्षेषु महोल्कानां च संप्लवे ।**
**आकालिकमनध्यायमेतेषु मनुरब्रवीत् ॥१०३॥**

बिजुली चम्केको, बादल गर्जेको, मुसलधारे पानी परेको र उल्कापात भएको बेलामा वेदपाठ नगर्नू ।

**एतांस्त्वभ्युदितान्विद्याद्यदा प्रादुष्कृताग्निषु ।**
**तदा विद्यादनध्यायमनृतौ चाभ्रदर्शने ॥१०४॥**

वर्षा बाहेकका ऋतुमा आकाश बादलले घेरेमा तथा होमका समयमा पानी परेमा वाम पर्ने सम्भावना भएमा वेदपाठ नगर्नू ।

**निर्घाते भूमिचलने ज्योतिषां चोपसर्जने ।**
**एतानाकालिकान्विद्यादनध्यायानृतावपि ॥१०५॥**

यसै गरी चटचाङ पर्दा वा आँधी चल्दा, भूकम्प जाँदा, अन्तरिक्षमा उत्पात हुँदा वा सूर्यादि ग्रहको दोषयुक्त ऋतुमा, अती गर्मी-जाडो दिनमा पनि वेदको अध्ययन नगर्नू ।

**प्रादुष्कृतेष्वग्निषु तु विद्युत्स्तनितनिःस्वने ।**
**सज्योतिः स्यादनध्यायः शेषे रात्रौ यथा दिवा ॥१०६॥**

होम गर्न आगो बाल्ने बेलामा बिजुली चम्के, बादलले घेरे वा कुनै उत्पात देखिए त्यसदिन वेदाध्ययन नगर्नू । सामान्य परिस्थितिमा र रातमा दिनकै नियमले वेद पढ्ने गर्नू ।

**नित्यानध्याय एव स्याद्ग्रामेषु नगरेषु च ।**
**धर्मनैपुण्यकामानां पूतिगन्धे च सर्वशः ॥१०७॥**



धर्मज्ञ ब्राह्मणले गाऊँशहरमा वेदपाठ नगर्नू किनकि हल्लाले गर्दा एकाग्रता हुँदैन । एकाग्रताको लागि त वन नै उत्तम भएपनि दूषित र दुर्गन्धित स्थानमा बसी वेदपाठ गर्नु उचित हुँदैन ।

**अन्र्गतशवे ग्रामे वृषलस्य च सन्निधौ ।**
**अनध्यायो रुद्यमाने समवाये जनस्य च ॥१०८॥**

लाशको नजिकै, धर्मभ्रष्टको उपस्थितिमा, भीडमा, रुने-कराउने भइरहेको स्थानमा अनध्याय हुन्छ ।

**उदके मध्यरात्रौ च विण्मूत्रस्य विसर्जने ।**
**उच्छिष्टःश्राद्धभुक्चैव मनसाऽपि न चिन्तयेत् ॥१०९॥**

पानीमा उभिएर, आधारातमा, मलमूत्र त्याग गरिरहँदा, जुठो मुख हुँदा र श्राद्ध खाइरहँदा वा खाइ सकेपछि वेदपाठ नगर्नू ।

**प्रतिगृह्य द्विजो विद्वानेकोद्दिष्टनिकेतनम् ।**
**त्र्यहं न कीर्तयेद्ब्रह्म राज्ञो राहोश्च सूतके ॥११०॥**

राजाको श्राद्धको निमन्त्रणा स्वीकार गर्ने वा भोजन खाने ब्राह्मणले दरवारमा
सूतक पर्दा एवं सूर्यग्रहण लाग्दा तीन दिनसम्म वेद् नपढ्नू ।

**यावदेकानुदिष्टस्य गन्धलेपश्च तिष्ठति ।**
**विप्रस्य विदुषो देहे तावद्ब्रह्म न कीर्तयेत् ॥१११॥**

ब्राह्मणले एकस्थानमा पूजापाठ गर्दा-गराउँदा लगाएको चन्दनको बास्ना
आइरहेसम्म वेदपाठ गर्नु हुँदैन ।

**शयानः प्रौढपादश्च कृत्वा चैवावसक्थिकाम् ।**
**नाधीयीतामिषं जग्ध्वा सूतकान्नाद्यमेव च ॥११२॥**



सुतेर, पेट थिची गोडा माथि पारी पल्टेको बेलामा, घुँडा मारेर बसेको अवस्थामा र मासु खाएको
दिनमा वा सुतक परेको घरको अन्न खाएको बेलामा वेद् नपढ्नू-नपढाउनू ।

**नीहारे बाणशब्दे च सन्ध्ययोरेव चोभयोः ।**
**अमावस्याचतुर्दश्योः पौर्णमास्यष्टकासु च ॥११३॥**

कुहिरो लागेको दिन, ब्राह्मणसँग विवाद हुने दिन, दुवै सन्ध्यामा, औंसी-चतुर्दशी-पूर्णिमामा र
शिशिर ऋतुको कृष्णपक्षको अष्टमीमा वेद् नपढ्नू ।

**अमावस्या गुरुं हन्ति शिष्यं हन्ति चतुर्दशी ।**
**ब्रह्माष्टकापौर्णमास्यौ तस्मात्ताः परिवर्जयेत् ॥११४॥**

वेद् औंसीमा पढ्नाले गुरुको, चतुर्दशीमा पढ्नाले शिष्यको तथा अष्टमी र
पूर्णिमामा पढ्नाले वेदको नै विनाश हुन्छ ।

**पांसुवर्षे दिशां दाहे गोमायुविरुते तथा ।**
**श्वखरोष्ट्रे च रुवति पङ्क्तौ च न पठेत् द्विजः ॥११५॥**

धूलो उड्दा वा आँधी आउँदा वा पानी पर्दा, आगो वर्षिदा, स्याल कराउँदा, कुकुर-गधा-ऊँट रोएको सुनिएमा, जमातमा रहँदा तथा...।

**नाधीयीत श्मशानान्ते ग्रामान्ते गोव्रजेऽपि वा ।**
**वासित्वा मैथुनं वासः श्राद्धिकं प्रतिगृह्य च ॥११६॥**

मसानमा, गाउँ नजिकैको स्थानमा, गोठमा, सम्भोग गर्दाको लुगा लाएर र श्राद्ध खाएर वेदपाठ गर्न हुँदैन ।

**प्राणि वा यदि वाऽप्राणि यत्किञ्चिच्छ्राद्धिकं भवेत् ।**
**तदालभ्याप्यनध्यायः पाण्यास्यो हि द्विजः स्मृतः ॥११७॥**



आफ्ना हातबाट जड वा चेतनशील प्राणीको हिंसा भएको दिन ऊ शूद्र हुन्छ, त्यसैले सो दिन पनि वेदपाठ गर्नु हुँदैन ।

**चौरैरुपप्लुते ग्रामे सम्भ्रमे चाग्निकारिते ।**
**आकालिकमनध्यायं विद्यात्सर्वाद्भुतेषु च ॥११८॥**

चोरडाँकुले उपद्रो मच्चाउँदा, कारणवश गाउँमा हलचल हुँदा, घर-भवन आदिमा आगो लागेका बखतमा र कुनै आश्चर्यजनक घटना घटेमा वेदपाठ गर्नु हुँदैन ।

**उपाकर्मणि चोत्सर्गे त्रिरात्रं क्षेपणं स्मृतम् ।**
**अष्टकासु त्वहोरात्रमृत्वन्तसु च रात्रिषु ॥११९॥**

जनै फेर्दा तीन दिनरात र अष्टमीमा एक दिनरात तथा ऋतु परीवर्तन हुँदा शुरुका केही रात वेदपाठ नगर्नू ।

**नाधीयीताश्वमारूढो न वृक्षं न च हस्तिनम् ।**
**न नावं न खरं नोष्ट्रं नेरिणस्थो न यानगः ॥१२०॥**

घोडा वा रुख चढेको समयमा, हात्ती वा घोडा वा ऊँट वा गधा माथि वा यिनले तान्ने गाडीमा चढेको समयमा, र बाँझो जमिनमा बसेका समयमा तथा...।

**न विवादे न कलहे न सेनायां न सङ्गरे ।**
**न भुक्तमात्रे नाजीर्णे न वमित्वा न शुक्तके ॥१२१॥**

झगडा गरेको अवस्थामा, सेनासँगै वा लडाईको मैदानमा भएको बेलामा, खाना खानासाथ, अजीर्ण हुँदा, वान्ता गरेर, सूतकमा तथा...।

**अतिथिं चाननुज्ञाप्य मारुते वाति वा भृशम् ।**
**रुधिरे च स्रुते गात्राच्छस्त्रेण च परिक्षते ॥१२२॥**



अतिथिले अनुमति नदिएमा, ठूलो आँधिमा, शस्त्रले घाउ हुँदा र घाउबाट रगत-पीप बगेमा वेदपाठ नगर्नू ।

**सामध्वनावृग्यजुषी नाधीयीत कदाचन ।**
**वेदस्याधीत्य वाऽप्यन्तमारण्यकमधीत्य च ॥१२३॥**

सामवेद पछि ऋग्वेद र यजुर्वेद पढ्न तथा उपनिषद र आरण्यक पढेर तुरुन्त वेद पढ्न हुँदैन ।

**ऋग्वेदो देवदैवत्यौ यजुर्वेदस्तु मानुषः ।**
**सामवेदः स्मृतः पित्र्यस्तस्मात्तस्याशुचिर्ध्वनिः ॥१२४॥**

ऋग्वेदलाई देवताहरुको र यजुर्वेलाई मनुष्यहरुको तथा सामवेदलाई पितृहरुको वेद मानिने हुनाले पारलौकिक (अपवित्र) भएका कारण अरु दुई वेदसँगै सामवेद नपढ्नू ।

**एतद्विदन्तो विद्वांसस्त्रयीनिष्कर्षमन्वहम् ।**
**क्रमतः पूर्वमभ्यस्य पश्चाद्वेदमधीयते ॥१२५॥**

माथि उल्लेखित सबै नियमहरु जान्ने ब्राह्मणले सधैं गायत्री र ॐ कारको जप तथा व्याहृति र वेदको सारमाथि चिन्तनमनन गरेर मात्र वेद पढ्ने गर्दछन् ।

**पशुमण्डूकमार्जारश्वसर्पनकुलाखुभिः ।**
**अन्तरागमने विद्यादनाध्यायमहर्निशम् ॥१२६॥**

पढिरहेका समयमा गाई, साँढे, बिरालो, कुकुर आदि पशु तथा भ्यागुतो, सर्प, न्याहुरीमुसो, मुसो आदि जीवले बाटो काटे पूरै दिनकालागि वेद पढ्ने-पढाउने काम छाड्नु पर्दछ ।

**द्वावेव वर्णयेन्नित्यमनध्यायौ प्रयत्नतः ।**
**स्वाध्यायभूमिं चाशुद्धामात्मानं चाशुचिं द्विजः ॥१२७॥**



विचारपूर्वक हेर्ने हो भने अध्ययन गर्ने स्थान र अध्ययन कर्ता दुवैको पवित्रताको स्थिति नै वेदाध्ययनको लागि उपयुक्त हुने देखिएको छ ।

**अमावस्यामष्टमीं च पौर्णमासीं चतुर्दशीम् ।**
**ब्रह्मचारी भवेन्नित्यमप्यृतौ स्नातको द्विजः ॥१२८॥**

अष्टमी, चतुर्दशी, पूर्णिमा र औंसी तिथिमा तथा परसरेकी स्त्रीलाई सम्भोग नगर्नू ।

**न स्नानमाचरेद्भुक्त्वा नातुरो न महानिशि ।**
**न वासोभिः सहाजस्रं नाविज्ञाते जलाशये ॥१२९॥**

खाना खानासाथ, रोगी हुँदा, आधारातमा र पूरै कपडा लगाई ननुहाउनू ।
गहिरो र थाहा नभएको जलाशयमा ननुहाउनू ।

**देवतानां गुरोः राज्ञः स्नातकाचार्ययोस्तथा ।**
**नाक्रामेत्कामतश्छायां बभ्रुणो दीक्षितस्य च ॥१३०॥**

वाध्यता नपरे कहिल्यै पनि देवता, गुरु, राजा ब्रह्मचारी, कपिल, दीक्षित,
महर्षि आदिको छायाँ ननाघ्नू ।

**मध्यदिनेऽर्धरात्रे श्राद्धं भुक्त्वा च सामिषम् ।**
**सन्ध्ययोरुभयोश्चैव न सेवेत चतुष्पथम् ॥१३१॥**

मध्याह्न, आधारात, दुवै सन्ध्या, श्राद्धमा मासु खाएर र अन्धकारको समयमा
चौबाटोमा धेरै बेरसम्म घुमफिर नगर्नू ।

**उद्वर्तनमपस्नानं विण्मूत्रे रक्तमेव च ।**
**श्लेष्मनिष्ठ्यूतवान्तानि नाधितिष्ठेत्तु कामतः ॥१३२॥**



नुहाएको बास्नादार पदार्थ मिसिएर दुषित पानीमा, दिसापिसाब गरिएको स्थानमा र
रगत-कफ-पीप-वान्ता आदि भएको स्थानमा नबस्नू ।

**वैरिणं नोपसेवेत सहायं चैव वैरिणः ।**
**अधार्मिकं तस्करं च परस्यैव च योषितम् ॥१३३॥**

शत्रु, शत्रुका सहायक, अधर्मी, चोर तथा परस्त्रीका साथ अधिक मेलजोल बढाउने चेष्टा नगर्नू ।

**न हीदृशमनायुष्यं लोके किञ्चन विद्यते ।**
**यादृशं पुरुषस्येह परदारोपसेवनम् ॥१३४॥**

पराया स्त्री भोग गर्नुजस्तो मनुष्यको आयु नष्ट गर्ने र स्वास्थ्य बिगार्ने
दुष्कर्म यो संसारमा कुनै अर्को छैन ।

**क्षत्रियं चैव सर्पं च ब्राह्मणं च बहुश्रुतम् ।**
**नावमन्येत वै भूष्णुः कृशानपि कदाचन ॥१३५॥**

आफ्नो सुखसमृद्धि चाहनेले क्षत्रिय, सर्प तथा बहुश्रुत्र ब्राह्मणलाई दुब्लै भएपनि नसताउनू ।

**एतत्त्रयं हि पुरुषं निर्दहेदवमानितम् ।**
**तस्मादेतत्त्रयं नित्यं नावमन्येत बुद्धिमान् ॥१३६॥**

कुरो के भने यि तीनै अवसर पाउने बित्तिकै आफ्नो अपमान र अपकारगर्नेलाई समूल नष्ट गर्ने सामर्थ राख्दछन् । त्यसैले यिनलाई जिस्क्याउनु बुद्धिमानी हुँदैन ।

**नात्मानमवमन्येत पूर्वाभिरसमृद्धिभिः ।**
**आमृत्योः श्रियमन्विच्छेन्नैनां मन्येत दुर्लभम् ॥१३७॥**

पहिले गरिएका कामको असफलतामा आफूलाई नधिक्कार्नू । नमर्दासम्म सफलताका लागि प्रयाश गरिरहनू, कहिल्यै कुनै कुरा दुर्लभ हुन्छ भन्ने मान्यता नराख्नू ।

**सत्यं ब्रूयात्प्रियं ब्रूयान्न ब्रूयात्सत्यमप्रियम् ।**
**प्रियं च नानृतं ब्रूयादेष धर्मः सनातनः ॥१३८॥**

सनातन धर्मको भनाइ छ कि सदैव प्रिय सत्य बोल्नू । कहिल्यै अप्रिय सत्य वा प्रिय लाग्ने असत्य नबोल्नू ।

**भद्रं भद्रमिति ब्रूयाद्भद्रमित्येव वा वदेत् ।**
**शुष्कवैरं विवादं च न कुर्यात्केनचित्सह ॥१३९॥**

सधैं "राम्रो, धेरै राम्रो" भन । तर, नराम्रोलाई राम्रो भनी कसैको उपेक्षा नगर । कसैसँग निरर्थक वैरता नगर ।

**नातिकल्पं नातिसायं नातिमध्यन्दिने स्थिते ।**
**नाज्ञातेन समं गच्छेन्नैको न वृषलैः सहः ॥१४०॥**

बिहानको झिसमिसेमा, साँझमा तथा मध्याह्नमा नचिनेको मानिस वा पापी व्यक्तिसँग एकान्त बाटोमा यात्रा नगर्नू र (यात्रा गरिरहेको भए) कतै नरोकिनू ।

**हीनाङ्गानतिरिक्ताङ्गान्विद्याहीनान्वयोऽतिगान् ।**
**रुपद्रव्यविहीनांश्च जातिहीनांश्च नाक्षिपेत् ॥१४१॥**

अपाङ्ग, अधिकाङ्ग, अशिक्षित, वृद्ध, कुरुप तथा निम्न वर्णका व्यक्तिलाई कहिल्यै अपमान वा हैँला नगर्नू ।

**न स्पृशेत्पाणिनोच्छिष्टो विप्रो गोब्राह्मणानलान् ।**
**न चापि पश्येदशुचिःस्वस्थो ज्योतिर्गणान्दिवि ॥१४२॥**



जुठो मुखले गाई, ब्राह्मण र आगो नछुनू । अशुद्ध वा अपवित्र अवस्थामा चन्द्रसूर्य आदि ग्रहलाई नहेर्नू ।

**स्पृष्ट्वैतानशुचिर्नित्यमद्भिः प्राणानुपस्पृशेत् ।**
**गात्राणि चैव सर्वाणि नाभिं पाणितलेन तु ॥१४३॥**

अज्ञानमा अपवित्रतामा गाई, ब्राह्मण वा अग्निलाई छोए आफ्नो सबै अङ्गमा जल छर्कनू, आचमन गर्नू, बायाँहातमा लिएको जलमा दायाँ हातका औँला चोपली त्यसले सबै अङ्ग र नाइटो छुनू ।

**अनातुरः स्वानि खानि न स्पृशेदनिमित्ततः ।**
**रोमाणि च रहःस्यानि सर्वाण्येव विवर्जयेत् ॥१४४॥**

विवश नभएसम्म त्यत्तिकै आफ्नै अङ्ग, कपाल र गुप्ताङ्गका रौँ छुने नगर्नू ।

**मङ्गलाचारयुक्तः स्यात्प्रयतात्मा जितेन्द्रियः ।**
**जपेच्च जुहुयाच्चैव नित्यमग्निमतन्द्रितः ॥१४५॥**

सधैँ पवित्र र इन्द्रियहरुलाई वशमा राखेर शुभकर्म गर्न प्रयत्नशील रहनू ।
अल्छी नगरी प्रतिदिन जप र होम गर्दै रहनू ।

**मङ्गलाचारयुक्तानां नित्यं च प्रयतात्मनाम् ।**
**जपतां जुह्वतां चैव विनिपातो न विद्यते ॥१४६॥**

शुभकर्म गर्नमा उद्यत, जितेन्द्रिय भएर पवित्र जीवन बिताउने र प्रतिदिन जप-होम
गर्नेले कुनैपनि उपद्रवको सामना गर्नु पर्दैन ।

**वेदमेव जपेन्नित्यं यथाकालमतन्द्रितः ।**
**तं ह्यस्याहुः परं धर्ममुपधर्मोऽन्य उच्यते ॥१४७॥**



अल्छी नगरी सधैँ वेद पढ्ने गर्नू किनकि योभन्दा ठूलो अर्को कुनै धर्म छैन,
अरु सबै तल्ला श्रेणीका धर्म हुन् ।

**वेदाभ्यासेन सततं शौचेन तपसैव च ।**
**अद्रोहेण च भूतानां जातिं स्मरति पौर्विकीम् ॥१४८॥**

निरन्तरको वेदाध्ययनले, पवित्र आचरणले, निष्ठापूर्वकको तप-अनुष्ठानले र मित्रभावले
मानिस पूर्वजन्मको जानकारी प्राप्त गर्न सक्षम हुन्छ ।

**पौर्विकीं संस्मरञ्जातिं ब्रह्मैवाभ्यसते द्विजः ।**
**ब्रह्माभ्यासेन चाजस्रमनन्तं सुखमश्नुते ॥१४९॥**

पूर्वजन्मको सम्झना आएपछि वेद पढ्न झन रुचि बढ्दछ, वेदको
अनुशीलनले व्यक्तिले अनन्त सुखको भोग गर्दछ ।

**सावित्रान् शान्तिहोमांश्च कुर्यात्पर्वसु नित्यशः ।**
**पितृंश्चैवाष्टकास्वर्चयेन्नित्यमन्वष्टकासु च ॥१५०॥**

पर्वहरुमा गायत्री र शान्तिमन्त्रले विशेष यज्ञ-होम गर्नु पर्दछ । शुक्लपक्षका अष्टमी र नवमी तथा हेमन्त र शिशिर ऋतुका कृष्णपक्षका यी तिथिमा पितृलाई श्राद्धतर्पण गर्नू ।

**दूरादावसथान्मूत्रं दूरात्पादावसेचनम् ।**
**उच्छिष्टान्न निषेकं च दूरादेव समाचरेत् ॥१५१॥**

मलमूत्रको विसर्जन, गोडाधोएको पानी तथा जुठ्यानलाई घरबाट पर लगेर फाल्ने गर्नू ।

**मैत्रं प्रसाधनं स्नानं दन्तधावनमञ्जनम् ।**
**पूर्वाह्ण एव कुर्वीत देवतानां च पूजनम् ॥१५२॥**

मलमूत्र विसर्जन, कपाल कोर्ने वा काट्ने र दाह्री काट्ने काम, नुहाउने काम, दाँत माझ्ने काम, गाजल लगाउने काम र देवताको पूजा पनि दिनको पहिलो प्रहरमा नै गर्नू ।

**दैवतान्यभिगच्छेत्तु धार्मिकांश्च द्विजोत्तमान् ।**
**ईश्वरं चैव रक्षार्थं गुरुनेव च पर्वसु ॥१५३॥**

श्रेष्ठ द्विजले पर्वमा देवस्थल, यज्ञशाला आदिमा गई गुरु, धर्माचार्य, श्रेष्ठ ब्राह्मण र आदर्श महापुरुषको पूजागरी तिसँग आशिर्वाद लिनू ।

**अभिवादयेद्वृद्धांश्च दद्याच्चैवासनं स्वकम् ।**
**कृताञ्जलिरुपासीत गच्छतः पृष्ठतोऽन्वियात् ॥१५४॥**

वृद्ध-श्रेष्ठ व्यक्तिको उठेर सम्मान गर्नु र आफैं बसेको वा अग्लो आसन बस्नका लागि दिनू । हात जोडेर नम्रतापूर्वक अगाडि उभिनू । परसम्म विदाई गर्न जानू र नमस्कार गरेर फर्कनू ।

**श्रुतिस्मृत्युदितं सम्यङ्निबद्धं स्वेषु कर्मसु ।**
**धर्ममूलं निषेवेत सदाचारमतन्द्रित ॥१५५॥**

वेदले बताएको र नियमका रुपमा निर्दिष्ट गरेको धर्मको मूलभूत कुरो
“सदाचार” लाई सधैं दृढतापूर्वक पालना गर्नू ।

**आचाराल्लभते ह्यायुराचारादीप्सिताः प्रजाः ।**
**आचारद्धनमक्षय्यमाचारो हन्त्यलक्षणम् ॥१५६॥**

सदाचारको पालनाले दीर्घायु, गुणवान छोरानाति र अक्षय सुख पाइने मात्र होइन कि
अनिष्टकारी पापहरु पनि नाश भएर जान्छन् ।

**दुराचारो हि पुरुषो लोके भवति निन्दितः ।**
**दुःखभागी च सततं व्याधितोऽल्पायुरेव च ॥१५७॥**



दुराचारीको  लोकमा निन्दा हुन्छ तथा उसले निरन्तर दुःख र रोगले ग्रस्त भई
अल्पायुमै शरीर त्याग्नु पर्दछ ।

**सर्वलक्षण हीनोऽपि यः सदाचारवान्नरः ।**
**श्रद्दधानोऽनसूयश्च शतं वर्षाणि जीवति ॥१५८॥**

बाहिरी लक्षण बिना पनि सदाचारीहरु  सम्मानित हुन्छन् । वेदमा राखिने श्रद्धा र कसैप्रति
ईर्ष्या-द्वेष नराख्नाका कारण ती महापुरुष वेदका कृपाले सय वर्ष बाँच्दछन् ।

**यद्यत्परवशं कर्म तत्तद्यत्नेन वर्जयेत् ।**
**यद्यदात्मवशं तु स्यात्तत्तत्सेवेत यत्नतः ॥१५९॥**

ब्राह्मणले अर्काको अधीनता स्वीकार गर्नुपर्ने कार्यहरु नगरी स्वेच्छाले
गर्नसक्ने कामहरु मात्र गर्नु पर्दछ ।

**सर्वं परवशं दुःखं सर्वमात्मवशं सुखम् ।**
**एतद्विद्यात्समासेन लक्षणं सुखदुःखयोः ॥१६०॥**

अर्काको अधीनता दुःख हो र स्वतन्त्रता सुख हो । सुखदुःखको सार कुरो नै यही हो ।

**यत्कर्म कुर्वतोऽस्य स्यात्परितोषोऽन्तरात्मनः ।**
**तत्प्रयत्नेन कुर्वीत विपरीतं तु वर्जयेत् ॥१६१॥**

मनमा शान्ति र अन्तरात्मालाई सन्तुष्टि दिने कामहरु प्रयत्नपूर्वक गर्नू र
मानसिक क्लेश उत्पन्न गर्ने कामहरु नगर्नू ।

**आचार्यं च प्रवक्तारं पितरं मातरं गुरुम् ।**
**न हिंस्याद् ब्राह्मणान् गाश्च सर्वांश्चैव तपस्विनः ॥१६२॥**

आचार्य, वेदका व्याख्याता, मातापिता, गुरु, ब्राह्मण, गाई र सबै
तपस्वीलाई पिट्ने कुरो मन, बचन र कर्मबाट पनि गर्नु हुँदैन ।

**नास्तिक्यं वेदनिन्दां च देवतानां च कुत्सनम् ।**
**द्वेषं स्तम्भं च मानं च क्रोधं तैक्ष्ण्यं च वर्जयेत् ॥१६३॥**

नास्तिकता, वेदनिन्दा, देवताको अपमान, द्वेष, अहङ्कार, अभिमान, क्रोध र
कठोरतालाई आफ्नो नगिचमा पर्नै नदिनू ।

**परस्य दण्डं नोद्यच्छेत्क्रुद्धोनैनं निपातयेत् ।**
**अन्यत्र पुत्राच्छिष्याद्वा शिष्टचर्थं ताडयेत्तु तौ ॥१६४॥**

आफ्नो पुत्र र शिष्यभन्दा बाहेक अन्यलाई सुधार्न भनी रीसले कहिल्यै लौरो नउभ्याउनू ।

**ब्राह्मणायावगुर्यैव द्विजातिर्वधकाम्यया ।**
**शतंवर्षाणि तामिस्रे नरके परिवर्तते ॥१६५॥**

ब्राह्मण र गुरुलाई हिर्काउन हाथमा लौरो लिने व्यक्तिलाई सय
वर्षसम्म तामिस्र नामको नरकमा हालिन्छ ।

**ताडयित्वा तृणेनापि संरम्भान्मतिपूर्वकम् ।**
**एकविंशतिमाजातीः पापयोनिषु जायते ॥१६६॥**

सचेत हुँदाहुँदै आचार्यलाई सिन्का मात्रले हिर्काउनेले पनि एक्काईस
जुनीसम्म पापयोनीमा जन्मनु पर्दछ ।

**अयुध्यमानस्योत्पाद्य ब्राह्मणस्यासृगङ्गतः ।**
**दुःखं सुमहदाप्नोति प्रेत्याप्राज्ञतया नरः ॥१६७॥**



युद्धमा बाहेक अनजानमै ब्राह्मणको हिँसा गर्ने वा शरीरबाट रगत निकाल्ने
वा बहाउनेले मरेपछि कठोर कष्ट सहनु पर्दछ ।

**शोणितं यावतः पांसून् संगृह्णाति महीतलात् ।**
**तावतोऽब्दानमुत्रान्यैःशोणितोत्पादकोऽद्यते ॥१६८॥**

उनको शरीरबाट बगेको रगतले भिजेका धूलोतुल्य वर्षसम्म परलोकमा
बगाउनेको शरीरबाट रगत निकालेर बगाइन्छ ।

**न कदाचिद्द्विजे तस्माद्विद्वानवगुरेदपि ।**
**न ताडयेत्तृणेनापि न गात्रात्स्रांवयेदसृक्॥१६९॥**

ब्राह्मणलाई लौरोले त के सिन्काले पनि नहिर्काउनू, शरीरबाट एक थोपा पनि
रगत ननिकाल्नू र यो कुराप्रति सदा सतर्क हुनू ।

**अधार्मिको नरो यो हि यस्य चाप्यनृतं धनम् ।**
**हिंसारतश्च यो नित्यं नेहासौ सुखमेधते ॥१७०॥**

अधार्मिक, असत्यलाई धर्म मान्ने र नित्य हिंसा गर्नेहरु संसारमा
कहिल्यै सुख पाउन र उन्नति गर्न सक्दैनन् ।

**न सीदन्नपि धर्मेण मनोऽधर्मे निवेशयेत् ।**
**अधार्मिकाणां पापनामाशुः पश्यन्विपर्ययम् ॥१७१॥**

अधर्मी, पापीको भोग्ने फललाई देखेर कष्ट सहेर पनि कहिल्यै अधर्मतिर मन
नलाउनू किनकि पापको फल त भोग्नु परिहाल्दछ ।

**नाधर्मश्चरितो लोके सद्यः फलति गौरिव ।**
**शनैरावर्त्यमानस्तु कर्तुर्मूलानि कृन्तति ॥१७२॥**



छरिएको बिउ तत्काल नफली पछि फलेजस्तै पापीको पनि शुरुमा राम्रो देखिए
पनि अन्तमा उ जरैसम्म उखेलिन्छ ।

**यदि नात्मनि पुत्रेषु न चेत्पुत्रेषु नप्तृषु ।**
**न त्वेव न कृतो धर्मः कर्तुर्भवति निष्फलः ॥१७३॥**

पापीको पाप नभोगी कट्दैन । गर्नेले भोग्नु परेन भने उसका छोराले र छोराले
पनि भोग्नु परेन भने नातीले भए पनि भोग्नै पर्दछ ।

**अधर्मेणैधते तावत्ततो भद्राणि पश्यति ।**
**ततः सपत्नाञ्जयति समूलस्तु विनश्यति ॥१७४॥**

अधर्मीको पनि शुरुमा फलिपाप भएको जस्तो देखिन्छ तर अन्तमा भने
नराम्रै नै हुन्छ र समूल नष्ट हुन्छ ।

**सत्यधर्मार्यवृत्तेषु शौचे चैवारमेत्सदा ।**
**शिष्यांश्च शिष्याद्धर्मेण वाग्बाहूदरसंयतः ॥१७५॥**

सत्यधर्ममा रहेर, श्रेष्ठ पुरुषहरुको मार्ग अनुसरण गरेर र शौच-पवित्रता अपनाएर शिष्यलाई वचन, बाहुबल र पेटपाल्नमा संयमित रहने उपदेश दिनू ।

**परित्यजेदर्थकामौ यौ स्यातां धर्मवर्जितौ ।**
**धर्मं चाप्यसुखोदर्कं लोकसंक्रुष्टमेव च ॥१७६॥**

धर्महीन अर्थ र काम त्याग गर्नू । कसैलाई (परिवार आदि) दुःख पुग्ने/हुने गरी धर्म नगर्नू ।

**न पाणिपादचपलो न नेत्रचपलोऽनृजुः ।**
**न स्याद्वाक्चपलश्चैव न परद्रोहकर्मधीः ॥१७७॥**

हात, गोडा, आँखा र वचनमा चञ्चलता नलेराउनू । अरुसँग शत्रुता साँध्ने खालका कर्महरु नगर्नू ।

**येनास्य पितरो याताः येन याताः पितामहाः ।**
**तेन यायात् सतां मार्गं तेन गच्छन् न रिष्यते ॥१७८॥**

आफ्ना बाबुबाजे हिँडेको सन्मार्गमा हिँड्नाले कहिल्यै कुभलो हुँदैन ।

**ऋत्विक्पुरोहिताचार्यैर्मातुलातिथिसंश्रितैः ।**
**बालवृद्धातुरैर्वैद्यैर्ज्ञातिसम्बन्धिबान्धवैः ॥१७९॥**
**मातापितृभ्यां जामीभिर्भ्रात्रा पुत्रेण भार्यया ।**
**दुहित्रा दासवर्गेण विवादं न समाचरेत् ॥१८०॥**

ऋत्विज, पुरोहित, आचार्य, आमाका पिता, अतिथि, वालक, वृद्ध, रोगी, वैद्य, काका-साला आदि, मातापिता, बहिनी-बुहारी, दाजुभाई, छोरा, स्त्री, छोरी र नोकरहरुसँग झगडा नगर्नू ।

**एतैर्विवादान्संत्यज्य सर्वपापैः प्रमुच्यते ।**
**एतैर्जितैश्च जयति सर्वाल्लोकानिमान्गृही ॥१८१॥**

यिसँग विवाद नगर्नाले सबै दुःखकष्टबाट मुक्ति पाइन्छ र असल व्यवहारले यिनको मन जित्न सके पृथ्वीको राजाले सरह सबैलाई जितिन्छ ।

**आचार्यो ब्रह्मलोकेशः प्राजापत्ये पिता प्रभुः ।**
**अतिथिस्त्विन्द्रलोकेशो देवलोकस्य चर्त्विजः ॥१८२॥**

आचार्य, पिता, अतिथि र ऋत्विज क्रमशः ब्रह्म, प्रजापति, इन्द्र र देव लोकका स्वामी हुन् ।

**जामयोऽप्सरसां लोके वैश्वदेवस्य बान्धवाः ।**
**सम्बन्धिनो ह्यपां लोके पृथिव्यां मातृमातुलौ ॥१८३॥**

बहिनी र बुहारी अप्सरालोकका, बन्धुवान्धव वैश्वदेवलोकका, नातागोता जनलोकका तथा माता रमामा भूलोकका स्वामी हुन् ।

**आकाशेशास्तु विज्ञेयाः बालवृद्धकृशातुराः ।**
**भ्राता ज्येष्ठः समः पित्रा भार्या पुत्रः स्वका तनुः ॥१८४॥**

बालक-वृद्ध-अशक्त-रोगीहरु आकाशलोकका स्वामी हुन् । जेठो दाजु आफ्नो पिताको, पत्नी आफ्नो पतिको तथा पुत्र आफ्नो बाबुको नै शरीर हो ।

**छाया स्वो दासवर्गश्च दुहिता कृपणं परम् ।**
**तस्मादेतैरधिक्षिप्त सहेतासञ्ज्वरः सदा ॥१८५॥**

सेवकहरु मालिककै छाया हुन् भने छोरीहरु पिताका दायित्व हुन् त्यसैले तिनले परिस्थितिवश केही अप्रिय बोलेपनि मनमा नलिनू, कुनै प्रतिक्रिया नदिनू, नरिसाउनू, सरलताका साथ सहनू ।

**प्रतिग्रहसमर्थोऽपि प्रसङ्गं तत्र वर्जयेत् ।**
**प्रतिग्रहेण ह्यस्याशु ब्राह्मं तेजः प्रशाम्यति ॥१८६॥**

समर्थसँग पनि प्रतिदान लिने चेष्टा नगर्नू । किनकि प्रतिदानले ब्रह्मतेज चाँडै नष्ट हुन्छ ।

**न द्रव्याणामविज्ञाय विधिधर्म्यं प्रतिग्रहे ।**
**प्राज्ञः प्रतिग्रहं कुर्यादवसीदन्नपि क्षुधा ॥१८७॥**

प्रतिदान धर्मविरुद्ध हो भनी बुझेर अभावले छटपटिँदा वा कामलाग्ने वस्तु भए पनि त्यो नलिनू ।

**हिरण्यं भूमिमश्वं गामन्नं वासस्तिलान्घृतम् ।**
**प्रतिगृह्णन्नविद्वांस्तु भस्मीभवति दारुवत् ॥१८८॥**

प्रतिदानमा सुन, भूमि, पशु, अन्न, वस्त्र, तिल, घिउ आदि पदार्थ लिने
मूर्ख आगोमा काठ भस्म भएझैं चाँडै भस्म हुन्छ ।

**हिरण्यमायुरन्नं च भूर्गौश्चाप्योषतस्तनुम् ।**
**अश्वश्चक्षुस्त्वचं वासो घृतं तेजस्तिलाःप्रजाः ॥१८९॥**

सेवाको बदलामा सुन वा अन्न लिनाले आयु घट्दछ । पृथ्वी वा गाई लिनाले शरीर सुक्दै जान्छ ।
घोडा लिनाले आँखा, वस्त्रले छाला, घिउले तेज र तिलले सन्तानलाई हानी गर्दछ ।

**अतपास्त्वनधीयानः प्रतिग्रहरुचिर्द्विजः ।**
**अम्भस्यश्मप्लवेनैव सह तेनैव मज्जति ॥१९०॥**

आचार्य आदिबाट प्रतिदान लिने नीच द्विज ढुङ्गाको डुङ्गामा बस्ने डुङ्गासँगै डुबेझैं
लिइएको वस्तु, आफ्नो सम्पत्ति र आफूलाई पनि लिएर नष्ट हुन्छ ।

**तस्मादविद्वान्बिभियाद्यस्मात्तस्मात्प्रतिग्रहात् ।**
**स्वल्पकेनाप्यविद्वान्हि पङ्के गौरिव सीदति ॥१९१॥**

त्यसैले मूर्ख वा अभावग्रस्त व्यक्तिले पनि आचार्य आदिबाट सेवाको बदलामा कुनै कुरा नलिनू । किनकि यसरी लिइएको थोरै धनले पनि धापमा गाई भासिएझैं दुःखको दलदलमा भास्सिँदै गइन्छ ।

**न वार्यपि प्रयच्छेत्तुं बैडालवृत्तिके द्विजे ।**
**न बकव्रतिके विप्रे नावेदविदि धर्मवित् ॥१९२॥**

धर्मज्ञले बिडालवृत्ति, बकवृत्ति गर्ने र वेदविद्याबाट अपरिचित हुने ब्राह्मणलाई जल पनि दान नगर्नू ।

**त्रिष्वप्येतेषु दत्तं हि विधिनाऽप्यर्जितं धनम् ।**
**दातुर्भवत्यनर्थाय परत्रादातुरेव च ॥१९३॥**



यी तीन ब्राह्मणलाई दिइएको न्याय र धर्मपूर्वक आर्जित धनको दानले पनि लिनेदिने दुवैको यसलोकमा निन्दा र परलोकमा दुर्गति हुन्छ ।

**यथा प्लवेनौपलेन निमज्जत्युदके तरन् ।**
**तथा निमज्जतोऽधस्तादज्ञौ दातृप्रतीच्छकौ ॥१९४॥**

पत्थरको डुङ्गा सबैलाई लिएर जसरी डुब्दछ त्यसरी नै यी तीन थरी ब्राह्मणलाई दान दिने र लिने डुब्दछन् ।

**धर्मध्वजी सदा लुब्धश्छाद्मिको लोकदम्भकः ।**
**बैडालव्रतिको ज्ञेयो हिंस्रः सर्वाभिसन्धकः ॥१९५॥**

हिँस्रक, अरुलाई लडाउने भिडाउने, देखावटी धर्म गरी टोपल्ने र छल, कपट र

ढोँगको सहारा लिने व्यक्तिलाई 'बिडालवृत्ति' को भनिन्छ ।

**अधोदृष्टिर्नैष्कृतिकः स्वार्थसाधनतत्परः ।**
**शठो मिथ्याविनीतश्च बकव्रतचरो द्विजः ॥१९६॥**

अर्काको धनमाथि आँखा गाड्ने, कुकर्मी, स्वार्थी, झुट बोल्ने, दुराचारी, उद्दण्ड तथा आत्मकल्याणबाट विमुख भएको व्यक्तिलाई 'बकवृत्ति' को भनिन्छ ।

**ये बकव्रतिनो विप्राः ये च मार्जारलिङ्गिनः ।**
**ते पतन्त्यन्धतामिस्रे तेन पापेन कर्मणा ॥१९७॥**

यि वृत्तिका व्यक्तिहरु आफूले गरेको निकृष्ट पापले अन्धतामिस्र नामको नरकमा परी घोर यातना भोग्दछन् ।

**न धर्मस्यापदेशेन पापं कृत्वा व्रतं चरेत् ।**

**व्रतेन पापं प्रच्छाद्य कुर्वन् स्त्रीशूद्रदम्भनम् ॥१९८॥**

पाप लुकाउनु (वा लुकाई) र प्रायश्चितका लागि व्रतादि धर्मकर्म गर्नु मूर्ख, स्त्री वा शूद्रलाई झुक्याउने काम गर्नु मात्र हो ।

**प्रेत्येह चेदृशाः विप्राः गर्ह्यन्ते ब्रह्मवादिभिः ।**
**छद्मना चरितं यच्च वृत्त रक्षांसि गच्छति ॥१९९॥**

विवेकी ब्राह्मण बिडाल र बकवृत्तिकालाई सधैं निन्दा गर्दछन् । यस्ताको दुवैलोक बिग्रन्छ र तिनले गरेको धर्मको फल पनि राक्षसले पाउने गर्दछ ।

**अलिङ्गी लिङ्गिवेषेण यो वृत्तिमुपजीवति ।**
**सः लिङ्गीनां हरत्येनस्तिर्यग्योनौ च जायते ॥२००॥**

ब्रह्मचारी र सन्यासीको भेषमा ठगी खान पल्केकाले असली ब्रह्मचारी र
सन्यासीकै पाप बोक्छन् र मरेपछि चरा भई जन्मन्छन् ।

**परकीयनिपानेषु न स्नायाच्च कदाचन ।**
**निपानकर्त्तुः स्नात्वा तु दुष्कृतांशेन लिप्यते ॥२०१॥**

अर्काले बनाएको पोखरीमा ननुहाउनू । किन कि नुहाउनेले आफ्नो पुण्य पोखरी बनाउनेलाई
प्रदान गरी उसको पाप चाहीँ आफूले बोक्दछ ।

**यानशय्यासनान्यस्य कूपोद्यानगृहाणि च ।**
**अदत्तान्युपयुञ्जानः एनसः स्यात्तुरीयभाक् ॥२०२॥**

बाहन, ओछ्यान, आसन, कुवा, बगैंचा र घर आदिको दान नगरी (सार्वजनिक
प्रयोगको प्रावधान नगरी) एक्लै उपयोग गर्नु ठूलो पाप हो ।



**नदीषु देवखातेषु तडागेषु सरःसु च ।**
**स्नानं समाचरेन्नित्यं गर्त्तप्रस्रवणेषु च ॥२०३॥**

बुद्धिमान ब्राह्मणले सधैं नदी, झरना, तलाउ, कुण्ड, पोखरी वा पानीले
भरिएको खाल्टो वा स्नानागारमध्ये कुनै एकमा नुहाउने गर्नू ।

**यमान्सेवेत सततं न नित्यं नियमान्बुधः ।**
**यमान्पतत्यकुर्वाणो नियमान्केवलान्भजन् ॥२०४॥**

बुद्धिमानले नियममा भन्दा यममा जोड दिनू, यम भन्दा नियममा
जोड दिनाले पतन हुनबाट बच्न मुश्किल हुन्छ ।

**नाश्रोत्रियतते यज्ञे ग्रामयाजिकृते तथा ।**
**स्त्रिया क्लीबेन च हुते भुञ्जीत ब्राह्मणः क्वचित् ॥२०५॥**

वेदहीन पुरेतले गरिरहेको, एउटाको घरमा आयोजित तर सबै गाऊँले जजमान भएको र स्त्री वा नपुंसकले होम गरिरहेको यज्ञमा गएर नखानू ।

**अश्लीलमेतत्साधूनां यत्र जुह्वत्यमी हविः ।**
**प्रतीपमेतद्देवानां तस्मात्तत्परिवर्जयेत् ॥२०६॥**

बुद्धिमानले के कुरा बुझ्नु पर्दछ भने स्त्री र नपुंसकले होम गर्नू धर्मविरुद्ध र देवतालाई पनि अप्रिय लाग्ने कुरो हो । अतः डर वा लोभमा परी यस्तो यज्ञमा सम्मिलित नहुनू ।

**मत्तक्रुद्धातुराणां च न भुञ्जीत कदाचन ।**
**केशकीटावपन्नं च पदा स्पृष्टं च कामतः ॥२०७॥**

उन्मत्तको, रिसाहाको, रोगीको, रौं वा कीरा परेको, जानीजानी गोडाले छोएको,...।

**भ्रूणघ्नावेक्षितं चैव संस्पृष्टं चाप्युदक्यया ।**

**पतत्रिणाऽवलीढं च शुना संस्पृष्टमेव च ॥२०८॥**

भ्रूण हत्याराले देखेको, परसरेकीले छोएको, चराले जूठो हालेको, कुकुरले छोएको,...।

**गवा चान्नमुपाघ्रातं घुष्टान्नं च विशेषतः ।**
**गणान्नं गणिकान्नं च विदुषा च जुगुप्सितम् ॥२०९॥**

गाईले सुँघेर वा चाटेर जुठो हालेको अन्न, स्वाद बिग्रेको वा खान दिँदा कसैले खान नमानेको अन्न, चन्दा उठाएर पकाइएको अन्न, वेश्याको अन्न, विद्वान-निन्दित,...।

**स्तेनगायनयोश्चान्नं तक्ष्णो वार्धुषिकस्य च ।**
**दीक्षितस्य कदर्यस्य बद्धस्य निगडस्य च ॥२१०॥**

चोरको, गाइनेको, सिकर्मीको, ब्याजोपजीविको, सोम आदि यज्ञ गर्न वरण

गरिएकाको, कञ्जुसको, कैदीको,...।

**अभिशस्तस्य षण्ढस्य पुंश्चल्याः दाम्भिकस्य च ।**
**शुक्तं पर्युषितं चैव शूद्रस्योच्छिष्टमेव च ॥२११॥**

लोकमा पापी कहलिएकाको, नपुंसकको, ढोँगी-घमण्डीको, अमिल्चिएर कडा भएको, बासी, शूद्रको जुठो अन्न तथा...।

**चिकित्सकस्य मृगयोः क्रूरस्योच्छिष्टभोजिनः ।**
**उग्रान्नं सूतिकान्नं च पर्याचान्तमनिर्दशम् ॥२१२॥**

वैद्यको, शिकारीको, निर्दयीको, अर्काको जुठो खानेको, उग्र स्वभावका व्यक्तिको अन्न, सूतक नचोखिएकाको अन्न, अपमानपूर्ण तरिकाले अरुलाई दिइएको,...।

**अनर्चितं वृथामांसमवीरायाश्च योषितः ।**

**द्विषदन्नं नगर्यन्नं पतितान्नमवक्षुतम् ॥२१३॥**

सत्कार बिना दिइएको, फाल्न मिल्ने, पति तथा सन्तान नहुने स्त्रीको, शत्रुको अन्न, ग्रामपतिको अन्न, पतितको अन्न, हाच्छिउँ गरिएको,...।

**पिशुनानृतिनोश्चान्नं क्रतुविक्रयिणस्तथा ।**
**शैलूषतुन्नवायान्नं कृतघ्नस्यान्नमेव च ॥२१४॥**

कुरौटेको, झुटो साक्षी बस्नेको अन्न, यज्ञ-फल बेच्नेको, नटुवाको, सूचिकारको अन्न, कृतघ्नको अन्न,...।

**कर्मारस्य निषादस्य रङ्गावतरकस्य च ।**
**सुवर्णकर्तुर्वैणस्य शस्त्रविक्रयिणस्तथा ॥२१५॥**

लोहारको, माझीको, चटकीको, सुनारको, बाँसको कामगर्नेको तथा हतियार ब्यापार गर्नेको,...।

**श्ववतां शौण्डिकानां च चैलनिर्णेजकस्य च ।**
**रजकस्य नृशंसस्य यस्य चोपपतिर्गृहे ॥२१६॥**

कुकुर पाल्नेको, रक्सी बनाउने-बेच्नेको, कपडामा रङ्ग भर्नेको, धोबीको, निर्दयीको, जार पाल्ने स्त्रीको,...।

**मृष्यन्ति ये चोपपतिं स्त्रीजातिनां च सर्वशः ।**
**अनिर्दशं च प्रेतान्नमतुष्टिकरमेव च ॥२१७॥**

पत्नीको डरले जार सहनेको, स्त्रीको अधीनमा रहनेको, जुठो नचोखिएको घरको अन्न र पितृको श्राद्धतर्पण नगर्नेको अन्न नखानू ।

**राजान्नं तेज आदत्ते शूद्रान्नं ब्रह्मवर्चसम् ।**

**आयुः सुवर्णकारान्नं यशश्चर्मावकर्तिनः ॥२१८॥**

राजाको अन्नले तेज, शूद्रको अन्नले ब्रह्मतेज, सुनारको अन्नले आयु र चर्मकारको अन्नले यश घट्दछ ।

**कारुकान्नं प्रजां हन्ति बलं निर्णेजकस्य च ।**
**गणान्नं गणिकान्नं च लोकेभ्यः परिकृन्तति ॥२१९॥**

शिल्पकारको अन्नले सन्तान-क्षति हुन्छ, धोबीको अन्नले बल नाश हुन्छ तथा समुदाय र वेश्याको अन्नले लोकनिन्दा हुन्छ ।

**पूयं चिकित्सकस्यान्नं पुंश्चल्यास्त्वन्नमिन्द्रियम् ।**
**विष्ठा वार्धुषिकस्यान्नं शस्त्रविक्रयिणो मलम् ॥२२०॥**

वैद्यको अन्न पीपसमान, वेश्याको अन्न वीर्यसमान, ब्याजको आयले जीवन चलाउनेको अन्न दिसासमान र शस्त्र ब्यापारीको अन्न मलसमान हुन्छ ।

**य एतेऽन्ये त्वभोज्यान्नः क्रमशः परिकीर्तिताः ।**
**तेषां त्वगस्थिरोमाणि वदन्त्यन्नं मनीषिणः ॥२२१॥**

खान नहुने अन्नका बारेमा क्रमैले बताइयो । ती अन्नलाई बुद्धिमानहरू छाला, हाड र रौँ समान हो भन्दछन् ।

**भुक्त्वातोऽन्यतमस्यान्नममत्या क्षपणं त्र्यहम् ।**
**मत्या भुक्त्वाऽऽचरेत्कृच्छ्रं रेतोविण्मूत्रमेव च ॥२२२॥**

खान नहुने अन्न, वीर्य र मलमूत्र अनजानमा खाए तीन दिन उपवास र जानाजान खाए कृच्छ्र व्रत गर्नू ।



**नाद्याच्छूद्रस्य पक्वान्नं विद्वानश्राद्धिनो द्विजः ।**
**आददीताममेवास्मादवृत्तावेकरात्रिकम् ॥२२३॥**

शूद्रले पकाएको अन्न द्विजले श्रद्धाले नखानू । नलिई काम नचल्ने भए एक रातलाई पुग्ने काँचो अन्न लिनू ।

**श्रोत्रियस्य कदर्यस्य वदान्यस्य च वार्धुषेः ।**
**मीमांसित्वोभयं देवाः सममन्नमकल्पयन् ॥२२४॥**

देवताले वेदपाठी तर कञ्जुसको तथा दान दिने तर ब्याज खाएर बाँच्ने वैश्यको अन्नलाई गुणदोषको समीक्षा गरी दुबैलाई समान र अग्राह्य मानेका छन् ।

**तान् प्रजापतिराहैत्य मा कृढ्वं विषमं समम् ।**
**श्रद्धापूतं वदान्यस्य हतमश्रद्धयेतरत् ॥२२५॥**

ब्रह्माले देवताहरूलाई विवेक प्रयोग गरी सम र विषम पहिचान गर्न र श्रद्धालाई ध्यान दिन आग्रह गर्नु भयो । (तात्पर्य यो हो कि वेद पढ्ने कञ्जुस ब्राह्मणको भन्दा ब्याज खाएर दान दिने वैश्यको अन्न ग्रहणीय हुन्छ) ।

**श्रद्धयेष्टं च पूर्तं च नित्यं कुर्यादतन्द्रितः ।**
**श्रद्धाकृते ह्यक्षये ते भवतः स्वागतैर्धनैः ॥२२६॥**

यज्ञ गर्न (इष्ट कर्म) र कुवा आदि खनाउन (पूर्त कर्म) लाग्दा श्रद्धावान् र फुर्तिलो हुनु पर्दछ । धर्मकर्ममा श्रद्धापूर्वक प्रयोग गरिने न्यायपूर्वक कमाइएको धनले सधैं चिताएको फल दिन्छ ।

**दानधर्मं निषेवेत नित्यमैष्टिकपौर्तिकम् ।**
**परितुष्टेन भावेन पात्रमासाद्य शक्तितः ॥२२७॥**

नित्य धर्म गर्न र कुवा बनाउने जस्ता पूर्तिक कर्म गर्नमा मन लगाउनू ।
सुपात्रलाई आफ्नु गच्छे अनुसार प्रसन्न भई दान दिनू ।



**यत्किञ्चिदपि दातव्यं याचितेनानुसूयता ।**
**उत्पत्स्यते हि तत्पात्रं यत्तारयति सर्वतः ॥२२८॥**

लिने व्यक्ति योग्य नभएको थाहा भएपनि केही न केही दिने आदतले कुनै दिन सत्पात्र याचक भेट्टिन्छ र उ दाताको उद्धार गर्न समर्थ हुन्छ ।

**वारिदस्तृप्तिमाप्नोति सुखमक्षायमन्नदः ।**
**तिलप्रदः प्रजामिष्टां दीपदश्चक्षुरुत्तमम् ॥२२९॥**

जलदानले तृप्ति प्राप्त हुन्छ, अन्नदानले अक्षय सुख प्राप्त हुन्छ, तिलदानले प्रिय सन्तान र दीपदानले उत्तम नेत्र प्राप्त हुन्छ ।

**भूमिदो भूमिप्राप्नोति दीर्घमायुर्हिरण्यदः ।**
**गृहदोऽग्र्याणि वेश्मानि रूप्यदो रूपमुत्तमम् ॥२३०॥**

भूमिदानले जमिन प्राप्त हुन्छ, स्वर्णदानले दीर्घायु प्राप्त हुन्छ, भवनदानले सुन्दर दरवार र चाँदीदानले सुन्दर रुप प्राप्त हुन्छ ।

**वासोदश्चन्द्रसालोक्यमश्विसालोक्यमश्वदः ।**
**अनडुहः श्रियं पुष्टां गोदो ब्रध्नस्य विष्टपम् ॥२३१॥**

वस्त्रदानले चन्द्रमाकोभैं सुन्दर शरीर, घोडादानले घोडाजस्तै बलियो र पुष्ट शरीर, साँढेदानले अतुलनीय सम्पत्ति र गाईदानले सूर्य समान तेज प्राप्त हुन्छ ।

**यानशय्याप्रदो भार्यामैश्वर्यमभयप्रदः ।**
**धान्यदः शाश्वतं सौख्यं ब्रह्मदो ब्रह्मसार्ष्टिताम् ॥२३२॥**



बाहन र शैया दानले पत्नी, अभयदानले ऐश्वर्य, धानदानले नित्यसुख र वेदज्ञानदानले ब्रह्मलोक प्राप्त हुन्छ ।

**सर्वेषामेव दानानां ब्रह्मदानं विशिष्यते ।**
**वार्यन्नगोमहीवासस्तिलकाञ्चनसर्पिषाम् ॥२३३॥**

जल, अन्न, गाई, जमिन, वस्त्र, तिल, सुन र घिउजस्ता दानभन्दा वेदविद्याको दान सर्वाधिक महत्वको हुन्छ ।

**येन येन तु भावेन यद्यद्दानं प्रयच्छति ।**
**तत्तत्तेनैव भावेन प्राप्नोति प्रतिपूजितः ॥२३४॥**

दाताले जुनजुन भावनाले जे जे कुरा दान गर्दछ, उसलाई त्यसै अनुसार ब्याजसमेतको फल प्राप्त हुन्छ ।

**योऽर्चितं प्रतिगृह्णाति ददात्यर्चितमेव च ।**
**तावुभौ गच्छतः स्वर्गं नरकं तु विपर्यये ॥२३५॥**

सत्कारपूर्वक दान दिने र दान लिने स्वर्ग प्राप्त गर्दछन् भने यसको
विपरित दान दिने र लिने नरक पर्दछन् ।

**न विस्मयेत तपसा वदेदिष्ट्वा च नानृतम् ।**
**नार्त्तोऽप्यपवदेद्विप्रान्न दत्त्वा परिकीर्तयेत् ॥२३६॥**

तपबाट प्राप्त हुने फलबाट आश्चर्य नमान्नू । यज्ञ गरेर झूट नबोल्नू । दुःखमा पनि ब्राह्मणलाई
गाली वा निन्दा नगर्नू । दान दिएर फलाक्दै नहिँड्नू ।

**यज्ञोऽनृतेन क्षरति तपः क्षरति विस्मयात् ।**
**आयुर्विप्रापवादेन दानं च परिकीर्तनात् ॥२३७॥**



झूट बोल्नाले यज्ञहोमको फल नाश हुन्छ । आश्चर्य माने तपको फल नष्ट हुन्छ ।
ब्राह्मण-निन्दाले आयु घट्दछ । फलाक्दै हिँडेमा दानको महत्व समाप्त हुन्छ ।

**धर्मं शनैः सञ्चिनुयाद्वल्मीकमिव पुत्तिकाः ।**
**परलोकसहायार्थं सर्वभूतान्यपीडयन् ॥२३८॥**

धमिराले समय लगाएर गोलो बनाएझैं परलोक सुधार्न चाहनेले हिँसा नगरी
धर्मको सञ्चयमा समय लगाउनु पर्दछ ।

**नामुत्र हि सहायार्थं पिता माता च तिष्ठतः ।**
**न पुत्रदारं न ज्ञातिर्धर्मस्तिष्ठति केवलः ॥२३९॥**

माता-पिता, स्त्री, पुत्र आदिको सहायता यो लोकमा मात्र सीमित हुन्छ
परलोकमा त केवल धर्मले नै सहायता गर्दछ ।

**एकःप्रजायते जन्तुरेक एव प्रलीयते ।**
**एकोऽनुभुङ्क्ते सुकृतमेक एव च दुष्कृतम् ॥२४०॥**

व्यक्ति एक्लै जन्मन्छ, एक्लै नै मर्दछ र उसले गरेको राम्रा-नराम्रा
कर्मको फल पनि एक्लै नै भोग्दछ ।

**मृतं शरीरमुत्सृज्य काष्ठलोष्ठसमं क्षितौ ।**
**विमुखाःबान्धवाःयान्ति धर्मस्तमनुगच्छति ॥२४१॥**

मृत शरीरलाई मूढो वा माटोको ढिस्को सम्झी आगोमा डढाएर वा जमिनमा गाढेर सबै
आफन्तहरु सम्बन्ध त्यागी फर्किन्छन् तर धर्मले भने
त्यसपछि पनि उसलाई साथ दिइरहन्छ ।

**तस्माद्धर्मं सहायार्थं नित्यं सञ्चिनुयाच्छनैः ।**
**धर्मेण हि सहायेन तमस्तरति दुस्तरम् ॥२४२॥**



त्यसैले धर्मलाई नै सदा सहयोगी मानी त्यसको सञ्चय गर्नू यसले नै परलोकमा
अँध्यारोमा हिँड्न जीवलाई सहयोग गर्दछ ।

**धर्मप्रधानं पुरुषं तपसा हतकिल्विषम् ।**
**परलोकं नयत्याशु भास्वतं खशरीरिणम् ॥२४३॥**

तपले पाप डढाएका, सत्यवान् र आदर्श जीवनले प्रकाशित भएकाहरुलाई शरीर
त्यागेपछि धर्मले तत्क्षण परमधाममा पुऱ्याउँदछ ।

**उत्तमैरुत्तमैर्नित्यं सम्बन्धानाचरेत्सह ।**
**निनीषुः कुलमुत्कर्षमधमानधमांस्त्यजेत् ॥२४४॥**

उत्तम कुलले प्रतिष्ठा-वृद्धिका लागि सधैं उत्तम कुलसँगै सम्बन्ध गाँस्नू,

निम्न कुलसँग कुनै प्रकारको सम्बन्ध नराख्नू ।

**उत्तमानुत्तमानेव गच्छन् हीनांस्तु वर्जयन् ।**
**ब्राह्मणः श्रेष्ठतामेति प्रत्यवायेन शूद्रताम् ॥२४५॥**

उत्तम कुलसँगको सम्बन्ध र अधम कुलसँगको दूरताले समाजमा सम्मान बढ्दछ र यसको विपरितले श्रेष्ठ ब्राह्मण पनि कलङ्कित हुन पुग्दछ ।

**दृढकारी मृदुर्दान्तः क्रूराचारैरसंवसन् ।**
**अहिंस्रो दमदानाभ्यां जयेत्स्वर्गं तथाव्रतः ॥२४६॥**

दृढ, कोमल, इन्द्रियजेता, अक्रूर, अहिंसक, धर्म सञ्चयी र दानशील ब्राह्मणले नै साँचो अर्थमा स्वर्गमा आफ्नो स्थान सुरक्षित गर्दछ ।

**एधोदकं मूलफलमन्नमभ्युद्यतं च यत् ।**

**सर्वतः प्रतिगृह्णीयान्मध्वथाऽभयदक्षिणाम् ॥२४७॥**

नमागिकन दिए, वर्ण-गोत्र आदि नसोची इन्धन, जल, कन्दमूल, फलफूल, अन्न, सङ्कटकालमा बास र दक्षिणा लिन हुन्छ ।

**आहृताभ्युद्यतां भिक्षां पुरस्तादप्रचोदिताम् ।**
**मेने प्रजापतिर्ग्राह्यामपि दुष्कृतकर्मणः ॥२४८॥**

पापी गृहस्थले नमागिकनै भिक्षा लिन अनुरोध गरे लिनु पर्दछ भनी ब्रह्माले भनेका छन् ।

**नाश्नन्ति पितरस्तस्य दशवर्षाणि पञ्च च ।**
**न च हव्यं वहत्यग्निर्यस्तामभ्यवमन्यते ॥२४९॥**

यस्तो भिक्षा नलिनेले गर्ने श्राद्ध-भोजन पितृहरु पन्ध्र वर्षसम्म स्वीकार गर्दैनन् र

अग्नि यस्ता भिक्षा-अवहेलकले दिएको हवि ग्रहण गर्दैनन् ।

**शय्यां गृहान्कुशान्गन्धानपः पुष्पं मणीन्दधि ।**
**धाना मत्स्यान्पयो मांसं शाकं चैव न निर्णुदेत् ॥२५०॥**

मागी वा नमागी-शैया, भवन, कुश, सुगन्धित द्रव्य, जल, फूल, मणि, दूध, धान, माछा, मासु र साग कसैले दिन्छ भने नफर्काउनू र दिनेको चरित्रको समीक्षा पनि नगर्नू ।

**गुरून्भृत्यांश्चोज्जिहीर्षन्नर्चिष्यन् देवतातिथीन् ।**
**सर्वतः प्रतिगृह्णीयान्न तु तृप्येत्स्वयं ततः ॥२५१॥**

गुरु वा सेवकको भोक मेटाउन वा देवदेवी र अतिथिको पूजा गर्न दाताको पात्र-कुपात्र नसोची सबै गृहस्थसँग भिक्षा लिन हुन्छ ।

**गुरुषु त्वभ्यतीतेषु विना वा तैर्गृहे वसन् ।**

**आत्मनो वृत्तिमन्विच्छन् गृह्णीयात्साधुतःसदा ॥२५२॥**

मातापिता बितेको वा ठूलाको पेटपाल्ने चिन्ता नहुने गृहस्थले भने जीवन चलाउन केवल सदाचारी गृहस्थसँग मात्र भिक्षा लिनु पर्दछ ।

**आर्धिकः कुलमित्रं च गोपालो दासनापितौ ।**
**एते शूद्रेषु भोज्यान्नाः यश्चात्मानं निवेदयेत् ॥२५३॥**

अधियामा जग्गा कमाउने, पुर्ख्यौली मित्र, गोठालो, सेवक र नाईले वा आत्मैबाट अनुरोध गरी दिने शूद्रको अन्न खान हुन्छ ।

**यादृशोऽस्य भवेदात्मा यादृशं च चिकीर्षितम् ।**
**यथा चोपचरेदेनं तथाऽऽत्मानं निवेदयेत् ॥२५४॥**

आफ्नो आवश्यकता, आतिथेयको मनस्थिति र सुविधा हेरेर
अतिथि बन्ने नबन्ने सम्बन्धी निर्णय लिनु पर्दछ ।

**योऽन्यथा सन्तमात्मानमन्यथा सत्सु भाषते ।**
**स पापकृत्तमो लोकस्तेन आत्मापहारकः ॥२५५॥**

सज्जनका सामु वास्तविकता लुकाउने कपटीलाई महापापी, चोर
र आफूलाई पनि धोखा दिने व्यक्ति सम्झनु पर्दछ ।

**वाच्यर्था नियताः सर्वे वाङ्मूलाःवाग्विनिःसृताः ।**
**तां तु यः स्तेनयेद्वाचं सः सर्वस्तेयकृन्नरः ॥२५६॥**

वाणीले नै सबै कुरा सिद्ध हुन्छन् । वाणिबाटै वेदशास्त्रको उत्पत्ति भएको हो । यसरी वाणी नै संसारको मूलतत्व हो । यस्तो वाणीको दुरुपयोग गर्नेहरुलाई संसारका सबभन्दा ठूला चोर सम्झिनु पर्दछ ।



**महर्षिपितृदेवानां गत्वाऽऽनृण्यं यथाविधि ।**
**पुत्रे सर्वं समासज्य वसेन्माध्यस्थ्यमास्थितः ॥२५७॥**

(बुद्धिमान ब्राह्मणले गृहस्थ आश्रममा रहँदा) ऋषि-ऋण, पितृ-ऋण र देव-ऋण तिरी अऋणी भई छोरालाई सबै जिम्मा लगाएर वानप्रस्थ आश्रममा प्रवेश गर्नू ।

**एकाकी चिन्तयेन्नित्यं विविक्ते हितमात्मनि ।**
**एकाकी चिन्तयानो हि परं श्रेयोऽधिगच्छति ॥२५८॥**

वनमा एकान्तप्रिय भई आत्मचिन्तन गर्दै एकान्तवास गर्नु, एकाग्र भएर
भगवान्मा लीन हुने वानप्रस्थी नै मोक्ष हुन सक्दछ ।

**एषोदिता गृहस्थस्य वृत्तिर्विप्रस्य शाश्वती ।**
**स्नातकव्रतकल्पश्च सत्त्ववृद्धिकरः शुभः ॥२५९॥**

मैले यी गृहस्थ ब्राह्मण (आदि) का सनातन पेसाका बारेमा बताएँ । साथै, स्नातक धर्मका बारेमा पनि बताएँ । यो धर्म पालना गर्नाले व्यक्तिको शुभ र सत्व वृद्धि (आत्मकल्याण) हुन्छ ।

**अनेन विप्रो वृत्तेन वर्तयन्वेदशास्त्रवित् ।**
**व्यपेतकल्मषो नित्यं ब्रह्मलोके महीयते ॥२६०॥**

वेदका ज्ञाता ब्राह्मण (आदि) गृहस्थले तोकिएका नियम श्रद्धापूर्वक पालना गर्दा पाप पखालिएर शुद्ध र बुद्ध हुन्छ । यसलोकमा यशस्वी भई परलोकमा सम्मानित हुन्छ ।
(यही नै आत्मकल्याणको बाटो हो) ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां चतुर्थोऽध्यायः ॥४॥**

✷

**मनुस्मृति, चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

**शुरुदेखिको श्लोकको संख्याः-६५४+२६०=९१४**

✷

# ॥ अथ पञ्चमोऽध्यायः ॥
# (खान हुने र नहुने कुरा तथा जुठोसूतक र विभिन्न कुराको शुद्धि)

**श्रुत्वैतानृषयो धर्मान् स्नातकस्य यथोदितान् ।**
**इदमूचुर्महात्मानमनलप्रभवं भृगुम् ॥१॥**

मनुद्वारा बताइएका स्नातक-धर्म भृगुका मुखबाट सुनेपछि ती ऋषिहरूले अग्निसमान तेजिला भृगुलाई (पुनः) यी कुरा भने- ।

**एवं यथोक्तं विप्राणां स्वधर्मं अनुतिष्ठताम् ।**
**कथं मृत्युः प्रभवति वेदशास्त्रविदां प्रभो ॥२॥**

हे वेद एवं शास्त्रका ज्ञाता ! बताइए बमोजिमका कार्य गर्दै आफ्नो धर्मकर्म गरिरहेका ब्राह्मण (आदि) को (अकाल) मृत्यु कसरी हुन्छ प्रभू ? ।



**स तानुवाच धर्मात्मा महर्षीन्मानवो भृगुः ।**
**श्रूयतां येन दोषेण मृत्युर्विप्रान् जिघांसति ॥३॥**

मनुवंशीय महर्षी भृगुले मुनिहरूलाई भन्नु भयो-"जुन दोषले ब्राह्मण (आदि) लाई मृत्युले आफ्नो गाँस बनाउँदछ त्यो (दोषका बारेमा) सुन्नु होस्" ।

**अनभ्यासेन वेदानामाचारस्य च वर्जनात् ।**
**आलस्यादन्नदोषाच्च मृत्युर्विप्रान् जिघांसति ॥४॥**

वेदको नियमितको स्वाध्याय र सदाचारलाई छोड्नाले, अल्छी हुनाले तथा अन्न-दोषले गर्दा विद्वान ब्राह्मणहरूले पनि अल्पायुमै मर्नु पर्दछ ।

**लशुनं गृञ्जनं चैव पलाण्डुं कवकानी च ।**
**अभक्ष्याणि द्विजातीनाममेध्यप्रभवानी च ॥५॥**

द्विजातिका लागि- लसुन, सलगम, प्याज, च्याउ र अपवित्र ठाउँमा
उब्जने चिजहरु पनि अभक्ष्य हुन् ।

**लोहितान् वृक्षनिर्यासान् व्रश्चनप्रभवांस्तथा ।**
**शेलुं गव्यं च पीयूषं प्रयत्नेन विवर्जयेत् ॥६॥**

रातो रङ्का वृक्षको चोप, काटेर वा खोपेर निकालिने वृक्षको रस, लप्सी आदि रेसादार फल र
भर्खर ब्याहेकी गाईको दूधलाई पनि यत्नपूर्वक परित्याग गर्नू ।

**वृथा कृसरसंयावं पायसापूपमेव च ।**
**अनुपाकृतमांसानि देवान्नानि हवींषि च ॥७॥**

जिभ्रोको स्वाद् फेर्ने नियतले, तिलचामल हालेर पकाइएको खिच्रो वा खिचडी (कृसर), गाईको
दूध र गहुँको पिठो मिसाएर बनाइएका पदार्थ (संयाव), खीर, चिल्लोमा पकाइएका गहुँको पिठोका
अपुङ्गो, पूवा, मालपूवा, अर्सा आदि परिकार (अपूप) तथा बलि नदिइएको वा नचढाइएको

(उपाकृत नगरिएको) मासु, देवदेवीको प्रसाद र यज्ञको प्रसाद पनि नखानू ।

**अनिर्दशायाः गोः क्षीरमौष्ट्रमैकशफं तथा ।**
**आविकं सन्धिनीक्षीरं विवत्सायाश्च गोः पयः ॥८॥**

नचोखिएकी (बिहाएको १० दिन नपुगेकी लैनु) गाई, ऊँट, एक खुर हुने पशुहरु (घोडा, गधा
आदि), भेडी, गर्भिणी गाई (सन्धिनी) र हतुवा (दूधमुखे बाछाबाछी मरेकी)
गाईको दूध पनि नखानू ।

**आरण्यानां च सर्वेषां मृगाणां माहिषं विना ।**
**स्त्रीक्षीरं चैव वर्ज्यानि सर्वशुक्तानि चैव हि ॥९॥**

भैंसीभन्दा बाहेकका (अर्नाभन्दा बाहेकका) सबै जङ्गली जनावरको तथा
स्त्रीको दूध तथा सडाएर अमिलो पारिएका सबै कुरा नखानू ।

**दधि भक्ष्यं च शुक्तेषु सर्वं च दधिसम्भवम् ।**
**यानि चैवाभिषूयन्ते पुष्पमूलफलैः शुभैः ॥१०॥**

सडाएर अमिलो पारिएका खानेकुरामा : दही र दहीजन्य पदार्थ तथा फलफूल, फूल वा कन्दमूल आदिबाट बनाइने अर्क, आसव, अरिष्ट आदि जस्ता आयुर्वेदीय विधिले तयार पारिने मदिराहरू (अभिषव) खान हुन्छ ।

**क्रव्यादः शकुनीन् सर्वान् तथा ग्रामनिवासिनः ।**
**अनिर्दिष्टांश्चैकशफांष्टिट्टिभं च विवर्जयेत् ॥११॥**

काँचो मासु खाने सबै मांसाहारी जनावर र चरा, गाऊँघरमा हिँडडुल गर्ने (नपालिएका) जनावर र चरा, एक खुरे जनावर र टिटिहाँसको मासु नखानू ।

**कलविङ्कं प्लवं हंसं चक्राह्वं ग्रामकुक्कुटम् ।**
**सारसं रज्जुवालं च दात्यूहं शुकसारिके ॥१२॥**



भँगेरा, परेवा, हाँस, चखेवा, कुखुरो, सारस, लाम्पुच्छ्रे, जलकौवा, सुँगा, मैना,...।

**प्रतुदान् जालपादांश्च कोयष्टिनखविष्किरान् ।**
**निमज्जतश्च मत्स्यादान् सौनं वल्लूरमेव च ॥१३॥**

चुच्चोले ठुँगेर खानेकुरा खाने हलेसो, ढुकुर, सुँगा आदि (प्रतोद, अभिवन निघण्टु), हाँसका जस्ता खुट्टा हुने चराहरू (जालपादान्), हुटिटयाउँ, नङ्ग्राले चिथोरेर खाने पशुपंक्षीहरु, मत्स्यजीवि जलचर जीवहरु, वधशालाका मासु, सुकुटी,...।

**बकं चैव बलाकां च काकोलं खञ्जरीटकम् ।**
**मत्स्यादान् विडवराहांश्च मत्स्यानेव च सर्वशः ॥१४॥**

बकुल्लो, पोथी बकुल्लो (बलाका), डुमकौवा, बाहुनीचरी, मत्स्यजीवि जलचरहरु, मल (दिसा आदि) खाने सुँगुर र माछाको मासु नखानू ।

**यो यस्य मांसमश्नाति स तन्मांसाद उच्यते ।**
**मत्स्यादः सर्वमांसादस्तस्मात्मत्स्यान् विवर्जयेत् ॥१५॥**

जुन जीवको मासु जसले खान्छ त्यो मानिस त्यही जीवको भक्षक हुन्छ ।
सबै जीवको मासु माछाले खान्छ, त्यसैले माछा खानेलाई "सर्वजीवभक्षक" भनिन्छ ।
अतः यो पापबाट जोगिन माछा नखानु ।

**पाठीनरोहितावाद्यौ नियुक्तौ हव्यकव्ययोः ।**
**राजीवान्सिंहतुण्डांश्च सशल्काश्चैव सर्वशः ॥१६॥**

पाठीन (बरारी) र रोहित (रोहु) माछाको मासु हव्यकव्यमा प्रयोग गरिने विधान छ ।
यस्तै राजीव (?), सिंहतुण्डा (?) र बाक्ला कत्ला हुने माछा खान पनि निषेध छैन ।



**न भक्षयेदेकचरानज्ञातांश्च मृगद्विजान् ।**
**भक्ष्येष्वपि समुद्दिष्टान् सर्वान्पञ्चनखांस्तथा ॥१७॥**

मासु खानेले पनि एक्लै चरिरहने हिँड्ने पशु वा सर्प आदि जीव, नचिनिएका पशुपंक्षी तथा पाँच नङ्गा हुने पशुपंक्षीको मासु नखानू ।

**श्वाविधं शल्यकं गोधां खड्गकूर्मशशांस्तथा ।**
**भक्ष्यान्पञ्चनखेष्वाहुरनुष्ट्रांश्चैकतोदतः ॥१८॥**

पाँच नङ्गा हुनेमा दुम्सी, शल्यक (?), गोही, गैँडा, कछुवा र खरायोको मासु खान हुन्छ तर ऊँटको हुन्न ।

**छत्राकं विड्वराहं च लशुनं ग्रामकुक्कुटम् ।**
**पलाण्डुं गृञ्जनं चैव मत्या जग्ध्वा पतेद् द्विजः ॥१९॥**

खान हुँदैन भनी थाहा हुँदाहुँदै पनि च्याउ, सुँगुर, लसुन, प्याज, कुखुरा र सलगम खाने द्विज पतित हुन्छ ।

**अमत्यैतानि षड्जग्ध्वा कृच्छ्रं सान्तपनं चरेत् ।**
**यतिचान्द्रायणं वाऽपि शेषेषूपवसेदहः ॥२०॥**

यी छ कुरा अनजानमा खाएमा कृच्छ्र सान्तपन व्रत वा यतिचान्द्रायण व्रत वस्नू, चाखे एक दिन उपवास बस्नू ।

**संवत्सरस्यैकमपि चरेत्कृच्छ्रं द्विजोत्तमः ।**
**अज्ञातभुक्तशुद्ध्यर्थं ज्ञातस्य तु विशेषतः ॥२१॥**



नजानी अखाद्य खाइएमा वा त्यस्तो खाइएको शङ्का लागेमा प्रायश्चितका लागि वर्षमा एक-दुई पटक सामान्य व्रत बस्नुपर्दछ तर जानीजानी खाएमा भने नियमानुसारकै (तोकिएकै) प्रायश्चित गर्नुपर्दछ ।

**यज्ञार्थं ब्राह्मणैर्वध्याः प्रशस्ताः मृगपक्षिणः ।**
**भृत्यानां चैव वृत्त्यर्थमगस्त्यो ह्याचरत्पुरा ॥२२॥**

ब्राह्मणले बलि दिन वा सेवकलाई खुवाउन, खानयोग्य पशुपंक्षिमात्र मार्नु भन्ने परम्परालाई अगस्त ऋषिले समर्थन गरेका छन् ।

**बभूवुर्हि पुरोडाशाः भक्ष्याणां मृगपक्षिणाम् ।**
**पुराणेष्वृषियज्ञेषु ब्रह्मक्षात्रसवेषु च ॥२३॥**

प्राचीनकालमा ब्राह्मण, क्षत्रीय र ऋषिले गरेका यज्ञमा भक्ष्य

पशुपंक्षि होम गरिएका प्रमाणहरू पाइन्छन् ।

**यत्किञ्चित्स्नेहसंयुक्तं भक्ष्यं भोज्यमगर्हितम् ।**
**तत्पर्युषितमप्याद्यं हविःशेषं च यद्भवेत् ॥२४॥**

बचेको यज्ञको प्रसाद वा अन्य घिउ/तेलमा भुटे/तारेका पदार्थहरु खान/ खुवाउन योग्य छ भने बासी भए पनि खान हुन्छ ।

**चिरस्थितमपि त्वाद्यमस्नेहाक्तं द्विजातिभिः ।**
**यवगोधूमजं सर्वं पयसश्चैव विक्रिया ॥२५॥**

द्विजातिले जौ, गहुँ आदिलाई दूधमा पकाएर वा घिउमा तारेर बनाएका मिठाईहरु बासी भए पनि खान सङ्कोच मान्नु पर्दैन ।

**एतदुक्तं द्विजातीनां भक्ष्याभक्ष्यमशेषतः ।**

**मांसस्यातः प्रवक्ष्यामि विधिं भक्षणवर्जने ॥२६॥**

द्विजका लागि खान हुने-नहुने भन्ने विषयमा यही विधान छ, जसको वर्णन मैले गरेँ । अब मासु खाने र त्याग्ने विधिका बारेमा बताउँदछु ।

**प्रोक्षितं भक्षयेन्मांसं ब्राह्मणानां च काम्यया ।**
**यथाविधि नियुक्तस्तु प्राणानामेव चात्यये ॥२७॥**

ब्राह्मणलाई खुवाउने इच्छा भएमा यज्ञमा बलि दिई शुद्ध गरिएको मासु मात्र खुवाउनु त्यसपछि आफूले खानू । प्राण नै जाने स्थितिमा पनि विधि नपुऱ्याई मासु नखानू ।

**प्राणस्यान्नमिदं सर्वं प्रजापतिरकल्पयन् ।**
**स्थावरं जङ्गमं चैव सर्वं प्राणस्य भोजनम् ॥२८॥**

ब्रह्माले प्राण रक्षार्थ नै यी सबै अन्नको सृष्टि गरेका हुनाले प्राण रक्षार्थ संसारमा उत्पादन हुने सबै कुरा (अन्न) खान हुन्छ ।

**चरणामन्नमचरा दंष्ट्रिणामप्यदंष्ट्रिणः ।**
**अहताश्च सहस्तानां शूराणं चैव भीरवः ॥२९॥**

विधाताले चर (गाई, भैंसी आदि) जीवका लागि जडपदार्थ (घाँस आदि), दाऱ्हा हुने जीव (सिंह, बाघ आदि) का लागि दाऱ्हा नहुने (मृग, सुँगुर आदि) जीव, हात हुनेजीवका लागि हात नहुने माछा आदि जीव र शूरवीरका लागि काथरलाई भोजन बनाइदिएका छन् ।

**नात्ता दुष्यत्यदन्नाद्यान् प्राणिनोऽहन्यहन्यपि ।**
**धात्रैव सृष्टा ह्याद्याश्च प्राणिनोऽत्तार एव च ॥३०॥**

खाने चिज सधैं खाएर कुनै किसिमको दोष लाग्दैन किनकि खाइने चिज र खाने जीव दुवैको सृष्टिकर्ता स्वयं विधाता (ब्रह्मा) हुन् ।



**यज्ञाय जग्धिर्मांसस्येत्येष दैवो विधिः स्मृतः ।**
**अतोऽन्यथाप्रवृत्तिस्तु राक्षसो विधिरुच्यते ॥३१॥**

यज्ञ वा होमका लागि पशु वधगरी ब्राह्मणहरुलाई खुवाई सकेपछि प्रसादको रुपमा आफूले मासु खानु देवकर्म हुन्छ अन्यथा त्यो राक्षसी कर्म हुन्छ ।

**क्रीत्वा स्वयं वाऽप्युत्पाद्य परोपकृतमेव च ।**
**देवान्पितृंश्चार्चयित्वा खादन्मासं न दुष्यति ॥३२॥**

किनेर, मारेर वा कसैले दिएको कुनै जनावरको मासुलाई देवता र पितृहरुलाई समर्पण गरेर पूजाआजा गरिसकेपछि (सबैलाई चढाएर) प्रसादको रुपमा मात्र खानाले खानेलाई दोष लाग्दैन ।

**नाद्यादविधिना मांसं विधिज्ञोऽनापदि द्विजः ।**
**जग्ध्वा ह्यविधिना मांसं प्रेत्य तैरद्यतेऽवशः ॥३३॥**

द्विजले सङ्कटकाल बाहेक सामान्य स्थितिमा विधिको पालना नगरी मासु खानु अनुचित र पाप हो । यस्ता पापी त्यही पशुको आहारा भई जन्मन्छन् ।

**न तादृशं भवत्येनो मृगहन्तुर्धनार्थिनः ।**
**यादृशं भवति प्रेत्य वृथा मांसानि खादतः ॥३४॥**

आजीविकाका लागि पशुवध गर्नेलाई भन्दा विधिविधानको पालना नगरी मासु खानेलाई बढी पाप लाग्दछ ।

**नियुक्तस्तु यथान्यायं यो मांसं नात्ति मानवः ।**
**स प्रेत्य पशुतां याति सम्भवानेकविंशतिम् ॥३५॥**



श्राद्ध आदिमा पितृ आदिलाई मासु चढाएर आफूले खाएन भने उसले एक्काईस पटक पशु भई जन्मनु पर्दछ ।

**असंस्कृतान्पशून्मन्त्रैर्नाद्याद्विप्रः कदाचन ।**
**मन्त्रैस्तु संस्कृतानद्याच्छाश्वतं विधिमास्थित ॥३६॥**

प्राचीन परम्परा र शास्त्र अनुसार ब्राह्मणले मन्त्रद्वारा शुद्ध पारी पशु वध गर्नुपर्दछ । अनि वध गरिएको त्यो पशुको मासुलाई मन्त्रद्वारा संस्कार गरेर मात्र खानु पर्दछ ।

**कुर्याद् घृतपशुं सङ्गे कुर्यात्पिष्टपशुं तथा ।**
**न त्वेव तु वृथा हन्तुं पशुमिच्छेत्कदाचन ॥३७॥**

मासुको तलतल लागे घिउ र पिठोले बनेका मिष्ठान्न वा पक्वान्न खानु तर यज्ञमा बलि दिने प्रयोजनभन्दा बाहेक स्वाद लिन वा भोज खुवाउन पशु मारेर

मासु खाने काम गरी पाप नकमाउनू ।

**यावन्ति पशुरोमाणि तावत्कृत्वेह मारणम् ।**
**वृथापशुघ्नः प्राप्नोति प्रेत्य जन्मनिजन्मनि ॥३८॥**

देवपूजन बाहेकका उद्देश्यले पशु मार्नेले मरेपछि पशुका जीउमा
भएका जति रौं छन् त्यति नै पटकसम्म पशु भई जन्मनु पर्दछ ।

**यज्ञार्थं पशवः सृष्टाः स्वयमेव स्वयम्भुवा ।**
**यज्ञोऽस्य भूत्यै सर्वस्य तस्माद्यज्ञे वधोऽवधः ॥३९॥**

ब्रह्माले पशुको सृष्टि यज्ञको सिद्धीका लागि गरेका हुनाले
यज्ञमा गरिने पशुवध शास्त्रसम्मत हुन्छ ।

**औषध्यः पशवो वृक्षास्तिर्यञ्चः पक्षिणस्तथा ।**

**यज्ञार्थं निधनं प्राप्ताः प्राप्नुवन्त्युच्छ्रितीः पुनः ॥४०॥**

यज्ञका लागि : औषधी, पशु, वृक्ष, कछुवा आदि जीव तथा चराहरुको
प्रयोग गर्दा तिनीहरु उत्तम गतिमा प्राप्त हुन्छन् ।

**मधुपर्के च यज्ञे च पितृदैवतकर्मणि ।**
**अत्रैव पशवो हिंस्याः नान्यत्रेत्यब्रवीन्मनुः ॥४१॥**

मनुका अनुसार मधुपर्क, यज्ञ, श्राद्ध र देवपूजाका लागि मात्र पशुवध गर्न हुन्छ ।

**एष्वर्थेषु पशून् हिंसन्वेदतत्त्वार्थविद् द्विजः ।**
**आत्मानं च पशुं चैव गमयत्युत्तमां गतिम् ॥४२॥**

वेद जान्ने विद्वानले मधुपर्कका लागि पशुवध गर्दा पशुको उद्धार मात्र गर्दैन

अपितु आफू स्वयं पनि उत्तम गतिको अधिकारी हुन्छ भनेका छन् ।

**गृहे गुरावरण्ये वा निवसन्नात्मवान् द्विजः ।**
**नावेदविहिता हिंसामापद्यपि समाचरेत् ॥४३॥**

चारमध्ये कुनै पनि आश्रममा रहेको जितेन्द्रिय द्विजले आपत्कालमा
पनि शास्त्रविरुद्ध गई जीव-हिंसा नगर्नू ।

**या वेदविहिता हिंसा नियताऽस्मिंश्चराचरे ।**
**अहिंसामेव तां विद्याद्वेदाद्धर्मो हि निर्बभौ ॥४४॥**

संसारमा धर्म-अधर्म, उचित-अनुचित, गर्न हुने-नहुने सबै कुराको निर्णय वेदले दिन्छ ।
वेदले जुन हिँसालाई हिँसा मान्दैन त्यसलाई (हामीले पनि) अहिँसा नै मान्नु पर्दछ ।

**योऽहिंसकानि भूतानि हिनस्त्यात्मसुखेच्छया ।**

**स जीवंश्च मृतश्चैव नक्वचित्सुखमेधते ॥४५॥**

अहिँस्रक जीवजन्तुलाई जसले आत्मसुखका लागि मार्दछ त्यसले न यस
जीवनमा सुख पाउँदछ न त परलोकमा सद्गति नै ।

**यो बन्धनवधक्लेशान् प्राणिनां न चिकीर्षति ।**
**स सर्वस्य हितप्रेप्सुः सुखमत्यन्तमश्नुते ॥४६॥**

जसले पशुहरुलाई बाँध्ने वा मार्नेजस्ता काम नगरी तिनीहरुलाई दुःख दिँदैन,
सबै प्राणीको हित चिताउने त्यस्तो व्यक्तिले अनन्त सुख पाउँदछ ।

**यद्ध्यायति यत्कुरुते रतिं बध्नाति यत्र च ।**
**तदवाप्नोत्ययत्नेन यो हिनस्ति न किञ्चन ॥४७॥**

जीव हिँसा नगर्नेले जे सोच्दछ, जे गर्दछ, जे पाउन धैर्य लिन्छ, ती
सबै उसलाई सजिलै प्राप्त हुन्छन् ।

**नाऽकृत्वा प्राणिनां हिंसां मांसमुत्पद्यते क्वचित् ।**
**न च प्राणिवधः स्वर्ग्यस्तस्मान्मांसं विवर्जयेत् ॥४८॥**

हिँसा नगरी मासु पाईँदैन, हिँसा गर्नु पाप भएकोले स्वर्ग पाउने कुरामा बाधक हुन्छ,
त्यसैले मासु खान हुन्न ।

**समुत्पत्तिं च मांसस्य वधबन्धौ च देहिनाम् ।**
**प्रसमीक्ष्य निवर्तेत सर्वमांसस्य भक्षणात् ॥४९॥**

मासुको उत्पत्तिका श्रोत (शुक्र र रगत), जीवको हत्या र जीवको बन्धन (बाँध्नु)
देखेर मासु खान छाड्नु नै वेश हुन्छ ।



**न भक्षयति यो मांसं विधिं हित्वा पिशाचवत् ।**
**स लोके प्रियतां याति व्याधिभिश्च न पीड्यते ॥५०॥**

विधिविधानलाई लात हानेर पिशाचले जस्तो मासु नखानेले रोगले ग्रस्त पनि हुनु पर्दैन,
लोकमा सम्मान र यश पनि पाइन्छ ।

**अनुमन्ता विशसिता निहन्ता क्रयविक्रयी ।**
**संस्कर्ता चोपहर्ता च खादकश्चेति घातकाः ॥५१॥**

मार्न सहमति दिने, भक्ष्य-अभक्ष्य छुट्ट्याएर भाग लगाउने, मार्ने, बेच्ने, किन्ने,
पकाउने, पस्किने र खाने सबै हत्यारा नै हुन् ।

**स्वमांसं परमांसेन यो वर्धयितुमिच्छति ।**
**अनभ्यर्च्य पितृन्देवांस्ततोऽन्यो नास्त्यपुण्यकृत् ॥५२॥**

देवता तथा पितृलाई पूजा गर्ने उद्देश्यले नभई आफ्नो शरीरको मासु बढाउन जो अरुको शरीरको मासु प्रयोग गदर्छ त्यो जस्तो विवेकहीन र पापी अर्को कोही हुँदैन ।

**वर्षे वर्षेऽश्वमेधेन यो यजेत शतं समाः ।**
**मांसानि च न खादेद्यस्तयोः पुण्यफलं समम् ॥५३॥**

सय वर्षसम्म अश्वमेध यज्ञ गर्नाले जुन फल पाइन्छ त्यही फल मासु नखानाले अर्थात् जीव हिँसा नगर्नाले सजिलै पाइन्छ ।

**फलमूलाशनैर्मेध्यैर्मुन्यान्नां च भोजनैः ।**
**न तत्फलमवाप्नोति यन्मांसपरिवर्जनात् ॥५४॥**

मुनिहरुका साथमा रही उनले जस्तै सात्विक जीवन बिताएर फलफूल वा कन्दमूल आदिले पेट भर्ने ब्रह्मचारीले भन्दा मासु नखाने गृहस्थीले बढी फल पाउँदछ ।



**मां स भक्षयिताऽमुत्र यस्य मांसमिहाद्म्यहम् ।**
**एतन्मांसस्य मांसत्वं प्रवदन्ति मनीषिणः ॥५५॥**

'मांस' शब्दका 'मां' र 'सः' २ अक्षरको अर्थ 'म जसलाई खाइरहेको छु यसले मलाई भोजन बनाउनेछ' भन्ने बुझिन्छ । विद्वानले यसैलाई मांसको मांसत्व भनेका छन् ।

**न मांसभक्षणे दोषे न मद्ये न च मैथुने ।**
**प्रवृत्तिरेषा भूतानां निवृत्तिस्तु महाफला ॥५६॥**

मासु, मदिरा तथा मैथुन मानिसका सहज प्रवृत्ति हुनाले यिनको प्रयोगलाई दोष मान्न मिल्दैन । तर, प्रयोग नगरे ठूलो पुण्य भने अवश्य पाइन्छ ।

**प्रेतशुद्धिं प्रवक्ष्यामि द्रव्यशुद्धिं तथैव च ।**
**चतुर्णां अपि वर्णानां यथावदनुपूर्वशः ॥५७॥**

अब म यसपछि चारै वर्णका प्रेतशुद्धि अनि द्रव्यशुद्धिका बारेमा क्रमैले बताउँदछु ।

**दन्तजातेऽनुजाते च कृतचूडे च संस्थिते ।**
**अशुद्धाः बान्धवाः सर्वे सूतके च तथोच्यते ॥५८॥**

भर्खरै दाँत उम्रेका, उम्रिसकेका वा चूडाकर्म गरिएका बालकको मृत्युमा परिवारका सबै जना र बन्धु-बान्धवहरु समेत अशुद्ध हुन्छन् यसैलाई जूठो लाग्ने भनिन्छ ।

**दशाहं शावमाशौचं सपिण्डेषु विधीयते ।**
**अर्वाक् सञ्चयनादस्थ्नां त्र्यहमेकाहमेव च ॥५९॥**

सपिण्डीको मृत्युमा दश दिन, कसैलाई अस्थिसञ्चयन नगरेसम्म, कसैलाई एक दिन, कसैलाई दुई दिन त कसैलाई तीन दिन जूठो लाग्दछ ।

**सपिण्डता तु पुरुषे सप्तमे विनिवर्तते ।**

**समानोदकभावस्तु जन्मनाम्नोरवेदने ॥६०॥**

सातौं पुस्तासम्म सपिण्डता रहन्छ । कुलमा जन्मेकाको नाम र जन्म सम्झना नभए त समानोदकता पनि सकिन्छ ।

**यथेदं शावमाशौचं सपिण्डेषु विधीयते ।**
**जननेऽप्येवमेव स्यान्निपुणं शुद्धिमिच्छताम् ॥६१॥**

राम्रो शुद्धताको इच्छा हुनेहरुलाई, सपिण्डीको मरणमा जुठो लागेजस्तै सपिण्डीको जन्महुँदा सूतक पनि लाग्दछ ।

**सर्वेषां शावमाशौचं मातापित्रोस्तु सूतकम् ।**
**सूतकं मातुरेव स्यात् उपस्पृश्य पिता शुचिः ॥६२॥**

मरण आशौच सबैलाई हुन्छ तर सूतक बाबुआमालाई मात्र लाग्छ । त्यसमा पनि बाबु आचमन एवं स्नानले नै शुद्ध हुन्छ र आमालाई मात्र सूतक रहन्छ ।

**निरस्य तु पुमाञ्छुक्रमुपस्पृश्यैव शुद्ध्यति ।**
**बैजिकादभिसम्बन्धादनुरुध्यादघं त्र्यहम् ॥६३॥**

हस्तमैथुन, स्वप्नदोष वा स्त्रीसम्भोग गरी वीर्य खसाल्ने पुरुष स्नानले शुद्ध हुन्छ तर परस्त्री सम्भोग गर्ने पुरुष तीन दिन अपवित्र रहन्छ ।

**अह्ना चैकेन रात्र्या च त्रिरात्रैरेव च त्रिभिः ।**
**शवस्पृशो विशुध्यन्ति त्र्यहादुदकदायिनः ॥६४॥**

लाश छुनेहरु मृतकसँगको रगत-नाता अनुसार एक रातदिन, एक रात, दश दिन (तीन वटा तीन रात पछि) जलदान दिनेहरू (समानोदकहरू) तीन दिनमा शुद्ध हुन्छन् ।



**गुरोः प्रेतस्य शिष्यस्तु पितृमेधं समाचरन् ।**
**प्रेताहारैः समं तत्र दश रात्रेण शुद्ध्यति ॥६५॥**

गुरुको मृत्युमा अन्तिम संस्कार गर्ने तथा लाश बोक्ने शिष्य दश दिनपछि शुद्ध हुन्छ ।

**रात्रिभिर्मासतुल्याभिर्गर्भस्राभे विशुद्ध्यति ।**
**रजस्युपरते साध्वी स्नानेन स्त्री रजस्वला ॥६६॥**

जति महिनाको गर्भस्राव भएको हो त्यति नै रातमा शुद्धि हुन्छ । पतिव्रता स्त्री परसरे पछि रजनिवृत्ति भएको (रगत बहन छाडेको) दिन स्नानले शुद्ध हुन्छे ।

**नृणामकृतचूडानां विशुद्धिर्नैशिकी स्मृता ।**
**निर्वृत्तमुण्डकानां तु त्रिरात्राच्छुद्धिरिष्यते ॥६७॥**

चूडाकर्म हुनुभन्दा पहिले मृत्यु हुने बालकको एक रात (दिन) जुठो लाग्छ ।
चूडाकर्म पछि मृत्यु हुने बालकको तीन दिन जुठो लाग्छ ।

**ऊनद्विवार्षिकं प्रेतं निदध्युर्बान्धवाः बहिः ।**
**अलंकृत्य शुचौ भूमावस्थिसञ्चयनादृते ॥६८॥**

दुई वर्ष मुनिका बालकको मृत्यु हुँदा लाशलाई बन्धुबान्धवले गाउँ बाहिर शुद्ध स्थानमा लगी गाड्नू, दाहकर्म र अस्थिसञ्चयन नगर्नू ।

**नास्यकार्योऽग्निसंस्कारो न च कार्योदकक्रिया ।**
**अरण्येकाष्ठवत्त्यक्त्वा क्षपेत त्र्यहमेव तु ॥६९॥**

यस्ता बालकको दाहसंस्कार, अस्थिसञ्चयन र विसर्जन नगर्नू । लाशलाई जङ्गलमा पुरिएको मुढा जस्तै खाल्टो खनेर पुरिदिनू र तीन दिन जुठो बार्नू ।



**नात्रिवर्षस्य कर्त्तव्या बान्धवैरुदकक्रिया ।**
**जातदन्तस्य वा कुर्युर्नाम्नि वापि कृते सति ॥७०॥**

शास्त्रमा कसैले तीन वर्ष नपुगेकाको लाश जलाउन, अस्थिसञ्चयन र विसर्जन गर्न हुँदैन गाड्नु पर्दछ भनेका छन् भने कसैलै दाँत आइसकेका वा न्वारान गरेका बालकको लाश जलाउन उत्तम हुन्छ पनि भनेका छन् ।

**सब्रह्मचारिण्येकाहमतीते क्षपणं स्मृतम् ।**
**जन्मन्येकोदकानां तु त्रिरात्राच्छुद्धिरिष्यते ॥७१॥**

ब्रह्मचारी सहपाठीको मृत्युमा एक दिन जुठो लाग्दछ । समानोदक नाताको
तीन दिन सूतक लाग्दछ ।

**स्त्रीणामसंस्कृतानां तु त्र्यहाच्छुद्ध्यन्ति बान्धवाः ।**
**यथोक्तेनैव कालेन शुद्ध्यन्ति तु सनाभयः ॥७२॥**

संस्कार नगरिएकी स्त्रीको मरणमा बन्धुवान्धव र सपिण्डीहरुलाई तीन दिन जुठो लाग्दछ ।

**अक्षारलवणान्नाः स्युर्निमज्जेयुश्च ते त्र्यहम् ।**
**मांसासनं नाश्नीयुः शयीरंश्च पृथक् क्षितौ ॥७३॥**

जुठो लागेका तीन दिनसम्म नुन नभएको खाना खानू, दिनहुँ नुहाउनू,
मासु नखानू र एक्लै छुट्टै सुत्नू ।

**सन्निधावेष वै कल्पः शावाशौचस्य कीर्तितः ।**
**असन्निधावयं ज्ञेयो विधिः सम्बन्धिबान्धवैः ॥७४॥**

नजिकै हुने नातेदारको मरणमा लाग्ने जुठोसूतकका बारेमा बताइयो । अब टाढा (परदेशमा) हुने नातेदारको मरणमा लाग्ने जुठोसूतकका बारेमा बताइन्छ ।



**विगतं तु विदेशस्थं श्रृणुयाद्यो ह्यनिर्दशम् ।**
**यच्छेषं दशरात्रस्य तावदेवाशुचिर्भवेत् ॥७५॥**

परदेशमा रहेका सपिण्डीको मृत्यु भएको खबर दश दिनभित्र सुनेमा, दश दिन पुग्न जति दिन बाँकी छ त्यति नै दिनसम्म जुठो बार्नु पर्दछ ।

**अतिक्रान्ते दशाहे च त्रिरात्रमशुचिर्भवेत् ।**
**संवत्सरे व्यतीते तु स्पृष्ट्वैवापो विशुद्ध्यति ॥७६॥**

दश दिनपछि सुनेमा तीन दिन जुठो बार्नु पर्दछ र वर्ष दिन बितेपछि सुनेमा नुहाए मात्र शुद्ध हुन्छ ।

**निर्दशं ज्ञातिमरणं श्रुत्वा पुत्रस्य जन्म च ।**
**सवासा जलमाप्लुप्य शुद्धो भवति मानवः ॥७७॥**

सपिण्डीको जन्ममरणको खबर दश दिन बितेपछि थाहा भएमा
वस्त्रसहित स्नान गर्नाले चोखिन्छ ।

**बाले देशान्तरस्थे च पृथक् पिण्डे च संस्थिते ।**
**सवासा जलमाप्लुत्य सद्य एव विशुद्ध्यति ॥७८॥**

परदेशमा रहेका सपिण्डी बालक वा असपिण्डी नातेदारको मृत्युको खबर
सुने सवस्त्र स्नानले चोखो भइन्छ ।

**अन्दर्दशाहे चेत्स्यातां पुनर्मरणजन्मनी ।**
**तावत्स्यादशुचिर्विप्रो यावत्तत्स्यादनिर्दशम् ॥७९॥**



जूठो वा सूतक लागिरहँदा अर्को जुठो वा सूतक परेमा (खप्टिएका) दश दिन
बिती नचोखिएसम्म जुठो सूतक लागिरहन्छ ।

**त्रिरात्रमाहुराशौचमाचार्ये संस्थिते सति ।**
**तस्य पुत्रे च पत्न्यां च दिवारात्रमिति स्थितिः ॥८०॥**

शिष्यलाई आचार्यको मरणमा तीन र आचार्यपुत्र तथा आचार्यपत्नीको
मरणमा एक दिनको जुठो लाग्दछ ।

**श्रोत्रिये तूपसम्पन्ने त्रिरात्रमशुचिर्भवेत् ।**
**मातुले पक्षिणीं रात्रिं शिष्यर्त्विगबान्धवेषु च ॥८१॥**

श्रोत्रीय (कुलपुरोहित) को मरणमा जजमानलाई तीन दिन जुठो लाग्दछ ।
मामा, शिष्य र ऋत्विजको दुई दिन एक रात आशौच लाग्दछ ।

**प्रेते राजनि सज्योतिर्यस्य स्याद्विषये स्थितः ।**
**अश्रोत्रिये त्वहः कृत्स्नामनूचाने तथा गुरौ ॥८२॥**

धर्म अनुसार शासन गर्ने राजाको तथा अविद्वान (वेद नपढेको) ब्राह्मणको मरणमा दिनभरको जुठो लाग्दछ । छ अङ्ग सहितका वेद जान्ने (अनूचान) गुरुको मरणमा लाग्ने जुठोका बारेमा यसपछि बताइने छ ।

**शुद्ध्येद्विप्रो दशाहेन द्वादशाहेन भूमिपः ।**
**वैश्यः पञ्चदशाहेन शूद्रो मासेन शुद्ध्यति ॥८३॥**

ब्राह्मण दश दिनमा, क्षत्रीय बाह्र दिनमा, वैश्य पन्ध्र दिनमा र शूद्र एक महिनामा शुद्ध हुन्छ ।

**न वर्धयेदघाहानि प्रत्युहेन्नाग्निषु क्रियाः ।**
**न च तत्कर्म कुर्वाणः सनाभ्योप्यशुचिर्भवेत् ॥८४॥**



पछि सुनेपनि आशौच बार्ने दिन नबढाउनू । अग्निहोत्र आदि कर्मको विधान नगर्नू । अग्निहोत्र गरिरहँदा त सपिण्डीलाई पनि आशौच लाग्दैन ।

**दिवाकीर्तिमुदक्यां च पतितं सुतिकां तथा ।**
**शवं तत्स्पृष्टिनं चैव स्पृष्ट्वा स्नानेन शुद्ध्यति ॥८५॥**

चाण्डाल, रजस्वला, पतित, लाश तथा सुत्केरीलाई वा यी कुरा छुनेलाई छोए नुहाउनाले शुद्ध हुन्छ ।

**आचम्य प्रयतो नित्यं जपेदशुचिदर्शने ।**
**सौरान्मन्त्रान्यथोत्साहं पावमानीश्च शक्तितः ॥८६॥**

आचमन गरेर शुद्ध भइसकेको व्यक्तिले अशुद्धीलाई देख्यो भने सूर्य आदि देवताको स्तुतिमन्त्र (पावमानी) निष्ठापूर्वक सकेको जप्नु पर्दछ ।

**नारं स्पृष्ट्वाऽस्थि सस्नेहं स्नात्वा विप्रो विशुद्ध्यति ।**
**आचम्यैव तु निःस्नेहं गामालभ्यार्कमीक्ष्य च ॥८७॥**

आलो हाड छोए ब्राह्मणले शुद्ध हुन नुहाउनू । सुकेको हाड छोएमा भने आचमनले, सूर्यदर्शनले वा जमिन छुनाले शुद्ध हुन्छ ।

**आदिष्टी नोदकं कुर्यादाव्रतस्य समापनात् ।**
**समाप्ते तूदकं कृत्वा त्रिरात्रेणैव शुद्ध्यति ॥८८॥**

ब्रह्मचर्याश्रममा रहनेलाई पितृ-श्राद्ध वा प्रेत-कर्म गर्नुसँग कुनै लिनुदिनु हुँदैन । गृहस्थाश्रमी चाहीँ पितृको प्रेतकर्म (अन्तिम संस्कार) गरेको तीन दिनपछि शुद्ध हुन्छन् ।

**वृथासङ्करजातानां प्रव्रज्यासु च तिष्ठताम् ।**
**आत्मनीत्यागिनां चैव निवर्तेतोदकक्रिया ॥८९॥**
**पाषण्डमाश्रितानां च चरन्तीनां च कामतः ।**

**गर्भभर्तृद्रुहां चैव सुरापीनां च योषिताम् ॥९०॥**

वर्णसङ्कर, सन्यासी, आत्महत्या गर्ने, पाखण्डी, स्वेच्छाले व्यभिचार गर्ने र गर्भपात गर्ने स्त्री, आफ्नो पतिको हत्या गर्ने वा गराउने स्त्री तथा जाँडरक्सी खाने स्त्रीको श्राद्ध-तर्पण गरेर केही फल प्राप्त हुँदैन ।

**आचार्यं स्वमुपाध्यायं पितरं मातरं गुरुम् ।**
**निर्हृत्य तु व्रती प्रेतान्न व्रतेन वियुज्यते ॥९१॥**

ब्रह्मचारीले आचार्य, उपाध्याय, माता, पिता र गुरुको अन्तिम संस्कार गर्दा उसको ब्रह्मचर्य व्रत भङ्ग हुँदैन ।

**दक्षिणेन मृतं शूद्रं पुरद्वारेण निर्हरेत् ।**
**पश्चिमोत्तरपूर्वस्तु यथायोगं द्विजन्मनः ॥९२॥**

ब्राह्मण, क्षत्रीय, वैश्य र शूद्रको शव क्रमशः शहरको पूर्व, उत्तर, पश्चिम र दक्षिणको ढोकाबाट निकालेर घाटमा लैजानू ।

**न राज्ञामघदोषोऽस्ति व्रतिनां न च सत्रिणाम् ।**
**ऐन्द्रं स्थानमुपासीना ब्रह्मभूता हि ते सदा ॥९३॥**

राजा, ब्रह्मचारी, चान्द्रायणादि व्रत बस्ने र यज्ञ गराउने पुरोहितलाई इन्द्रका अवतार र निष्पाप मानिने हुनाले आशौच लाग्दैन ।

**राज्ञो माहात्मिके स्थाने सद्यः शौचं विधीयते ।**
**प्रजानां परिरक्षार्थमासनं चात्र कारणम् ॥९४॥**

ईश्वरको प्रतिनिधि भई पवित्रताले राज्य गर्ने राजालाई प्रजारक्षार्थ न्यायासनमा बस्ने हुनाले आफन्तको जुठोसूतक लाग्दैन ।



**डिम्बाहवहतानां च विद्युता पार्थिवेन च ।**
**गोब्राह्मणस्य चैवार्थे यस्य चेच्छति पार्थिवः ॥९५॥**

गर्भपात, युद्ध, चटचाङ, गाई-ब्राह्मणको रक्षार्थ, राज्यहितार्थ र राजाज्ञा पालनार्थ मारिने आफन्तको जुठो राजालाई लाग्दैन ।

**सोमाग्न्यर्कानिलेन्द्राणां वित्ताप्पत्योर्यमस्य च ।**
**अष्टानां लोकपालानां वपुर्धारयते नृपः ॥९६॥**

धर्मानुसार शासन गर्ने राजामा चन्द्रमा, अग्नि, सूर्य, वायु, इन्द्र, कुबेर, वरुण र यम गरी आठ लोकपालका गुण समावेश भएका हुन्छन् ।

**लोकेशाधिष्ठितो राजा नास्याशौचं विधीयते ।**
**शौचाशौचं हि मर्त्यानां लोकेभ्यः प्रभवाप्ययौ ॥९७॥**

यसरी लोकपालका अंशरूपी भएका कारण राजालाई जुठोसूतक लाग्दैन । आफैं शौच आशौचको व्यवस्थापक भएका कारण उसले यी कुरा बार्न पर्दैन ।

**उद्यतैराहवे शस्त्रैः क्षत्रधर्म हतस्य च ।**
**सद्यः संतिष्ठते यज्ञस्तथाऽऽह्मशौचमिति स्थितिः ॥९८॥**

क्षत्रियको हतियार सहित युद्धमा मर्नुमार्नुमा तत्काल यज्ञ समाप्त भएको मानिएझैं, राजाका लागि आफन्तको जुठोसूतक नुहाउनाले तत्काल सकिन्छ ।

**विप्रः शुद्ध्यत्यपः स्पृष्ट्वा क्षत्रियो वाहनायुधम् ।**
**वैश्यः प्रतोदं रश्मीन्वा यष्टिं शूद्रः कृतक्रिया ॥९९॥**

प्रेतकर्म पछि ब्राह्मण जल, क्षत्रिय वाहन वा हतियार, वैश्य डण्डी, कोर्रा वा लगाम र शूद्र लौरो छुनाले तत्काल पवित्र हुन्छन् ।



**एतद्वोऽभिहितं शौचं सपिण्डेषु द्विजोत्तमाः ।**
**असपिण्डेषु सर्वेषु प्रेतशुद्धिं निबोधत ॥१००॥**

यी त भए सपिण्डी (नजिकका नातेदार) का जुठोसूतकका कुरा अब म सबै असपिण्डी (टाढाका आफन्त) को जुठोसूतकका बारेमा बताउँदछु ।

**असपिण्डं द्विजं प्रेतं विप्रोनिर्हृत्य बन्धुवत् ।**
**विशुद्ध्यति त्रिरात्रेण मातुराप्तांश्च बान्धवान् ॥१०१॥**

कुनै पराया ब्राह्मणको वा मातृकुलका कसैको मृत्युमा श्रद्धावश उसको दाहसंस्कार गर्ने व्यक्ति तीन दिनमा शुद्ध हुन्छ ।

**यद्यन्नमत्ति तेषां तु दशाहेनैव शुद्ध्यति ।**
**अनदन्नन्नमह्नैव चेत्तस्मिन्गृहे वसेत् ॥१०२॥**

कुनै असपिण्डीको दाहसंस्कार गरी मृतकका घरमा सँगै बसी त्यस घरको अन्न खान्छ भने दश दिन र यसो नगरे दाहकर्म पछि एक दिन अशुद्ध हुन्छ ।

**अनुगम्येच्छया प्रेतं ज्ञातिमज्ञातिमेव च ।**
**स्नात्वा सचैलं स्पृष्ट्वाऽग्निं घृतं प्राश्य विशुद्ध्यति ॥१०३॥**

आफ्नो वा अरु जातिका व्यक्तिको मरणमा स्वेच्छाले मलामि जाने व्यक्ति सवस्त्र नुहाएर आगो छोई घिउ खानाले शुद्ध हुन्छन् ।

**न विप्रं स्वेषु तिष्ठत्सु मृते शूद्रेण नाययेत् ।**
**अस्वर्ग्या ह्याहुतिः सा स्याच्छूद्रसंस्पर्शदूषिता ॥१०४॥**

ब्राह्मणको मरणमा आफ्ना दाजुभाई नातागोता हुँदाहुँदै शूद्रलाई लाश बोक्न नदिनू किनकि शूद्रको स्पर्शले दुषित आहूतिले ब्राह्मणलाई स्वर्ग प्राप्त गर्न बाधा दिन्छ ।



**ज्ञानं तपोऽग्निराहारो मृन्मनोबायुपाञ्जनम् ।**
**वायुःकर्मार्ककालौ च शुद्धे कर्तृणि देहिनाम् ॥१०५॥**

ज्ञान, तप, अग्नि, आहार, माटो, मन, वायु, पृथ्वी, कर्म, सूर्य, यज्ञ र कालले मानिसलाई शुद्ध बनाउँदछ ।

**सर्वेषामेव शौचानामर्थशौचं परं स्मृतम् ।**
**योऽर्थे शुचिर्हि स शुचिर्न मृद्वारिशुचिःशुचिः ॥१०६॥**

सबै पवित्रतामा अर्थ-पवित्रता उच्च हुन्छ । यो अपनाउने सदैव पवित्र र नअपनाउनेलाई अग्नि, जलादिले पनि पवित्र बनाउँदैन ।

**क्षान्त्या शुध्यति विद्वांसो दानेनाकार्यकारिणः ।**
**प्रच्छन्नपापाः जप्येन तपसा वेदवित्तमाः ॥१०७॥**

विद्वान क्षमाले, यज्ञादि गर्न असमर्थ व्यक्ति दानले, गोप्यपापी जपले र वेदविद्याका पण्डित व्यक्ति तपले शुद्ध हुन्छन् ।

**मृत्तोयैः शुध्यते शोध्यं नदी वेगेन शुद्ध्यति ।**
**रजसा स्त्री मनोदुष्टा संन्यासेन द्विजोत्तमा ॥१०८॥**

फोहोरमैलो कुरा पानीमा धुनाले, नदी वेगले, कुलटा स्त्री परसर्नाले र उत्तम द्विज सन्यास धर्मले शुद्ध हुन्छन् ।

**अद्भिर्गात्राणि शुद्ध्यन्ति मनः सत्येन शुद्ध्यति ।**
**विद्यातपोभ्यां भूतात्मा बुद्धिर्ज्ञानेन शुद्ध्यति ॥१०९॥**

शरीर जलले शुद्ध हुन्छ, मन सत्यताले शुद्ध हुन्छ, जिवात्मा विद्या र तपले र बुद्धि ज्ञानले शुद्ध हुन्छ ।



**एष शौचस्य वः प्रोक्तः शरीरस्य विनिर्णयः ।**
**नानाविधानां द्रव्याणां शुद्धेः शृणुत निर्णयम् ॥११०॥**

शरीर शुद्धिका कुरा यी बताइए, अब अनेक प्रकारका वस्तुको शुद्धिका बारेमा भएका नियमहरू सुन ।

**तैजसानां मणीनां च सर्वस्याश्ममयस्य च ।**
**भस्मनाद्भिर्मृदा चैव शुद्धिरुक्ता मनीषिभिः ॥१११॥**

विद्वानहरूले चम्किला मणि आदि वस्तु र चमकिला पत्थर खरानी, पानी र माटोले शुद्ध हुन्छन् भनेका छन् ।

**निर्लेपं काञ्चनं भाण्डमद्भिरेव विशुद्ध्यति ।**
**अब्जमश्ममयं चैव राजतं चानुपस्कृतम् ॥११२॥**

शुद्ध सुनका भाँडा, जलबाट उत्पन्न हुने शङ्ख-मोति आदिले बनेका वस्तु र
कालो नभएका चाँदीका वस्तु पानीले धुनाले शुद्ध हुन्छन् ।

**अपामग्नेश्च संयोगाद्धैमं रौप्यं च निर्बभौ ।**
**तस्मात्तयोः स्वयोन्यैव निर्णेको गुणवत्तरः ॥११३॥**

सुनचाँदीको उत्पत्ति अग्नि र जलको संयोगबाट भएको मानिएकोले
यिनको शुद्धि उत्पत्तिका कारण अर्थात अग्नि र जलले नै हुन्छ ।

**ताम्रायः कांस्यरैत्यानां त्रपुणः सीसकस्य च ।**
**शौचं यथार्हं कर्तव्यं क्षाराम्लोदकवारिभिः ॥११४॥**

तामा, फलाम, काँस, पीतल, लाहा र शिशाले बनेका भाँडा शुद्ध पार्न नुनिलो
वा अमिलो वा सादा पानी प्रयोग गर्नू ।



**द्रवाणां चैव सर्वेषां शुद्धिराप्लवनं स्मृतम् ।**
**प्रोक्षणं संहतानां च दारवाणां च तक्षणम् ॥११५॥**

सबै तरल चिज भरेर बगाउनाले, वा ठोस भए आगोमा सेकाउनाले र तरल
भए कपडाले छान्नाले तथा काठका वस्तु खुर्कनाले शुद्ध हुन्छ ।

**मार्जनं यज्ञपात्राणां पाणिना यज्ञकर्मणि ।**
**चमसानां ग्रहाणां च शुद्धिः प्रक्षालनेन तु ॥११६॥**

यज्ञमा प्रयोग हुने भाँडा माटोपानी वा खरानीपानीले धुनाले तथा चिम्टा, सन्यासो
आदि समाउन योग्य सामान पानीले पखाल्नाले नै शुद्ध हुन्छन् ।

**चरूणां स्रुक्स्रुवाणां च शुद्धिरुष्णेन वारिणा ।**
**स्फ्यशूर्पशकटानां च मुसलोलूखलस्य च ॥११७॥**

चरुस्थाली, सुरो तथा आगो फुक्ने ढुङ्गी, नाङ्लो, सामान ओसार्ने साना गाडा
तथा ओखल र मुसल तातो पानीले धुनाले शुद्ध हुन्छन् ।

**अद्भिस्तु प्रोक्षणं शौचं बहूनां धान्यवाससाम् ।**
**प्रक्षालनेन स्वल्पानामद्भिः शौचं विधीयते ॥११८॥**

धान र कपडा थोरै भएमा त धुनु नै पर्दछ तर धेरै भएमा भने त्यसमाथि
जल छर्कनाले शुद्ध हुन्छ ।

**चैलवच्चर्मणां शुद्धिर्वैदलानां तथैव च ।**
**शाकमूलफलानां तु धान्यवच्छुद्धिरिष्यते ॥११९॥**

छाला र आसनको शुद्धि कपडाझैं धोएर हुन्छ । सागपात, कन्दमूल र फलफूलको शुद्धि
धानजस्तै जल छर्कनाले वा पखालेर हुन्छ ।



**कौशेयाविकयोरूषैः कुतपानामरिष्टकैः ।**
**श्रीफलैरंशुपट्टानां क्षौमाणां गौरसर्षपै ॥१२०॥**

रेशम र ऊनी कपडालाई नुनिलो माटोले, नेपाली कम्बललाई रिठ्ठोले, सनका कपडालाई
बेलले र पातला कपडालाई पहैँलो सरस्यूँले धुनाले शुद्ध हुन्छ ।

**क्षौमवच्छङ्खश्रृङ्गाणामस्थिदन्तमयस्य च ।**
**शुद्धिर्विजानता कार्या गोमूत्रेणोदकेन च ॥१२१॥**

शुद्धि विज्ञहरुले शङ्ख, सिङ, हाड र दाँत आदिका पदार्थको शुद्धि रेसमी कपडाको
जस्तै गहुँत र पानीले हुन्छ भनेर जान्नु भनेका छन् ।

**प्रोक्षणात्तृणकाष्ठं च पलालं चैव शुद्ध्यति ।**
**मार्जनोपाञ्जनैर्वेश्म पुनः पाकेनमृण्मयम् ॥१२२॥**

घाँसपात-काठ-परालका सामानहरु पानीका छिटा पर्नाले, घर गोबर-पानीले लिप्नाले र माटाका भाँडा पुनः सेकाउनाले शुद्ध हुन्छ ।

**मद्यैर्मूत्रैः पुरीषैर्वा ष्ठीवनैः पूयशोणितैः ।**
**संस्पृष्टं नैव शुद्ध्येत पुनः पाकेन मृण्मयम् ॥१२३॥**

जाँडरक्सी, मुत, दिसा, थूक, र्‍याल, रगत, पीप आदि परेका माटाका भाँडा तताएर वा आगोमा सेकेर शुद्ध हुँदैन (फाल्नु पर्दछ) ।

**सम्मार्जनोपाञ्जनेन सेकेनोल्लेखनेन च ।**
**गवां च परिवासेन भूमिः शुद्ध्यति पञ्चभिः ॥१२४॥**

भूमिको शुद्धि पाँच किसिमले : पानी छर्केर, गोबरले वा माटोले लिपेर, पानी भरेर, खोस्रेर वा गाई बाँधेर हुन्छ भनिएको छ ।



**पक्षिजग्धं गवा घ्रातमवधूतमवक्षुतम् ।**
**दूषितं केशकीटैश्च मृत्प्रक्षेपेण शुध्यति ॥१२५॥**

चराले जुठा हालेको, गाईले सुँघेको, घृणास्पद, हाच्छिउँ गरिएको तथा कपाल र कीरा परी प्रदुषित भएको माटो पर्नाले शुद्ध हुन्छ ।

**यावन्नापैत्यमेध्याक्ताद्गन्धो लेपश्च तत्कृतः ।**
**तावन्मृद्वारि चादेयं सर्वासु द्रव्यशुद्धिषु ॥१२६॥**

विष्ठा आदि मल लागेको वस्तुलाई मल ननिखन्जेलसम्म मात्र होइन कि गन्ध ननिखन्जेलसम्म धुनु पर्दछ ।

**त्रीणि देवाः पवित्राणि ब्राह्मणानामकल्पयन् ।**
**अदृष्टमद्भिर्निर्णिक्तं यच्च वाचा प्रशस्यते ॥१२७॥**

देवताले ब्राह्मणका तीन कुरा पवित्र मानेका छन्-पकाएको आदि नदेखिएको पकाइएको कुरा, पानीले धोइएको वस्तु र ब्राह्मणले प्रशंसा गरेको वस्तु ।

**आपः शुद्धाः भूमिगताः वैतृष्ण्यं यासु गोर्भवेत् ।**
**अव्याप्ताश्चेदमेध्येन गन्धवर्णरसान्विताः ॥१२८॥**

जुन पानीले गाई अघाउँदछ, नगनाउने हुन्छ, सफा हुन्छ र रङ्ग तथा स्वाद प्रिय लाग्ने हुन्छ त्यस्तो जमिन भित्रको पानी खान हुन्छ ।

**नित्यं शुद्धः कारुहस्तः पण्ये यच्च प्रसारितम् ।**
**ब्रह्मचारिगतं भैक्ष्यं नित्यं मेध्यमिति स्थितिः ॥१२९॥**

पाकशास्त्री (हलुवाई आदि) को हात, पसलमा बेच्न राखिएका सामान र ब्रह्मचारीको हातमा परेको भिक्षा सदैव शुद्ध हुन्छ ।



**नित्यमास्यं शुचिः स्त्रीणां शकुनिः फलपातने ।**
**प्रस्रवे च शुचिर्वत्सः श्वा मृगग्रहणे शुचिः ॥१३०॥**

स्त्रीको, वृक्षको फल खसाल्ने चराको, दूध पगार्न छोडिने गाईको बाच्छाको र मृग आदि समाउने शिकारी कुकुरको मुख सधैं पवित्र मानिन्छ ।

**श्वभिर्हतस्य यन्मांसं शुचि तन्मनुरब्रवीत् ।**
**क्रव्याद्भिश्च हतस्यान्यैश्चाण्डालाद्यैश्च दस्युभिः ॥१३१॥**

घरपालुवा कुकुरद्वारा मारिएको, शिकारीद्वारा मारिएको अथवा चाण्डाल वा चोरद्वारा मारिएको पशुको मासु शुद्ध हुन्छ ।

**ऊर्ध्वं नाभेर्यानि खानि तानि मेध्यानि सर्वशः ।**
**यान्यधस्तान्यमेध्यानि देहाच्चैव मलाश्च्युताः ॥१३२॥**

शास्त्रले नाइटो मुनिका अङ्गहरु अपवित्र र नाइटो माथिका
अङ्गहरु पवित्र हुन्छन् भनी बताएको छ ।

**मक्षिका विप्रुषश्छाया गौरश्वः सूर्यरश्मयः ।**
**रजो भूर्वायुरग्निश्च स्पर्शे मेध्यानि निर्दिशेत्॥१३३॥**

झिँगा, वायुको जलकण, छाँया, गाई, घोडा, सूर्यकिरण, हावाको धूलो,
धरती, हावा र अग्नि पवित्र हुने हुनाले छुँदा अपवित्रता हुँदैन ।

**विण्मूत्रोत्सर्गशुद्ध्यर्थं मृद्वार्यादेयमर्थवत् ।**
**दौहिकानां मलानां च शुद्धिषु द्वादशस्वपि॥१३४॥**

मलमूत्र लगायतका बाह्र मल निक्लँदा शुद्धीका लागि आवश्यकता
अनुसार माटो र जल प्रयोग गर्नू ।



**वसाशुक्रमसृङ्मज्जामूत्रविड्घ्राणकर्णविट् ।**
**श्लेष्माश्रुदूषिकास्वेदा द्वादशैते नृणां मलाः॥१३५॥**

बोसो, वीर्य, रगत, मासी, मूत्र, विष्ठा, सिँगान, कानेगुजी, कफ, आँसु,
चिप्रा र पसिना : यी मानव शरीरका बाह्र मल हुन् ।

**एका लिङ्गे गुदे तिस्रस्तथैकत्र करे दश ।**
**उभयोः सप्त दातव्याः मृदः शुद्धिमभीप्सता॥१३६॥**

शुद्ध चाहनेले मूत्रत्यागी लिङ्गमा एक चोटी र मलत्यागी मलद्वारमा तीन चोटी माटो दली दश
चोटी पखाल्नू । हात दश पटक र दुवै हात माटोले साट चोटी धुनू ।

**एतच्छौचं गृहस्थानां द्विगुणं ब्रह्मचारिणम् ।**
**त्रिगुणं स्याद्वनस्थानां यतीनां च चतुर्गुणम्॥१३७॥**

यी शौचविधि गृहस्थाश्रमीका लागि बताइएका हुन् । ब्रह्मचारीले यसको दोब्बर, वानप्रस्थीले तेब्बर र सन्यासीले चौबर गर्नु पर्दछ ।

**कृत्वा मूत्रं पुरीषं वा खान्याचान्त उपस्पृशेत् ।**
**वेदमध्येष्यमाणश्च अन्नमश्नंश्च सर्वदा ॥१३८॥**

मलमूत्र गरी सफा भएपछि आचमन गरी आँखामा पानी छर्कनू । सधैं वेद पढ्नु र खाना खानु अघि पनि आचमन गर्नू ।

**त्रिराचामेदपः पूर्वं द्विः प्रमृज्यात्ततो मुखम् ।**
**शरीरं शौचमिच्छन्हि स्त्री शूद्रस्तु सकृत्सकृत् ॥१३९॥**

शारीरिक शुद्धताका लागि भोजन गर्नु अघि तीन पटक आचमन र दुई पटक मुख कुल्ला गर्नू । शूद्र र स्त्रीले एक एक पटक गरे पुग्दछ ।



**शूद्राणां मासिकं कार्यं वपनं न्यायवर्तिनाम् ।**
**वैश्यवच्छौचकल्पश्च द्विजोच्छिष्टं च भोजनम् ॥१४०॥**

न्यायमार्गमा बाँचिरहेको शूद्रले महिनामा एकपटक कपाल खौरनू । उसका शौच विधि वैश्यका जस्तै हुन्छन् । ब्राह्मणको जुठो खानाले पनि उ शुद्ध हुन्छ ।

**नोच्छिष्टं कुर्वते मुख्या विप्रुषोऽङ्गं पतन्ति याः ।**
**न श्मश्रूणि गतान्यास्यं न दन्तान्तरधिष्ठितम् ॥१४१॥**

शरीरमा परेको थुकको छिटा, मुखभित्र गएको जुँगा र दाँतमा अडकिएको अन्न जुठो हुँदैन ।

**स्पृशन्ति बिन्दवः पादौ यः आचमयतः परान् ।**
**भौमिकास्ते समाज्ञेयाः न तैरप्रयतो भवेत् ॥१४२॥**

अर्काले आचमन गर्दा उछिट्टिएर आफूलाई परेका जलका छिटा पृथ्वीभित्रको
जल समान सम्फेर पवित्र मान्नु पर्दछ ।

**उच्छिष्टेन तु संस्पृष्टो द्रव्यहस्तः कथञ्चन ।**
**अनिधायैव तद्द्रव्यमाचान्तः शुचितामियात् ॥१४३॥**

जुठो मुख हुनेले छोएको कुनै पनि चिज खाने व्यक्ति आचमन गरेर शुद्ध हुन्छ ।

**वान्तो विरिक्तः स्नात्वा तु घृतप्राशनमाचरेत् ।**
**आचामेदेव भुक्त्वाऽन्नं स्नानं मैथुनिनः स्मृतम् ॥१४४॥**

भोजन पछि, वान्ता भएपछि र पातलो दिसा भएपछि नुहाएर घिउ खानू तथा
मैथुन पछि नुहाउनू भनिएको छ ।

**सुप्त्वा क्षुत्वा च भुक्त्वा च निष्ठीव्योक्त्वाऽनृतानि च ।**

**पीत्वाऽपोऽध्येष्यमाणश्च आचामेत्प्रयतोऽपि सन् ॥१४५॥**

सुतेर उठेपछि, हाच्छिउँपछि, खाएर, थुकेर र झूटो बोलेपछि पानी खानाले शुद्ध हुन्छ
तर फेरी पढ्ने भए आचमन गर्नु पर्दछ ।

**एष शौचविधिः कृत्स्नो द्रव्यशुद्धिस्तथैव च ।**
**उक्तो वः सर्ववर्णानां स्त्रीणां धर्मान्निबोधत ॥१४६॥**

शौचका विधि र द्रव्यशुद्धिका बारेमा बताएँ अब सवै वर्णका स्त्री-धर्मका बारेमा बताउँदछु, सुन ।

**बालया वा युवत्या वा वृद्धया वाऽपि योषिता ।**
**न स्वातन्त्र्येण कर्त्तव्यं किञ्चित्कार्यं गृहेष्वपि ॥१४७॥**

बालिका, युवति वा बृद्धा जे भएपनि स्त्रीले स्वतन्त्रतापूर्वक कुनै काम घरमा पनि नगरोस् ।

**बाल्ये पितुर्वशे तिष्ठेत्पाणिग्राहस्य यौवने ।**
**पुत्राणां भर्तरि प्रेते न भजेत्स्त्री स्वतन्त्रताम् ॥१४८॥**

स्त्रीले बालक छँदा आफ्ना पिताको, विवाह भएपछि पतिको र पति मरेपछि पुत्रको अधिनमा रहनू कहिल्यै स्वतन्त्र नरहनू ।

**पित्रा भर्त्रा सुतैर्वाऽपि नेच्छेद्विरहमात्मनः ।**
**एषां हि विरहेण स्त्री गर्ह्ये कुर्यादुभे कुले ॥१४९॥**

स्त्रीले पिता, पति र पुत्रबाट अलग रहेर स्वतन्त्रता नखोज्नू किनकि यसरी बस्दा पिता र पति दुबैको कुल कलङ्कित र अपमानित हुन्छ ।

**सदा प्रहृष्टया भाव्यं गृहकार्येषु दक्षया ।**
**सुसंस्कृतोपस्करया व्यये चामुक्तहस्तया ॥१५०॥**



स्त्रीले सधैं प्रसन्न रहनू, घरेलु धन्दामा दक्ष बन्नू, भाँडाकुँडा सफासुग्घर राख्नू र बिचार पुऱ्याएर मात्र धन खर्च गर्ने बानी बसाल्नु पर्दछ ।

**यस्मै दद्यात्पिता त्वेनां भ्राता वाऽनुमते पितुः ।**
**तं शुश्रूषेत जीवन्तं संस्थितं च न लङ्घयेत् ॥१५१॥**

पिताले वा पिताको अनुमतिमा दाजुभाईले जसलाई विवाह गरेर दिन्छन् स्त्रीले उसैको पत्नी बनेर आजीवन बस्नू, यसको उल्लङ्घन नगर्नू ।

**मङ्गलार्थं स्वस्त्ययनं यज्ञश्चासां प्रजापतेः ।**
**प्रयुज्यते विवाहेषु प्रदानं स्वाम्यकारणम् ॥१५२॥**

स्त्रीको सौभाग्य र मङ्गलको लागि भनेर नै विवाहमा स्वस्तिवाचन र प्राजापत्य होम गरिन्छ । कन्यादान भनेकै हुने पतिलाई स्वामित्व प्रदान गर्नु हो ।

**अनृतावृतुकाले च मन्त्रसंस्कारकृत्पतिः ।**
**सुखस्य नित्यं दातेह परलोके च योषितः ॥१५३॥**

कन्यादानमा स्त्रीको हात समाई पतिले सबैखाले परिस्थितिमा संरक्षण गर्ने जिम्मा लिएको हुन्छ । यस्तो पुरुषको सेवा स्त्रीले गर्नाले यो लोकमा यश र परलोकमा सुख पाउँदछिन् ।

**विशीलः कामवृत्तो वा गुणैर्वा परिवर्जितः ।**
**उपचर्यः स्त्रिया साध्व्या सततं देववत्पतिः ॥१५४॥**

दुर्भाग्यवश पति चरित्रहीन, कामुक र विद्या-विनय आदि गुण नभएको परेमा पनि देवता मानेर सेवा गर्नुपर्दछ ।

**नास्ति स्त्रीणां पृथग्यज्ञो न व्रतो नाप्युपोषणम् ।**
**पतिः शुश्रूषते येन तेन स्वर्गे महीयते ॥१५५॥**



शास्त्रमा स्त्रीका लागि भनेर छुट्टै यज्ञादिको, व्रतादिको र उपवासादिको विधान गरिएको छैन । पतिको सेवा गर्नाले नै उनले स्वर्ग प्राप्त गर्दछिन् ।

**पाणिग्राहस्य साध्वी स्त्री जीवतो वा मृतस्य वा ।**
**पतिलोकमभीप्सन्ती नाचरेत्किञ्चिदप्रियम् ॥१५६॥**

अर्को जन्ममा पनि उत्तम पति चाहने स्त्रीले पति जीवित छँदा वा मरेपछि पनि पतिलाई अप्रिय लाग्ने कुनै कुरा नगर्नू ।

**कामं तु क्षपयेद्देहं पुष्पमूलफलैः शुभैः ।**
**न तु नामपि गृह्णीयात् पत्यौ प्रेते परस्य तु ॥१५७॥**

पतिको मृत्युपछि पौष्टिक आहारको सट्टा फलफूल, कन्दमूल आदि खाएर इन्द्रियलाई संयमित बनाउनू, परपुरुषको सङ्गतको इच्छा नगर्नू ।

**आसीता मरणात्क्षान्ता नियता ब्रह्मचारिणी ।**
**यो धर्मः एकपत्नीनां कांक्षन्ती तमनुत्तमम् ॥१५८॥**

पतिको मृत्युपछि सदाचारिणी स्त्रीले शास्त्रले बताएका कठीन व्रतादि गर्दै ब्रह्मचर्यमा रहनुमा नै आफूलाई गौरवशाली ठान्नु पर्दछ ।

**अनेकानि सहस्राणि कुमारब्रह्मचारिणाम् ।**
**दिवं गतानि विप्राणामकृत्वा कुलसन्ततिम् ॥१५९॥**
**मृते भर्तरि साध्वी स्त्री ब्रह्मचर्ये व्यवस्थिता ।**
**स्वर्गं गच्छत्यपुत्राऽपि यथा ते ब्रह्मचारिणः ॥१६०॥**

जसरी कुलको वृद्धि नगरी अनगिन्ती ब्रह्मचारीहरु स्वर्ग जान्छन् त्यसैगरी छोरो नपाउँदै विधवा भएकी पतिव्रता स्त्रीले पनि परपुरुष मार्फत सन्तान जन्माउने कामना नगरी ब्रह्मचर्यव्रतको दृढतापूर्वक पालना गरेमा अपुता हुँदा पनि स्वर्ग जान पाउँदछिन् ।



**अपत्यलोभाद्या तु स्त्री भर्तारमतिवर्तते ।**
**सेह निन्दामवाप्नोति पतिलोकाच्च हीयते ॥१६१॥**

शास्त्र नमानी सन्तानको चाहनाले परपुरुषसँग लसपस गर्ने स्त्रीको यस लोकमा निन्दा र परलोकमा नरक वास हुन्छ ।

**नान्योत्पन्ना प्रजाऽस्तीह न चान्यस्य परिग्रहे ।**
**न द्वितीयश्च साध्वीनां क्वचिद्भर्तोपदिश्यते ॥१६२॥**

पुरपरुषबाट विधवाले जन्माउने सन्तान विधिपूर्वक विवाह नगरिएका कारण न स्त्रीको न पुरुषको हुन्छ । शास्त्रले उसलाई दोश्रो विवाहीत पतिको मान्यता दिँदैन ।

**एवं वृत्तां सवर्णां स्त्रीं द्विजातिः पूर्वमारिणीम् ।**
**दाहयेदग्निहोत्रेण यज्ञपात्रैश्च धर्मवित् ॥१६७॥**

आदर्श एवं पतिव्रता नारीको पतिभन्दा पहिले मृत्यु भएमा शास्त्रीय विधिले नै यज्ञहोम गरेर दाहसंस्कार गर्नुपर्दछ भन्ने विधान छ ।

**भार्यायै पूर्वमारिण्यै दत्त्वाऽग्नीनन्त्य कर्मणि ।**
**पुनर्दारक्रियां कुर्यात्पुनराधानमेव च ॥१६८॥**

पत्नीको मृत्युपछि सन्तानको चाहना गरी अर्को विवाह गर्ने पुरुषले अग्नि-होम आदि फेरी गर्नु अनीवार्य हुन्छ ।

**अनेन विधिना नित्यं पञ्चयज्ञान्न हापयेत् ।**
**द्वितीयमायुषो भागं कृतदारो गृहे वसेत् ॥१६९॥**

यो विधिले पुनर्विवाह गरेपनि दिनहुँ पञ्चयज्ञ गर्न नछाडी पत्नीसँग घरमा बसोस् ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां पञ्चमोऽध्यायः ॥५॥**



मनुस्मृति, पाँचौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।

**शुरुदेखिको श्लोकको संख्या:-९१४+१६९=१,०८३**

# ॥ अथ षष्ठोऽध्यायः ॥
## (वानप्रस्थ र सन्यास आश्रम)

**एवं गृहाश्रमे स्थित्वा विधिवत्स्नातको द्विजः ।**
**वने वसेत्तु नियतो यथावद्विजितेन्द्रियः ॥१॥**

स्नातक द्विजले यसरी गृहस्थाश्रममा बसेपछि नियमपूर्वक जितेन्द्रिय भई वनमा वानप्रस्थ आश्रममा रहनू ।

**गृहस्थस्तु यथा पश्येद्वलीपलितमात्मनः ।**
**अपत्यस्यैव चापत्यं तदाऽरण्यं समाश्रयेत् ॥२॥**

गृहस्थले जब आफ्ना छाला चाउरी परेका, कपाल फुलेका र छोराका पनि छोरालाई घरमा देख्दछ तब घरगृहस्थी छाडी वनको शरणमा जानू ।



**सन्त्यज्य ग्राम्यमाहारं सर्वं चैव परिच्छदम् ।**
**पुत्रेषु भार्यां निक्षिप्य वनं गच्छेत्सहैव वा ॥३॥**

गृहस्थीले आफ्ना आहार, परिच्छद (लुगा, नोकरचाकर, भाँडाकुँडा, छाता आदि) सबै छाडी पत्नीलाई पुत्रको रेखदेखमा रहने गरी छाडेर अथवा आफूसँगै लिएर वनमा जानू ।

**अग्निहोत्रं समादाय गृह्यं चाग्निपरिच्छदम् ।**
**ग्रामादरण्यं निःसृत्य निवसेन्नियतेन्द्रियः ॥४॥**

आफूले घरमा दिनहुँ होम गर्ने गरेको अग्नि (अग्निहोत्र) र होमगर्ने साधन बोकी गाउँबाट निस्की वनमा गएर आफ्ना इन्द्रियलाई नियन्त्रण गर्दै बस्नू ।

**मुन्यन्नैर्विविधैर्मेध्यैः शाकमूलफलेन वा ।**
**एतानेव महायज्ञान्निर्वपेद्विधिपूर्वकम् ॥५॥**

विभिन्न किसिमका मुनि-अन्न (नरोपी आफैं उम्रिएका नाभो अन्न, फापर) अथवा सागपात, कन्दमूल वा फलफूलले नै विधिपूर्वक महायज्ञहरू गर्नू ।

**वसीत चर्म चीरं वा सायं स्नायात्प्रगे तथा ।**
**जटाश्च बिभृयान्नित्यं श्मश्रुलोमनखानि च ॥६॥**

छाला वा रुखका बोक्रा पहिरेर बस्नू । साँझमा र बिहान नुहाउने गर्नू । कपाल (जटा), दाह्री, रौं (शरीरका अन्य अङ्गका) र नङ पाल्नू ।

**यद्भक्षः स्यात्ततो दद्याद्बलिं भिक्षां च शक्तितः ।**
**अम्मूलफलभिक्षाभिरर्चयेदाश्रमागतान् ॥७॥**

खाइने कुराको बलि र भिक्षा पनि दिनू । जल, कन्दमूल र फलफूल दिई आश्रममा आउने अतिथिहरूको पूजा गर्नू ।



**स्वाध्याये नित्ययुक्तः स्याद्दान्तो मैत्रः समाहितः ।**
**दाता नित्यमनादाता सर्वभूतानुकम्पकः ॥८॥**

दिनहुँ वेद पढ्नू । इन्द्रियलाई नियन्त्रण गर्नू । सबैको मित्र हुनू । मनलाई वशमा राख्नू । सधैं दिने बन्नू, लिने नबन्नू । सबै जीवमाथि दया गर्नू ।

**वैतानिकं च जुहुयादग्निहोत्रं यथाविधि ।**
**दर्शमस्कन्दयन्पर्व पौर्णमासं च योगतः ॥९॥**

वैतानिक अग्निमा विधिपूर्वक अग्निहोत्र होम गर्नू । समय आउँदा औंसी, पूर्णिमा आदि पर्वहरूमा हालिने होमहरू पनि हाल्ने गर्नू ।

**दर्शेष्ट्याग्रयणं चैव चातुर्मास्यानि चाहरेत् ।**
**तुरायणं च क्रमशो दक्षस्यायनमेव च ॥१०॥**

नक्षत्र-होम, आग्रायणि होम, चतुर्मास होम उत्तरायण र दक्षिणायण होम पनि गर्नू ।

**वासन्तशारदैर्मेध्यैर्मुन्यन्नैः स्वयमाहृतैः ।**
**पुरोडाशांश्चरूंश्चैव विधिवन्निर्वपेत्पृथक् ॥११॥**

वसन्त र शरद् ऋतुमा आफैं उम्रेका अन्न लेराई बेग्लाबेग्लै चरु र पुरोडाश (जौ आदि अन्नको पिठोलाई हाँडीमा पकाई बनाइने ससाना चक्की) तयार पार्नू ।

**देवताभ्यस्तु तद्धुत्वा वन्यं मेध्यतरं हविः ।**
**शेषमात्मनि युञ्जीत लवणं च स्वयं कृतम् ॥१२॥**

वनमा भेटिने यस्ता अति पवित्र हवन गर्न हुने पदार्थको होम गरिसकेपछि बचेको कुरोमा नुन मिसाई खाने गर्नु पर्दछ ।

**स्थलजौदकशाकानि पुष्पमूलफलानि च ।**

**मेध्यवृक्षोद्भवान्यद्यात्स्नेहांश्च फलसंभवान् ॥१३॥**

स्थल र जलमा उम्रने सागपात, फूल, कन्दमूल र फलफूल तथा होमका लागि पवित्र मानिएका वृक्षका फलफूलबाट निस्कने तैलीय पदार्थ (तेलकारूपमा) खाने गर्नू ।

**वर्जयेन्मधु मांसं च भौमानि कवकानि च ।**
**भूस्तृणं शिग्रुकं चैव श्लेश्मातकफलानि च ॥१४॥**

मह, मासु, भुइँच्याउ, भूस्तृण (घाँस विशेष, कुकुरमुते झार), सहजन र लौसी नखानू ।

**त्यजेदाश्वयुजे मासि मुन्यन्नं पूर्वसंचितम् ।**
**जीर्णानि चैव वासांसि शाकमूलफलानि च ॥१५॥**

असौज महिनामा पहिले पहिले जम्मा पारिएका नाभो अन्न, थोत्रा पहिरन, सागपात,

कन्दमूल र फलफूल परित्याग गर्नू (यसपछि नयाँ खोज्नू) ।

**न फालकृष्टमश्नीयादुत्सृष्टमपि केनचित् ।**
**न ग्रामजातान्यार्तोऽपि मूलानि च फलानि च ॥१६॥**

गाउँलेले हलोले जोतेका खेतबारीका अन्न छाडिएका नै भएपनि नखानू ।
गाउँतिरका कन्दमूल र फलफूल जतिसुकै भोक लागे पनि नखानू ।

**अग्निपक्वाशनो वा स्यात्कालपक्वभुगेव वा ।**
**अश्मकुट्टो भवेद्वाऽपि दन्तोलूखलिकोऽपि वा ॥१७॥**

आगोले पकाइएका वा आफैं पाकेका कुरा ढुङ्गामा फोरेर वा कुटेर वा दाँतले चबाएर खानू ।

**सद्यः प्रक्षालको वा स्यान्मासस्संचयिकोऽपि वा ।**
**षण्मासनिचयो वा स्यात्समानिचय एव वा ॥१८॥**



एक छाक टार्ने खालको वा एक महिनालाई पुग्नेगरी वा छ महिना वा एक वर्षलाई पुग्नेगरी सामलतुमल जम्मा गर्ने हुनू ।

**नक्तं चान्नं समश्नीयाद्दिवा वाऽऽहृत्य शक्तितः ।**
**चतुर्थकालिको वा स्यात्स्याद्वाऽप्यष्टमकालिकः ॥१९॥**

आफ्नो शक्ति अनुसार लेराइएको अन्न रातमा वा दिनमा जतिखेर खाएपनि एकपटक मात्र खाने गर्नू अथवा तीन दिनरात भोकै बसी चौथो दिन वा रातमा खाने गर्नू ।

**चान्द्रायणविधानैर्वा शुक्लकृष्णे च वर्तयेत् ।**
**पक्षान्तयोर्वाऽप्यश्नीयाद्यवागूं क्वथितां सकृत् ॥२०॥**

अथवा चान्द्रायण व्रतको विधि अनुसार हरेक महिनाको शुक्ल एवं कृष्ण पक्षमा गाँस

घटाउँदै बढाउँदै खाने गर्नू । अथवा औंसी र पूर्णिमामा जौको खोले खाने गर्नू ।

**पुष्पमूलफलैर्वाऽपि केवलैर्वर्तयेत्सदा ।**
**कालपक्वैः स्वयं शीर्णैर्वैखानसमते स्थितः ॥२१॥**

अथवा फूल, कन्दमूल र फल जब आफैं पाक्दछन् वा झर्दछन् सधैं ती
कुरा मात्र खाई वैखानसी भएर रहनू ।

**भूमौ विपरिवर्तेत तिष्ठेद्वा प्रपदैर्दिनम् ।**
**स्थानासनाभ्यां विहरेत्सवनेषूपयन्नपः ॥२२॥**

जमिनमा बस्नू वा दिनभर उभिनू । बसेकै स्थान वा आसनमा घुम्नू ।
तीन वटै सन्ध्यामा नुहाउने गर्नू ।

**ग्रीष्मे पञ्चतपास्तु स्याद्वर्षास्वभ्रावकाशिकः ।**

**आर्द्रवासास्तु हेमन्ते क्रमशो वर्धयंस्तपः ॥२३॥**

ग्रीष्म ऋतुमा पञ्चाग्नि ताप्नू, वर्षा ऋतुमा खुल्ला स्थानमा बादल मुनि बस्नू, हेमन्त ऋतुमा भिजेका
पहिरन लगाउनू ।यसरी तपस्यामा बानी लगाउनू ।

**उपस्पृशंस्त्रिषवणं पितृन्देवांश्च तर्पयेत् ।**
**तपश्चरंश्चोग्रतरं शोषयेद्देमात्मनः ॥२४॥**

तीन वटै सन्ध्यामा नुहाएपछि देवता र पितृलाई तर्पण दिनू । एवं रीतले उग्र तपस्या
गर्दै आफ्नो शरीरलाई सुकाउनू ।

**अग्नीनात्मनि वैतानान्समारोप्य यथाविधि ।**
**अनग्निरनिकेतः स्यान्मुनिर्मूलफलाशनः ॥२५॥**

वैखानस शास्त्र बमोजिम मुनिवृत्तिको जीवन बिताइरहेको वानप्रस्थीले विधिपूर्वक तीन वटै अग्निलाई आफ्नो आत्मामा आरोपण गरी कन्दमूल र फलफूल खाँदै वासस्थान र अग्निलाई पनि त्यागी दिनू ।

**अप्रयत्नः सुखार्थेषु ब्रह्मचारी धराशयः ।**
**शरणेष्वममश्चैव वृक्षमूलनिकेतनः ॥२६॥**

सुखका लागि प्रयत्न नगर्नू, ब्रह्मचर्यमा रहनू, जमिनमा सुत्नू, सुरक्षित स्थानको लोभ नगरी रुखमुनि बस्ने गर्नू ।

**तापसेष्वेव विप्रेषु यात्रिकं भैक्षमाहरेत् ।**
**गृहमेधिषु चान्येषु द्विजेषु वनवासिषु ॥२७॥**

(अत्यावश्यक पर्दा) अन्य वानप्रस्थीहरुसँग प्राण धान्न चाहिने जति मात्र भिक्षा लिने गर्नू अथवा अन्य वनवासी गृहस्थ द्विजसँग भिक्षा लिनू ।



**ग्रामादाहृत्य वाऽश्नीयादष्टौ ग्रासान्वने वसन् ।**
**प्रतिगृह्य पुटेनैव पाणिना शकलेन वा ॥२८॥**

अथवा गाउँबाट भिक्षा मागी लेराइएको भिक्षान्न वनमा बसेर आठ गाँस खानू । खाँदा दुनुमा राखेर वा रुखका बोक्रामा राखेर वा अँजुलीमा राखेर खानू ।

**एताश्चान्यांश्च सेवेत दीक्षा विप्रो वने वसन् ।**
**विविधाश्चौपनिषदीरात्मसंसिद्धये श्रुतीः ॥२९॥**
**ऋषिभिर्ब्राह्मणैश्चैव गृहस्थैरेव सेविताः ।**
**विद्यातपोविवृद्ध्यर्थं शरीरस्य च शुद्धये ॥३०॥**

यी र अन्य नियमलाई ब्राह्मणले वनमा बस्दा पालना गर्नू । आत्मशुद्धिका लागि, विद्या र तप बढाउन तथा शरीर शुद्ध पार्न वनमा रहने ऋषिहरु, तथा ब्राह्मणहरू जो गृहस्थले

समेत आराधना गरिने गर्दछन्, तीबाट वेद, उपनिषद् आदि शास्त्रको शिक्षा लिनू ।

**अपराजितां वाऽऽस्थाय व्रजेद्दिशमजिह्मगः ।**
**आ निपाताच्छरीरस्य युक्तो वार्यनिलाशनः ॥३१॥**

अथवा प्राणा नजाँदासम्म हावा र पानी मात्र खाँदै, इन्द्रियसँग नहार्ने
बन्दै सरल र सहज तरिकाले घुमिरहने गर्नू ।

**आसां महर्षिचर्याणां त्यक्तान्यतमया तनुम् ।**
**वीतशोकभयो विप्रो ब्रह्मलोके महीयते ॥३२॥**

महर्षिहरूले बताएका यिमध्ये कुनै एक नियमको पालना गर्दै देह त्याग गर्ने वानप्रस्थ
भय, शोक आदिबाट छुटी ब्रह्मलोक जान योग्य हुनेछ ।

**वनेषु च विहृत्यैवं तृतीयं भागमायुषः ।**

**चतुर्थमायुषो भागं त्यक्त्वा सङ्गान्परिव्रजेत् ॥३३॥**

यसरी पचास वर्षदेखि पचहत्तर वर्षसम्म बनमा बिताएपछि अन्तिम पच्चीस वर्ष सन्यासी हुनू ।

**आश्रमादाश्रमं गत्वा हुतहोमो जितेन्द्रियः ।**
**भिक्षाबलिपरिश्रान्तः प्रव्रजन्प्रेत्य वर्धते ॥३४॥**

नियमानुसार आश्रम बदल्दै जितेन्द्रिय भई होम, भिक्षा, बलि आदिले थकित
भएको व्यक्ति मोक्षका लागि योग्य हुन्छ ।

**ऋणानि त्रीण्यपाकृत्य मनो मोक्षे निवेशयेत् ।**
**अनपाकृत्य मोक्षं तु सेवमानो व्रजत्यधः ॥३५॥**

तीन प्रकारका ऋणबाट मुक्त भएपछि मानिसले मनलाई मोक्ष हुनतिर लगाउनु पर्दछ ।

तीन प्रकारका ऋण नतिरी मोक्ष हुन खोज्ने मानिस पतनतिर लाग्दछ ।

**अधीत्य विधिवद्वेदान्पुत्रांश्चोत्पाद्य धर्मतः ।**
**इष्ट्वा च शक्तितो यज्ञैर्मनो मोक्षे निवेशयेत् ॥३६॥**

विधिपूर्वक वेदहरू पढी, धर्म अनुसार सन्तान जन्माई, गच्छे अनुसार यज्ञ गरी
अनि मात्र मनलाई मोक्षको मार्गमा लैजानू ।

**अनधीत्य द्विजो वेदाननुत्पाद्य तथा प्रजाम् ।**
**अनिष्ट्वा चैव यज्ञैश्च मोक्षमिच्छन्व्रजत्यधः ॥३७॥**

वेदको अध्ययन नगरी, सन्तान नपाई तथा यज्ञ-होम नगरी (तीन थरीका ऋणबाट
ऋणमुक्त नभई) मोक्षको प्रयत्न गर्ने मुर्खले आफ्नो अधोगति नै गर्दछ ।

**प्राजापत्यं निरुप्येष्टिं सर्ववेदसदक्षिणाम् ।**

**आत्मन्यग्नीन्समारोप्य ब्राह्मणः प्रव्रजेद्गृहात् ॥३८॥**

सर्वस्व नै दक्षिणामा दिइने प्रजापति देवताको यज्ञ गरी आत्मालाई समेत अग्निमा
समारोपण गर्दै ब्राह्मणले वानप्रस्थ आश्रमबाट सन्यासाश्रममा प्रवेश गर्नू ।

**यो दत्त्वा सर्वभूतेभ्यः प्रव्रजत्यभयं गृहात् ।**
**तस्य तेजोमया लोका भवन्ति ब्रह्मवादिनः ॥३९॥**

जो मानिस सबै प्राणीलाई अभयदान दिँदै गृहबाट चौथो आश्रममा प्रवेश गर्दछ,
त्यस्तो ब्रह्मवादीले देदीप्यमान लोक पाउँदछ ।

**यस्मादण्वपि भूतानां द्विजान्नोत्पद्यते भयम् ।**
**तस्य देहाद्विमुक्तस्य भयं नास्ति कुतश्चन ॥४०॥**

जुन् द्विजबाट सामान्यभन्दा सामान्य जीवलाई पनि कुनै किसिमको डर हुँदैन
त्यस्तो व्यक्तिलाई देह त्याग गरेपछि कतै कुनै डर हुँदैन ।

**अगारादभिनिष्क्रान्तः पवित्रोपचितो मुनिः ।**
**समुपोढेषु कामेषु निरपेक्षः परिव्रजेत् ॥४१॥**

गृहस्थाश्रमबाट वानप्रस्थाश्रममा छिरेको व्यक्तिले आफ्ना आचार र विचार पवित्र राख्दै कुनै पनि कार्य (चाहे त्यो उत्तम कार्य नै किन नहोस्) मा पनि रुचि वा ध्यान नलगाउँदै तटस्थ भएर सन्यासाश्रममा प्रवेश गर्नू ।

**एक एव चरेन्नित्यं सिद्ध्यर्थं असहायवान् ।**
**सिद्धमेकस्य संपश्यन्न जहाति न हीयते ॥४२॥**

सङ्गत त्यागी सधैं एक्लै विचरण गर्नू, एकान्तमा बस्नू । उसले यसरी अभ्यास गर्नू कि सबै कुरा उसले छोड्दै गएको होइन कि ती कुराले नै स्वतः उसलाई छोडिरहेका हुन् ।



**अनग्निरनिकेतः स्याद्ग्राममन्नार्थमाश्रयेत् ।**
**उपेक्षकोऽसंकुसुको मुनिर्भावसमाहितः ॥४३॥**

सन्यासीले घरगृहस्थीका साथै यज्ञका लागि आवश्यक पर्ने साधन र अग्निलाई समेत परित्याग गर्नुपर्दछ । कुनै गाउँ विशेषलाई स्वार्थवश भिक्षा माग्ने केन्द्र बनाउनु हुँदैन । सुख र दुःखलाई समान ठान्दै भविष्यको चिन्ता छाडी वर्तमानमा सन्तोष लिनु पर्दछ ।

**कपालं वृक्षमूलानि कुचेलमसहायता ।**
**समता चैव सर्वस्मिन्नेतन्मुक्तस्य लक्षणम् ॥४४॥**

सन्यासीले खोपडीलाई भाँडाकुँडा, रुखको फेदलाई घर र मैला लुगालाई पहिरन बनाउनू । कसैलाई सहयोग नगर्ने खालको एकाकी जीवन बिताउनू । सबैलाई समानभावले देख्ने हुनू । यही नै मुक्ति मार्गको लक्षण हो ।

**नाभिनन्देत मरणं नाभिनन्देत जीवितम् ।**
**कालं एव प्रतीक्षेत निर्देशं भृतको यथा ॥४५॥**

बाँच्नमा सुख र मर्नमा दुःख नमान्नू । मालिकको आदेश कुरिरहेको सेवकलेझैं काल कुरेर बस्नू ।

**दृष्टिपूतं न्यसेत्पादं वस्त्रपूतं जलं पिबेत् ।**
**सत्यपूतां वदेद्वाचं मनःपूतं समाचरेत् ॥४६॥**

हेर्दा चोखो पार्ने वा चोखो हुने बाटोमा हिँड्ने गर्नू (राम्ररी हेरेर पाइला चाल्नू) । कपडाले छानेर पवित्र भएको पानी पिउने गर्नू । सत्यताले पवित्र भएको वचन बोल्ने गर्नू र मनले पवित्र भएको आचरण गर्ने गर्नू ।

**अतिवादांस्तितिक्षेत नावमन्येत कंचन ।**
**न चेमं देहमाश्रित्य वैरं कुर्वीत केनचित् ॥४७॥**



कसैले गरेको निन्दा सुनेको नसुनेझैं गर्नू, कसैलाई अपमान नगर्नू, यो शरीरको आड लिएर कसैसँग शत्रुता मोल्ने काम नगर्नू ।

**क्रुद्ध्यन्तं न प्रतिक्रुध्येदाक्रुष्टः कुशलं वदेत् ।**
**सप्तद्वारावकीर्णां च न वाचमनृतां वदेत् ॥४८॥**

रिसाउनेसँग नरिसाउनू, निन्दा गर्नेसँग पनि मिठो बोल्नू, शरीरका सात वटै छिद्र (पाँच ज्ञानेन्द्रिय, मन र बुद्धि)बाट कहिल्यै असत्य आवाज ननिकाल्नू ।

**अध्यात्मरतिरासीनो निरपेक्षो निरामिषः ।**
**आत्मनैव सहायेन सुखार्थी विचरेदिह ॥४९॥**

अध्यात्मतिर तल्लिन हुनू, तटस्थ हुनू, विषयमा नफस्नू (आमिषको यहाँ विषय अर्थ लाग्दछ) र आफ्नै प्रयाशमा आत्मकल्याण वा सुख खोज्ने बनी घुम्ने गर्नू ।

**न चोत्पातनिमित्ताभ्यां न नक्षत्राङ्गविद्यया ।**
**नानुशासनवादाभ्यां भिक्षां लिप्सेत कर्हिचित् ॥५०॥**

आफूले प्राप्त गरेको सिद्धिका सहायताबाट मानिसलाई भूकम्प आदि प्रकोपका कुरा, ज्योतिषका कुरा तथा अन्य अनुशासनादि ज्ञानका कुरा बताउँदै केही पाउने चाहना कुनै पनि हालतमा नगर्नू ।

**न तापसैर्ब्राह्मणैर्वा वयोभिरपि वा श्वभिः ।**
**आकीर्णं भिक्षुकैर्वाऽन्यैरगारमुपसंव्रजेत् ॥५१॥**

सन्यासीले तपस्वीहरू, ब्राह्मणहरू, वृद्धहरू, पशुपंक्षी तथा भिक्षुकहरूले घेरिएका घरमा गएर गृहस्थीलाई वाक्कदिक्क नबनाउनू ।

**क्लृप्तकेशनखश्मश्रुः पात्री दण्डी कुसुम्भवान् ।**
**विचरेन्नियतो नित्यं सर्वभूतान्यपीडयन् ॥५२॥**



सन्यासीले कपाल, नङ, दाह्री काटी (वा खौरी), एउटा हातमा लौरो र अर्को हातमा खप्पर लिई, जोगी-वस्त्र लगाई, इन्द्रियलाई नियन्त्रण गर्दै र कुनै जीवलाई पनि कुनै किसिमको दुःख नदिँदै घुम्ने गर्नु पर्दछ ।

**अतैजसानि पात्राणि तस्य स्युर्निर्व्रणानि च ।**
**तेषामद्भिः स्मृतं शौचं चमसानामिवाध्वरे ॥५३॥**

सन्यासीले कुनै पनि धातुका भाँडा प्रयोग गर्नु हुन्न । जे भाँडा प्रयोग गरिन्छ त्यो टुटेको वा फुटेको पनि हुनु हुँदैन । उसले प्रयोग गर्ने भाँडा यज्ञका सुरो आदि जस्तै जलले पखाल्नाले नै शुद्ध हुन्छन् ।

**अलाबुं दारुपात्रं च मृण्मयं वैदलं तथा ।**
**एतानि यतिपात्राणि मनुः स्वायम्भुवोऽब्रवीत् ॥५४॥**

सन्यासीसँग तुम्बाका वा काठका वा माटाका वा बाँसका भाँडा नै हुनुपर्दछ
भनेर स्वायम्भुव मनुले बताउनु भएको छ ।

**एककालं चरेद्भैक्षं न प्रसज्जेत विस्तरे ।**
**भैक्षप्रसक्तो हि यतिर्विषयेष्वपि सज्जति ॥५५॥**

एकपटक मात्र भिक्षा माग्ने गर्नू । धेरैमा आशक्त नहुनू । धेरै भिक्षामा आशक्ति भएको सन्यासी
अरु विषयमा पनि आशक्त हुने गर्दछ ।

**विधूमे सन्नमुसले व्यङ्गारे भुक्तवज्जने ।**
**वृत्ते शरावसंपाते भिक्षां नित्यं यतिश्चरेत् ॥५६॥**

भान्छाबाट निस्कने धुवाँ निस्कन बन्द भइसकेको कुट्ने-पिँध्ने आदि काम सकिसकेको, आगो
निभाइ सकिएको, गृहस्थले खानपिन गरिसकेको र भान्छामा लगेर भाँडावर्तन थन्क्याइ सकेको

गृहस्थका घरमा गएर सन्यासीले भिक्षा माग्ने गर्नू ।

**अलाभे न विषादी स्याल्लाभे चैव न हर्षयेत् ।**
**प्राणयात्रिकमात्रः स्यान्मात्रासङ्गाद्विनिर्गतः ॥५७॥**

भिक्षा नपाउँदा दिक्क नमान्नू, पाए पनि खुशी नहुनू । बाँच्ने उपाय मात्र
गर्नू । विषयवासनामा नफस्नू ।

**अभिपूजितलाभांस्तु जुगुप्सेतैव सर्वशः ।**
**अभिपूजितलाभैश्च यतिर्मुक्तोऽपि बध्यते ॥५८॥**

सत्कारपूर्वक दिइएका खानेकुरा पाउँदा सन्यासी खुशी नहुनू । किन कि यसरी भिक्षा दिनेको
माया र ममताले गर्दा मुक्त सन्यासी पनि पुनः बन्धनमा पर्ने गर्दछ ।

**अल्पान्नाभ्यवहारेण रहःस्थानासनेन च ।**
**ह्रियमाणानि विषयैरिन्द्रियाणि निवर्तयेत् ॥५९॥**

सन्यासीले थोरै भोजन, निर्जन स्थल र निर्जन वासस्थान मार्फत विषयबाट तानिएका आफ्ना इन्द्रियलाई रोक्नु पर्दछ ।

**इन्द्रियाणां निरोधेन रागद्वेषक्षयेण च ।**
**अहिंसया च भूतानाममृतत्वाय कल्पते ॥६०॥**

इन्द्रियलाई नियन्त्रण गर्नाले, रागद्वेष आदिलाई हटाउनाले र हिँसा नगर्नाले सन्यासी मोक्षका लागि योग्य हुने गर्दछ ।

**अवेक्षेत गतीर्नृणां कर्मदोषसमुद्भवाः ।**
**निरये चैव पतनं यातनाश्च यमक्षये ॥६१॥**



मानिसले गर्ने कर्मको दोषले उत्पन्न हुने तिनको अवस्थालाई गहिरिएर हेर्नू । नरकमा पर्ने, यमयातना आदि जस्ता वैराग्यवर्धक शिक्षालाई सधैं चिन्तन गर्नू ।

**विप्रयोगं प्रियैश्चैव संयोगं च तथाऽप्रियैः ।**
**जरया चाभिभवनं व्याधिभिश्चोपपीडनम् ॥६२॥**

प्रियसँग हुने विछोड, अप्रियसँग हुने मिलन, बुढ्यौलीको मार, रोगले हुने पीडा आदिका बारेमा पनि बारम्बार चिन्तनमनन गर्नू ।

**देहादुत्क्रमणं चाष्मात्पुनर्गर्भे च संभवम् ।**
**योनिकोटिसहस्रेषु सृतीश्चास्यान्तरात्मनः ॥६३॥**

शरीरबाट प्राण निस्कने र फेरी शरीरभित्र छिर्ने कुरा, हजारौं करोड जुनिका कुरा,..।

**अधर्मप्रभवं चैव दुःखयोगं शरीरिणाम् ।**
**धर्मार्थप्रभवं चैव सुखसंयोगमक्षयम् ॥६४॥**

शरीरधारीलाई अधर्मले हुने दुःख तथा धर्म र अर्थबाट हुने अक्षय सुख आदिका बारेमा पनि चिन्तन गर्नू ।

**सूक्ष्मतां चान्ववेक्षेत योगेन परमात्मनः ।**
**देहेषु चैवोपपत्तिमुत्तमेष्वधमेषु च ॥६५॥**

योग मार्फत परमात्माको सूक्ष्मरूपलाई ध्यान गर्नू । कर्मफलको भोग गर्न जीवले लिने उत्तम तथा अधम योनिका बारेमा पनि चिन्तनमनन गर्नू ।

**दूषितोऽपि चरेद्धर्मं यत्रतत्राश्रमे रतः ।**
**समः सर्वेषु भूतेषु न लिङ्गं धर्मकारणम् ॥६६॥**



मान्दै आएको आश्रम-धर्ममा कुनै दोष देखिए पनि जुनसुकै आश्रमकाले धर्मलाई दृढतापूर्वक पालना गर्नू । यसले कुनै वर्णको अपेक्षा गर्दैन ।

**फलं कतकवृक्षस्य यद्यप्यम्बुप्रसादकम् ।**
**न नामग्रहणादेव तस्य वारि प्रसीदति ॥६७॥**

निर्मलीको नाम लिएर होइन त्यो फल पानीमा हालेर पानी शुद्ध भएझैं धर्मविज्ञताले होइन धर्माचरणले फल पाइन्छ ।

**संरक्षणार्थं जन्तूनां रात्रावहनि वा सदा ।**
**शरीरस्यात्यये चैव समीक्ष्य वसुधां चरेत् ॥६८॥**

रातमा पनि कमिला आदि जीवजन्तुको रक्षाका लागि शरीरलाई कष्ट भएपनि सधैं भुइँतिर हेरेर हिँड्ने गर्नू ।

**अह्ना रात्र्या च याञ्जन्तून्हिनस्त्यज्ञानतो यतिः ।**
**तेषां स्नात्वा विशुद्ध्यर्थं प्राणायामान् षडाचरेत्॥६९॥**

सन्यासीबाट रातमा वा दिनमा जेजति जीव मारिन पुग्दछन् त्यो पापबाट मुक्त हुन उसले नुहाएर छ पटक प्राणायाम गर्नु पर्दछ ।

**प्राणायामा ब्राह्मणस्य त्रयोऽपि विधिवत्कृताः ।**
**व्याहृतिप्रणवैर्युक्ता विज्ञेयं परमं तपः ॥७०॥**

ॐ र व्याहृति सहित विधिपूर्वक गरिएको तीन प्राणायामलाई ब्राह्मणको ठूलो तपस्या हो भनी जान्नू ।

**दह्यन्ते ध्यायमानानां धातूनां हि यथा मलाः ।**
**तथेन्द्रियाणां दह्यन्ते दोषाःप्राणस्य निग्रहात्॥७०॥**



सुन-चाँदी आदि धातु आगोले शुद्ध भएझैं प्राणायामबाट शरीरका इन्द्रियहरु विकार रहित भई शुद्ध हुन्छन् ।

**प्राणायमैर्दहेद्दोषान्धारणाभिश्च किल्बिषम् ।**
**प्रत्याहारेण संसर्गान्ध्यानेनानीश्वरान्गुणान्॥७२॥**

प्रणायामले राग आदि दोषलाई र धारणले पापलाई, इन्द्रिय नियन्त्रणले विषय-संसर्गलाई र ध्यानले काम, क्रोध आदिलाई जलाउनू ।

**उच्चावचेषु भूतेषु दुर्ज्ञेयामकृतात्मभिः ।**
**ध्यानयोगेन संपश्येद्गतिमस्यान्तरात्मनः ॥७३॥**

आत्मा शुद्ध नहुनेले नदेख्ने तथा जीवले कर्म फल अनुसार पाउने, राम्रा र नराम्रा जुनिलाई सन्यासीले ध्यान गरेर हेर्नू (वा थाहा पाउनू) ।

**सम्यग्दर्शनसंपन्नः कर्मभिर्न निबध्यते ।**
**दर्शनेन विहीनस्तु संसारं प्रतिपद्यते ॥७४॥**

ब्रह्म (आत्मज्ञान) लाई पाउने मानिस कर्मबन्धनमा बाँधिदैन । जसले आत्मज्ञान पाउँदैन उसले यो सांसारिक बन्धन पाउने गर्दछ ।

**अहिंसयेन्द्रियासङ्गैर्वैदिकैश्चैव कर्मभिः ।**
**तपसश्चरणैश्चोग्रैः साधयन्तीह तत्पदम् ॥७५॥**

हिंसा नगर्नाले, इन्द्रिहरूलाई विषयवासनामा नफँसाउनाले र वैदिक विधि अनुसारका कर्म एवं कठोर तपस्या गर्नाले मानिसले आत्मज्ञान (ब्रह्मपद) प्राप्त गर्दछ ।

**अस्थिस्थूणं स्नायुयुतं मांसशोणितलेपनम् ।**
**चर्मावनद्धं दुर्गन्धि पूर्णं मूत्रपुरीषयोः ॥७६॥**



हाडरूपी खम्बामा स्नायुरूपी डोरीले बाँधिएको, रगत र मासुले लतपतिएको, छालाले छोपिएको, मलमूत्र गनाउने,..।

**जराशोकसमाविष्टं रोगायतनमातुरम् ।**
**रजस्वलमनित्यं च भूतावासमिमं त्यजेत् ॥७७॥**

बुढचौली र शोकले युक्त, रोगको घर, भोकप्यासले हरदम सताउने, रजस्वलाको रगत जस्तै मलीन, अनित्य र पञ्चमहाभूतको घर यस्तो जुन शरीर छ त्यसलाई छाड्नू (अथवा यस्तो उपाय गर्नु जसले गर्दा फेरी शरीर नबनोस्) ।

**नदीकूलं यथा वृक्षो वृक्षं वा शकुनिर्यथा ।**
**तथा त्यजन्निमं देहं कृच्छ्राद्ग्राहाद्विमुच्यते ॥७८॥**

जसरी नदी किनारलाई रुखले र रुखलाई चराले छोड्ने गर्दछ त्यसरी नै सन्यासीले

आफ्नो शरीरको माया गर्न छाड्नू । यसो गर्नाले उ कठिन संसाररूपी गोहीको
मुखबाट उम्कन सफल हुन्छ ।

**प्रियेषु स्वेषु सुकृतं अप्रियेषु च दुष्कृतम् ।**
**विसृज्य ध्यानयोगेन ब्रह्माभ्येति सनातनम् ॥७९॥**

आफ्नो प्रियतालाई पूर्वजन्मको सुकर्मको र अप्रियतालाई पूर्वजन्मको दुष्कर्मको फल सम्झी
त्यसबाट हुने राग वा द्वेषलाई छाड्नू । आफ्नो भलो गर्नेलाई माया र कुभलो
गर्नेलाई हैँला नगर्नू । यस्तो ध्यानयोगले सनातन परब्रह्मलाई पाउन सकिन्छ ।

**यदा भावेन भवति सर्वभावेषु निःस्पृहः ।**
**तदा सुखमवाप्नोति प्रेत्य चेह च शाश्वतम् ॥८०॥**

जब विषयका दोष थाहा पाई सबै (वा कुनै पनि) पदार्थप्रति हुने चाहना वा लोभ बाँकी
रहन्न तब यो लोक र परलोकमा अनन्त सुखको अनुभव (वा प्राप्ति) हुन थाल्दछ ।



**अनेन विधिना सर्वांस्त्यक्त्वा सङ्गञ्छनैः शनैः ।**
**सर्वद्वन्द्वविनिर्मुक्तो ब्रह्मण्येवावतिष्ठते ॥८१॥**

यो विधिले क्रमशः सबै प्रकारमा माया, ममता बिस्तारै त्यागी मान
अपमानबाट पर भएको सन्यासी ब्रह्ममै मिसिन पुग्दछ ।

**ध्यानिकं सर्वमेवैतद्यदेतदभिशब्दितम् ।**
**न ह्यनध्यात्मवित्कश्चित्क्रियाफलमुपाश्नुते ॥८२॥**

माया, ममता त्याग्ने जुन कुरा गरियो, त्यो पूरा ध्यानमग्न भएपछि मात्र सम्भव हुन्छ ।
आत्माको ध्यान नगर्ने वा गर्न नसक्ने सन्यासीले विषय-बन्धन त्याग्न
नसक्ने हुनाले यि कुनै पनि फल पाउन सक्दैन ।

**अधियज्ञं ब्रह्म जपेदाधिदैविकमेव च ।**
**आध्यात्मिकं च सततं वेदान्ताभिहितं च यत् ॥८३॥**

यज्ञ, देवता र आत्माका बारेमा लेखिएका वेद र वेदान्तका वाक्य निरन्तर जप्नू र ती वाक्यलाई चिन्तनमनन गर्नू ।

**इदं शरणमज्ञानामिदमेव विजानताम् ।**
**इदमन्विच्छतां स्वर्गमिदमानन्त्यमिच्छताम् ॥८४॥**

वेद आत्मज्ञान जान्ने नजान्ने दुबैका लागि हितकारी हुन्छ । यो स्वर्ग वा मोक्ष चाहनेका लागि पनि हितकारी हुन्छ । (वेदबाट सबै कुरा पाइन्छ) ।

**अनेन क्रमयोगेन परिव्रजति यो द्विजः ।**
**स विधूयेह पाप्मानं परं ब्रह्माधिगच्छति ॥८५॥**



यो क्रमले जसले सन्यासाश्रम ग्रहण गर्दछ, उसले यसलोकमा पाप नाश गरी मरणोपरान्त मोक्ष हुन्छ ।

**एष धर्मोऽनुशिष्टो वो यतीनां नियतात्मनाम् ।**
**वेदसंन्यासिकानां तु कर्मयोगं निबोधत ॥८६॥**

सन्यासी र जितेन्द्रियका धर्मका बारेमा मैले हजुरहरूलाई बताएँ । अब वेदसन्यासीका कर्मयोगका बारेमा बताउँदछु ।

**ब्रह्मचारी गृहस्थश्च वानप्रस्थो यतिस्तथा ।**
**एते गृहस्थप्रभवाश्चत्वारः पृथगाश्रमाः ॥८७॥**

ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र सन्यास-यी चार वटै आश्रम गृहस्थ (वा गृहस्थाश्रम) बाट बेग्लाबेग्लै उत्पन्न हुने आश्रमहरू हुन् ।

**सर्वेऽपि क्रमशस्त्वेते यथाशास्त्रं निषेविताः ।**
**यथोक्तकारिणं विप्रं नयन्ति परमां गतिम् ॥८८॥**

यी सबै आश्रम शास्त्र एवं विधि अनुसार क्रमैले गर्ने ब्राह्मण मोक्ष हुन्छ ।

**सर्वेषामपि चैतेषां वेदस्मृतिविधानतः ।**
**गृहस्थ उच्यते श्रेष्ठः स त्रीनेतान्बिभर्ति हि ॥८९॥**

यी सबै आश्रममध्ये वेद र स्मृतिले गृहस्थाश्रमलाई श्रेष्ठ आश्रम भनी बताएका छन् । किन कि यसैले अरु तीन आश्रमकालाई पाल्दछ ।

**यथा नदीनदाः सर्वे सागरे यान्ति संस्थितिम् ।**
**तथैवाश्रमिणः सर्वे गृहस्थे यान्ति संस्थितिम् ॥९०॥**

जसरी सबै नदी र खोला गएर समुद्रमा अडिन्छन् त्यसरी नै सबै आश्रमका मानिस गृहस्थका आश्रयमा गएर अडिन्छन् ।



**चतुर्भिरपि चैवैतैर्नित्यमाश्रमभिर्द्विजैः ।**
**दशलक्षणको धर्मः सेवितव्यः प्रयत्नतः ॥९१॥**

चारै आश्रमका द्विजले धर्मका यी (तल उल्लेखित) दश लक्षण पालनामा सचेत रहनू ।

**धृतिः क्षमा दमोऽस्तेयं शौचमिन्द्रियनिग्रहः ।**
**धीर्विद्या सत्यमक्रोधो दशकं धर्मलक्षणम् ॥९२॥**

धैर्यता, क्षमा, मन-नियन्त्रण, चोरी नगर्नु, शुद्धता, इन्द्रियलाई नियन्त्रण, बुद्धिलाई शास्त्रोन्मुख बनाउनु, विद्या आर्जन गर्नु, मन-वचन-कर्म एकरुपी बनाउनु र रिस नगर्नु : यी दश धर्मका लक्षण हुन् ।

**दश लक्षणानि धर्मस्य ये विप्राः समधीयते ।
अधीत्य चानुवर्तन्ते ते यान्ति परमां गतिम् ॥९३॥**

जो ब्राह्मण धर्मका यी दश लक्षण पढी सो अनुसारका आचरण गर्दछन्, ती मोक्ष हुन्छन् ।

**दशलक्षणकं धर्मं अनुतिष्ठन्समाहितः ।
वेदान्तं विधिवच्छ्रुत्वा संन्यसेदनृणो द्विजः ॥९४॥**

तीन थरीका ऋणबाट मुक्त भई स्वस्थ चित्तले दश लक्षणका धर्म पालना गर्दै,
विधिपूर्वक वेदान्त सुन्दै सन्याश्राश्रम ग्रहण गर्नू ।

**संन्यस्य सर्वकर्माणि कर्मदोषानपानुदन् ।
नियतो वेदमभ्यस्य पुत्रैश्वर्ये सुखं वसेत् ॥९५॥**

कर्मजन्य पाप हुने सबै खाले गृहस्थ कर्म त्यागी पापलाई पखाल्दै जितेन्द्रिय भई,
वेदको अभ्यास गर्दै, पुत्रको ऐश्वर्यमा सुखपूर्वक बस्नू ।

**एवं संन्यस्य कर्माणि स्वकार्यपरमोऽस्पृहः ।
संन्यासेनापहत्यैनः प्राप्नोति परमां गतिम् ॥९६॥**

यसरी कर्मत्यागी आत्मध्यानमा तल्लिन भएको तटस्थ (निःस्पृह)
सन्यासी पापबाट मुक्त भई मोक्ष हुन्छ ।

**एष वोऽभिहितो धर्मो ब्राह्मणस्य चतुर्विधः ।
पुण्योऽक्षयफलः प्रेत्य राज्ञां धर्मं निबोधत ॥९७॥**

हे ऋषिगण ! मैले हजुरहरूलाई परलोकमा पुण्य र अक्षय फल दिने ब्राह्मणका चार प्रकारका
धर्मका बारेमा बताएँ । अब राजाका धर्मका बारेमा सुन्नु होस् ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां षष्ठोऽध्यायः ॥६॥**

**मनुस्मृति, छैटौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

**शुरुदेखिको श्लोकको संख्याः-१,०८३+९७=१,१८०**

# ॥ अथ सप्तमोऽध्यायः ॥

## (राजाका धर्म)

**राजधर्मान्प्रवक्ष्यामि यथावृत्तो भवेन्नृपः ।**
**संभवश्च यथा तस्य सिद्धिश्च परमा यथा ॥१॥**

राजा कस्तो आचरण गर्नें हुनुपर्दछ भन्ने राजधर्म, राजाको उत्पत्ति र राजाका सिद्धिका बारेमा अब यसपछि बताउनेछु ।

**ब्राह्मं प्राप्तेन संस्कारं क्षत्रियेण यथाविधि ।**
**सर्वस्यास्य यथान्यायं कर्तव्यं परिरक्षणम् ॥२॥**

ब्राह्मण मार्फत उपनयन, राज्याभिषेक आदि संस्कार पाइसकेपछि क्षत्रिय राजाले पूरै देशलाई न्यायपूर्वक रक्षा गर्नुपर्दछ ।



**अराजके हि लोकेऽस्मिन्सर्वतो विद्रुतो भयात् ।**
**रक्षार्थमस्य सर्वस्य राजानमसृजत्प्रभुः ॥३॥**

राजा नहुँदा भयका कारण चारैतिर लोकमा विद्रोह (कोलाहल) मच्चिएकाले सबैका रक्षा गर्न ईश्वरले राजाको सृष्टि गरेका हुन् ।

**इन्द्रानिलयमार्काणां अग्नेश्च वरुणस्य च ।**
**चन्द्रवित्तेशयोश्चैव मात्रा निर्हृत्य शाश्वतीः ॥४॥**

इन्द्र, वायु, यम, सूर्य, अग्नि, वरुण, चन्द्र र कुबेरको सार-अंश निकाली...।

**यस्मादेषां सुरेन्द्राणां मात्राभ्यो निर्मितो नृपः ।**
**तस्मादभिभवत्येष सर्वभूतानि तेजसा ॥५॥**

यही अंशको मात्राबाट राजा बनाइएका हुनाले उ आफ्नो तेजले सबै प्राणीलाई दबाउन वा वशमा पार्न सक्षम हुने गर्दछ ।

**तपत्यादित्यवच्चैषां चक्षूंषि च मनांसि च ।**
**न चैनं भुवि शक्नोति कश्चिदप्यभिवीक्षितुम् ॥६॥**

राजालाई हेर्ने मानिसका आँखा र मनले उनको सूर्यसमान तेज सहन नसक्ने हुन्छ, त्यसैले कोही पनि राजालाई आँखा जुधाएर हेर्न सक्दैनन् ।

**सोऽग्निर्भवति वायुश्च सोऽर्कः सोमः स धर्मराट् ।**
**स कुबेरः स वरुणः स महेन्द्रः प्रभावतः ॥७॥**

राजामा अग्नि, वायु, सूर्य, चन्द्रमा, यम, कुबेर, वरुण र इन्द्रको प्रभाव रहेको हुन्छ ।

**बालोऽपि नावमान्तव्यो मनुष्य इति भूमिपः ।**

**महती देवता ह्येषा नररूपेण तिष्ठति ॥८॥**

सानै भएपनि मानिस ठानी राजा अपमान गर्न योग्य हुँदैनन् । किन कि उनी ठूला देवता मानिसका रूपमा रहेका हुन् ।

**एकमेव दहत्यग्निर्नरं दुरुपसर्पिणम् ।**
**कुलं दहति राजाग्निः सपशुद्रव्यसंचयम् ॥९॥**

आफूमाथि अन्धाधुन्ध हिँड्ने व्यक्तिलाई मात्र आगोले जलाउँदछ तर राजामाथि अन्धाधुन्ध व्यवहार गर्नेको कुल नै पशु र धन सहित राजाले नष्ट पारी दिन्छन् ।

**कार्यं सोऽवेक्ष्य शक्तिं च देशकालौ च तत्त्वतः ।**
**कुरुते धर्मसिद्ध्यर्थं विश्वरूपं पुनः पुनः ॥१०॥**

कार्यको प्रकृति, शक्ति, स्थान र समयलाई राम्ररी हेरी धर्मसिद्ध गर्न
राजाले पटकपटक अनेक थरी रूप धारण गर्दछ ।

**यस्य प्रसादे पद्मा श्रीर्विजयश्च पराक्रमे ।**
**मृत्युश्च वसति क्रोधे सर्वतेजोमयो हि सः ॥११॥**

जसको प्रसन्नतामा लक्ष्मीको वास हुन्छ, जसको पराक्रममा विजय बसेको हुन्छ अनि जसको
क्रोधमा मृत्यु बसेको हुन्छ, ती राजा सबै तेजले युक्त छन् ।

**तं यस्तु द्वेष्टि संमोहात्स विनश्यत्यसंशयम् ।**
**तस्य ह्याशु विनाशाय राजा प्रकुरुते मनः ॥१२॥**

जसले अनजानमा पनि राजालाई अप्रसन्न पार्दछ, निश्चय नै उ नासिन्छ, किन कि
उसलाई चाँडै सिध्याउनतिर राजाको मन लाग्ने गर्दछ ।



**तस्माद्धर्मं यमिष्टेषु स व्यवस्येन्नराधिपः ।**
**अनिष्टं चाप्यनिष्टेषु तं धर्मं न विचालयेत् ॥१३॥**

यसैले धर्मपूर्वक अनिष्ट हेरी राजाले जे नियमकानुन बनाउँदछन् त्यसलाई अवज्ञा नगर्नू ।

**तस्यार्थे सर्वभूतानां गोप्तारं धर्ममात्मजम् ।**
**ब्रह्मतेजोमयं दण्डं असृजत्पूर्वमीश्वरः ॥१४॥**

उनका लागि प्राणीमात्रको रक्षाका खातिर धर्मरूपी ब्रह्मतेजले युक्त दण्ड ईश्वरले पहिले बनाए ।

**तस्य सर्वाणि भूतानि स्थावराणि चराणि च ।**
**भयाद्भोगाय कल्पन्ते स्वधर्मान्न चलन्ति च ॥१५॥**

त्यही दण्डको डरले सारा चल अचल जीव आआफ्ना धर्ममा अडिग भएर रहने गर्दछन् ।

**तं देशकालौ शक्तिं च विद्यां चावेक्ष्य तत्त्वतः ।**
**यथार्हतः संप्रणयेन्नरेष्वन्यायवर्तिषु ॥१६॥**

राजाले धर्मपूर्वक स्थान, समय, शक्ति र विद्या हेरी अन्यायको बाटोमा हिँडेका
मानिसलाई दण्ड दिउन् ।

**स राजा पुरुषो दण्डः स नेता शासिता च सः ।**
**चतुर्णां आश्रमाणां च धर्मस्य प्रतिभूः स्मृतः ॥१७॥**

चारै वर्ण र चारै आश्रम सम्बन्धी व्यवस्था कायम राख्ने दायित्व एवं श्रेय दण्डलाई प्राप्त छ ।
दण्ड नै राजा हो, दण्ड नै पुरुष (अस्तित्व राख्ने) हो, दण्ड नै नेता हो र दण्ड नै शाषक हो ।

**दण्डः शास्ति प्रजाः सर्वा दण्ड एवाभिरक्षति ।**
**दण्डः सुप्तेषु जागर्ति दण्डं धर्मं विदुर्बुधाः ॥१८॥**



दण्डले नै सारा प्रजामाथि शासन गर्दछ, दण्डले नै तिनलाई रक्षा पनि गर्दछ ।
सबै सुतिरहँदा पनि दण्ड जागिरहन्छ, विद्वानहरू दण्डलाई धर्म हो भनी जान्दछन् ।

**समीक्ष्य स धृतः सम्यक्सर्वा रञ्जयति प्रजाः ।**
**असमीक्ष्य प्रणीतस्तु विनाशयति सर्वतः ॥१९॥**

त्यो दण्ड यदि शास्त्रसम्मत छ भने त्यसले सारा प्रजालाई रक्षा गर्दछ,
छैन भने सबैतिरबाट नाश गर्दछ ।

**यदि न प्रणयेद्राजा दण्डं दण्ड्येष्वतन्द्रितः ।**
**शूले मत्स्यानिवापक्ष्यन्दुर्बलान्बलवत्तराः ॥२०॥**

जाँगरिलो राजा यदि अपराधीलाई दण्ड दिँदैन भने भालामा माछा उने
जसरी समाजमा बलियाले निर्धालाई उन्न थाल्दछन् ।

**अद्यात्काकः पुरोडाशं श्वा च लिह्याद्धविस्तथा ।**
**स्वाम्यं च न स्यात्कस्मिंश्चित्प्रवर्तेताधरोत्तरम् ॥२१॥**

(यदि राजा दण्ड दिँदैनन् भने) काग होम गर्ने कुरा खान थाल्दछ, कुकुरले चरु चाट्न थाल्नेछ, कोही कसैको मालिक हुँदैन, तलकाले माथिल्लोले गर्ने र माथिल्लोले तलकाले गर्ने काम गर्न थाल्नेछन् ।

**सर्वो दण्डजितोदलोके दुर्लभो हि शुचिर्नरः ।**
**दण्डस्य हि भयात्सर्वं जगद् भोगाय कल्पते ॥२२॥**

संसारमा स्वभावैले साधु मुश्किलले भेटिएला तर अनुभवले देखाउँदछ कि दण्डको डरले नै मानिस अनुशासन, कर्तव्य र मर्यादाको पालना गरी सुखी रहन्छन् ।

**देवदानवगन्धर्वा रक्षांसि पतगोरगाः ।**
**तेऽपि भोगाय कल्पन्ते दण्डेनैव निपीडिता ॥२३॥**



मानिसको त के कुरा देवता, दानव, गन्धर्व, राक्षस, चरा र सर्प पनि दण्डको डरले नै आआफ्नो कर्तव्य-पालना गरिरहेका हुन्छन् ।

**दुष्येयुः सर्ववर्णाश्च भिद्येरन् सर्वसेतवः ।**
**सर्वलोकप्रकोपश्च भवेद्दण्डस्य विभ्रमात् ॥२४॥**

दण्डको डर नभए सबै वर्णमा दुराचार फैलिन्छ, नियम-मर्यादा तोडिन्छ, मारपिट शुरु भई उपद्रव फैलिन्छ ।

**यत्र श्यामो लोहिताक्षो दण्डश्चरति पापहा ।**
**प्रजास्तत्र न मुह्यन्ति नेता चेत्साधु पश्यति ॥२५॥**

जहाँ सज्जन शाषक मार्फत पापीहरुमाथि कालो वर्णको रातो आँखा भएको

दण्ड विचरण गर्दछ त्यहाँका जनता कहिल्यै उन्मत्त हुने गर्दैनन् ।

**तस्याहुः संप्रणेतारं राजानं सत्यवादिनम् ।**
**समीक्ष्यकारिणं प्राज्ञं धर्मकामार्थकोविदम् ॥२६॥**

सत्यवादी, सोचविचार गर्ने, बुद्धिमान् तथा धर्म, अर्थ र कामका बारेमा जान्ने
राजालाई त्यो दण्डलाई धारण गर्ने (दण्ड दिने) अधिकारी भनिन्छ ।

**तं राजा प्रणयन्सम्यक् त्रिवर्गेणाभिवर्धते ।**
**कामात्मा विषमः क्षुद्रो दण्डेनैव निहन्यते ॥२७॥**

राम्रोसँग दण्ड चलाउने राजाका धर्म, अर्थ र काम बढ्दछन् । तर, विषयलम्पट,
उल्टो हिँड्ने र क्षुद्र राजाले दण्ड चलाउन खोजे उ त्यही दण्डबाट नासिन्छ ।

**दण्डो हि सुमहत्तेजो दुर्धरश्चाकृतात्मभिः ।**

**धर्माद्विचलितं हन्ति नृपं एव सबान्धवम् ॥२८॥**

दण्ड अत्यन्त तेजिलो हुन्छ, यसलाई संस्कारहीन राजाबाट धारण गर्न सकिन्न, राजधर्म विपरीत
यसरी दण्ड धारण गरिए त्यो दण्डले नातागोता सहित राजालाई नाश गरिदिन्छ ।

**ततो दुर्गं च राष्ट्रं च लोकं च सचराचरम् ।**
**अन्तरिक्षगतांश्चैव मुनीन्देवांश्च पीडयेत् ॥२९॥**

त्यसपछि त्यो दण्डले किल्ला, देश, चर अचर जनता, आकाशका जीव,
मुनिजन र देवतालाई समेत पीडा दिन थाल्दछ ।

**सोऽसहायेन मूढेन लुब्धेनाकृतबुद्धिना ।**
**न शक्यो न्यायतो नेतुं सक्तेन विषयेषु च ॥३०॥**

सहयोगी नभएको, मूर्ख, लोभी, बुद्धिहीन र विषयलम्पट राजाबाट
त्यो दण्ड न्यायपूर्वक चल्न सक्दैन ।

**शुचिना सत्यसंधेन यथाशास्त्रानुसारिणा ।**
**प्रणेतुं शक्यते दण्डः सुसहायेन धीमता ॥३१॥**

शौच गर्ने, सत्यनिष्ठ र शास्त्र अनुसार चल्ने बुद्धिमान राजा असल सहयोगी
सहित दण्ड चलाउन सक्दछ ।

**स्वराष्ट्रे न्यायवृत्तः स्याद्भृशदण्डश्च शत्रुषु ।**
**सुहृत्स्वजिह्मः स्निग्धेषु ब्राह्मणेषु क्षमान्वितः ॥३२॥**

राजाले आफ्नो राज्यमा शास्त्र अनुसार न्यायकर्ता हुनु, शत्रुलाई कठोर दण्ड दिने हुनू,
माया गर्ने मित्रलाई कुटिल व्यवहार गर्ने नहुनू र ब्राह्मणहरु माथि क्षमाशील हुनू ।



**एवंवृत्तस्य नृपतेः शिलोञ्छेनापि जीवतः ।**
**विस्तीर्यते यशो लोके तैलबिन्दुरिवाम्भसि ॥३३॥**

सिला खोजेको अन्नले जीवन धान्ने रहेछ भनेपनि यसरी शासन गर्ने राजाको
यश पानीमा तेलको थोपा फैलिएझैं फैलने गर्दछ ।

**अतस्तु विपरीतस्य नृपतेरजितात्मनः ।**
**संक्षिप्यते यशो लोके घृतबिन्दुरिवाम्भसि ॥३४॥**

यसभन्दा विपरीत तरिकाले आचरण गर्ने विषयाशक्त राजाको ख्याती
त्यसरी नै खुम्चन्छ जसरी पानीमा घिउको थोपा खुम्चन्छ ।

**स्वे स्वे धर्मे निविष्टानां सर्वेषामनुपूर्वशः ।**
**वर्णानां आश्रमाणां च राजा सृष्टोऽभिरक्षिता ॥३५॥**

क्रमानुसार आआफ्ना धर्ममा स्थापित गराउने तथा ब्राह्मण आदि चारै वर्ण एवं ब्रह्मचर्य आदि चारै आश्रमलाई रक्षा गर्ने राजालाई ब्रह्माले सृष्टि गरेका हुन् ।

**तेन यद्यत्सभृत्येन कर्तव्यं रक्षता प्रजाः ।**
**तत्तद्वोऽहं प्रवक्ष्यामि यथावदनुपूर्वशः ॥३६॥**

यसैले आफ्ना सेवकका साथ प्रजको रक्षाका लागि राजाले के के गर्नुपर्दछ ती सबै सत्यतथ्य कुरा अब हजुरहरूका सामु बताउँदछु ।

**ब्राह्मणान्पर्युपासीत प्रातरुत्थाय पार्थिवः ।**
**त्रैविद्यवृद्धान्विदुषस्तिष्ठेत्तेषां च शासने ॥३७॥**



राजाले सधैं बिहान उठी ऋक्, साम र यजुर्वेद गरी तीन वेद जान्ने विद्वान ब्राह्मणलाई पूजा गर्नू र उनको आदेश मान्नू ।

**वृद्धांश्च नित्यं सेवेत विप्रान्वेदविदः शुचीन् ।**
**वृद्धसेवी हि सततं रक्षोभिरपि पूज्यते ॥३८॥**

वेदजान्ने वृद्ध ब्राह्मणहरूलाई सेवा गर्नु किन कि वृद्धलाई सेवा गर्नेलाई राक्षसहरू पनि सधैं पूजा गर्दछन् ।

**तेभ्योऽधिगच्छेद्विनयं विनीतात्मापि नित्यशः ।**
**विनीतात्मा हि नृपतिर्न विनश्यति कर्हिचित् ॥३९॥**

तिनको आज्ञा पालन गर्दै नित्य आत्मादेखि नै नम्र हुने गर्नू । आत्मा नम्र हुने राजा कहिल्यै नाश हुँदैन ।

**बहवोऽविनयान्नष्टा राजानः सपरिच्छदाः ।**
**वनस्था अपि राज्यानि विनयात्प्रतिपेदिरे ॥४०॥**

हात्ती, घोडा र सहयोगीले युक्त भएका राजाहरू पनि नम्र नहुनाले नासिएका छन् । राज्यच्यूत भएर वनमा पुगेका कतिपय राजाहरूले नम्रताले गर्दा पुनः राज्य पाएका छन् ।

**वेनो विनष्टोऽविनयान्नहुषश्चैव पार्थिवः ।**
**सुदासो यवनश्चैव सुमुखो निमिरेव च ॥४१॥**

राजा वेन नम्र नहुनाले नासिए । राजा नहुष पनि यसैगरी नासिए । सुदास नामका यवन राजा, सुमुख र निमिष पनि नम्र नहुनाले नष्ट भए ।

**पृथुस्तु विनयाद्राज्यं प्राप्तवान्मनुरेव च ।**
**कुबेरश्च धनैश्वर्यं ब्राह्मण्यं चैव गाधिजः ॥४२॥**



पृथु र मनु नम्रताले गर्दा राजा भए । कुबेर नम्रताले नै धनका मालिक बने । गाधीका पुत्र विश्वामित्र नम्रताले नै क्षत्रियबाट ब्राह्मणभावमा पुगे ।

**त्रैविद्येभ्यस्त्रयीं विद्यां दण्डनीतिं च शाश्वतीम् ।**
**आन्वीक्षिकीं चात्मविद्यां वार्तारम्भांश्च लोकतः ॥४३॥**

ऋक्, साम र यजु-यि तीन वेद जान्ने ब्राह्मणहरूसँग तीन वटै वेद पढ्नू । प्राचीन राजनीति (राजनैतिक इतिहास) तथा तर्कशास्त्र र ब्रह्मविद्या (अध्यात्म ज्ञान) पढ्नू । व्यवहार जान्ने मानिससँग राजाले व्यवहार शास्त्र सिक्नू ।

**इन्द्रियाणां जये योगं समातिष्ठेद्दिवानिशम् ।**
**जितेन्द्रियो हि शक्नोति वशे स्थापयितुं प्रजाः ॥४४॥**

राजाले आफ्ना इन्द्रियलाई विषय-वासनाबाट हटाउन निरन्तर प्रयत्न गर्नु पर्दछ किन कि

जितेन्द्रिय राजाले नै सारा प्रजालाई आफ्नो वशमा पार्न सक्दछ । जुन राजा आफैं विषयभोगी छ त्यसले प्रजालाई कसरी वशमा पार्ला ? ।

**दशकामसमुत्थानि तथाष्टौ क्रोधजानि च ।**
**व्यसनानि दुरन्तानि प्रयत्नेन विवर्जयेत् ॥४५॥**

कामजन्य दश र क्रोधजन्य आठ (खराब) छाड्न कठिन आदत (कुलत) प्रयत्नपूर्वक हटाउनू ।

**कामजेषु प्रसक्तो हि व्यसनेषु महीपतिः ।**
**वियुज्यतेऽर्थधर्माभ्यां क्रोधजेष्वात्मनैव तु ॥४६॥**

कामजन्य कुलतमा लागेको राजाका धर्म र धन नष्ट हुन्छ । क्रोधजन्य कुलतमा फसेको राजा स्वाभाविकरूपमा आफ्नै शरीरलाई नाश गर्दछ ।

**मृगयाक्षा दिवास्वप्नः परिवादः स्त्रियो मदः ।**

**तौर्यत्रिकं वृथाटचा च कामजो दशको गणः ॥४७॥**

(१) शिकार, (२) जुवा, (३) दिउस सुत्नु, (४) अर्काको दोषका कुरा गर्न रुचाउनु, (५) स्त्रीलम्पटता, (६) मदिराको सेवन, (७) नाच्नु, (८) गाउनु, (९) बजाउनु र (१०) यि कुरामा संलग्न हुन यताउता जानु-यी कामजन्य दश कुलत हुन् ।

**पैशुन्यं साहसं द्रोह ईर्ष्यासूयार्थदूषणम् ।**
**वाग्दण्डजं च पारुष्यं क्रोधजोऽपि गणोऽष्टकः ॥४८॥**

(१) नदेखी अरुलाई दोष लगाउनु, (२) निर्दोषीलाई दण्ड दिनु, (३) भुक्याएर मार्नु, (४) ईर्ष्या गर्नु, (५) अरुका गुणमा पनि दोष लगाउने गर्नु, (६) धनमाल चोर्नु, (७) गाली गर्नु र (८) यातना दिनु-यी आठ क्रोधजन्य कुलत हुन् ।

**द्वयोरप्येतयोर्मूलं यं सर्वे कवयो विदुः ।**
**तं यत्नेन जयेल्लोभं तज्जावेतावुभौ गणौ ॥४९॥**

कामजन्य र क्रोधजन्य कुलतको कारण लोभ हो । यसैले बल गरेर लोभ गर्नबाट आफूलाई जोगाउनू । मानिसलाई धन आदि विभिन्न कुराको लोभले गर्दा नै यी कुलत लाग्ने गर्दछ ।

**पानमक्षाः स्त्रियश्चैव मृगया च यथाक्रमम् ।**
**एतत्कष्टतमं विद्याच्चतुष्कं कामजे गणे ॥५०॥**

कामजन्य कुलतहरूमा पनि मदिरा पिउने, जुवा खेल्ने, स्त्री-सङ्गत गर्ने र शिकार खेल्ने : यी चार कुलत अत्यन्त कष्टकारी हुन्छन् भनी जान्नू ।

**दण्डस्य पातनं चैव वाक्पारुष्यार्थदूषणे ।**
**क्रोधजेऽपि गणे विद्यात्कष्टं एतत्त्रिकं सदा ॥५१॥**



क्रोधजन्य कुलतमा लौरोले हिर्काउने, कठोर वचन बोल्ने र धनमाल चोर्ने तीन कुलत अत्यन्त कष्टकारी हुन्छन् भनी जान्नू ।

**सप्तकस्यास्य वर्गस्य सर्वत्रैवानुषङ्गिणः ।**
**पूर्वं पूर्वं गुरुतरं विद्याद्व्यसनमात्मवान् ॥५२॥**

यी राज्यलाई गाँज्ने कुलतका सात वर्गमा पछिल्ला कुलतभन्दा अघिल्ला कुलत कठिन कुलत हुन् भनी विद्वानले थाहा पाउनू ।

**व्यसनस्य च मृत्योश्च व्यसनं कष्टमुच्यते ।**
**व्यसन्यधोऽधो व्रजति स्वर्यात्यव्यसनी मृतः ॥५३॥**

कुलत र मृत्युमा कुलत बढी कष्टदायक हुन्छ । कुलतमा फसेको मानिस मरेपछि नरकमा पर्दछ र नफसेको मानिस स्वर्ग जान्छ ।

**मौलाञ्छास्त्रविदः शूराँल्लब्धलक्षान्कुलोद्गतान् ।**
**सचिवान्सप्त चाष्टौ वा प्रकुर्वीत परीक्षितान् ॥५४॥**

पुस्तौंदेखि सरकारी नोकरी गर्दै आएका, शास्त्र जान्ने, बहादुर, सफलतापूर्वक उद्देश्य पूरा गर्ने र कुलीन परिवारका सात वा आठ व्यक्तिलाई राजाले मन्त्रीमा नियुक्त गर्नू ।

**अपि यत्सुकरं कर्म तदप्येकेन दुष्करम् ।**
**विशेषतोऽसहायेन किं तु राज्यं महोदयम् ॥५५॥**

जतिसुकै सहज काम भएपनि राज्यको काम एउटाले गर्न कठिन हुन्छ भने, ठूलो उपलब्धी हासिल हुने काम कसरी एउटैले गर्न सक्दछ ?

**तैः सार्धं चिन्तयेन्नित्यं सामान्यं संधिविग्रहम् ।**
**स्थानं समुदयं गुप्तिं लब्धप्रशमनानि च ॥५६॥**



ती मन्त्रिलाई साथमा लिएर राजाले सामान्य सन्धि, विग्रह आदिका बारेमा सधैं छलफल गर्ने गर्नू । देशको समृद्धि, देशको रक्षा, प्राप्त उपलब्धीको रक्षा र प्राप्त साधनको बाँडफाँडका बारेमा सधैं सरसल्लाह गर्नू ।

**तेषां स्वं स्वं अभिप्रायमुपलभ्य पृथक् पृथक् ।**
**समस्तानां च कार्येषु विदध्याद्धितमात्मनः ॥५७॥**

पहिला सबै मन्त्रिका बिचार बेग्लाबेग्लै सुनिसकेपछि फेरी सबैलाई एकैठाउँमा राखी तिनका सामूहिक धारणा बुझ्नू, त्यसपछि आफूलाई जे गर्न उचित लाग्दछ त्यही गर्नू ।

**सर्वेषां तु विशिष्टेन ब्राह्मणेन विपश्चिता ।**
**मन्त्रयेत्परमं मन्त्रं राजा षाड्गुण्यसंयुतम् ॥५८॥**

ती सबै मन्त्रीहरुमध्येमा बुद्धिमान ब्राह्मणले दिएको छ गुणले युक्त भएको

सल्लाहलाई राजाले मान्नू ।

**नित्यं तस्मिन्समाश्वस्तः सर्वकार्याणि निःक्षिपेत् ।**
**तेन सार्धं विनिश्चित्य ततः कर्म समारभेत् ॥५९॥**

त्यस्तो ब्राह्मणलाई ढुक्क भएर सबै कुराको जिम्मा दिनू । कुनै काम गर्नुपर्दा उसको सल्लाह लिएर मात्र गर्ने गर्नू ।

**अन्यानपि प्रकुर्वीत शुचीन्प्राज्ञानवस्थितान् ।**
**सम्यगर्थसमाहर्तॄनमात्यान्सुपरीक्षितान् ॥६०॥**

अरु शुद्ध चित्तका, धन सञ्चय गर्न पोख्त र बुद्धिमान व्यक्तिहरूलाई राम्ररी जाँचेर मन्त्री बनाउनू ।

**निर्वर्तेतास्य यावद्भिरितिकर्तव्यता नृभिः ।**

**तावतोऽतन्द्रितान्दक्षान्प्रकुर्वीत विचक्षणान् ॥६१॥**

राजाले आफूलाई आवश्यक पर्ने जति जाँगरिला, चलाख र बुद्धिमान सहयोगीलाई कामको जिम्मा दिनू ।

**तेषामर्थे नियुञ्जीत शूरान्दक्षान्कुलोद्गतान् ।**
**शुचीनाकरकर्मान्ते भीरूनन्तर्निवेशने ॥६२॥**

मन्त्रीहरूमध्येबाट शूर, वीर, चलाख, कुलीन, शुद्ध र लोभ नगर्ने मन्त्रीलाई अर्थ मन्त्रालय र आपूर्ति मन्त्रालय (अनाज, खानी आदि हेर्ने)को र डरछेरुवालाई दरबारमा आउने जाने कामको जिम्मा दिनू ।

**दूतं चैव प्रकुर्वीत सर्वशास्त्रविशारदम् ।**
**इङ्गिताकारचेष्टज्ञं शुचिं दक्षं कुलोद्गतम् ॥६३॥**

सबै शास्त्र जानेको, ईशाराबाटै कुरा बुझ्ने, शुद्ध, दक्ष र कुलीनलाई राजदूतमा नियुक्त गर्नू ।

**अनुरक्तः शुचिर्दक्षः स्मृतिमान्देशकालवित् ।**
**वपुष्मान्वीतभीर्वाग्मी दूतो राज्ञः प्रशस्यते ॥६४॥**

सधैं प्रसन्न हुने वा सबैलाई प्रेम गर्ने, शुद्ध चित्त भएको, दक्ष, सम्झनाशक्ति भएको, देश र समयलाई बुझ्ने, खाइलाग्दो शरीर भएको, निडर र मिलाएर कुरा गर्न जान्ने व्यक्ति राजदूतका लागि योग्य हुन्छ ।

**अमात्ये दण्ड आयत्तो दण्डे वैनयिकी क्रिया ।**
**नृपतौ कोशराष्ट्रे च दूते संधिविपर्ययौ ॥६५॥**

सेनापतिका मातहतमा चार प्रकारका (हात्ती चढ्ने, घोडा चढ्ने, रथ चढ्ने र पैदल) सेना वा दण्ड हुन्छन् वा हुन्छ । दण्ड शिक्षा वा कानुनको अधिनमा हुन्छ । राजाको अधिनमा देश हुन्छ । आपसी सम्बन्ध सुधार्ने वा बिगार्ने भन्ने कुरा दूतको अधिनमा हुन्छ ।



**दूत एव हि संधत्ते भिनत्त्येव च संहतान् ।**
**दूतस्तत्कुरुते कर्म भिद्यन्ते येन वा न वा ॥६६॥**

मेल गराउने वा फुटाउने काम दूतकै हुन्छ । दूतले मिलेर बसेकालाई अलग्याउन वा मिलेरै बस्ने बनाउन पनि सक्दछ ।

**स विद्यादस्य कृत्येषु निर्गूढेङ्गितचेष्टितैः ।**
**आकारमिङ्गितं चेष्टां भृत्येषु च चिकीर्षितम् ॥६७॥**

राजाले आफ्ना सेवकहरूप्रति के कस्तो धारणा र चाहना राख्दछ भन्ने कुरा उसका इशारा र भाव हेरी दूतले बुझ्न सक्नु पर्दछ ।

**बुद्ध्वा च सर्वं तत्त्वेन परराजचिकीर्षितम् ।**
**तथा प्रयत्नमातिष्ठेद्यथात्मानं न पीडयेत् ॥६८॥**

आफ्ना दूतबाट आफू विरुद्धका गतिविधि (वा विपक्षीका कुरा) बुझी राजाले आफूलाई पीडा नहुने गरी पाइला चाल्नु पर्दछ ।

**जाङ्गलं सस्यसंपन्नामार्यप्रायमनाविलम् ।**
**रम्यमानतसामन्तं स्वाजीव्यं देशमावसेत् ॥६९॥**

जहाँ अलिअलि घाँसपात र पानी हुन्छ, अनाज प्रशस्त हुन्छ, असल र सभ्य मानिस बढी बसेका हुन्छन्, रोगव्याधि छैन, हेर्नमा रमणीय छ, सुन्दर वृक्ष छन्, सुन्दर बजार छ, ब्यापार व्यवसाय र कृषि गरिन्छ, त्यस्तो देशमा राजाले बस्नू ।

**धनुदुर्गं महीदुर्गं अब्दुर्गं वार्क्षमेव वा ।**
**नृदुर्गं गिरिदुर्गं वा समाश्रित्य वसेत्पुरम् ॥७०॥**



धनुकिल्ला (यस्तो किल्ला जसका चारैतिर मरुभूमिमा पाँच योजनसम्म पानी हुँदैन), महीकिल्ला (यस्तो किल्ला जसको चारैतिर बाह्र हात अग्लो ढुङ्गाको पर्खाल लगाइएको हुन्छ), जलकिल्ला (यस्तो किल्ला जसको चारैतिर पानीले घेरिएको हुन्छ), वार्क्षीकिल्ला (त्यस्तो किल्ला जसको चारैतिर अति गहिरो पानी सहितको नाली हुन्छ), नृकिल्ला (यस्तो किल्ला जसको चारैतिर घनावृक्ष वा फौज हुन्छ) र गिरिकिल्ला (यस्तो किल्ला जसको चारैतिर अग्ला अग्ला पहाड हुन्छन्) मध्ये कुनै एक किल्लामा राजाले शहर बसाई आफू पनि बस्नू ।

**सर्वेण तु प्रयत्नेन गिरिदुर्गं समाश्रयेत् ।**
**एषां हि बाहुगुण्येन गिरिदुर्गं विशिष्यते ॥७१॥**

यी सबै किल्लाहरूमध्ये गिरिकिल्ला धेरै गुणले गर्दा उत्तम हुन्छ, यसैले प्रयत्नपूर्वक राजा गिरिकिल्लामा बस्नु पर्दछ ।

**त्रिण्याद्यान्याश्रितास्त्वेषां मृगगर्ताश्रयाऽप्सराः ।**
**त्रीण्युत्तराणि क्रमशः प्लवंगमनरामराः ॥७२॥**

यी किल्लामध्ये पहिलेका तीन किल्ला (धनु, मही र जल) मृग आदि जनावरका लागि हुन् । धनु मृगको, मही मुसाको र जल माछा आदिका किल्ला हुन् । पछिल्ला तीन किल्ला क्रमशः बाँदर, मानिस र देवताका किल्ला हुन् ।

**यथा दुर्गाश्रितानेतान्नोपहिंसन्ति शत्रवः ।**
**तथारयो न हिंसन्ति नृपं दुर्गसमाश्रितम् ॥७३॥**

जसरी यी किल्लामा बस्ने मृग आदि जीवलाई शिकारी आदिले मार्न सक्दैनन् त्यसरी नै महीकिल्ला (आदि) मा बस्ने राजालाई शत्रुले मार्न सक्दैनन् ।

**एकः शतं योधयति प्राकारस्थो धनुर्धरः ।**
**शतं दशसहस्राणि तस्माद्दुर्गं विधीयते ॥७४॥**



किल्लामा बसेको एउटै धनुर्धरले पनि सय जना शत्रुलाई मार्न सक्दछ, एक सय धनुर्धरले दश हजार शत्रुलाई मार्न सक्दछन् । यसैले किल्ला बनाउनु धेरै लाभदायक हुन्छ ।

**तत्स्यादायुधसंपन्नं धनधान्येन वाहनैः ।**
**ब्राह्मणैः शिल्पिभिर्यन्त्रैर्यवसेनोदकेन च ॥७५॥**

किल्लालाई हतियार, धन, अनाज, वाहन, ब्राह्मण, शिल्पकार, यन्त्र, इन्धन र जलले भरिपूर्ण बनाउनू ।

**तस्य मध्ये सुपर्याप्तं कारयेद्गृहमात्मनः ।**
**गुप्तं सर्वर्तुकं शुभ्रं जलवृक्षसमन्वितम् ॥७६॥**

त्यो किल्लाको बीचमा प्रशस्त जग्गा ओगटी आफ्नो दरबार बनाउनू । यसलाई पर्खाल

आदि लगाई सुरक्षित (गुप्त) पार्नू । सफा बनाउनू । आवश्यक जलको व्यवस्था मिलाउनू र सबै ऋतुमा हुने वृक्ष आदि लगाउनू ।

**तदध्यास्योद्वहेद्भार्यां सवर्णां लक्षणान्विताम् ।**
**कुले महति संभूतां हृद्यां रूपगुणान्वीताम् ॥७७॥**

त्यस्तो दरबार बनाई बसेपछि राजाले आफ्नै वर्णकी, लक्षणकी, ठूलो कुलमा जन्मिएकी, मनलाई लोभ्याउने खालकी, रूपवती र गुणवती स्त्रीसँग विवाह गर्नू ।

**पुरोहितं च कुर्वीत वृणुयादेव चर्त्विजम् ।**
**तेऽस्य गृह्याणि कर्माणि कुर्युर्वैतानिकानि च ॥७८॥**

पुरोहित र ऋत्विज्लाई किल्लामा राखी ती मार्फत होम, शान्तिस्वस्ति आदि गृह्यकर्म गर्नू ।

**यजेत राजा क्रतुभिर्विविधैराप्तदक्षिणैः ।**

**धर्मार्थं चैव विप्रेभ्यो दद्याद्भोगान्धनानि च ॥७९॥**

राजाले अश्वमेध आदि अनेक प्रकारका धेरै दक्षिणा दिइने खालका यज्ञहरू गर्नू । धर्मका लागि ब्राह्मणहरूलाई प्रशस्त भोग्य वस्तु र धन दान गर्नू ।

**सांवत्सरिकमाप्तैश्च राष्ट्रादाहारयेद्बलिम् ।**
**स्याच्चाम्नायपरो लोके वर्तेत पितृवन्नृषु ॥८०॥**

राजाले आफ्ना नागरिकबाट धर्म अनुसार वार्षिकरूपमा कर उठाउनु र सबै नागरिकलाई पिता सरहको व्यवहार गर्नू ।

**अध्यक्षान्विविधान्कुर्यात्तत्र तत्र विपश्चितः ।**
**तेऽस्य सर्वाण्यवेक्षेरन्नृणां कार्याणि कुर्वताम् ॥८१॥**

विभिन्न कामका लागि विभिन्न अधिकारी नियुक्ति गरी तिनलाई बेग्लाबेग्लै काममा लगाउनू ।
ती नियुक्त अधिकारीले राजकर्मचारीको कामको रेखदेख गरुन् ।

**आवृत्तानां गुरुकुलाद्विप्राणां पूजको भवेत् ।**
**नृपाणामक्षयो ह्येष निधिर्ब्राह्मोऽभिधीयते ॥८२॥**

गुरुकुलबाट वेदाध्ययन सकी फर्केका ब्राह्मणहरूलाई धनधान्यले पूजा गर्नू किन कि यिनलाई पूजा गर्नाले राजाको धनधान्य वृद्धि हुन्छ ।

**न तं स्तेना न चामित्रा हरन्ति न च नश्यति ।**
**तस्माद्राज्ञा निधातव्यो ब्राह्मणेष्वक्षयो निधिः ॥८३॥**

ब्राह्मणमा गरिएको लगानी शत्रुले लैजान सक्दैन, नाश पनि हुँदैन ।
यसैले राजाले ब्राह्मणहरूलाई प्रशस्त दान गर्नू ।



**न स्कन्दते न व्यथते न विनश्यति कर्हिचित् ।**
**वरिष्ठमअग्निहोत्रेभ्यो ब्राह्मणस्य मुखे हुतम् ॥८४॥**

आगोमा होमिएका कुरा कहिलेकाहीँ आगोमा नपरी यताउता जमिनतिर पर्न सक्दछ, कहिले सुक्छ त कहिले नष्ट हुन्छ तर गुरुकुलबाट फर्केका ब्राह्मणहरूलाई दिइएको दान कहिल्यै खेर जाँदैन । अतः होमभन्दा यस्ता ब्राह्मणलाई दिइने दान उत्तम हुन्छ ।

**सममब्राह्मणे दानं द्विगुणं ब्राह्मणब्रुवे ।**
**प्राधीते शतसाहस्रं अनन्तं वेदपारगे ॥८५॥**

आफ्नै वर्णका ब्राह्मण बाहेककालाई दिइने दान व्यवहार चलाउने कार्यमात्र (जति दान दिइएको हो त्यति मात्र फल दिने) हुन्छ । नाम मात्रका ब्राह्मणलाई दिइएको दानले दोब्बर फल दिन्छ । पढेका ब्राह्मणलाई दिइएको दान लाख गुना र वेदज्ञ ब्राह्मणलाई दिइएको दानले अनन्त फल दिन्छ ।

**पात्रस्य हि विशेषेण श्रद्दधानतयैव च ।**
**अल्पं वा बहु वा प्रेत्य दानस्यावाप्यते फलम् ॥८६॥**

श्रद्धापूर्वक सत्पात्रलाई दिइएको थोरै दानले पनि परलोकमा ठूलो फल पाइन्छ ।

**समोत्तमाधमै राजा त्वाहूतः पालयन् प्रजाः ।**
**न निवर्तेत संग्रामात्क्षात्रं धर्ममनुस्मरन् ॥८७॥**

प्रजापालनका क्रममा आफू सरहको, आफूभन्दा बलियो वा आफूभन्दा निर्धो जस्तोसुकै शत्रुसँग लड्नु परेपनि राजाले क्षत्रिय धर्म सम्झी युद्धबाट पछि नहट्नू ।

**संग्रामेष्वनिवर्तित्वं प्रजानां चैव पालनम् ।**
**शुश्रूषा ब्राह्मणानां च राज्ञां श्रेयस्करं परम् ॥८८॥**

युद्धबाट पछि नहट्ने, प्रजापालन र ब्राह्मणहरूको सेवा-यी कार्य राजाका लागि अति कल्याणदायक हुन्छन् ।



**आहवेषु मिथोऽन्योन्यं जिघांसन्तो महीक्षितः ।**
**युध्यमानाः परं शक्त्या स्वर्गं यान्त्यपराङ्मुखाः ॥८९॥**

युद्धमा प्रतिस्पर्धा गर्दै एक अर्कालाई मार्न लालायित भई पूरै तागत लगाएर लडिरहेका राजा (वा क्षत्रिय) हरू मरेपछि स्वर्ग जान्छन् ।

**न कूटैरायुधैर्हन्याद्युध्यमानो रणे रिपून् ।**
**न कर्णिभिर्नापि दिग्धैर्नाग्निज्वलिततेजनैः ॥९०॥**

युद्धमा शत्रुलाई गुप्त हतियारले वा निकाल्न कठिन हुने बाणले वा अगोमा तताइएको बाणले हानेर नमार्नू ।

**न च हन्यात्स्थलारूढं न क्लीबं न कृताञ्जलिम् ।**
**न मुक्तकेशं नासीनं न तवास्मीति वादिनम् ॥९१॥**

आफू रथमा बसेको अवस्थामा जमिनमा हुने शत्रुलाई, नपुंसकलाई, हात जोडेकालाई, मुकुट खसेर कपाल छरपष्ट भएकालाई, बसेकालाई, "म हजुरकै हुँ" भनी शरण पर्नेलाई,...।

**न सुप्तं न विसन्नाहं न नग्नं न निरायुधम् ।**
**नायुध्यमानं पश्यन्तं न परेण समागतम् ॥९२॥**

सुतिरहेकालाई, कवच फुकालेकालाई, नाङ्गालाई, हतियार नबोकेकालाई, युद्ध नगरिरहेकोलाई, दर्शकलाई र अर्कोसँग लडिरहेकोलाई नमार्नू ।

**नायुधव्यसनप्राप्तं नार्तं नातिपरिक्षतम् ।**
**न भीतं न परावृत्तं सतां धर्ममनुस्मरन् ॥९३॥**



यसैगरी, हतियार टुटफुट भएकालाई, शोकमा डुबेकोलाई, अत्यन्त घायललाई, डराएकालाई र युद्धमैदानबाट भागिरहेकालाई धर्म सम्झी राजाले नमार्नू ।

**यस्तु भीतः परावृत्तः संग्रामे हन्यते परैः ।**
**भर्तुर्यद्दुष्कृतं किंचित्तत्सर्वं प्रतिपद्यते ॥९४॥**

जुन् योद्धा युद्धमैदानबाट भाग्दै गर्दा शत्रुबाट मारिन्छ उसले आफ्नो स्वामीका सबै पाप बोक्दछ ।

**यच्चास्य सुकृतं किंचिदमुत्रार्थमुपार्जितम् ।**
**भर्ता तत्सर्वमादत्ते परावृत्तहतस्य तु ॥९५॥**

युद्धमा पीठ फर्काएर भाग्दै मारिने योद्धाले जीवित हुँदा गरेका सबै सुकर्मको फल राजाले प्राप्त गर्दछ ।

**रथाश्वं हस्तिनं छत्रं धनं धान्यं पशून्स्त्रियः ।**
**सर्वद्रव्याणि कुप्यं च यो यज्जयति तस्य तत् ॥९६॥**

रथ, घोडा, हात्ती, छाता, धन, अनाज, पशु, स्त्री, सबैखाले द्रव्य र सुनचाँदी बाहेकका धातु जसले युद्ध जित्दछ उसैको हुन्छ ।

**राज्ञश्च दद्युरुद्धारमित्येषा वैदिकी श्रुतिः ।**
**राज्ञा च सर्वयोधेभ्यो दातव्यं अपृथग्जितम् ॥९७॥**

युद्धमा जितिएका उत्तम वस्तु राजालाई दिनु भनेर वेदले भन्दछ । (अथवा) युद्धमा मिलेर लडी जितिएका सबै कुरा राजालाई दिनू र राजाले पनि ती कुरा योद्धाहरूलाई इनामकारूपमा बाँडी दिनू ।

**एषोऽनुपस्कृतः प्रोक्तो योधधर्मः सनातनः ।**
**अस्माद्धर्मान्न च्यवेत क्षत्रियो घ्नन् रणे रिपून् ॥९८॥**



यही नै सनातनरूपमा चलेको युद्धधर्म हो । रणमैदानमा शत्रुलाई मार्दै गरेको योद्धाले यो धर्मलाई नछोड्नू ।

**अलब्धं चैव लिप्सेत लब्धं रक्षेत्प्रयत्नतः ।**
**रक्षितं वर्धयेच्चैव वृद्धं पात्रेषु निक्षिपेत् ॥९९॥**

नपाइएको वा नजितिएका कुरा पाउन वा जित्न खोज्नू । पाइएका उपलब्धीलाई प्रयत्नपूर्वक रक्षा गर्नू । रक्षा गरिएका कुरालाई बढाउनु र बढेको कुरालाई सत्पात्रमा वा सत्कार्यमा लगानी गर्नू ।

**एतच्चतुर्विधं विद्यात्पुरुषार्थप्रयोजनम् ।**
**अस्य नित्यं अनुष्ठानं सम्यक्कुर्यादतन्द्रितः ॥१००॥**

यी चार कुरालाई स्वर्ग आदि प्राप्त गर्ने साधन भनी जान्नू र यसका
लागि अल्छी नगरी यी चार कर्म गर्नू ।

**अलब्धमिच्छेद्दण्डेन लब्धं रक्षेदवेक्षया ।**
**रक्षितं वर्धयेद्वृद्ध्या वृद्धं दानेन निक्षिपेत् ॥१०१॥**

नपाइएका कुरा जितेर प्राप्त गर्ने चाहना गर्नू, पाइएका कुरा राम्ररी रक्षा गर्नू, रक्षा गरेका कुरालाई बढाउनू र बढेको कुरा सुपात्रलाई दान गर्नू ।

**नित्यमुद्यतदण्डः स्यान्नित्यं विवृतपौरुषः ।**
**नित्यं संवृतसंवार्यो नित्यं छिद्रानुसार्यरेः ॥१०२॥**

देश भित्र र बाहिरका शत्रुलाई दण्ड दिन सदा चनाखो रहनू (वा युद्ध-अभ्यास गरिरहनू) ।
देखिने गरी सेनालाई तालिम दिइरहनू । सधैँ पुरुषार्थ प्रकाशित गर्नू, सम्पत्ति
गुप्त राख्नू र शत्रुका कमीकमजोरी नियाली रहनू ।



**नित्यमुद्यतदण्डस्य कृत्स्नं उद्विजते जगत् ।**
**तस्मात्सर्वाणि भूतानि दण्डेनैव प्रसाधयेत् ॥१०३॥**

सधैँ दण्ड दिन तयार रहने राजालाई देखेर प्रजाहरू खराब काम गर्न डराउँदछन्,
त्यसैले दण्ड मार्फत नै सबैलाई वशमा पार्नू ।

**अमाययैव वर्तेत न कथंचन मायया ।**
**बुध्येतारिप्रयुक्तां च मायां नित्यं स्वसंवृतः ॥१०४॥**

सधैँ छलकपट रहीत व्यवहार गर्नु नत्र विश्वास गर्न छाड्दछन् ।
आफ्नो रक्षा गर्दै शत्रुका छलकपट थाहा पाउने हुनू ।

**नास्य छिद्रं परो विद्याद्विद्याच्छिद्रं परस्य तु ।**
**गूहेत्कूर्म इवाङ्गानि रक्षेद्विवरमात्मनः ॥१०५॥**

आफ्ना कमीकमजोरी लुकाउनू तर अरुका कमीकमजोरी थाहा पाउनू । कछुवाले खबटाभित्र शरीर लुकाए जसरी आफ्ना कमजोरी लुकाउनू ।

**बकवच्चिन्तयेदर्थान्सिंहवच्च पराक्रमेत् ।**
**वृकवच्चावलुम्पेत शशवच्च विनिष्पतेत् ॥१०६॥**

बकुल्लाले जसरी उद्देश्य पाउन ध्यान गर्नू । सिँहजस्तै पराक्रमी हुनू । ब्वाँसोले जसरी शत्रुलाई मार्नू । बलियो शत्रु भए खरायो जसरी भाग्नू र कतै अर्को बलियोको शरणमा पर्नू ।

**एवं विजयमानस्य येऽस्य स्युः परिपन्थिनः ।**
**तानानयेद्वशं सर्वान्सामादिभिरुपक्रमैः ॥१०७॥**



विजययात्राको बाटो हिँडेको राजाले आफूभन्दा बलिया शत्रु (वा देश) लाई साम, दान, भेद र दण्डका नीतिले वशमा पार्नू ।

**यदि ते तु न तिष्ठेयुरुपायैः प्रथमैस्त्रिभिः ।**
**दण्डेनैव प्रसह्यैतांश्छनकैर्वशमानयेत् ॥१०८॥**

पहिला तीन उपाय (साम, दान र भेद)ले मानेन भने बलपूर्वक त्यो देशलाई युद्ध गरेर जिती वशमा पार्नू ।

**सामादीनामुपायानां चतुर्णामपि पण्डिताः ।**
**सामदण्डौ प्रशंसन्ति नित्यं राष्ट्राभिवृद्धये ॥१०९॥**

साम आदि चार उपायमध्ये राज्यको समृद्धिका लागि विद्वानहरू साम र दण्डलाई सधैं बढी प्रशंसा गर्दछन् ।

**यथोद्धरति निर्दाता कक्षं धान्यं च रक्षति ।**
**तथा रक्षेन्नृपो राष्ट्रं हन्याच्च परिपन्थिनः ॥११०॥**

जसरी किसान खेतबारी अनाजबा बोटसँगै उम्रने झारपातलाई गोडेर फाली अनाजलाई मात्र राख्दछ त्यसरी नै राजाले पनि चोर आदिलाई नष्ट गरी राज्यलाई जोगाउने गर्नू ।

**मोहाद्राजा स्वराष्ट्रं यः कर्षयत्यनवेक्षया ।**
**सोऽचिराद्भ्रश्यते राज्याज्जीविताच्च सबान्धवः ॥१११॥**

जसले बिनसित्तिमा प्रजालाई  कष्ट दिन्छ त्यो राजा बन्धुबान्धव सहित चाँडै नष्ट हुन्छ ।

**शरीरकर्षणात्प्राणाः क्षीयन्ते प्राणिनां यथा ।**
**तथा राज्ञां अपि प्राणाः क्षीयन्ते राष्ट्रकर्षणात् ॥११२॥**

जसरी शरीरधारीहरूको शरीर शोषण गर्नाले नष्ट हुन्छ त्यसरी नै राजाको प्राण पनि राज्य एवं प्रकृतिलाई पीडा दिँदा नष्ट हुन्छ ।



**राष्ट्रस्य संग्रहे नित्यं विधानमिदमाचरेत् ।**
**सुसंगृहीतराष्ट्रो हि पार्थिवः सुखमेधते ॥११३॥**

राज्यको सम्वृद्धि र राजकोषको सङ्कलनका लागि राजाले यि (तलका) उपाय गर्नू किन कि राम्ररी सुरक्षित भएको देशको राजा सुखपूर्वक शासन गर्न सक्दछ ।

**द्वयोस्त्रयाणां पञ्चानां मध्ये गुल्ममधिष्ठितम् ।**
**तथा ग्रामशतानां च कुर्याद्राष्ट्रस्य संग्रहम् ॥११४॥**

दुई, तीन, पाँच वा सय गाउँका बीचमा एउटा गुल्म (गाउँको प्रहरी चौकी वा नौ हात्ती, नौ रथ, सत्ताईस घोडचढी र पैंतालीस पैदल सिपाही भएको सेनाको टुकडी) बनाएर देशको रक्षा वा बन्दोवस्त मिलाउनू ।

**ग्रामस्याधिपतिं कुर्याद्दशग्रामपतिं तथा ।**
**विंशतीशं शतेशं च सहस्रपतिमेव च ॥११५॥**

हरेक गाउँको, दश वटा गाउँको, बीस वटा गाउँको, सय वटा गाउँको र हजारवटा गाउँको लागि बेग्लाबेग्लै अधिकारी नियुक्त गर्नू ।

**ग्रामदोषान्समुत्पन्नान्ग्रामिकः शनकैः स्वयम् ।**
**शंसेद्ग्रामदशेशाय दशेशो विंशतीशिनम् ॥११६॥**

हरेक गाउँमा उठेका समस्या सर्वप्रथम गाउँकै अधिकारीले निराकरण गर्नू । उसले नसके दश गाउँको अधिकारीलाई र उसले पनि नसके बीस गाउँको अधिकारीलाई भनी निराकरण गर्नू ।

**विंशतीशस्तु तत्सर्वं शतेशाय निवेदयेत् ।**
**शंसेद्ग्रामशतेशस्तु सहस्रपतये स्वयम् ॥११७॥**



बीस गाउँको अधिकारी नसके सय गाउँकोलाई र उसले नसके हजार गाउँको अधिकारीलाई बताई समस्याको समाधान गर्नू ।

**यानि राजप्रदेयानि प्रत्यहं ग्रामवासिभिः ।**
**अन्नपानेन्धनादीनि ग्रामिकस्तान्यवाप्नुयात् ॥११८॥**

गाउँका प्रजाले अन्न, पेय, धन आदि जे जे कुरा राजालाई दिनुपर्ने हो त्यो यिनै गाउँका अधिकारीलाई दिने गर्नु पर्दछ ।

**दशी कुलं तु भुञ्जीत विंशी पञ्च कुलानि च ।**
**ग्रामं ग्रामशताध्यक्षः सहस्राधिपतिः पुरम् ॥११९॥**

बाह्र हल गोरु (वा साँढ छ वटा गोरुको हललाई मध्यम हल भनिन्छ र त्यस्ता दुई वटा हलले जोत्न सक्ने जति जमिनलाई कुल भनिन्छ) ले जोत्न सक्नेजति जमिनको कर उठाउने र देखभाल

गर्ने जिम्मा दश गाउँ हेर्ने अधिकारीले, साठी हलले जोत्ने जमिनको कर उठाउने र देखभाल गर्ने जिम्मा बीस गाउँ हेर्ने अधिकारीले, पूरै गाउँबाट कर उठाउने र देखभाल गर्ने जिम्मा सय गाउँ हेर्ने अधिकारीले र पूरै शहरबाट कर उठाउने र देखभाल गर्ने जिम्मा हजार गाउँ हेर्ने अधिकारीले लिनू ।

**तेषां ग्राम्याणि कार्याणि पृथक्कार्याणि चैव हि ।**
**राज्ञोऽन्यः सचिवः स्निग्धस्तानि पश्येदतन्द्रितः ॥१२०॥**

यी अधिकारीले गर्ने गाउँको रेखदेख लगायतका अन्य बेग्लाबेग्लै कामको रेखदेख राजाबाट नियुक्त योग्य सचिबले जाँगरिलो भई गर्नू ।

**नगरे नगरे चैकं कुर्यात्सर्वार्थचिन्तकम् ।**
**उच्चैः स्थानं घोररूपं नक्षत्राणामिव ग्रहम् ॥१२१॥**

हरेक नगरमा सबै कुरा सोचविचार गर्ने, सबै उ र उसका सहयोगी सेनासँग डराउने एवं ताराका अगिल्तिर ग्रह चम्केजस्तै चम्कने एउटा व्यक्तिलाई नगर-अधिकारीमा नियुक्त गर्नू ।



**स ताननुपरिक्रामेत्सर्वानेव सदा स्वयम् ।**
**तेषां वृत्तं परिणयेत्सम्यग्राष्ट्रेषु तच्चरैः ॥१२२॥**

यसरी नियुक्त नगर-अधिकारीले आफू मातहतका सबै क्षेत्रमा स्वयं गई निरीक्षण गर्ने गर्नू । विभिन्न पदमा नियुक्त अधिकारी, तिनका गतिविधि र तिनका दूत आदिमाथि निगरानी गर्नू ।

**राज्ञो हि रक्षाधिकृताः परस्वादायिनः शठाः ।**
**भृत्या भवन्ति प्रायेण तेभ्यो रक्षेदिमाः प्रजाः ॥१२३॥**

प्रायः प्रजाको रक्षार्थ खटिएका राजकर्मचारी अर्काको धनमा लोभ गर्ने र ठग हुन्छन् । त्यसैले राजाले यस्ता कर्मचारीबाट प्रजालाई जोगाउनु पर्दछ ।

**ये कार्यिकेभ्योऽर्थमेव गृह्णीयुः पापचेतसः ।**
**तेषां सर्वस्वमादाय राजा कुर्यात्प्रवासनम् ॥१२४॥**

जुन् पापी राष्ट्रसेवक कर्मचारी सेवाग्राहीसँग लोभमा परी घुस लिन्छ राजाले
उसको सर्वस्व हरण गरी उसलाई देशनिकाला गर्नू ।

**राजा कर्मसु युक्तानां स्त्रीणां प्रेष्यजनस्य च ।**
**प्रत्यहं कल्पयेद्वृत्तिं स्थानं कर्मानुरूपतः ॥१२५॥**

आफ्नो सेवाका लागि नियुक्त स्त्री र दूतको तलब, पद आदिका बारेमा राजाले काम,
स्थान आदि हेरी बेलाबेलामा पुनर्विचार र पुनरावलोकन गरिरहनु पर्दछ ।

**पणो देयोऽवकृष्टस्य षडुत्कृष्टस्य वेतनम् ।**
**षाण्मासिकस्तथाच्छादो धान्यद्रोणस्तु मासिकः ॥१२६॥**



निम्नस्तरका कर्मचारीलाई तलबकारूपमा पण (प्राचीनकालमा प्रचलित आठ कौडी बराबरको
तामाको सिक्का) दिनू । छ, छ महिनामा पोसाक दिनू र महिना महिनामा एक द्रोण (प्राचीन
समयमा अन्न आदि भर्न प्रयोग गरिने ६४-१२८ पाउसम्म अटाउने काठको भाँडो)
धान आदि अनाज दिनू ।

**क्रयविक्रयमध्वानं भक्तं च सपरिव्ययम् ।**
**योगक्षेमं च संप्रेक्ष्य वणिजो दापयेत्करान् ॥१२७॥**

ढुवानीमा कति खर्च भयो, बाटोमा खानपिउन कति खर्च भयो, चोर आदिबाट जोगाउन कति खर्च
भयो आदि सबै खर्च हिसाब गरी राजाले ब्यापारीसँग कर उठाउनू ।

**यथा फलेन युज्येत राजा कर्ता च कर्मणाम् ।**
**तथावेक्ष्य नृपो राष्ट्रे कल्पयेत्सततं करान् ॥१२८॥**

गर्ने मानिस, गरिएको काम, त्यसले दिइरहेका लाभ आदि हेरेर सबैलाई लाभ हुने गरी राजाले करका दरहरू निर्धारण गर्नू ।

**यथाल्पाल्पमदन्त्याद्यं वार्योकोवत्सषट्पदाः ।**
**तथाल्पाल्पो ग्रहीतव्यो राष्ट्राद्राज्ञाब्दिकः करः ॥१२९॥**

जसरी पानीजुका (वार्योकाः), बाछाबाछी र भमरो वा माहुरी अलिअलि गरेर थाहा नपाउने किसिमले आहारा चुस्दछन् त्यसरी नै राजाले वार्षिकरूपमा प्रजालाई बोझ नहुने गरी कर उठाउनु पर्दछ ।

**पञ्चाशद्भाग आदेयो राज्ञा पशुहिरण्ययोः ।**
**धान्यानां अष्टमो भागः षष्ठो द्वादश एव वा ॥१३०॥**

राजाले सुन र जनावरको किनबेचमा दुई प्रतिशत र अनाजको खरिबिक्रीको लाभमा आठ, छ वा बाह्रौं भाग कर लगाउनू ।



**आददीताथ षड्भागं द्रुमांसमधुसर्पिषाम् ।**
**गन्धौषधिरसानां च पुष्पमूलफलस्य च ॥१३१॥**

वृक्ष, मासु, मह, घिउ, सुगन्ध, औषधी, तरल पदार्थ, फूल, कन्दमूल र फलफूलबाट हुने लाभमा छ भागको एक भाग कर लगाउनू ।

**पत्रशाकतृणानां च चर्मणां वैदलस्य च ।**
**मृन्मयानां च भाण्डानां सर्वस्याश्ममयस्य च ॥१३२॥**

पात, सागपात, घाँस, छाला-वेतबाँस र माटाका भाँडाकुँडा तथा पत्थरका सबै सामानबाट हुने लाभमा पनि छ भागको एक भाग कर लगाउनू ।

**म्रियमाणोऽप्याददीत न राजा श्रोत्रियात्करम् ।**
**न च क्षुधाऽस्य संसीदेच्छोत्रियो विषये वसन् ॥१३३॥**

मर्नै आँटे पनि राजाले विधिपूर्वक वेदपढेका ब्राह्मणसँग कर नलिनू । यस्ता ब्राह्मण भोक र अभावमा नपरुन् भनी राजाले ध्यान दिनू ।

**यस्य राज्ञस्तु विषये श्रोत्रियः सीदति क्षुधा ।**
**तस्यापि तत्क्षुधा राष्ट्रं अचिरेनैव सीदति ॥१३४॥**

जुन राजाको जुन देशमा वेदज्ञ ब्राह्मण भोको बस्न विवश हुन्छ, त्यो देश चाँडै भोकमरीमा परेर नासिन्छ ।

**श्रुतवृत्ते विदित्वास्य वृत्तिं धर्म्यां प्रकल्पयेत् ।**
**संरक्षेत्सर्वतश्चैनं पिता पुत्रमिवौरसम् ॥१३५॥**



वेदज्ञ ब्राह्मणलाई निश्चिन्त भएर वेद पढ्न सक्ने व्यवस्था मिलाउनू र उसलाई सबै कुरामा औरस पुत्र (वैदिक विधिले विवाह गरिएकी पत्नीबाट जन्मने पुत्र) लाईंझैं संरक्षण गर्नू ।

**संरक्ष्यमाणो राज्ञायं कुरुते धर्ममन्वहम् ।**
**तेनायुर्वर्धते राज्ञो द्रविणं राष्ट्रमेव च ॥१३६॥**

संरक्षित वेदज्ञ ब्राह्मणबाट निश्चिन्त भई नित्य गरिने वेदाध्ययनबाट राजाको आयु, धन र यशमा उत्तरोत्तर वृद्धि हुन्छ ।

**यत्किंचिदपि वर्षस्य दापयेत्करसंज्ञितम् ।**
**व्यवहारेण जीवन्तं राजा राष्ट्रे पृथग्जनम् ॥१३७॥**

राजाले स्वदेशी ब्यापार-व्यवसायीसँग मात्र होइन विदेशी ब्यापार-व्यवसायीसँग पनि कर लिने गर्नू ।

**कारुकाञ्छिल्पिनश्चैव शूद्रांस्चात्मोपजीविनः ।**
**एकैकं कारयेत्कर्म मासि मासि महीपतिः ॥१३८॥**

श्रमिक, शिल्पकार, शूद्र, ज्यालादारी आदिजस्ता कर लगाउन नसकिने वा कर तिर्न नसक्ने वर्गलाई राजाले हरेक महिनामा एक दिन राज्यको काममा लगाउनु (तीसँग कर नलिनू) ।

**नोच्छिन्द्यादात्मनो मूलं परेषां चातितृष्णया ।**
**उच्छिन्दन् ह्यात्मनो मूलमात्मानं तांश्च पीडयेत् ॥१३९॥**

दया गरेर प्रजासँग कर नलिए राजाकै जरो काटिन्छ, धेरै कर लिए प्रजाको जरो काटिन्छ, त्यसैले यी दुवै कुराबाट जोगिनु पर्दछ ।

**तीक्ष्णश्चैव मृदुश्च स्यात्कार्यं वीक्ष्य महीपतिः ।**
**तीक्ष्णश्चैव मृदुश्चैव राजा भवति सम्मतः ॥१४०॥**



आवश्यकता हेरी राजा कतै कडा त कतै नरम हुनू । यसरी आवश्यकता अनुसार कडा र नरम हुने राजालाई सबैले मन पराउँदछन् ।

**अमात्यमुख्यं धर्मज्ञं प्राज्ञं दान्तं कुलोद्गतम् ।**
**स्थापयेदासने तस्मिन् खिन्नः कार्येक्षणे नृणाम् ॥१४१॥**

आफू कुनै कारणवश राज्य सञ्चालन गर्न अशक्त हुँदा धार्मिक, विद्वान, जितेन्द्रिय र कुलिन मन्त्रीलाई राजाले राज्यको कार्यभार सुम्पनू ।

**एवं सर्वं विधायेदमितिकर्तव्यमात्मनः ।**
**युक्तश्चैवाप्रमत्तश्च परिरक्षेदिमाः प्रजाः ॥१४२॥**

राजाले उपर्युक्त विधिले सबै व्यवस्था मिलाई प्रजाको रक्षा गर्नु आफ्नु कर्तव्य हो भन्ने ठानी कर्तव्यपालना गर्नतर्फ सधैं सचेत हुनुपर्दछ ।

**विक्रोशन्त्यो यस्य राष्ट्राद्ध्रियन्ते दस्युभिः प्रजाः ।**
**संपश्यतः सभृत्यस्य मृतः स न तु जीवति ॥१४३॥**

जुन राजा वा राजकर्मचारीका सामु कोलाहल गर्दै चोरडाँकाबाट प्रजा लुटिन्छन्,
त्यो राजा बाँचे पनि मरेसरह हुन्छ ।

**क्षत्रियस्य परो धर्मः प्राजानामेव पालनम् ।**
**निर्दिष्टफलभोक्ता हि राजा धर्मेण युज्यते ॥१४४॥**

प्रजालाई पालनपोषण गर्नु क्षत्रिय (राजा) को एकमात्र धर्म हो । धर्म र नीति अनुसार राज्य भोग
गर्न भनेर नै उसलाई राजा बनाइएको हुन्छ ।

**उत्थाय पश्चिमे यामे कृतशौचः समाहितः ।**
**हुताग्निर्ब्राह्मणांश्चार्च्य प्रविशेत्स शुभां सभाम् ॥१४५॥**



राजाले एक प्रहर रात बाँकी छँदै उठी, शौचस्नान आदि सकी, होम आदि सन्ध्याकर्म सकी,
ब्राह्मणहरूलाई पूजा गरी अनि प्रसन्न चित्त बनाई राजसभामा प्रवेश गर्नु पर्दछ ।

**तत्र स्थितः प्रजाः सर्वाः प्रतिनन्द्य विसर्जयेत् ।**
**विसृज्य च प्रजाः सर्वा मन्त्रयेत्सह मन्त्रिभिः ॥१४६॥**

सभामा दर्शन आदिका लागि आएका प्रजासँग सम्न्धित सबै विषय सकी सभा विसर्जन गर्नू ।
सभा विसर्जन गरेपछि मन्त्रीहरूसँग गोप्य छलफल गर्नू ।

**गिरिपृष्ठं समारुह्य प्रसादं वा रहोगतः ।**
**अरण्ये निःशलाके वा मन्त्रयेदविभावितः ॥१४७॥**

कुनै पहाड चढेर वा कुनै गुप्त भवनमा वा वनमा त्यस्तो एकान्त ठाउँ जहाँ कुनै गुप्तचर पुग्न
सक्दैनन् बसी मन्त्रीहरूसँग गोप्य सरसल्लाह गर्नु पर्दछ ।

**यस्य मन्त्रं न जानन्ति समागम्य पृथग्जनाः ।**
**स कृत्स्नां पृथिवीं भुङ्क्ते कोशहीनोऽपि पार्थिवः ॥१४८॥**

जुन राजाको गोप्य सरसल्लाह (एवं निर्णय) अरु सबै मिलेर पनि थाहा पाउन सक्दैनन्, त्यो राजाले ढुकुटी रित्तिए पनि सारा पृथ्वीमा राज गर्दछ ।

**जडमूकान्धबधिरांस्तैर्यग्योनान्वयोऽतिगान् ।**
**स्त्रीम्लेच्छव्याधितव्यङ्गान्मन्त्रकालेऽपसारयेत् ॥१४९॥**

मूर्ख, लाटो, अन्धो, बहिरो, सुँगा-मैना, अतिवृद्ध, स्त्री, म्लेच्छ, रोगी र अङ्गहीनलाई वार्ताका क्रममा वार्तास्थलबाट आदरपूर्वक हटाउनू ।

**भिन्दन्त्यवमता मन्त्रं तैर्यग्योनास्तथैव च ।**
**स्त्रियश्चैव विशेषेण तस्मात्तत्रादृतो भवेत् ॥१५०॥**



हीन अङ्ग हुनेका मनमा हीन भावना हुने हुनाले, चरा स्वभावैले चञ्चल हुने हुनाले तथा विशेष गरी स्त्री अति नै कुरौटे हुने हुनाले गोप्य कुरा बाहिर जान्छ त्यसैले यिनलाई हटाउनु भनिएको हो ।

**मध्यंदिनेऽर्धरात्रे वा विश्रान्तो विगतक्लमः ।**
**चिन्तयेद्धर्मकामार्थान्सार्धं तैरेक एव वा ॥१५१॥**

मध्याह्नमा वा आधारातमा थकाई मेटेर आराम गरेपछि एक वा एकभन्दा बढी मन्त्रीसँग बसी धर्म, अर्थ र कामका बारेमा विचारविमर्श गर्नू ।

**परस्परविरुद्धानां तेषां च समुपार्जनम् ।**
**कन्यानां संप्रदानं च कुमाराणां च रक्षणम् ॥१५२॥**

छलफलका क्रममा धर्म, अर्थ र कामका विषयमा विरोधाभाष उत्पन्न भए कन्यादान, देशका युवालाई रक्षा कसरी गर्ने आदि जस्ता विषयमा छलफल गर्नू ।

**दूतसंप्रेषणं चैव कार्यशेषं तथैव च ।**
**अन्तःपुरप्रचारं च प्रणिधीनां च चेष्टितम् ॥१५३॥**

राजदूत नियुक्ति, गर्न बाँकी काम, दरबारको स्त्री-कक्षका बारेमा सुनिएका कुरा, जनप्रतिनिधिका व्यवहार र चाहना,..।

**कृत्स्नं चाष्टविधं कर्म पञ्चवर्गं च तत्त्वतः ।**
**अनुरागापरागौ च प्रचारं मण्डलस्य च ॥१५४॥**

आठ प्रकार कर्म (कर तथा उपहार, तलब तथा पुरस्कार, दुष्टसँगको रणनीति, अधिकारीहरूका बीचमा हुने मतभेदको निराकरण, खराबीलाई फैलन नदिने उपाय, लोकव्यवहार माथिको नजर, अपराधीलाई दिइने दण्ड र तिनलाई भूल सुधार्न र वा प्रायश्चित गर्न दिइने अवसर) तथा पाँच वर्ग (कार्यारम्भको विधि, उद्यम, नोक्सानीसँग गरिने मुकाबिला, देश र समयका बारेमा हुने चिन्तन र सफलता) का बारेमा गहन विचारविमर्श गर्नू । मन्त्रीहरुले गर्ने राज्यप्रतिको बफादारी र बेइमानीका बारेमा पनि छलफल गर्नू ।



**मध्यमस्य प्रचारं च विजीगिषोश्च चेष्टितम् ।**
**उदासीनप्रचारं च शत्रोश्चैव प्रयत्नतः ॥१५५॥**

देखिने गरी नै शत्रुता वा मित्रता गर्नु, तटस्थ बस्नु, अवसरवादी हुनु र कपटी हुनु गरी परराष्ट्र सम्बन्ध चार किसिमका हुन्छन् । राजाले यी कुरामा ध्यान दिने गर्नू ।

**एताः प्रकृतयो मूलं मण्डलस्य समासतः ।**
**अष्टौ चान्याः समाख्याता द्वादशैव तु ताः स्मृताः ॥१५६॥**

यी पाँच र पहिले बताइएका आठ कर्म गरी राज्यका मूल बाह्र प्रकृतिका बारेमा संक्षेपमा बताइयो ।

**अमात्यराष्ट्रदुर्गार्थदण्डाख्याः पञ्च चापराः ।**
**प्रत्येकं कथिता ह्येताः संक्षेपेण द्विसप्ततिः ॥१५७॥**

राज्यका प्रमुख प्रकृति मन्त्री, देश, किल्ला, राजकोष र सेना गरी पाँच हुन्छन् । यी पाँचका बहत्तर प्रकार हुन्छन्, जसको चर्चा संक्षेपमा यथास्थानमा गरी सकियो ।

**अनन्तरमरिं विद्यादरिसेविनमेव च ।**
**अरेरनन्तरं मित्रमुदासीनं तयोः परम् ॥१५८॥**

आफ्ना शत्रु र उसका मित्रलाई कहिल्यै निर्बल र टाढाका भनी नसोच्नू । तटस्थ देशलाई यसपछि मात्र प्राथमिकतामा राख्नू । अर्थात् शत्रु र उसका सहयोगी देशले जति चाँडो आक्रमण गर्दछन् त्यती चाँडो मित्र देशले सहायता गर्ने विषयमा बिरलै सोच्ने गर्दछ । तटस्थ देश त के गर्ने के नगर्ने भनेर सोचेरै बसिरहेको हुन्छ ।

**तान्सर्वानभिसंदध्यात्सामादिभिरुपक्रमैः ।**

**व्यस्तैश्चैव समस्तैश्च पौरुषेण नयेन च ॥१५९॥**

राजाले शत्रु, मित्र र तटस्थ छिमेकी देशलाई साम, दान आदि उपायले वशमा पार्नु पर्दछ । कालपरिस्थिति हेरी साम, दान, दण्ड र भेदमध्ये दुई वा बढी संयुक्त उपायले वा बेग्लाबेग्लै उपायले वशमा पार्न राजा स्वतन्त्र हुन्छ ।

**संधिं च विग्रहं चैव यानमासनं एव च ।**
**द्वैधीभावं संश्रयं च षड्गुणांश्चिन्तयेत्सदा ॥१६०॥**

सन्धि गर्ने वा सन्धि भङ्ग गर्ने (सन्धि), कुन छिमेकी देशसँग कहिले र कसरी युद्ध गर्ने वा नगर्ने (विग्रह), शत्रु देशमाथि कहिले र कसरी आक्रमण गर्ने (यान), कुन देशलाई आक्रमण गर्न शान्त भई कुरेर बस्ने (आसन), कुन छिमेकी देशसँग भित्रभित्रै शत्रुता भएपनि मिलेर बसेको जस्तो व्यवहार देखाउने (द्वैधीभाव) र कुन बलियो देशसँग मिलेर कुन निर्बल देशलाई दबाउने (संश्रय)-यि छ गुणका विषयमा राजाले चिन्तनमनन गर्नु पर्दछ ।

**आसनं चैव यानं च संधिं विग्रहमेव च ।**
**कार्यं वीक्ष्य प्रयुञ्जीत द्वैधं संश्रयमेव च ॥१६१॥**

आसन, यान, सन्धि, विग्रह, द्वैधभाव र संश्रयका बारेमा राजाले समय एवं परिस्थिति हेरेर निर्णय गर्नु पर्दछ ।

**संधिं तु द्विविधं विद्याद्राजा विग्रहमेव च ।**
**उभे यानासने चैव द्विविधः संश्रयः स्मृतः ॥१६२॥**

सन्धि, विग्रह, यान, आसन र संश्रयका दुई दुई भेद हुन्छन् भनी जान्नू ।

**समानयानकर्मा च विपरीतस्तथैव च ।**
**तदा त्वायतिसंयुक्तः संधिर्ज्ञेयो द्विलक्षणः ॥१६३॥**

दुई मित्र देश मिली एकैपटक शत्रु देशमाथि आक्रमण गर्ने वा गरेपछि र दुई मित्र देशले बेग्लाबेग्लै एकैपटक वा फरक समयमा शत्रु देशलाई आक्रमण गर्ने वा गरेपछि गरिने गरी सन्धि दुई किसिमका हुन्छन् ।



**स्वयंकृतश्च कार्यार्थं अकाले काल एव वा ।**
**मित्रस्य चैवापकृते द्विविधो विग्रहः स्मृतः ॥१६४॥**

समयको परवाह नगरी व्यसनमा व्यस्त शत्रु देशलाई प्रतिशोध लिन आक्रमण गर्नू र आफ्नो मित्र देशमाथि आक्रमण हुँदा मित्र देशको उपकार तिर्न वा मित्र देशमाथि भएको अपमानको बदला लिन आक्रमण गर्नु गरी विग्रह दुई किसिमका हुन्छन् ।

**एकाकिनश्चात्ययिके कार्ये प्राप्ते यदृच्छया ।**
**संहतस्य च मित्रेण द्विविधं यानमुच्यते ॥१६५॥**

संयोगवश वा समयको माग बमोजिम शत्रु देशलाई एक्लै कब्जा गर्नु र मित्र देशसँग

मिली योजना बनाएर शत्रुलाई घेर्नु गरी यानका दुई भेद हुन्छन् ।

**क्षीणस्य चैव क्रमशो दैवात्पूर्वकृतेन वा ।**
**मित्रस्य चानुरोधेन द्विविधं स्मृतं आसनम्॥१६६॥**

पूर्वजन्मको पाप वा यस जन्ममा गरिएका गल्तिले कमजोर भएर र मित्र देशको अनुरोधमा गरिने गरी आसन दुई प्रकारका हुन्छन् ।

**बलस्य स्वामिनश्चैव स्थितिः कार्यार्थसिद्धये ।**
**द्विविधं कीर्त्यते द्वैधं षाड्गुण्यगुणवेदिभिः ॥१६७॥**

यि छ गुणका प्रयोगका विशेषज्ञ मानिएका कतिपय राजनैतिक पण्डितहरू द्वैधीभावका पनि सेनाको एक भागलाई एकातिर राखी अर्को भागले आक्रमण गर्नु र सेनाको एक भागलाई युद्धमा पठाई अर्को भागले किल्लालाई रक्षा गर्नु गरी दुई भेद हुन्छ भन्दछन् ।



**अर्थसंपादनार्थं च पीडयमानस्य शत्रुभिः ।**
**साधुषु व्यपदेशश्च द्विविधः संश्रयः स्मृतः ॥१६८॥**

शत्रुबाट पीडित भई आफ्नो कुनै प्रयोजन सिद्ध गर्न आफूभन्दा बलियो कुनै राजाको शरणमा जानु र कुनै सङ्कट नहुँदा पनि सुमधुर सम्बन्ध राख्न वा शत्रु देशलाई आफ्नो देशमाथि आक्रमण गर्ने दुस्साहस गर्न नै नदिन कुनै बलियो राजाको शरणमा जानु गरी आश्रयका दुई भेद हुन्छन् ।

**यदावगच्छेदायत्यामाधिक्यं ध्रुवमात्मनः ।**
**तदात्वे चाल्पिकां पीडां तदा संधिं समाश्रयेत्॥१६९॥**

भविष्यमा आफूलाई फाइदा हुन्छ भने तत्कालका पीडा सहेर पनि अर्को देशसँग सन्धि गर्न राजाले हिचकिचाउनु हुँदैन ।

**यदा प्रकृष्टा मन्येत सर्वास्तु प्रकृतीर्भृशम् ।**
**अत्युच्छ्रितं तथात्मानं तदा कुर्वीत विग्रहम् ॥१७०॥**

आफ्ना मन्त्रीगण, राजकोष, सेना र प्रजा अनुकूल भए नभएको निश्चित गरेर सन्तुष्ट भएको अवस्थामा मात्र राजाले अर्को देशमाथि आक्रमण गर्नु पर्दछ ।

**यदा मन्येत भावेन हृष्टं पुष्टं बलं स्वकम् ।**
**परस्य विपरीतं च तदा यायाद्रिपुं प्रति ॥१७१॥**

जब आफ्ना प्रजा सन्तुष्ट, सेना बलबान् र समर्पित भएको तथा शत्रु देशका जनता असन्तुष्ट र सेना कमजोर भएको अवस्था देखिन्छ तब शत्रु देशमाथि आक्रमण गर्नु पर्दछ ।

**यदा तु स्यात्परिक्षीणो वाहनेन बलेन च ।**
**तदासीत प्रयत्नेन शनकैः सान्त्वयन्नरीन् ॥१७२॥**



शत्रुका सामु आफ्ना सेना र बाहन कमजोर हुँदा शत्रु देशलाई चापलुशी गरीगरी धोखामा राख्नु नै राजनैतिक कुशलता हुन्छ ।

**मन्येतारिं यदा राजा सर्वथा बलवत्तरम् ।**
**तदा द्विधा बलं कृत्वा साधयेत्कार्यमात्मनः ॥१७३॥**

शत्रुदेश आफूभन्दा बलियो भए बाहिर ठिक्क पार्नू र भित्रभित्रै आफ्नो शक्ति बढाउनतिर लाग्नू ।

**यदा परबलानां तु गमनीयतमो भवेत् ।**
**तदा तु संश्रयेत्क्षिप्रं धार्मिकं बलिनं नृपम् ॥१७४॥**

आफूले आक्रमण गरेको देशका राजा प्रचण्ड र जित्न नसकिने देखिए उभन्दा शक्तिशाली देशका धार्मिक राजालाई जतिसक्यो चाँडो आफ्नो गुरु सरह मानसम्मान गर्नू ।

**निग्रहं प्रकृतीनां च कुर्याद्योऽरिबलस्य च ।**
**उपसेवेत तं नित्यं सर्वयत्नैर्गुरुं यथा ॥१७५॥**

बुद्धिमान राजाले आफ्नो शत्रु देशलाई नियन्त्रण गर्ने र आफ्ना जनतालाई पुत्रवत् व्यवहार गर्ने देशको राजालाई गुरुसरह मानसम्मान गर्नुपर्दछ ।

**यदि तत्रापि संपश्येद्दोषं संश्रयकारितम् ।**
**सुयुद्धमेव तत्रापि निर्विशङ्कः समाचरेत् ॥१७६॥**

बुद्धिमान राजाले आफूले आश्रय लिएका देशको राजाका मनमा कुनै खोट देखे साबधान हुनू र जतिसक्यो चाँडो उसँग युद्ध गर्नू ।

**सर्वोपायैस्तथा कुर्यान्नीतिज्ञः पृथिवीपतिः ।**
**यथास्याभ्यधिका न स्युर्मित्रोदासीनशत्रवः ॥१७७॥**



साम, दान आदि नीति प्रयोग गरिरहेको राजाको सफलता : मित्र बढ्दै र शत्रु घट्दै गए तथा तटस्थ देशले पनि मित्र हुन उत्सुकता देखाएकोबाट मापन हुने गर्दछ ।

**आयतिं सर्वकार्याणां तदात्वं च विचारयेत् ।**
**अतीतानां च सर्वेषां गुणदोषौ च तत्त्वतः ॥१७८॥**

विगतमा गरिएका र अहिले गरि रहिएका सबै कामका गुण-दोषका बारेमा गम्भीर ढङ्गले समीक्षा गर्नुपर्दछ ।

**आयत्यां गुणदोषज्ञस्तदात्वे क्षिप्रनिश्चयः ।**
**अतीते कार्यशेषज्ञः शत्रुभिर्नाभिभूयते ॥१७९॥**

भविष्यमा गरिने कामको गुण-दोषको समीक्षा गर्ने, दोष हटाउँदै गुण ग्रहण गर्न तुरुन्त निर्णय गर्ने र विगतका गल्तीबाट पाठ सिक्ने राजालाई कहिल्यै शत्रुले हराउन सक्दैन ।

**यथैनं नाभिसंदध्युर्मित्रोदासीनशत्रवः ।**
**तथा सर्वं संविदध्यादेष सामासिको नयः ॥१८०॥**

समग्रमा मित्र बढ्दै गएको, शत्रु घट्दै गएको र तटस्थ देश मित्र बन्न उत्सुक देखिएको परिस्थितिबाट नै राजाको कुशलता नापिने गर्दछ ।

**यदा तु यानमातिष्ठेदरिराष्ट्रं प्रति प्रभुः ।**
**तदानेन विधानेन यायादरिपुरं शनैः ॥१८१॥**

शत्रु राजामाथि आक्रमण गर्न चाहने राजाले तोकिएको विधि अनुसार बिस्तारै र मन्द गतिमा उसको शहरमा छिर्नु पर्दछ ।

**मार्गशीर्षे शुभे मासि यायाद्यात्रां महीपतिः ।**
**फाल्गुनं वाऽथ चैत्रं वा मासौ प्रति यथाबलम् ॥१८२॥**



माघ, फागुन र चैतमा सेनाको युद्धगर्ने क्षमता बढ्दछ । अतः जित चाहने राजाले यि महिनामा शुभ मुहूर्त हेरी शत्रुदेशमाथि आक्रमण गर्नू ।

**अन्येष्वपि तु कालेषु यदा पश्येद् ध्रुवं जयम् ।**
**तदा यायाद्विगृह्यैव व्यसने चोत्थिते रिपोः ॥१८३॥**

अरु बेलामा पनि यदि सेनामा उत्साह छ, जित निश्चित हुने देखिएको छ, शत्रुले जिस्क्याइ राखेको छ र आफ्नो मन पनि युद्धतिर लालायित छ भने राजाले आक्रमण गर्न सक्दछ ।

**कृत्वा विधानं मूले तु यात्रिकं च यथाविधि ।**
**उपगृह्यास्पदं चैव चारान्सम्यग्विधाय च ॥१८४॥**

युद्धमा निस्कनु पूर्व राजाले पहिला आफ्नो किल्लाको रक्षा-व्यवस्था प्रति ढुक्क हुनू अनि पूरा तयारी गरेर मात्र युद्धका लागि निस्कनू ।

**संशोध्य त्रिविधं मार्गं षड्विधं च बलं स्वकम् ।**
**सांपरायिककल्पेन यायादरिपुरं शनैः ॥१८५॥**

यसपछि शत्रुराज्यमा सेना प्रवेश गर्ने जल, स्थल र आकाश मार्गको जानकारी लिनु पर्दछ । त्यसपछि तोकिए बमोजिका छ प्रकारका सेनाको आवश्यकता अनुसार व्यूह रचना गर्दै शत्रु देशको राजधानीमा आक्रमण गर्नु पर्दछ ।

**शत्रुसेविनि मित्रे च गूढे युक्ततरो भवेत् ।**
**गतप्रत्यागते चैव स हि कष्टतरो रिपुः ॥१८६॥**

गोप्यरूपले शत्रुसँग मिलेका तर आफ्नु सेवा गरिरहेका आफ्ना मित्र तथा एकपटक अपमानित भई निकालिएका र पुनर्वहाली गरिएका सेवकसँग सधैं राजाले सावधान हुनु पर्दछ । यि दुबैले भित्रभित्रै हानी गर्दछन् र अती डरलाग्दा हुन्छन् ।

**दण्डव्यूहेन तन्मार्गं यायात्तु शकटेन वा ।**

**वराहमकराभ्यां वा सूच्या वा गरुडेन वा ॥१८७॥**

दण्डव्यूह, शकटव्यूह, वराहव्यूह, मकरव्यूह र गरुडव्यूहलाई आवश्यकता अनुसार शुद्धमा अपनाउनू ।

नोट : दण्डव्यूह-सेनाको लौरोजस्तो आकारको मोर्चाबन्दी जसको अगाडि सेनापति, बीचमा राजा, पछाडि प्रधानसेनापति, दुईतिर हात्ती, हात्तिका छेउमा घोडा र घाडाका छेउमा पैदल सैनिक हुन्छन् । शकटव्यूह-बयलगाडाजस्तो आकारमा अगिल्तिर साँघुरो र पछिल्तिर फुकेको आकारमा सेनालाई राख्दा हुने मोर्चाबन्दी । वराहव्यूह-बँदेलको आकारको सेनाको मोर्चाबन्दी । मकरव्यूह-गोहीको आकारको सेनाको मोर्चाबन्दी । गरुडव्यूह-गरुडका आकारको सेनाको मोर्चाबन्दी ।

**यतश्च भयमाशङ्केत्ततो विस्तारयेद् बलम् ।**
**पद्मेन चैव व्यूहेन निविशेत सदा स्वयम् ॥१८८॥**

डरको आशङ्का हुँदा सेनालाई चारैतिर फैलाउनू र आफू सधैं पद्मव्यूहमा बस्नू ।
(पद्मव्यूह-कमलका आकारको सेनाको मोर्चाबन्दी) ।

**सेनापतिबलाध्यक्षौ सर्वदिक्षु निवेशयेत् ।**
**यतश्च भयमाशङ्केत्प्राचीं तां कल्पयेद्दिशम् ॥१८९॥**

राजाले आफ्नो सुरक्षार्थ चारैतिर सेनापति राख्नु पर्दछ । डर उत्पन्न हुने दिशालाई नै पूर्व दिशा मानी सारा ध्यान त्यतैतिर लगाउनु पर्दछ ।

**गुल्मांश्च स्थापयेदाप्तान्कृतसंज्ञान्समंततः ।**
**स्थाने युद्धे च कुशलानभीरूनविकारिणः ॥१९०॥**

राजाले युद्धमैदानमा आफ्ना चारैतिर सेनाका खम्बा मानिएका विभिन्न नामका, प्रमाणित, सत्यनिष्ठ, समर्पित, विश्वासिला र स्वामीभक्त कुशल लडाकुहरुलाई अङ्गरक्षक बनाउनु पर्दछ ।



**संहतान्योधयेदल्पान्कामं विस्तारयेद् बहून् ।**
**सूच्या वज्रेण चैवैतान्व्यूहेन व्यूह्य योधयेत् ॥१९१॥**

शत्रुका भन्दा आफ्ना सेना कम भए सेनालाई आवश्यकता अनुसार फिँजाउनू वा एकत्र पार्नू । अथवा सियो वा वज्रको आकारको व्यूह बनाउनू । यो व्यूहले संख्याको वास्तविकता लुकाइ दिन्छ ।

**स्यन्दनाश्वैः समे युध्येदनूपे नौ द्विपैस्तथा ।**
**वृक्षगुल्मावृते चापैरसिचर्मायुधैः स्थले ॥१९२॥**

समतल भूभागमा रथ वा घोडामा चढेर, जलमा हात्ती वा डुङ्गामा चढेर, रुखलहरा भएका स्थानमा बाणले र सफा मैदानमा छालाले मोरिएका हतियारले युद्ध गर्नु पर्दछ ।

**कुरुक्षेत्रांश्च मत्स्यांश्च पञ्चालान् शूरसेनजान् ।**
**दीर्घांल्लघूंश्चैव नरानग्रानीकेषु योजयेत् ॥१९३॥**

कुरुक्षेत्र, मत्स्यदेश, पाञ्चाल, शूरसेन आदि देशका तथा धेरै अग्ला अथवा होचा सैनिकलाई रणकौशलमा वीर हुने हुनाले सदैव सेनाको अग्रमोर्चामा राख्नु पर्दछ ।

**प्रहर्षयेद् बलं व्यूह्य तांश्च सम्यक् परीक्षयेत् ।**
**चेष्टाश्चैव विजानीयादरीन् योधयतामपि ॥१९४॥**

व्यूह रचना गरेपछि सैनिकलाई उत्साहित बनाई तिनको मनोबलतिर ध्यान दिनु पर्दछ । यसका साथै राजाले युद्धरत सेनाका चाहना र आचरणतिर पनि कडा नजर राख्नु पर्दछ ।

**उपरुध्यारिमासीत राष्ट्रं चास्योपपीडयेत् ।**
**दूषयेच्चास्य सततं यवसान्नोदकेन्धनम् ॥१९५॥**



शत्रुलाई घेरेपछि  उसको राज्य, उसको खाद्य-आपूर्ति व्यवस्था, घाँसपात, रासन र इन्धनका श्रोतलाई पटकपटक नष्ट पार्नु पर्दछ ।

**भिन्द्याच्चैव तडागानि प्राकारपरिखास्तथा ।**
**समवस्कन्दयेच्चैनं रात्रौ वित्रासयेत्तथा ॥१९६॥**

शत्रुका जलाशय, किल्लाका पर्खाल र लुक्न बनाइएका खाल्टा भत्काउनु पर्दछ । रातमा असावधान भएको शत्रुलाई घेरी आत्समर्पण गर्न बाध्य पार्नु पर्दछ ।

**उपजप्यानुपजपेद्बुध्येतैव च तत्कृतम् ।**
**युक्ते च दैवे युध्येत जयप्रेप्सुरपेतभीः ॥१९७॥**

शत्रुपक्षमा रहेका र इच्छा र आवश्यकताका अधीनमा पर्नसक्ने सेनापतिलाई आफ्ना पक्षमा मिलाई ती मार्फत शत्रुको गोप्यता थाहा पाई आफ्नो जित पक्का गर्न

चाहनेले निडर भएर शत्रुमाथि आक्रमण गर्नु पर्दछ ।

**साम्ना दानेन भेदेन समस्तैरथ वा पृथक् ।**
**विजेतुं प्रयतेतारीन्न युद्धेन कदाचन ॥१९८॥**

साम, दान र भेदका उपायले काम नगरेपछि मात्र शत्रुसँग युद्ध गर्नू ।
एकैचोटी युद्धमा होमिनु भनेको मूर्खता गर्नु हो, यसले आफ्नै नाश गर्दछ ।

**अनित्यो विजयो यस्माद्दृश्यते युध्यमानयोः ।**
**पराजयश्च संग्रामे तस्माद्युद्धं विवर्जयेत् ॥१९९॥**

युद्धमा कसको हार र कसको जित हुन्छ निश्चित हुन्न ।
त्यसैले सम्भव भएसम्म युद्ध नगर्नू ।

**त्रयाणामप्युपायानां पूर्वोक्तानां असंभवे ।**

**तथा युध्येत संपन्नो विजयेत रिपून्यथा ॥२००॥**

माथि बताइएका तीन वटै उपाय असफल भएपछि मात्र युद्ध मार्फत शत्रुलाई
जित्ने कुराका बारेमा राजाले सोच्नु पर्दछ ।

**जित्वा संपूजयेद्देवान्ब्राह्मणांश्चैव धार्मिकान् ।**
**प्रदद्यात्परिहारार्थं ख्यापयेदभयानि च ॥२०१॥**

शत्रुलाई जितेपछि देवता र धार्मिक ब्राह्मणहरूलाई कृतज्ञता ज्ञापन गर्दै पूजा गर्नु पर्दछ ।
युद्धका कारण धनजनको क्षती व्यहोरेका प्रजालाई
यथासम्भव राहत दिई भयमुक्त बनाउनु पर्दछ ।

**सर्वेषां तु विदित्वैषां समासेन चिकीर्षितम् ।**
**स्थापयेत्तत्र तद्वंश्यं कुर्याच्च समयक्रियाम् ॥२०२॥**

विजयी भएपछि हारेको राजाको अवस्था, मन्त्री, सचिव, सेनापति तथा गण्यमान्य नागरिकको चाहना अनुसार पराजित राजालाईवा उसका कुनै योग्य वंशजलाई उसको राज्य दिनु पर्दछ । साथै, जितिएको देशको प्रजालाई त्यहाँका परम्परा, रीतिस्थितिलाई मान्यता दिने कुरामा विश्वस्त पार्नुपर्दछ ।

**प्रमाणानि च कुर्वीत तेषां धर्मान्यथोदितान् ।**
**रत्नैश्च पूजयेदेनं प्रधानपुरुषैः सह ॥२०३॥**

जित्ने राजाले हार्ने राजालाई पहिले उसको राज्य फर्काउँदै उसका मन्त्री, सचिव आदिको उपस्थितिमा उसको राज्यमा प्रतिस्थापित गर्नु पर्दछ । त्यसपछि त्यहाँका धार्मिक मान्यतालाई निरन्तरता दिने घोषणा गर्नुपर्दछ ।

**आदानमप्रियकरं दानं च प्रियकारकम् ।**
**अभीप्सितानां अर्थानां काले युक्तं प्रशस्यते ॥२०४॥**



बलपूर्वक आफ्ना प्रिय कुरा कसैले लिएको र कसैको निगाहमा केही पाएको कसलाई पो मन पर्दछ र ? तर पनि युद्धमा यी कुरा गर्नै पर्दछ । युद्धमा हार्नेले जित्नेलाई दिने उपहार र जित्नेले हार्नेलाई दिएको राज्य-उपहार विवशतापूर्वक अपनाइने गरिन्छ ।

**सर्वं कर्मेदमायत्तं विधाने दैवमानुषे ।**
**तयोर्दैवमचिन्त्यं तु मानुषे विद्यते क्रिया ॥२०५॥**

संसारमा सबै काम पूर्वजन्ममा गरिएका कर्मको फल र यस जन्ममा गरिने कर्मकै अधीनमा हुने गर्दछन् । भाग्यका विषयमा त यसै भन्न सकिन्न, पुरुषार्थ गर्न भने मानिस स्वतन्त्र छ । यसैले बुद्धिमानले भाग्यको भर नपरी पुरुषार्थ गर्न प्रयत्नशील हुने गर्नू ।

**सह वापि व्रजेद्युक्तः सन्धिं कृत्वा प्रयत्नतः ।**
**मित्रं हिरण्यं भूमिं वा संपश्यंस्त्रिविधं फलम् ॥२०६॥**

जित्ने राजाले हार्ने राजालाई कुनै कुरा लेनदेन नगरी, कुनै भूभाग लिएर वा सुन लिएर उसको राज्य फिर्ता दिई त्यहाँबाट जतिसक्दो चाँडो आफ्नो देशतिर फर्किनु पर्दछ । जति बढी त्यहाँ बस्यो उती त्यहाँको तिरस्कार झेल्नु पर्दछ । आखिर युद्ध अहंको सन्तुष्टिका लागि, जमिन कब्जा गर्न वा धन बटुल्न नै त गरिन्छ, यि कुरा पूरा भएपछि त्यहाँ बसिरहनु पर्ने कुनै कारण बाँकी पनि त हुँदैन ।

**पार्ष्णिग्राहं च संप्रेक्ष्य तथाक्रन्दं च मण्डले ।**
**मित्रादथाप्यमित्राद्वा यात्राफलमवाप्नुयात् ॥२०७॥**

जित्ने राजाले शत्रुको शत्रु, आफ्ना सहायक, शत्रुका मित्र र उसका सहायक आदिको सल्लाह बमोजिम पराजित राजाबाट क्षतिपूर्ति असुल्नु पर्दछ । विजय राजाले होइन उसका सहयोगीले गरेका हुन् भन्ने कुरा राजाले कहिल्यै भुल्नु हुँदैन ।

**हिरण्यभूमिसंप्राप्त्या पार्थिवो न तथैधते ।**
**यथा मित्रं ध्रुवं लब्ध्वा कृशमप्यायतिक्षमम् ॥२०८॥**



साँच्चिकै भन्ने हो भने कुनै राजा वा देश अरु कुनै देशको जमिन वा धनले समृद्ध हुन सक्दैन । राजाको वास्तविक समृद्धि भनेको मित्रहरू बढ्नु हो मित्रहरू बढेपछि निर्बल राजापनि समर्थ र शक्तिशाली हुन पुग्दछ ।

**धर्मज्ञं च कृतज्ञं च तुष्टप्रकृतिमेव च ।**
**अनुरक्तं स्थिरारम्भं लघुमित्रं प्रशस्यते ॥२०९॥**

धर्मात्मा, कृतज्ञ, सजिलै सन्तुष्ट हुने र काम शुरु गरेर सक्ने खालका साना राजालाई पनि एउटा उत्तम दर्जाको मित्र समझिनु पर्दछ ।

**प्राज्ञं कुलीनं शूरं च दक्षं दातारमेव च ।**
**कृतज्ञं धृतिमन्तं च कष्टमाहुररिं बुधाः ॥२१०॥**

बुद्धिमान्, कुलीन, शूरवीर, चलाख, कृतज्ञ, दानी, प्रजावत्सल र धैर्यशाली

राजामाथि सहजै विजय हासिल गर्न सकिन्न भनेर विद्वानहरूले भनेका छन् ।

**आर्यता पुरुषज्ञानं शौर्यं करुणवेदिता ।**
**स्थौललक्ष्यं च सततमुदासीन गुणोदयः ॥२११॥**

सभ्यता, मनुष्यता, वीरता र करुणा धेर देखिने र स्थूल कुराको चर्चामा आफूलाई सीमित पार्ने लक्षण भनेका उदासीनताका लक्षण हुन् । यस्ता व्यक्ति कसैका मित्र वा शत्रु हुँदैनन्, यि संसारबाट अघाइसकेका हुन्छन् ।

**क्षेम्यां सस्यप्रदां नित्यं पशुवृद्धिकरीमपि ।**
**परित्यजेन्नृपो भूमिमात्मार्थमविचारयन् ॥२१२॥**

सुखसमृद्धि दिने, धनधान्यले भरीपूर्ण, उर्बर, पशुपालनका लागि योग्य भूमीलाई पनि धेरै सोचबिचार नगरी राजाले छाडी दिनु पर्दछ ।



**आपदर्थं धनं रक्षेद्दाराने रक्षेद्धनैरपि ।**
**आत्मानं सततं रक्षेद्दारैरपि धनैरपि ॥२१३॥**

आपद पर्दा काम लाग्दछ भनेर धनलाई सञ्चय वा रक्षा गर्नू । स्त्रीको रक्षाका लागि धन खर्च गर्नू । आफूलाई सङ्कट पर्दा धन र स्त्रीलाई छाडेर भएपनि आफ्नु रक्षा गर्नू ।

**सह सर्वाः समुत्पन्नाः प्रसमीक्ष्यापदो भृशम् ।**
**संयुक्तांश्च वियुक्तांश्च सर्वोपायान्सृजेद्बुधः ॥२१४॥**

बुद्धिमानले एकैपटक अनेक आपद आइलागे साम, दान आदि उपाय बेग्लाबेग्लै वा एकैपटक प्रयोग गर्नू ।

**उपेतारमुपेयं च सर्वोपायांश्च कृत्स्नशः ।**
**एतत्त्रयं समाश्रित्य प्रयतेतार्थसिद्धये ॥२१५॥**

उपायका गुण, दोष र विधिका बारेमा राम्ररी सोचविचार गरेर मात्र कुनै कार्य शुरु गर्नू ।

**एवं सर्वमिदं राजा सह सम्मन्त्र्य मन्त्रिभिः ।**
**व्यायम्याप्लुत्य मध्याह्ने भोक्तुं अन्तःपुरं विशेत् ॥२१६॥**

यसरी बुद्धिमान राजाले हरेक दिन सम्बन्धित सबै विषयमाथि मन्त्रीगणसँग सरसल्लाह गरेर त्यसपछि व्यायाम र स्नान गरी अनि खाना खाएर आराम गर्न दरबारको स्त्री-कक्ष वा खोपी (अन्तःपुर) मा छिर्नू ।

**तत्रात्मभूतैः कालज्ञैरहार्यैः परिचारकैः ।**
**सुपरीक्षितं अन्नाद्यमद्यान्मन्त्रैर्विषापहैः ॥२१७॥**

त्यहाँ पूर्णतः विश्वस्त, राम्ररी परीक्षा गरिएका, कुनै पनि लोभलालचमा नपर्ने, राजभक्त र समर्पित सेवकले दिएका तथा विषनाशक मन्त्रले शुद्ध पारिएका अन्न भोजन गर्नू ।



**विषघ्नैरगदैश्चास्य सर्वद्रव्याणि योजयेत् ।**
**विषघ्नानि च रत्नानि नियतो धारयेत्सदा ॥२१८॥**

राजवैद्य र भान्छेले राजाको भोजन र अन्य कुरामा बेलाबेलामा विषनाशक औषधी हालिरहनु पर्दछ । राजाले पनि सधैं विषनाशक रत्न लगाउने गर्नुपर्दछ ।

**परीक्षिताः स्त्रियश्चैनं व्यजनोदकधूपनैः ।**
**वेषाभरणसंशुद्धाः स्पृशेयुः सुसमाहिताः ॥२१९॥**

खोपीमा गुनिला, राम्रा, सुन्दर वस्त्राभूषण लगाएका, मीठो बोल्ने स्त्रीहरुले दत्तचित्त भएर राजालाई डुलाउने, हातगोडा धोइदिने, शरीर पुछिदिने, चन्दन लगाइदिने, चमर हम्कने आदि काम गरुन् ।

**एवं प्रयत्नं कुर्वीत यानशय्यासनाशने ।**
**स्नाने प्रसाधने चैव सर्वालङ्कारकेषु च ॥२२०॥**

यसैगरी राजाका सवारी, शैया, आसन, नुहाइधुवाइ तथा वस्त्र र अलङ्कार लगाइ दिने सेवक-सेविकाहरू पनि विश्वस्त, राम्ररी जाँचिएका, दक्ष र राजभक्त हुनु पर्दछ ।

**भुक्तवान् विहरेच्चैव स्त्रीभिरन्तःपुरे सह ।**
**विहृत्य तु यथाकालं पुनः कार्याणि चिन्तयेत् ॥२२१॥**

अन्तपुरमा खाना खाइसकेपछि राजाले दक्ष स्त्रीसँग एकछिन टहलिनु पर्दछ । त्यसपछि एकछिन आराम गरी पुनः राजसभामा गई आवश्यक छलफल गर्दै समस्या समाधान गर्नुपर्दछ (राजकाजपट्टि ध्यान दिनु पर्दछ) ।

**अलंकृतश्च संपश्येदायुधीयं पुनर्जनम् ।**
**वाहनानि च सर्वाणि शस्त्राण्याभरणानि च ॥२२२॥**



सुन्दर वस्त्र र मोहित पार्ने खालका अलङ्कार लगाएका राजाले राजसभाको काम सकेपछि शत्रुबाट युद्धमा लुटिएका हतियार, बाहन र गरगहनाका साथै बन्दी बनाइएका सैनिकको पनि निरीक्षण गर्नु पर्दछ ।

**संध्यां चोपास्य श्रृणुयादन्तर्वेश्मनि शस्त्रभृत् ।**
**रहस्याख्यायिनां चैव प्रणिधीनां च चेष्टितम् ॥२२३॥**

साँझको सन्ध्याबन्दन सकेपछि गुप्तगृहमा कडा सुरक्षाका बीच गुप्तचर र रहस्यवक्ताका प्रतिवेदन सुन्नु पर्दछ ।

**गत्वा कक्षान्तरं त्वन्यत्समनुज्ञाप्य तं जनम् ।**
**प्रविशेद्भोजनार्थं च स्त्रीवृत्तोऽन्तःपुरं पुनः ॥२२४॥**

गुप्तचर र रहस्यवक्तालाई बिदा गरेपछि राजाले गोप्य ढोकाबाट बाहिर आई गोप्य बाटो हुँदै अन्तःपुरको रक्षार्थ खटिएका स्त्रीहरूको रेखदेखमा अन्तःपुरमा छिरी रातको खाना खानु पर्दछ ।

**तत्र भुक्त्वा पुनः किंचित्तूर्यघोषैः प्रहर्षितः ।**
**संविशेत्तं यथाकालं उत्तिष्ठेच्च गतक्लमः ॥२२५॥**

खाना खाइसकेपछि एकछिन नाच, गान , बाद्यवादन आदिको आनन्द लिनु पर्दछ र त्यसपछि शयनकक्षातिर सुत्न जानु पर्दछ ।

**एतद्विधानं आतिष्ठेदरोगः पृथिवीपतिः ।**
**अस्वस्थः सर्वमेतत्तु भृत्येषु विनियोजयेत् ॥२२६॥**

स्वस्थ हुँदा राजाले यसैगरी दिनचर्या गरी सबै काम गर्नु पर्दछ । अस्वस्थ हुँदा कुनै काम गर्ने जिम्मा कुनै अधिकारीलाई दिन सकिन्छ ।



**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां सप्तमोऽध्यायः ॥७॥**

मनुस्मृति, सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।

**शुरुदेखिको श्लोकको संख्याः-१,१८०+२२६=१,४०६**

## ॥ अथाष्टमोऽध्यायः ॥

## (मुद्दामामिला)

**व्यवहारान्दिदृक्षुस्तु ब्राह्मणैः सह पार्थिवः ।**
**मन्त्रज्ञैर्मन्त्रिभिश्चैव विनीतः प्रविशेत्सभाम् ॥१॥**

अब राजाले मन्त्रीहरूसँग मुद्दामामिला हेर्दाका कामकर्तव्यका बारेमा बताउँदछु । मुद्दामामिला हेर्न चाहने राजाले वेदज्ञ ब्राह्मणहरू र व्यवहार एवं राजनीतिमा पोख्त मन्त्रीहरूसँग पूर्ण नम्रतापूर्वक सभा भवन (इजलाश) मा छिर्नु पर्दछ ।

**तत्रासीनः स्थितो वापि पाणिमुद्यम्य दक्षिणम् ।**
**विनीतवेषाभरणः पश्येत्कार्याणि कार्यिणाम् ॥२॥**

सुन्दर एवं भलाद्मी खालका लुगागहना लगाएका राजाले त्यहाँ पुगेपछि आफ्नो आसनमा बसेर वा उभिएरै आफ्नो दाहिने हात उठाएर सभासदले गरेको अभिवादनको प्रत्युत्तर दिनुपर्दछ र त्यसपछि बसेर अधिकारीका कामकारवाहीलाई हेर्नु पर्दछ ।

**प्रत्यहं देशदृष्टैश्च शास्त्रदृष्टैश्च हेतुभिः ।**
**अष्टादशसु मार्गेषु निबद्धानि पृथक्पृथक् ॥३॥**

राज्यव्यवस्थाका दृष्टिले अठार विभाग (तल दिइएका) मा बाँडिएका मुद्दामामिलालाई व्यावहारिक र सैद्धान्तिक दुबै पक्षबाट हरेक दिन बेग्लाबेग्लै समीक्षा गर्नु पर्दछ ।

**तेषामाद्यमृणादानं निक्षेपोऽस्वामिविक्रयः ।**
**संभूय च समुत्थानं दत्तस्यानपकर्म च ॥४॥**

ती विवादका अठार विषय वा विभाग हुन्-(१) ऋणको, (२) निक्षेपको, (३), अनधिकृत बेचबिखनको, (४) साभेदारी व्यवसायको, (५) दानदातव्य फिर्ता लिने कामको,...।

**वेतनस्यैव चादानं संविदश्च व्यतिक्रमः ।**
**क्रयविक्रयानुशयो विवादः स्वामिपालयोः ॥५॥**

(६) तलबको, (७) सम्झौता उल्लङ्घनको, (८) खरिदबिक्रीको, (९) मालिक र गोठालाको,..।

**सीमाविवादधर्मश्च पारुष्ये दण्डवाचिके ।**
**स्तेयं च साहसं चैव स्त्रीसंग्रहणमेव च ॥६॥**

(१०) सीमाको, (११) गालीगलौचको, (१२) मारपिटको, (१३) चोरीको, (१४) डकैती र बलजफ्तीको, (१५) परस्त्रीहरणको,..।

**स्त्रीपुंधर्मो विभागश्च द्यूतमाह्वय एव च ।**
**पदान्यष्टादशैतानि व्यवहारस्थिताविह ॥७॥**

(१६) स्त्री र पुरुषका धर्मको, (१७) अंशबण्डाको र (१८) जुवा, बाजी आदिको ।



**एषु स्थानेषु भूयिष्ठं विवादं चरतां नृणाम् ।**
**धर्मं शाश्वतमाश्रित्य कुर्यात्कार्यविनिर्णयम् ॥८॥**

यी अठार वटा विषयमा हुने विवादमा वादि र प्रतिवादिका कुरा सुनी राजाले तटस्थ भई शास्त्र एवं न्यायसम्मत ढङ्गले स्पष्ट निर्णय (फैसला) गर्नुपर्दछ ।

**यदा स्वयं न कुर्यात्तु नृपतिः कार्यदर्शनम् ।**
**तदा नियुंज्याद्विद्वांसं ब्राह्मणं कार्यदर्शने ॥९॥**

जब मुद्दा आफैं हेर्न राजा असमर्थ हुन्छ तब विद्वान ब्राह्मणलाई मुद्दा हेर्ने जिम्मा दिनू ।

**सोऽस्य कार्याणि संपश्येत्सभ्यैरेव त्रिभिर्वृतः ।**
**सभामेव प्रविश्याग्र्यामासीनः स्थित एव वा ॥१०॥**

राजाबाट खटाइएको त्यो ब्राह्मणले अन्य तीन न्यायविद्को सहयोग लिई सभामा प्रवेश गरेर सभा अगिल्तिर उठीउठी वा बसेर राजाका कामहरू गरोस् ।

**यस्मिन्देशे निषीदन्ति विप्रा वेदविदस्त्रयः ।**
**राज्ञश्चाधिकृतो विद्वान्ब्रह्मणस्तां सभां विदुः ॥११॥**

जुन देशमा वेदज्ञ तीन जना ब्राह्मणहरू राजाका अधिकृत भएर न्याय सभा चलाउँदछन् त्यो सभालाई विद्वानहरुले ब्रह्मसभा भनेका छन् ।

**धर्मो विद्धस्त्वधर्मेण सभां यत्रोपतिष्ठते ।**
**शल्यं चास्य न कृन्तन्ति विद्धास्तत्र सभासदः ॥१२॥**

जुन राजसभामा अधर्मबाट धर्मको हत्या हुन्छ तर पनि सभासदहरू मुकदर्शक भएर बस्दछन्, अधर्मरूपी काँडालाई निकाल्दैनन्, त्यहाँ यसरी घोचिएको धर्मले सभासदलाई नै काँडा बनी घोच्न थाल्दछ ।



**सभां वा न प्रवेष्टव्यं वक्तव्यं वा समञ्जसम् ।**
**अब्रुवन्विब्रुवन्वापि नरो भवति किल्बिषी ॥१३॥**

इजलाशमा जाँदै नजानु, गए साँचो बोल्नू । गएर पनि नबोले वा असत्य बोले मानिस पापी हुन्छ ।

**यत्र धर्मो ह्यधर्मेण सत्यं यत्रानृतेन च ।**
**हन्यते प्रेक्षमाणानां हतास्तत्र सभासदः ॥१४॥**

जुन सभामा सभ्य (न्यायाधीश)ले हेर्दाहेर्दै धर्म अधर्मबाट र सत्य असत्यबाट नष्ट हुन्छ, त्यहाँका सभ्य (त्यही पापले) नष्ट हुन्छन् ।

**धर्म एव हतो हन्ति धर्मो रक्षति रक्षितः ।**
**तस्माद्धर्मो न हन्तव्यो मा नो धर्मो हतोऽवधीत् ॥१५॥**

धर्मले धर्मको रक्षा गर्नेको रक्षा र हत्या गर्नेको हत्या गर्दछ । त्यसैले धर्मको रक्षा गर्नु हत्या नगर्नु,जसले गर्दा आफ्नो हत्या नहोस् ।

**वृषो हि भगवान्धर्मस्तस्य यः कुरुते ह्यलम् ।**
**वृषलं तं विदुर्देवास्तस्माद्धर्मं न लोपयेत् ॥१६॥**

धर्म भगवानलाई “वृष” भनिन्छ, जसले यसलाई मार्दछ उसलाई देवताहरू “वृषल” भन्दछन् । यसैले धर्मलाई लोप नगर्नू ।

**एक एव सुहृद्धर्मोनिधनेऽप्यनुयाति यः ।**
**शरीरेण समं नाशं सर्वमन्यद्धि गच्छति ॥१७॥**



अरु सबै कुराले शरीरको अन्तसँगै साथ छोडिदिन्छन् परन्तु धर्मले मरिसकेपछि पनि साथ छोड्दैन ।

**पादोऽधर्मस्य कर्तारं पादः साक्षिणमृच्छति ।**
**पादः सभासदः सर्वान् पादो राजानमृच्छति ॥१८॥**

अधर्मको एक-एक चौथाई फल सबैले अर्थात गर्नेले, देख्नेले, न्याय मण्डलीले र राजाले भोग्नु पर्दछ ।

**राजा भवत्यनेनास्तु मुच्यन्ते च सभासदः ।**
**एनो गच्छति कर्तारं निन्दार्हो यत्र निन्द्यते ॥१९॥**

जुन सभामा मिथ्यावादी (पापकर्ता) लाई निन्दा गरिन्छ, त्यहाँ राजा र सभासद पापी हुँदैनन्, जसले पाप गरेको छ सबै पाप उसलाई मात्र लाग्दछ ।

**जातिमात्रोपजीवी वा कामं स्याद् ब्राह्मणब्रुवः ।**
**धर्मप्रवक्ता नृपेन्नं तु शूद्रः कथञ्चन ॥२०॥**

ब्राह्मणकूलमा जन्मी वेद-विद्यारहित र जजमानलाई धर्मको तत्व ज्ञान दिन असमर्थ व्यक्तिलाई शूद्र नमानिए पनि पूजा भने गरिँदैन ।

**यस्य शूद्रस्तु कुरुते राज्ञो धर्मविवेचनम् ।**
**तस्य सीदति तद्राष्ट्रं पङ्के गौरिव पश्यतः ॥२१॥**

जुन राजाका दरबारमा धर्म-अधर्मको निर्णय शूद्र गर्दछ, त्यो राज्य देख्दादेख्दै धापमा गाई फसेर पीडित भएजसरी फसेर पीडित हुन्छ ।

**यद्राष्ट्रं शूद्रभूयिष्ठं नास्तिकाक्रान्तमद्विजम् ।**
**विनश्यत्याशु तत्कृत्स्नं दुर्भिक्षव्याधिपीडितम् ॥२२॥**



जुन देश शूद्र र नास्तिकले भरिभराउ हुन्छ, द्विज हुँदैनन्, त्यो देश चाँडै भोकमरी र रोगको पीडाले नष्ट हुन्छ ।

**धर्मासनमधिष्ठाय संवीताङ्गः समाहितः ।**
**प्रणम्य लोकपालेभ्यः कार्यदर्शनमारभेत् ॥२३॥**

स्वस्थचित्तले, वस्त्रले शरीरका अङ्ग ढाकी, लोकपालहरूलाई नमस्कार गर्दै राजगद्दीमा बसेर राजाले मुद्दामामिला (वा राजकाज) हेर्न थाल्नु पर्दछ ।

**अर्थानर्थावुभौ बुद्ध्वा धर्माधर्मौ च केवलौ ।**
**वर्णक्रमेण सर्वाणि पश्येत्कार्याणि कार्यिणाम् ॥२४॥**

राजाले अर्थ र अनर्थ तथा केबल धर्म र अधर्मलाई हेरी वर्णक्रम अनुसार भए, गरिएका सबै कामकारवाहीलाई हेर्नु (केलाउनु) पर्दछ ।

**बाह्यैर्विभावयेल्लिङ्गैर्भावं अन्तर्गतं नृणाम् ।**
**स्वरवर्णेङ्गिताकारैश्चक्षुषा चेष्टितेन च ॥२५॥**

(अपराधी) मानिसका शरीरमा देखिने बाहिरी लक्षण : बदलिएको वा काँपेको स्वर, बदलिएको अनुहारको रङ्ग, आएका पसिना वा कामिरहेको शरीर तथा दृष्टिको अस्थिरताबाट उसको मनको भावलाई बुझ्नु पर्दछ ।

**आकारैरिङ्गितैर्गत्या चेष्टया भाषितेन च ।**
**नेत्रवक्त्रविकारैश्च गृह्यतेऽन्तर्गतं मनः ॥२६॥**

पसिना वा कम्पन, सङ्केत, हाउभाउ, चेष्टा, बोली तथा आँखा र मुखमा देखिने विकारबाट मानिसका मनका कुरा थाहा हुन्छ ।

**बालदायादिकं रिक्थं तावद्राजाऽनुपालयेत् ।**
**यावत्स स्यात्समावृत्तो यावच्चातीतशैशवः ॥२७॥**



नाबालकको सम्पत्ति तबसम्म राजाले संरक्षण गर्नु जबसम्म उ पढीलेखी जान्ने हुँदैन वा किशोर वा वालिग हुँदैन ।

**वशाऽपुत्रासु चैवं स्याद्रक्षणं निष्कुलासु च ।**
**पतिव्रतासु च स्त्रीषु विधवास्वातुरासु च ॥२८॥**

सन्तान नहुने स्त्रीको, छोरा नहुने स्त्रीको, अंश खाने आफन्त कोही नहुनेको, पतिव्रताको, एकल महिलाको र रोगिणीको श्रीसम्पत्तिलाई पनि राजाले संरक्षण गर्नू ।

**जीवन्तीनां तु तासां ये तद्धरेयुः स्वबान्धवाः ।**
**ताञ्छिष्याच्चौरदण्डेन धार्मिकः पृथिवीपतिः ॥२९॥**

यस्ता जीवित स्त्रीको श्रीसम्पत्ति जसले खोस्दछ उसलाई धार्मिक

राजाले चोरलाई दिने सरहको दण्ड दिनू ।

**प्रणष्टस्वामिकं रिक्थं राजा त्र्यब्दं निधापयेत् ।**
**अर्वाक् त्र्यब्दाद्धरेत्स्वामी परेण नृपतिर्हरेत् ॥३०॥**

मालिक नभएको (वेवारिसे) श्रीसम्पत्तिलाई राजाले तीन वर्षसम्म राख्नू । तीन वर्षभित्र कोही सप्रमाण लिन आए उसले लैजानु, नभए राजाले जफत गर्नू ।

**ममेदमिति यो ब्रूयात्सोऽनुयोज्यो यथाविधि ।**
**संवाद्य रूपसंख्यादीन्स्वामी तत् द्रव्यमर्हति ॥३१॥**

मेरो धन हो भनी दावी गर्न आउनेलाई राजाले के हो ? कस्तो हो ? कति हो ? आदि कुरा सोध्नू, उसले सत्यसत्य बताए त्यो धन त्यसको मालिकले (उसैले) पाउँदछ ।

**अवेदयानो नष्टस्य देशं कालं च तत्त्वतः ।**

**वर्णं रूपं प्रमाणं च तत्समं दण्डमर्हति ॥३२॥**

हराएको श्रीसम्पत्तिका बारेमा देश, समय, रङ्ग, रूप आदि प्रमाण सत्यसत्य बताउन सक्दैन भने उ त्यही श्रीसम्पत्ति बराबरको दण्ड पाउन योग्य हुन्छ ।

**आददीताथ षड्भागं प्रनष्टाधिगतान्नृपः ।**
**दशमं द्वादशं वापि सतां धर्ममनुस्मरन् ॥३३॥**

हराएको धन पुनः पाइए त्यो धनबाट छैटौं, दशौं वा बाह्रौं भागे सत्पुरुषको धर्म सम्झँदै राजाले लिनू ।

**प्रणष्टाधिगतं द्रव्यं तिष्ठेद्युक्तैरधिष्ठितम् ।**
**यांस्तत्र चौरान्गृह्णीयात्तान् राजेभेन घातयेत् ॥३४॥**

कसैको हराएको धन राजकर्मचारीले पाई दरबारमा सुरक्षित तरिकाले राखिएको अवस्थामा कसैले चोरे, त्यस्तो चोरलाई (राजाले) हात्ती मार्फत मार्न लगाउनू ।

**ममायमिति यो ब्रूयान्निधिं सत्येन मानवः ।**
**तस्याददीत षड्भागं राजा द्वादशमेव वा ॥३५॥**

सत्यतापूर्वक कसैले "यो गाढधन मेरो हो" भनेमा (वा उसको दावी सही प्रमाणित भएमा) त्यो गाढधनबाट छैटौं वा बाह्रौं भाग राजाले लिई बाँकी गाढधन उसलाई दिनू ।

**अनृतं तु वदन्दण्ड्यः स्ववित्तस्यांशमष्टमम् ।**
**तस्यैव वा निधानस्य संख्ययाल्पीयसीं कलाम् ॥३६॥**

गाढधन माथि कसैले झूटो दाबी गरे उसको सम्पत्तिको आठौं भाग वा गाढधनमध्येको केही अंश बराबर दाबीगर्नेलाई दण्ड तिराउनू ।



**विद्वांस्तु ब्राह्मणो दृष्ट्वा पूर्वोपनिहितं निधिम् ।**
**अशेषतोऽप्याददीत सर्वस्याधिपतिर्हि सः ॥३७॥**

विद्वान् ब्राह्मणबाट उसका पूर्वजले गाढेको गाढधन भेटिए सबै उसैलाई दिनू (राजाले आफ्नो भाग नलिनु) किन कि सबैको अधिपति नै उही हो ।

**यं तु पश्येन्निधिं राजा पुराणं निहितं क्षितौ ।**
**तस्माद् द्विजेभ्यो दत्त्वार्धमर्धं कोशे प्रवेशयेत् ॥३८॥**

सार्वजनिक वा सरकारी जग्गामा गाढधन भेटिए त्यसको आधा द्विजहरूलाई दान गरी आधा राजकोषमा दाखिला गर्नू ।

**निधीनां तु पुराणानां धातूनामेव च क्षितौ ।**
**अर्धभाग्रक्षणाद्राजा भूमेरधिपतिर्हि सः ॥३९॥**

पुराना गाढधन (ब्राह्मण बाहेककाको) तथा पृथ्वीमा भएका सबैखाले धातुका आधा भागको हकदार राजा हुन्छ किन कि भूमिको रक्षक भएका नाताले उ त्यसको स्वामी हो ।

**दातव्यं सर्ववर्णेभ्यो राज्ञा चौरैर्हृतं धनम् ।**
**राजा तदुपयुञ्जानश्चौरस्याप्नोति किल्बिषम् ॥४०॥**

चोरले चोरेको धन राजाले प्राप्त गरी (खोजी) जुनसुकै वर्णको भएपनि त्यो धन त्यसको स्वामीलाई दिनू, नदिए (वा दिन नसके) राजालाई नै चोरेको पाप लाग्दछ ।

**जातिजानपदान्धर्मान्श्रेणीधर्मांश्च धर्मवित् ।**
**समीक्ष्य कुलधर्मांश्च स्वधर्मं प्रतिपादयेत् ॥४१॥**

धर्मका विषयमा सबै कुरा जान्ने (राजा) ले देशधर्म, श्रेणीधर्म (पेसाधर्म) र कुलधर्म राम्ररी हेरी आफ्नो धर्म (रीतिरिवाज) प्रचलनमा लेराउनू ।



**स्वानि कर्माणि कुर्वाणा दूरे सन्तोऽपि मानवाः ।**
**प्रिया भवन्ति लोकस्य स्वे स्वे कर्मण्यवस्थिताः ॥४२॥**

टाढा टाढा बसेर पनि आआफ्ना धर्मकर्म गरिरहेका मानिस लोकप्रिय हुने गर्दछन् ।

**नोत्पादयेत्स्वयं कार्यं राजा नाप्यस्य पुरुषः ।**
**न च प्रापितमन्येन ग्रसेदर्थं कथञ्चन ॥४३॥**

राजा र राजकर्मचारी कहिल्यै आफू झगडाको कारण नबन्नू । कसैले उजुरी हाल्न आए अर्कोसँग घुस लिएर उसँग उजुरी नलिने नगर्नू ।

**यथा नयत्यसृक्पातैर्मृगस्य मृगयुः पदम् ।**
**नयेत्तथाऽनुमानेन धर्मस्य नृपतिः पदम् ॥४४॥**

जसरी शरीरबाट खसिरहेका रगतका थोपा पछ्याउँदै शिकारी घायल मृग समक्ष पुग्दछ, त्यसरी नै राजा अनुमानलाई पछ्याउँदै वास्तविक अपराधीसम्म पुगोस् ।

**सत्यमर्थं च संपश्येदात्मानमथ साक्षिणः ।**
**देशं रूपं च कालं च व्यवहारविधौ स्थितः ॥४५॥**

मुद्दा छिन्न बसेका अधिकारीले अर्थ, आफू स्वयं, साछीहरू, देश, लक्षण र समयलाई ख्याल राख्ने गर्नू ।

**सद्भिराचरितं यत्स्याद्धार्मिकैश्च द्विजातिभिः ।**
**तद्देशकुलजातीनां अविरुद्धं प्रकल्पयेत् ॥४६॥**

सदाचारी र धार्मिक द्विजातिका आचरण, देशधर्म, कुलधर्म र जातिधर्म विरुद्ध नहुने गरी मुद्दाको फैसला गर्ने गर्नू ।



**अधमर्णार्थसिद्ध्यर्थमुत्तमर्णेन चोदितः ।**
**दापयेद्धनिकस्यार्थं अधमर्णाद्विभावितम् ॥४७॥**

ऋणीलाई तिनले व्यवहार चलाउन साहूसँग लिएको ऋण तिर्न लगाउनू ।

**यैर्यैरुपायैरर्थं स्वं प्राप्नुयादुत्तमर्णिकः ।**
**तैस्तैरुपायैः संगृह्य दापयेदधमर्णिकम् ॥४८॥**

जे जे उपाय गर्नाले साहूको पैसा उठ्दछ, त्यो त्यो उपाय गरी ऋणीसँग उसको पैसा (लगानी) उठाई दिनू ।

**धर्मेण व्यवहारेण छलेनाचरितेन च ।**
**प्रयुक्तं साधयेदर्थं पञ्चमेन बलेन च ॥४९॥**

धर्म, विवाद, छलकपट, दवाव र बलका माध्यमबाट भएपनि लगानीकर्ताको
लगानी ऋणीबाट असुलउपर गराई दिनू ।

**यः स्वयं साधयेदर्थमुत्तमर्णोऽधमर्णिकात् ।**
**न स राज्ञाऽभियोक्तव्यः स्वकं संसाधयन्धनम् ॥५०॥**

नियमानुसार आसामीसँग आफैं पैसा असुलउपर गर्ने
साहूलाई राजाले कुनै अभियोग नलगाउनू ।

**अर्थेऽपव्ययमानं तु करणेन विभावितम् ।**
**दापयेद्धनिकस्यार्थं दण्डलेशं च शक्तितः ॥५१॥**

ऋण लिएर पनि लिएको छैन वा हैन भन्नेसँग लिखत, साछी आदि मार्फत लिएको प्रमाणित भए
लिएको ऋण र गच्छे अनुसार केही जरिवाना समेत असुली गरी साहूलाई दिनू ।



**अपह्नवेऽधमर्णस्य देहीत्युक्तस्य संसदि ।**
**अभियोक्ता दिशेद्देश्यं करणं वाऽन्यदुद्दिशेत् ॥५२॥**

इजलाशमा उपस्थित भएको ऋणी (प्रतिवादी) लाई पहिले साहूको ऋण तिर भन्नू ।
उसले लिएको अस्वीकार गरे लिएको प्रमाण पेश गर्न साहू (वादी) लाई आदेश दिनू ।

**अदेश्यं यश्च दिशति निर्दिश्यापह्नुते च यः ।**
**यश्चाधरोत्तरानर्थान्विगीतान्नावबुध्यते ॥५३॥**

न्यायालय समक्ष जसले झूटा साछी पेश गर्दछ, नक्कली कागजात पेश गर्दछ, जसले पहिले पेश
गरेका कुरा पछि अस्वीकार गर्दछ, जो पटकपटक बयान फेर्दछ,..।

**अपदिश्यापदेश्यं च पुनर्यस्त्वपधावति ।**
**सम्यक्प्रणिहितं चार्थं पृष्टः सन्नाभिनन्दति ॥५४॥**

जसले कुरालाई बङ्ग्याउँदछ वा उल्टयाउँदछ, जो आफैंले पहिले कबुल गरेको कुरा पछि न्यायाधीशले सोद्धा अस्वीकार गर्दछ,..।

**असंभाष्ये साक्षिभिश्च देशे संभाषते मिथः ।**
**निरुच्यमानं प्रश्नं च नेच्छेद्यश्चापि निष्पतेत् ।।५५।।**

जो एकान्तमा साछीसँग कुराकानी गर्दछ, जो अदालतले सोधेका कुरामा जवाफ दिन झिँजो मान्दछ, जो आदेश नमानी बिनाकाम यताउता लखरलखर घुम्ने गर्दछ,..।

**ब्रूहीत्युक्तश्च न ब्रूयादुक्तं च न विभावयेत् ।**
**न च पूर्वापरं विद्यात्तस्मादर्थात्स हीयते ।।५६।।**

जो सोद्धाखेरी जवाफ नदिई चूपचाप बस्दछ, जो जवाफ दिएपनि दृढतापूर्वक दिँदैन र जो आफैंले दिएका बयान फेर्दछ उ मुद्दा हार्दछ ।



**साक्षिणः सन्ति मेत्युक्त्वा दिशेत्युक्तो दिशेन्न यः ।**
**धर्मस्थः कारणैरेतैर्हीनं तमपि निर्दिशेत् ।।५७।।**

मेरा साछी छन् भनेर अदालतले उपस्थित गराउन आदेश दिएका बखतमा साछीलाई उपस्थित गराउन सक्दैन भने, त्यसलाई पनि "तैंले मुद्दा हारिस्" भनिर्दिंदा हुन्छ ।

**अभियोक्ता न चेद्ब्रूयाद्बध्यो दण्ड्यश्च धर्मतः ।**
**न चेत्त्रिपक्षात्प्रब्रूयाद्धर्मं प्रति पराजितः ।।५८।।**

नालिश हालेर अदालतमा नबोल्ने वादी, मुद्दाको प्रकृति हेरी थुनिन वा दण्डित हुन योग्य हुन्छ । यस्तो अवस्थामा तीन महिना भित्र प्रतिवादीले वादीलाई झूटो मुद्दा हालेको भनी क्षतीपूर्ति दाबी गर्दै उल्टो मुद्दा नहाले पहिले मुद्दा हाल्ने व्यक्ति स्वतः हार्दछ ।

**यो यावन्निह्नुवीतार्थं मिथ्या यावति वा वदेत् ।**
**तौ नृपेण ह्यधर्मज्ञौ दाप्यो तद्द्विगुणं दमम् ॥५९॥**

ऋणीसँग नियमानुसार असुलउपर गर्नुपर्नेभन्दा बढी रकम असुलउपर गरी त्यसलाई नकार्ने साहू र तिर्नुपर्नेभन्दा कम रकम तिरी पूरै तिरें भन्ने ऋणी : यी दुवैसँग यी कुरा प्रमाणित भए फरक रकमको दोब्बर जरिवाना असुलउपर गर्नू । उदाहरणका लागि पाँच सय दिएर छ सय उठाउन खोज्ने साहू र छ सय लिएर पाँच सय तिर्न खोज्ने ऋणी छन् भने वास्तविक रकमको अन्तर सयको दोब्बर अर्थात् दुई दुई सय दूबैलाई दण्ड तिराउनू ।

**पृष्टोऽपव्ययमानस्तु कृतावस्थो धनैषिणा ।**
**त्र्यवरैः साक्षिभिर्भाव्यो नृपब्राह्मणसंनिधौ ॥६०॥**

अदालत एवं ब्राह्मणका सामु वादीबाट प्रतिवादीलाई लगाइएको आरोप अस्वीकार गरिएमा वादीले आफ्नो दावी प्रमाणित गर्न तीन जना साछी पेश गर्नु पर्दछ, अन्यथा प्रतिवादीले भनेका कुरा सही होइनन् भन्ने कुनै आधार बाँकी रहँदैन ।



**यादृशा धनिभिः कार्या व्यवहारेषु साक्षिणः ।**
**तादृशान्संप्रवक्ष्यामि यथा वाच्यमृतं च तैः ॥६१॥**

साहूले फैसला आफ्नू पक्षमा पार्न कस्ता साछी पेश गर्नु पर्दछ र साछीले अदालत समक्ष कसरी प्रस्तूत हुनुपर्दछ भन्ने कुरा अब म बताउँदछु ।

**गृहिणः पुत्रिणो मौलाः क्षत्रविट्शूद्रयोनयः ।**
**अर्थ्युक्ताः साक्ष्यं अर्हन्ति न ये केचिदनापदि ॥६२॥**

गृहस्थ, सन्तानवान् र कुल आदिको मुखिया क्षत्रीय, वैश्य र शूद्र जे भएपनि यदि उ कुनै सङ्कटले ग्रस्त छैन भने वादीका पक्षबाट साछी बस्न योग्य हुन्छ ।

**आप्ताः सर्वेषु वर्णेषु कार्याः कार्येषु साक्षिणः ।**
**सर्वधर्मविदोऽलुब्धा विपरीतांस्तु वर्जयेत् ॥६३॥**

चारै वर्णका विश्वसनीय एवं सत्यवादी व्यक्ति, सबै किसिमका धर्मका बारेमा जानकार र निर्लोभी व्यक्ति साछी बस्न सक्दछन्, यस विपरीतका सक्दैनन् ।

**नार्थसंबन्धिनो नाप्ता न सहाया न वैरिणः ।**
**न दृष्टदोषाः कर्तव्या न व्याध्यार्ता न दूषिताः ॥६४॥**

पैसाको लेनदेनसँग सम्बन्धित, असत्यवादी, सहायक, शत्रू, ठाउँ अनुसार कुरा बदल्ने, रोगी र कुनै अभियोग लागेका व्यक्तिलाई साछी नबनाउनू ।

**न साक्षी नृपतिः कार्यो न कारुककुशीलवौ ।**
**न श्रोत्रियो न लिङ्गस्थो न सङ्गेभ्यो विनिर्गतः ॥६५॥**



राजा, शिल्पकार, भाट वा नाटकमा खेल्ने, वेद पढेका ब्राह्मण, ब्रह्मचारी र सन्यासीलाई पनि साछी नराख्नू ।

**नाध्यधीनो न वक्तव्यो न दस्युर्न विकर्मकृत् ।**
**न वृद्धो न शिशुर्नैको नान्त्यो न विकलेन्द्रियः ॥६६॥**

अधीनस्थ, बदनाम, चोरडाँका, निषिद्धकर्म गर्ने, वृद्ध, बालक, एक जनामात्र, अन्त्यज र इन्द्रिय अस्वस्थ हुनेलाई पनि साछी नराख्नू ।

**नार्तो न मत्तो नोन्मत्तो न क्षुत्तृष्णोपपीडितः ।**
**न श्रमार्तो न कामार्तो न क्रुद्धो नापि तस्करः ॥६७॥**

दुःखी, मदोन्मत्त, मानसिक रोगी, भोक र तिर्खाले पीडित, परिश्रमले थकित, सम्भोग गर्न नपाएर वा गरेर दुःखी भएको वा थाकेको, रिसाहा र तस्करलाई पनि साछी नराख्नू ।

**स्त्रीणां साक्ष्यं स्त्रियः कुर्युर्द्विजानां सदृशा द्विजाः ।**
**शूद्राश्च सन्तः शूद्राणां अन्त्यानां अन्त्ययोनयः ॥६८॥**

स्त्रीका स्त्री, द्विजका द्विज, शूद्रका सज्जन शूद्र र अन्त्यजका अन्त्यज साछी बस्नू ।

**अनुभावी तु यः कश्चित्कुर्यात्साक्ष्यं विवादिनाम् ।**
**अन्तर्वेश्मन्यरण्ये वा शरीरस्यापि चात्यये ॥६९॥**

घरभित्रका विवादमा, वनमा हुने कुनै घटनामा र ज्यानमारेका मुद्दामा अनुभवी जोसुकै मानिस पनि साछी बस्न सक्दछन् ।

**स्त्रियाऽप्यसंभावे कार्यं बालेन स्थविरेण वा ।**
**शिष्येण बन्धुना वाऽपि दासेन भृतकेन वा ॥७०॥**

उल्लेखित प्रकृतिका विवादमा (अरु साछी नपाउँदा वा नहुँदा) स्त्री, बालक, वृद्ध (वा माग्ने), शिष्य, बन्धुबान्धव, दासदासी र नोकरचाकर पनि साछी बस्न सक्दछन् ।



**बालवृद्धातुराणां च साक्ष्येषु वदतां मृषा ।**
**जानीयादस्थिरां वाचमुत्सिक्तमनसां तथा ॥७१॥**

बालक, वृद्ध र रोगी (वा हडबडाएको वा अधैर्यशाली) साछीले अदालत सामु असत्य बोले पनि तिनको अस्थिर एवं चञ्चल मनका कारण असत्य बोलिएको हो भनी जान्नू (दण्ड नदिनू) ।

**साहसेषु च सर्वेषु स्तेयसंग्रहणेषु च ।**
**वाग्दण्डयोश्च पारुष्ये न परीक्षेत साक्षिणः ॥७२॥**

बलको उन्मादमा गरिने सबै खाले बलजफ्तीमा, चोरीमा, परस्त्री करणीमा, गालीगलौचमा र मारपिटमा साछी यो र यस्तै हुनुपर्दछ भन्ने छैन ।

**बहुत्वं परिगह्णीयात्साक्षिद्वैधे नराधिपः ।**
**समेषु तु गुणोत्कृष्टान्गुणिद्वैधे द्विजोत्तमान् ॥७३॥**

साछीहरूका बीचमा कुरा बाझिए राजाले बहुमतका कुरा मान्नू । समान संख्या भए धेरै गुन हुने साछीका कुरा मान्नू । गुणमा पनि समानता भए उत्तम ब्राह्मणका कुरा मान्नू ।

**समक्षदर्शनात्साक्ष्यं श्रवणाच्चैव सिध्यति ।**
**तत्र सत्यं ब्रुवन्साक्षी धर्मार्थाभ्यां न हीयते ॥७४॥**

देखेर वा सुनेर पनि साछी बस्न सकिन्छ । सत्य कुरा बोल्ने साछी धर्म र अर्थमा पराजित हुँदैन ।

**साक्षी दृष्टश्रुतादन्यद्विब्रुवन्नार्यसंसदि ।**
**अवाङ्नरकमभ्येति प्रेत्य स्वर्गाच्च हीयते ॥७५॥**

सभ्यको सभामा आफूले देखेसुनेको भन्दा विपरीत बोल्ने साछी अधोमुख नरकमा पर्दछ र मरेपछि पनि स्वर्ग जान पाउँदैन ।

**यत्रानिबद्धोऽपीक्षेत शृणुयाद्वापि किञ्चन ।**
**पृष्टस्तत्रापि तद् ब्रूयाद्यथादृष्टं यथाश्रुतम् ॥७६॥**

आफूलाई साछी नराखिएको मुद्दामा पनि (आधिकारिक व्यक्तिले) सोद्धा आफूले देखे सुनेका कुरा सत्य सत्य बताउनू ।

**एकोऽलुब्धस्तु साक्षी स्याद् बह्व्यः शुच्योऽपि न स्त्रियः ।**
**स्त्रीबुद्धेरस्थिरत्वात्तु दोषैश्चान्येऽपि ये वृताः ॥७७॥**

धेरै शुद्ध र पवित्र स्त्रीहरूभन्दा लोभ नगर्ने एउटै साछी पर्याप्त हुन्छ, किन कि स्त्रीको बुद्धी स्थिर हुँदैन । दोषयुक्त अरुहरुलाई पनि साछी नबनाउनू ।

**स्वभावेनैव यद् ब्रूयुस्तद्ग्राह्यं व्यावहारिकम् ।**
**अतो यदन्यद्विब्रूयुर्धर्मार्थं तदपार्थकम् ॥७८॥**

साछीले निर्भिक भएर अदालतमा दिने बयान मुद्दाको फैसलाका लागि सार्थक हुन्छ,
कुनै दवावमा परी दिने बयान निरर्थक हुन्छ ।

**सभान्तः साक्षिणः प्राप्तानर्थिप्रत्यर्थिसंनिधौ ।**
**प्राड्विवाकोऽनुयुञ्जीत विधिनानेन सान्त्वयन् ॥७९॥**

अदालतमा हाजिर भएका साछीहरुलाई वादी र प्रतिवादीका सामुन्ने वकिल वा न्यायाधीशले
सान्त्वना दिँदै (तल उल्लेख भए अनुसार) प्रश्न सोध्नू ।

**यद् द्वयोरनयोर्वेत्थ कार्येऽस्मिंश्चेष्टितं मिथः ।**
**तद् ब्रूत सर्वं सत्येन युष्माकं ह्यत्र साक्षिता ॥८०॥**



"यि दुई (वादी र प्रतिवादी) ले यो मुद्दामा जेजस्तो कामकारवाही गरेका छन् त्यो सबै कुरा
सत्यतथ्य बताउनु होस् किन कि तपाइँहरूलाई साछी राखिएको छ" ।

**सत्यं साक्ष्ये ब्रुवन्साक्षी लोकाप्नोति पुष्कलान् ।**
**इह चानुत्तमां कीर्तिं वागेषा ब्रह्मपूजिता ॥८१॥**

सत्य बोल्ने साछीले यहाँ यश र परलोकमा उत्कृष्ट लोक प्राप्त गर्दछ, किन कि
उसको वचन वेदले पूजित भएको हुन्छ ।

**साक्ष्येऽनृतं वदन्पाशैर्बध्यते वारुणैर्भृशम् ।**
**विवशः शतमाजातीस्तस्मात्साक्ष्यं वदेदृतम् ॥८२॥**

असत्य बोल्ने साछी बरुणका पाशबाट बाँधिएर सय जन्मसम्म अत्यन्त पीडा भोग्न बाध्य हुन्छ ।

**सत्येन पूयते साक्षी धर्मः सत्येन वर्धते ।**
**तस्मात्सत्यं हि वक्तव्यं सर्ववर्णेषु साक्षिभिः ॥८३॥**

सत्यले नै साछी पवित्र हुन्छ, सत्यले नै धर्म बढ्दछ, त्यसैले सबै वर्णका साछीले साँचो कुरा नै बोल्नु पर्दछ ।

**आत्मैव ह्यात्मनः साक्षी गतिरात्मा तथाऽऽत्मनः ।**
**माऽवमंस्थाः स्वमात्मानं नृणां साक्षिणमुत्तमम् ॥८४॥**

आत्मा नै आफ्नो साछी हुन्छ, आफ्नो मोक्षको गति (साधन) पनि आत्मा नै हो । त्यसैले आत्मालाई अवहेलना नगर । मानिसले आत्माले जे भन्छ त्यही कुराको साछी हुने गर्नु नै उत्तम हुन्छ ।

**मन्यन्ते वै पापकृतो न कश्चित्पश्यतीति नः ।**
**तांस्तु देवाः प्रपश्यन्ति स्वस्यैवान्तरपूरुषः ॥८५॥**



पापीहरू मैले गरेको पाप अरु कसैले देखेको छैन भन्ठान्दछन्, तर उसले गरेको पापलाई देवता र उही भित्र रहेको पुरुष (आत्मा) ले देखिरहेको हुन्छ ।

**द्यौर्भूमिरापो हृदयं चन्द्रार्काग्नियमानिलाः ।**
**रात्रिः संध्ये च धर्मश्च वृत्तज्ञाः सर्वदेहिनाम् ॥८६॥**

आकाश, भूमि, जल, आत्मा, चन्द्र, सूर्य, अग्नि, यम, वायु, रात, दुवै सन्ध्या र धर्मले सम्पूर्ण जीवलाई हरदम घेरिरहेका हुन्छन् । अर्थात् यिनले जीवले गर्ने सबै कर्म देखिरहेका हुन्छन् ।

**देवब्राह्मणसांनिध्ये साक्ष्यं पृच्छेदृतं द्विजान् ।**
**उदङ्मुखान्प्राङ्मुखान्वा पूर्वाह्णे वै शुचिः शुचीन् ॥८७॥**

देवताका मूर्ति वा ब्राह्मणका सामिप्यमा साछी बसेका पवित्र द्विजलाई पूर्व वा उत्तर फर्काएर

स्वस्थचित्त भएका न्यायाधीशले बिहान साँचो साँचो कुरा के हो भनी सोध्नू ।

**ब्रूहीति ब्राह्मणं पृच्छेत्सत्यं ब्रूहीति पार्थिवम् ।**
**गोबीजकाञ्चनैर्वैश्यं शूद्रं सर्वैस्तु पातकैः ॥८८॥**

ब्राह्मणलाई "ल भन" भन्नू । क्षत्रियलाई "साँचो कुरा भन" भन्नू । वैश्यलाई "ल साँचो भन, भूटो बोले तिमीलाई गाई, बिउविजन, सुन चोरेको पाप लाग्दछ" भन्नू । शूद्रलाई "जो भूट बोल्दछ सबै पाप उसैलाई लाग्दछ, ल साँचो कुरा भन" भन्नू ।

**ब्रह्मघ्नो ये स्मृता लोका ये च स्त्रीबालघातिनः ।**
**मित्रद्रुहः कृतघ्नस्य ते ते स्युर्ब्रुवतो मृषा ॥८९॥**

ब्राह्मणका हत्या गर्नेलाई हालिने जुन नरक बताइएको छ, स्त्री र बालकलाई मार्नेलाई हाल्ने जुन नरक बताइएको छ, मित्रसँग वैरभाव गर्नेलाई र बेगुनीलाई हाल्ने जुन जुन नरक बताइएको छ, असत्य बोल्ने साछीलाई ती सबै नरक प्राप्त हुन्छन् ।



**जन्मप्रभृति यत्किंचित्पुण्यं भद्र त्वया कृतम् ।**
**तत्ते सर्वं शुनो गच्छेद्यदि ब्रूयास्त्वमन्यथा ॥९०॥**

जन्मेदेखि आजसम्म जे जति पुण्य तिमीले कमाएका छौ, यदि तिमीले असत्य बोल्यौ भने त्यो सबै पुण्य कुकुरले पाउनेछ । यसमा अन्यथा हुँदैन ।

**एकोऽहमस्मीत्यात्मानं यस्त्वं कल्याण मन्यसे ।**
**नित्यं स्थितस्ते हृद्येष पुण्यपापेक्षिता मुनिः ॥९१॥**

यदि आफ्नो कल्याण चाहन्छौ भने म मात्रै एक्लै छु भन्ने नठान, तिम्रा हृदयमा नित्य रहेका आत्मारूपी परमात्माले तिमीले गरेका हरेक पापपुण्य हेरिरहेका हुन्छन् ।

**यमो वैवस्वतो देवो यस्तवैष हृदि स्थितः ।**
**तेन चेदविवादस्ते मा गङ्गां मा कुरून्गमः ॥९२॥**

भगवान् यमराज जो तिम्रै हृदयमा बसिरहेका छन्, तिसँग तिम्रो मनमुटाव भएन (सत्य कुरा बोल्यौ) भने गङ्गा र कुरुक्षेत्र किन जानु पर्‍यो ? (त्यो पुण्य यहीँ पाउनेछौ) ।

**नग्नो मुण्डः कपालेन च भिक्षार्थी क्षुत्पिपासितः ।**
**अन्धः शत्रुकुलं गच्छेद्यः साक्ष्यं अनृतं वदेत् ॥९३॥**

जुन् साछीले असत्य कुरा बोल्दछ त्यसले नाङ्गैमुडुल्लै, भोकप्यासले पीडित र अन्धो भई शत्रुका कुलमा गएर भिक्षा माग्नु पर्नेछ ।

**अवाक्शिरास्तमस्यन्धे किल्बिषी नरकं व्रजेत् ।**
**यः प्रश्नं वितथं ब्रूयात्पृष्टः सन्धर्मनिश्चये ॥९४॥**



सद्धर्मका कुरा गर्ने हो भने जुन साछीले असत्य बोल्दछ उसलाई निश्चितरूपमा उधमुण्टो पारेर अँध्यारो नरकमा हालिनेछ ।

**अन्धो मत्स्यानिवाश्नाति स नरः कण्टकैः सह ।**
**यो भाषतेऽर्थवैकल्यं अप्रत्यक्षं सभां गतः ॥९५॥**

जसले न्यायालयमा गएर लोभवश नदेखेका कुरालाई पनि देखेभैँ गरेर असत्य बोल्दछ, उसको लोभमा परी बल्छीमा फसेको माछाको जस्तो हालत हुनेछ ।

**यस्य विद्वान् हि वदतः क्षेत्रज्ञो नाभिशङ्कते ।**
**तस्मान्न देवाः श्रेयांसं लोकेऽन्यं पुरुषं विदुः ॥९६॥**

जसले बोलेका कुरामा देवता समेत शङ्का गर्दैनन्, लोकमा उ जति प्यारो र श्रेष्ठ देवतालाई अरु को होला ?

**यावतो बान्धवान् यस्मिन् हन्ति साक्ष्येऽनृतं वदन् ।**
**तावतः संख्यया तस्मिन् शृणु सौम्यानुपूर्वशः ॥९७॥**

हे सज्जन ! झूटो साछी बस्नेले कति जना आफन्तलाई नरकमा धकेल्दछ र कति जना आफन्तलाई मारेको पाप बोक्नु पर्दछ, त्यो सुन ।

**पञ्च पश्वनृते हन्ति दश हन्ति गवानृते ।**
**शतं अश्वानृते हन्ति सहस्रं पुरुषानृते ॥९८॥**

(सामान्य) पशुका लागि असत्य बोल्नेले पाँच, गाईका लागि असत्य बोल्नेले दश, घोडाका लागि असत्य बोल्नेले सय र मानिसका लागि असत्य बोल्नेले हजार पितृलाई नरकमा धकेल्दछ ।

**हन्ति जातानजातांश्च हिरण्यार्थेऽनृतं वदन् ।**
**सर्वं भूम्यनृते हन्ति मा स्म भूम्यनृतं वदीः ॥९९॥**



सुनका लागि बोल्नेले जन्मिएका र जन्मने सन्तान मारेको पाप बोक्दछ । जमिनका लागि असत्य बोल्नेले सारा प्राणीलाई मारेको पाप बोक्दछ, यसैले तिमी जमिनका लागि पनि असत्य नबोल ।

**अप्सु भूमिवदित्याहुः स्त्रीणां भोगे च मैथुने ।**
**अब्जेषु चैव रत्नेषु सर्वेष्वश्ममयेषु च ॥१००॥**

जल, स्त्री-भोग, मैथुन, मोती आदि, हिरा आदि र पुष्पराज आदिका सम्बन्धमा असत्य बोल्नेले पनि जमिनका सम्बन्धमा असत्य बोले सरहको पाप बोक्दछ ।

**एतान् दोषानवेक्ष्य त्वं सर्वाननृतभाषणे ।**
**यथाश्रुतं यथादृष्टं सर्वमेवाञ्जसा वद ॥१०१॥**

असत्य बोल्दा हुने यि दोषहरूलाई बिचार गरी जे देखिएको हो वा जे सुनिएको
हो त्यो तिमी सत्य सत्य बताउ भन्नू ।

**गोरक्षकान्वाणिजिकांस्तथा कारुकुशीलवान् ।**
**प्रेष्यान्वार्धुषिकांश्चैव विप्रान् शूद्रवदाचरेत् ॥१०२॥**

गोपाल, ब्यापारी, भान्छे, नोकरी गर्ने, दूत र ब्याजखोर ब्राह्मण साछीलाई
पनि यसरी नै शूद्रलाई सोधेझैँ गरी सोध्नू ।

**तद्वदन् धर्मतोऽर्थेषु जानन्नप्यन्यथा नरः ।**
**न स्वर्गाच्चयवते लोकाद्दैवीं वाचं वदन्ति ताम् ॥१०३॥**

जो मानिस सत्य कुरा थाहा पाएर पनि दया आदि धार्मिक भावनाले गर्दा व्यवहारमा अर्कै
किसिमले भनी दिन्छ उ स्वर्गलोकबाट पतन हुँदैन, किन कि यसलाई दैवी
वाणी नै भनी बताइएको छ ।



**शूद्रविट्क्षत्रविप्राणां यत्रर्तोक्तौ भवेद्वधः ।**
**तत्र वक्तव्यमनृतं तद्धि सत्याद्विशिष्यते ॥१०४॥**

जुन मुद्दामा साँचो कुरा गर्दा सय जना ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रको हत्या हुन्छ, त्यस मुद्दामा
असत्य नै बोल्नु पर्दछ, यस्तो अवस्थामा असत्य नै सत्यभन्दा उत्कृष्ट हुन्छ ।

**वाग्गैवत्यैश्च चरुभिर्यजेरंस्ते सरस्वतीम् ।**
**अनृतस्यैनसस्तस्य कुर्वाणा निष्कृतिं पराम् ॥१०५॥**

यस्तो अवस्थामा असत्य बोल्नेले पनि असत्य बोलेको पाप शुद्धिका लागि
वाग्देवताको चरुले सरस्वतीको होम गर्नु पर्दछ ।

**कूष्माण्डैर्वापि जुहुयाद् घृतमग्नौ यथाविधि ।**
**उदित्यृचा वा वारुण्या त्र्यृचेनाब्दैवतेन वा ॥१०६॥**

"यद्देवादेवहेडनं..." अथवा "उदुत्तमं वरुणं..." अथवा "आपोहिष्ठा.." आदि मन्त्रले वरुण देवताको होम गर्नु पर्दछ ।

**त्रिपक्षादब्रुवन्साक्ष्यमृणादिषु नरोऽगदः ।**
**तदृणं प्राप्नुयात्सर्वं दशबन्धं च सर्वतः ॥१०७॥**

ऋण लेनदेनको विवादमा जुन ऋणी पैंतालीस दिनसम्म पनि साछी पेश गर्न सक्दैन उसले साहूको पूरै रकम तिर्नू, जति रकम हो त्यसको दशौं भाग राजालाई दण्ड पनि तिर्नू ।

**यस्य दृश्येत सप्ताहादुक्तवाक्यस्य साक्षिणः ।**
**रोगोऽग्निर्ज्ञातिमरणं ऋणं दाप्यो दमं च सः ॥१०८॥**



बयान दिएर गएका साछीलाई सात दिन भित्र कुनै रोग लागे वा आगोले पोले वा सन्तान बिते उ साहूलाई रकम तिर्न र राजालाई दण्ड तिर्न योग्य हुन्छ ।

**असाक्षिकेषु त्वर्थेषु मिथो विवादमानयोः ।**
**अविन्दंस्तत्त्वतः सत्यं शपथेनापि लम्भयेत् ॥१०९॥**

साछी नराखिएका मुद्दामा सत्य कुरा थाहा पाउन नसकिए न्यायाधीशले (तलका) शपथ खुवाएर (वादी एवं प्रतिवादीलाई) सोध्नू ।

**महर्षिभिश्च देवैश्च कार्यार्थं शपथाः कृताः ।**
**वसिष्ठश्चापि शपथं शेपे पैजवने नृपे ॥११०॥**

विभिन्न महर्षि र देवताले पनि कार्य विशेषमा शपथ खाएका छन् ।
वसिष्ठ ऋषिले पनि सुदास राजालाई शपथ खुवाएका थिए ।

**न वृथा शपथं कुर्यात्स्वल्पेऽप्यर्थे नरो बुधः ।**
**वृथा हि शपथं कुर्वन्प्रेत्य चेह च नश्यति ॥१११॥**

बुद्धिमान मानिसले सामान्य कुरामा पनि असत्य किरिया नखानु, किन कि असत्य शपथले मानिसको यो लोक र परलोक दुवै नाश हुन्छ ।

**कामिनीषु विवाहेषु गवां भक्ष्ये तथेन्धने ।**
**ब्राह्मणाभ्युपपत्तौ च शपथे नास्ति पातकम् ॥११२॥**

सहवास गर्ने बेलामा, स्त्रीसँग, विवाहमा, गाईले खाएको विषयमा, इन्धनका विषयमा र ब्राह्मणलाई रक्षा गर्ने विषयमा गरिने असत्य शपथले पाप लाग्दैन ।

**सत्येन शापयेद्विप्रं क्षत्रियं वाहनायुधैः ।**
**गोबीजकाञ्चनैर्वैश्यं शूद्रं सर्वैस्तु पातकैः ॥११३॥**



ब्राह्मणलाई सत्यताको, क्षत्रियलाई बाहन एवं हतियारको, वैश्यलाई गाई बिउविजन र सुनको तथा शूद्रलाई सबै जीव हत्याको पापको शपथ खुवाउनू ।

**अग्निं वाहारयेदेनमप्सु चैनं निमज्जयेत् ।**
**पुत्रदारस्य वाप्येनं शिरांसि स्पर्शयेत्पृथक् ॥११४॥**

तातो रातो फलामको डल्लो यिनका हातमा राख्नू वा यिनलाई पानीमा डुबाउनू वा यिनका स्त्री र पुत्रलाई यिनको टाउका माथि बेग्लाबेग्लै हात राख्न लगाउनू ।

**यमिद्धो न दहत्यग्निरापो नोन्मज्जयन्ति च ।**
**न चार्तिमृच्छति क्षिप्रं स ज्ञेयः शपथे शुचिः ॥११५॥**

(यसो गर्दा) जसलाई पोल्दैन, जसलाई पानीले बाहिर फ्याल्दैन, जसलाई केही दिनमै पारिवारिक पीडा हुँदैन त्यस्ताको शपथलाई सत्य जान्नू ।

**वत्सस्य ह्यभिशस्तस्य पुरा भ्रात्रा यवीयसा ।**
**नाग्निर्ददाह रोमापि सत्येन जगतः स्पृशः ॥११६॥**

प्राचीन कालमा वत्स ऋषिका सौतेनी आमाका भाई वत्सऋषिलाई "तँ ब्राह्मणको छोरो नै होइनस्, शूद्रको छोरो होस्" भन्दा उनी आगोमा हाम फालेका थिए । सत्यताले गर्दा र लोककल्याणका लागि त्यसबेला अग्निले वत्सऋषिको एउटा रौँपनि जलाएनन् । (सत्यलाई आगोले पनि जलाउन सक्दैन)

**यस्मिन्यस्मिन्विवादे तु कौटसाक्ष्यं कृतं भवेत् ।**
**तत्तत्कार्यं निवर्तेत कृतं चाप्यकृतं भवेत् ॥११७॥**

राजालाई जुन जुन मुद्दामा साछी भूटा छन् भनेर यकीन हुन्छ, ती ती मुद्दा पुनः हेर्नू र सच्याउनू, फैसला भइसकेको भएपनि त्यसलाई बदर गर्नू ।

**लोभान्मोहाद्भयान्मैत्रात्कामात्क्रोधात्तथैव च ।**

**अज्ञानाद्बालभावाच्च साक्ष्यं वितथमुच्यते ॥११८॥**

लोभ, मोह, डर, मित्रता, कामवासना, रिस तथा अज्ञानता र बालपनले गर्दा साछीले भूटो बोल्ने गर्दछ ।

**एषामन्यतमे स्थाने यः साक्ष्यमनृतं वदेत् ।**
**तस्य दण्डविशेषांस्तु प्रवक्ष्याम्यनुपूर्वशः ॥११९॥**

यी कारणमध्ये जसले जुन कारणले भूटो साछी बस्दछ उसलाई त्यही अनुसारको दण्ड हुन्छ, म यी दण्डका विषयमा क्रमशः बताउँदछु ।

**लोभात्सहस्रं दण्डयस्तु मोहात्पूर्वं तु साहसम् ।**
**भयाद्द्वौ मध्यमौ दण्डौ मैत्रात्पूर्वं चतुर्गुणम् ॥१२०॥**

लोभले बसे "हजार", मोहले बसे "प्रथम साहस", डरले बसे "मध्यम साहस" र मित्रताका कारणले बसे "प्रथम साहसको चौबर" दण्ड दिनू ।

**कामाद्दशगुणं पूर्वं क्रोधात्तु त्रिगुणं परम् ।**
**अज्ञानाद्द्वे शते पूर्णे बालिश्याच्छतमेव तु ॥१२१॥**

कामवश बसे "प्रथम साहसको दश गुना", रिसले बसे "प्रथम साहसको तेबर", अज्ञानताले बसे दुई सय पण र बालपनले बसे सय पण दण्ड दिनू ।

**एतानाहुः कौटसाक्ष्ये प्रोक्तान्दण्डान्मनीषिभिः ।**
**धर्मस्याव्यभिचारार्थं अधर्मनियमाय च ॥१२२॥**

धर्मको लोप नहोस् र अधर्म नफैलियोस् भनी विद्वानहरूले भूटो साछी बस्नेका सम्बन्धमा यी नियम बनाएका हुन् ।



**कौटसाक्ष्यं तु कुर्वाणान्स्त्रीन्वर्णान्धार्मिको नृपः ।**
**प्रवासयेद्दण्डयित्वा बाह्मणं तु विवासयेत् ॥१२३॥**

भूटो साछी बस्ने तीन वर्णका मानिसलाई राजाले उपरोक्त अनुसारको दण्ड दिई देशनिकाला गर्नू । ब्राह्मणलाई दण्ड नदिई देशनिकाला गर्नू ।

**दश स्थानानि दण्डस्य मनुः स्वायंभुवोऽब्रवीत् ।**
**त्रिषु वर्णेषु यानि स्युरक्षतो बाह्मणो व्रजेत् ॥१२४॥**

स्वायम्भुव मनुले दण्ड दिनका लागि दश ठाउँ बताएका छन् । यो अरु तीन वर्णका लागि हो, ब्राह्मणलाई शारीरिक दण्ड दिन हुँदैन ।

**उपस्थमुदरं जिह्वा हस्तौ पादौ च पञ्चमम् ।**
**चक्षुर्नासा च कर्णौ च धनं देहस्तथैव च ॥१२५॥**

गुप्ताङ्ग, पेट, जिभ्रो, दुई हात र दुई गोडा गरी पाँच तथा दुई आँखा, नाक,
दुई कान, धन र पूरा शरीर-यि दश दण्ड दिइने ठाउँ हुन् ।

**अनुबन्धं परिज्ञाय देशकालौ च तत्त्वतः ।**
**सारापराधो चालोक्य दण्डं दण्ड्येषु पातयेत् ॥१२६॥**

पटके हो वा एकपटक अपराध गरेको हो त्यो हेरी तथा देश (स्थान), समय र अपराधको प्रकृति
हेरी जस्तो दण्ड दिन उचित हुन्छ त्यस्तै दण्ड दिनू ।

**अधर्मदण्डनं लोके यशोघ्नं कीर्तिनाशनम् ।**
**अस्वर्ग्यं च परत्रापि तस्मात्तत्परिवर्जयेत् ॥१२७॥**

अधर्मपूर्वक कसैलाई दण्ड दिनाले दण्डदिनेको लोकमा फैलिएको यश र कीर्ति नासिन्छ ।
यसले परलोकमा स्वर्ग जानबाट पनि रोक्दछ । त्यसैले कसैलाई पनि
अन्यायपूर्वक वा अधर्मपूर्वक दण्ड नदिनू ।



**अदण्ड्यान्दण्डन् राजा दण्ड्यांश्चैवाप्यदण्डयन् ।**
**अयशो महदाप्नोति नरकं चैव गच्छति ॥१२८॥**

दिनुपर्नेलाई सजाय दिने र नदिनुपर्नेलाई सजाय दिने व्यक्तिले ठूलो अबजस
खप्नु पर्दछ र मरेपछि नरक पनि जानु पर्दछ ।

**वाग्दण्डं प्रथमं कुर्याद्धिग्दण्डं तदनन्तरम् ।**
**तृतीयं धनदण्डं तु वधदण्डं अतः परम् ॥१२९॥**

पहिला सम्झाउनू (वाग्दण्ड), त्यसपछि गाली गर्नू (धिग्दण्ड), त्यसपछि जरिवाना
तिराउनू, यति गर्दापनि नमाने वा नसुध्रिए शारीरिक दण्ड दिनू ।

**वधेनापि यदा त्वेतान्निग्रहीतुं न शक्नुयात् ।**
**तदैषु सर्वमप्येतत्प्रयुञ्जीत चतुष्टयम् ॥१३०॥**

शारीरिक दण्ड दिएपनि तह लगाउन नसकिए उसमाथि दण्डका
सबै (चार वटै) विधि अपनाउनु पर्दछ ।

**लोकसंव्यवहारार्थं याः संज्ञाः प्रथिता भुवि ।**
**ताम्ररूप्यसुवर्णानां ताः प्रवक्ष्याम्यशेषतः ॥१३१॥**

आपसी व्यवहारका लागि लोकमा पण (सिक्का) का रूपमा प्रचलित तामा, चाँदी र सुनलाई
दण्डका लागि कसरी प्रयोग गर्ने भन्ने सम्बन्धी सबै कुरा अब म बताउँदछु ।

**जालान्तरगते भानौ यत्सूक्ष्मं दृश्यते रजः ।**
**प्रथमं तत्प्रमाणानां त्रसरेणुं प्रचक्षते ॥१३२॥**



घरका झ्याल, ढोका आदि प्वालबाट घाम छिर्दा त्यो उज्यालोमा जुन मसिना
धुलाका कण देखिन्छन्, त्यसलाई नाप्ने पहिलो इकाईका रूपमा
लिइन्छ र त्यो धुलोलाई “त्रसरेणु” भनिन्छ ।

**त्रसरेणवोऽष्टौ विज्ञेया लिक्षैका परिमाणतः ।**
**ता राजसर्षपस्तिस्रस्ते त्रयो गौरसर्षपः ॥१३३॥**

आठ वटा त्रसरेणु बराबरको नापोलाई एक “लिक्षा (कपालमा पर्ने लिखो)” भनिन्छ । तीन
लिक्षाको एक “राजसर्षप (रायोको गेडा)” हुन्छ । तीन राजसर्षपको
एक “गौरसर्षप (सर्सिउँको गेडा)” हुन्छ ।

**सर्षपाः षड्यवो मध्यस्त्रियवं त्वेककृष्णलम् ।**
**पञ्चकृष्णलको माषस्ते सुवर्णस्तु षोडश ॥१३४॥**

छ गौरसर्षपको एक मध्यम "यव (जौ)" हुन्छ । तीन यवको एक "कृष्णल (रातीगेडी)" हुन्छ । पाँच कृष्णलको एक "माष (मासको गेडा)" हुन्छ । सोह्र माषको एक "सुवर्ण" हुन्छ ।

**पलं सुवर्णाश्चत्वारः पलानि धरणं दश ।**
**द्वे कृष्णले समधृते विज्ञेयो रौप्यमाषकः ॥१३५॥**

चार सुवर्णको एक "पल" हुन्छ । दश पलको एक "धरण" हुन्छ । यसैगरी दुई कृष्णल बराबर एक "रौप्यमाष" हुन्छ ।

**ते षोडश स्याद्धरणं पुराणश्चैव राजतः ।**
**कार्षापणं तु विज्ञेयस्ताम्रिकः कार्षिकः पणः ॥१३६॥**

तीन सुवर्णको वा सोह्र एक धरण हुन्छ र यसलाई "चाँदीको पुराण" पनि भनिन्छ । तामाको एक कर्ष बराबरको सिक्कालाई "कार्षापण" वा "ताम्रिक कार्षिक" पनि भनिन्छ ।



**धरणानि दश ज्ञेयः शतमानस्तु राजतः ।**
**चतुःसौवर्णिको निष्को विज्ञेयस्तु प्रमाणतः ॥१३७॥**

दश धरण बराबर चाँदीको एक "शतमान" हुन्छ । चार सुवर्णको एक "निष्क" हुन्छ ।

**पणानां द्वे शते सार्धे प्रथमः साहसः स्मृतः ।**
**मध्यमः पञ्च विज्ञेयः सहस्रं त्वेव चोत्तमः ॥१३८॥**

दुई सय पचास पणलाई "प्रथम साहस" भनिन्छ । पाँच सय पणलाई "मध्यम साहस" र हजार पणलाई "उत्तम साहस" भनिन्छ ।

**ऋणे देये प्रतिज्ञाते पञ्चकं शतमर्हति ।**
**अपह्नवे तद्द्विगुणं तन्मनोरनुशासनम् ॥१३९॥**

लेनदेनको मुद्दामा प्रतिवादीले शुरुमै पैसा लिएको स्वीकार गरी वादीलाई दिन खोजे उसलाई पाँच प्रतिशत तथा पहिले अस्वीकार गरी पछि लिएको प्रमाणित भए दश प्रतिशत जरिबाना तिराउनु पर्दछ भनी मनुले बताएका छन् ।

**वसिष्ठविहितां वृद्धिं सृजेद्वित्तविवर्धिनीम् ।**
**अशीतिभागं गृह्णीयान्मासाद्वार्धुषिकः शते ॥१४०॥**

धन ब्याजमा लगाएर ब्याज खानेले बसिष्ठ ऋषिले बताए अनुसारको प्रतिमहिना सयको अस्सीयौं भाग ब्याज लिनू ।

**द्विकं शतं वा गृह्णीयात्सतां धर्ममनुस्मरन् ।**
**द्विकं शतं हि गृह्णानो न भवत्यर्थकिल्बिषी ॥१४१॥**

सत्पुरुषको धर्म सम्झँदै सयकडा दुई ब्याज लिन पनि सकिन्छ, यति ब्याज लिएर पापी हुइन्न ।



**द्विकं त्रिकं चतुष्कं च पञ्चकं च शतं समम् ।**
**मासस्य वृद्धिं गृह्णीयाद्वर्णानां अनुपूर्वशः ॥१४२॥**

वर्णक्रम अनुसार क्रमशः प्रतिमहिना दुई, तीन, चार र पाँच प्रतिशत ब्याज लिनू ।

**न त्वेवाधौ सोपकारे कौसीदीं वृद्धिमाप्नुयात् ।**
**न चाधेः कालसंरोधान्निसर्गोऽस्ति न विक्रयः ॥१४३॥**

भोगचलन गर्न मिल्ने कुरा धितो राखिएको अवस्थामा माथि बताइए अनुसारको ब्याज नलिनू । धेरै समय बितेपनि यस्तो धितो अरुलाई दिन वा बेच्न हुँदैन ।

**न भोक्तव्यो बलादाधिर्भुञ्जानो वृद्धिमुत्सृजेत् ।**
**मूल्येन तोषयेच्चैनं आधिस्तेनोऽन्यथा भवेत् ॥१४४॥**

धितो राखिएको कुरालाई जबरजस्ती भोगचलन नगर्नु, गरे ब्याज नलिनु । अथवा भोगचलन गरे बापत धितो भनीलाई रकम दिनु नत्र धितो राख्ने साहू चोर हुन्छ ।

**आधिश्चोपनिधिश्चोभौ न कालात्ययमर्हतः ।**
**अवहार्यौ भवेतां तौ दीर्घकालं अवस्थितौ ॥१४५॥**

धितो र भाँडो सहित राखिएको नासोको धेरै समय बितेपनि स्वामित्व नष्ट हुँदैन । धेरै समयपछि पनि त्यसको वास्तविक मालिकले ती कुरा फिर्ता लैजान सक्दछ ।

**संप्रीत्या भुज्यमानानि न नश्यन्ति कदाचन ।**
**धेनुरुष्ट्रो वहन्नश्वो यश्च दम्यः प्रयुज्यते ॥१४६॥**

प्रेमपूर्वक सधाएर उपभोग गरिरहिएका अरुका गाई, ऊँट, घोडामाथिको उसको मालिकको स्वामित्व कहिल्यै समाप्त हुँदैन ।



**यत्किञ्चिद्दशवर्षाणि सन्निधौ प्रेक्षते धनी ।**
**भुज्यमानं परैस्तूष्णीं न स तल्लब्धुमर्हति ॥१४७॥**

आफ्नो सम्पत्ति आफ्नै अगिल्तिर अर्काले उपभोग गरिरहेको देख्दादेख्दै पनि न उ सोधखोज गर्दछ न रोक्दछ भने, दश वर्षपछि वास्तविक धनीको उक्त सम्पत्ति माथिको स्वामित्व समाप्त हुन्छ ।

**अजडश्चेदपोगण्डो विषये चास्य भुज्यते ।**
**भग्नं तद्व्यवहारेण भोक्ता तद्द्रव्यमर्हति ॥१४८॥**

मानसिक एवं शारीरिक विकार नभएको र उमेर पुगेको व्यक्ति आफ्नो सम्पत्ति अरुले उपभोग गरेको टुलुटुलु हेरेर मात्र बस्दछ भने दश वर्षपछि उ उक्त सम्पत्तिको स्वामित्वबाट बाहिरिन्छ, उपभोक्ता नै त्यसको मालिक हुन्छ । (मुद्दा हालेपनि हार्दछ) ।

**आधिः सीमा बालधनं निक्षेपोपनिधिः स्त्रियः ।**
**राजस्वं श्रोत्रियस्वं च न भोगेन प्रणश्यति ॥१४९॥**

धितो, साँधसीमाना, बालकको धन, नासो, स्त्रीको धन, राजाको धन र विधिपूर्वक वेदपढेका ब्राह्मणको धनको स्वामित्व भोगचलनबाट गुम्दैन ।

**यः स्वामिनाऽननुज्ञातमाधिं भुङ्क्तेऽविचक्षणः ।**
**तेनार्धवृद्धिर्मोक्तव्या तस्य भोगस्य निष्कृतिः ॥१५०॥**

वास्तविक स्वामीसँग आज्ञा नलिई धितो वा नासो लुकीछिपी उपभोग गर्ने मूर्खलाई आधा ब्याज मिनाहा गर्न लगाउनू । बलजफ्ती उपभोग गर्दछ भने सबै ब्याज मिनाहा गर्न लगाउनू ।

**कुसीदवृद्धिर्द्वैगुण्यं नात्येति सकृदाहृता ।**
**धान्ये सदे लवे बाह्ये नातिक्रामति पञ्चताम् ॥१५१॥**



पैसाको ब्याज साँवाको दोब्बरभन्दा बढी तथा अनाज, रुखका फलफूल (सद), ऊनजन्य वस्तु (लव) को र सवारी साधन (बाह्य) को ब्याज साँवाको पाँच गुनाभन्दा बढी लिन हुँदैन ।

**कृतानुसारादधिका व्यतिरिक्ता न सिध्यति ।**
**कुसीदपथमाहुस्तं पञ्चकं शतमर्हति ॥१५२॥**

शास्त्रले तोकेभन्दा बढी ब्याज लिन हुँदैन । ब्याजको नियम (बाटो) अनुसार पाँच प्रतिशतसम्म ब्याज लिन सकिन्छ ।

**नातिसांवत्सरीं वृद्धिं न चादृष्टां पुनर्हरेत् ।**
**चक्रवृद्धिः कालवृद्धिः कारिता कायिका च या ॥१५३॥**

चक्रवृद्धि (सावाँब्याज एकमुष्ट तिर्दा ब्याजको पनि ब्याज लिने विधि), कालवृद्धि (प्रतिमहिना ब्याज तिरिने विधि), कारिता (ऋणीले कबुलेर पहिले पहिलेको महिनाको ब्याज समेत जोडी दुई

दुई वा तीन तीन महिनामा ब्याज तिर्ने विधि), कायिका (सावाँब्याज दुबै मिलाएर किस्ताकिस्तामा तिरिने विधि) मध्ये जुनसुकै विधिबाट ब्याज लिने गरेको भएपनि एक वर्ष बितेपछि आफ्नो पाकेको ब्याज लिनु, समय नकटाउनू । ब्याजमाथि ब्याज नलिनू ।

**ऋणं दातुमशक्तो यः कर्तुमिच्छेत्पुनः क्रियाम् ।**
**स दत्त्वा निर्जितां वृद्धिं करणं परिवर्तयेत् ॥१५४॥**

ऋण दिन नसक्ने साहूले हिसाबकिताब गर्न चाहे पाकेको ब्याज लिई पुनः अर्को तमसुक बनाउनू ।

**अदर्शयित्वा तत्रैव हिरण्यं परिवर्तयेत् ।**
**यावती संभवेद्वृद्धिस्तावतीं दातुमर्हति ॥१५५॥**

ऋणीले ब्याज तिर्न नसके त्यसलाई सावाँमा गाभ्नू । यसपछि जति सावाँ हुन्छ त्यसको ब्याज लाग्दछ ।



**चक्रवृद्धिं समारूढो देशकालव्यवस्थितः ।**
**अतिक्रामन्देशकालौ न तत्फलमवाप्नुयात् ॥१५६॥**

देशको व्यवस्था के छ ? र समयको माग के छ ? त्यो हेरेर मात्र चक्रवृद्धि ब्याज लिने गर्नू, यसलाई नमान्दा लाभ पाइँदैन ।

**समुद्रयानकुशला देशकालार्थदर्शिनः ।**
**स्थापयन्ति तु यां वृद्धिं सा तत्राधिगमं प्रति ॥१५७॥**

जलमार्ग, स्थलमार्ग, देश, समय र परिस्थिति बिचार गरी ब्याजमा धन लगानी गर्नेले नै सोचेजस्तो फाइदा पाउँदछ ।

**यो यस्य प्रतिभूस्तिष्ठेद्दर्शनायेह मानवः ।**
**अदर्शयन्स तं तस्य प्रयच्छेत्स्वधनादृणम् ॥१५८॥**

जमानी बस्नेले ऋणी समयमा उपलब्ध नहुँदा साहूलाई आफ्नै पैसाले ऋण तिर्नु पर्दछ ।

**प्रातिभाव्यं वृथादानमाक्षिकं सौरिकं च यत् ।**
**दण्डशुल्कावशेषं च न पुत्रो दातुमर्हति ॥१५९॥**

जमानी बसेको, व्यर्थ (दान) खर्च गरेको, जूवा खेलेको र मदिरा पिएको रकम तथा जरिवाना, शुल्क र महसूल पिता हुँदाहुँदै पुत्रले तिर्न पर्दैन । (पिता नभए पुत्रले तिर्नु पर्दछ) ।

**दर्शनप्रातिभाव्ये तु विधिः स्यात्पूर्वचोदितः ।**
**दानप्रतिभुवि प्रेते दायादानपि दापयेत् ॥१६०॥**

जमानी बस्ने पिता भए जमानत तिर्नुपर्ने अवस्था आउँदा उनैले तिर्नु पर्दछ ।
उनी नभए अंश खाने पुत्र आदिले तिर्नुपर्दछ ।

**अदातरि पुनर्दाता विज्ञातप्रकृतावृणम् ।**
**पश्चात्प्रतिभुवि प्रेते परीप्सेत्केन हेतुना ॥१६१॥**

कोही व्यक्ति जमानी मात्र बसेको छ धनजमानी बसेको छैन भने र साहूलाई पनि यो कुरा थाहा छ भने उ किन जमानी बस्नेसँग रकम असुलउपर गर्न खोज्दछ र ?

**निरादिष्टधनश्चेत्तु प्रतिभूः स्यादलङ्घनः ।**
**स्वधनादेव तद्द्यान्निरादिष्ट इति स्थितिः ॥१६२॥**

ऋणीले जमानीलाई साहूको ऋण तिरी दिन रकम दिएको छ भने, जमानीले उक्त रकम साहूलाई तिर्नु पर्दछ । यदि यसै बीचमा जमानी बस्नेको मृत्यु हुन्छ भने उसका अंशियारले उक्त रकम तिरी दिनुपर्दछ ।

**मत्तोन्मत्तार्ताध्यधीनैर्बालेन स्थविरेण वा ।**
**असंबद्धकृतश्चैव व्यवहारो न सिध्यति ॥१६३॥**

नशा लागेको, सुस्त मनस्थितिको, दुःखले पिल्सिएको, अर्कोको अधीनमा भएको, बालक, वृद्ध र असम्बन्धित व्यक्तिले गर्ने व्यवहार प्रमाणित हुँदैन ।

**सत्या न भाषा भवति यद्यपि स्यात्प्रतिष्ठिता ।**
**बहिश्चेद्भाष्यते धर्मान्नियताद्व्यवहारिकात् ॥१६४॥**

लेनदेनको लिखत प्रमाण वा साछी प्रमाण जे भएपनि यदि त्यो विषय, धर्म र परम्परा विरोधी छ भने त्यो प्रमाण मान्य हुँदैन ।

**योगाधमनविक्रीतं योगदानप्रतिग्रहम् ।**
**यत्र वाप्युपधिं पश्येत्तत्सर्वं विनिवर्तयेत् ॥१६५॥**



छलकपटले : राखिएको धितो, भएको किनबेच, गरिएको लेनदेन आदि सबै फिर्ता गर्नुपर्दछ ।

**ग्रहीता यदि नष्टः स्यात्कुटुम्बार्थे कृतो व्ययः ।**
**दातव्यं बान्धवैस्तत्स्यात्प्रविभक्तैरपि स्वतः ॥१६६॥**

परिवारको पालपोषणको लागि ऋण लिएको अवस्थामा उसको मृत्यु भए, अंशबण्डा भएपनि नभएपनि परिवारका सबैले मिलेर त्यो ऋण तिर्नुपर्दछ ।

**कुटुम्बार्थेऽध्यधीनोऽपि व्यवहारं यमाचरेत् ।**
**स्वदेशे वा विदेशे वा तं ज्यायान्न विचालयेत् ॥१६७॥**

परिवारको पालपोषणका लागि परिवारका कुनै पनि सदस्यले देश, विदेशमा गरेको लेनदेनको व्यवहार परिवार चलाउन जिम्मा लिनेले अस्वीकार नगर्नू ।

**बलाद्दत्तं बलाद्भुक्तं बलाद्यच्चापि लेखितम् ।**
**सर्वान्बलकृतानर्थानकृतान्मनुरब्रवीत् ॥१६८॥**

बलजफ्ती दिइएको, बलजफ्ती भोगिएको, बलजफ्ती लेखिएको आदि बलजफ्तीले गरिने सबै खाले व्यवहार गरेपनि नगरेको सरह हुन्छ भनी मनुले भनेका छन् ।

**त्रयः परार्थे क्लिश्यन्ति साक्षिणः प्रतिभूः कुलम् ।**
**चत्वारस्तूपचीयन्ते विप्र आढ्यो वणिङ्नृपः ॥१६९॥**

साछी, जमानी बस्ने र कुल -यी तीन अर्काको धनका लागि दुःख पाउने गर्दछन् । ब्राह्मण, धनी, ब्यापारी र राजा-यी चार अर्काको कारणले समृद्ध हुने गर्दछन् ।

**अनादेयं नाददीत परिक्षीणोऽपि पार्थिवः ।**
**न चादेयं समृद्धोऽपि सूक्ष्मं अप्यर्थमुत्सृजेत् ॥१७०॥**



राजाले जतिसुकै कमजोर हुँदा पनि लिन नहुनेसँग केही कुरा नलिनू । जतिसुकै समृद्ध हुँदा पनि लिन योग्य कुरा लिन नछाड्नू ।

**अनादेयस्य चादानादादेयस्य च वर्जनात् ।**
**दौर्बल्यं ख्याप्यते राज्ञः स प्रेत्येह च नश्यति ॥१७१॥**

लिन नहुनेसँग कुनै कुरा लिइएमा वा लिन हुनेसँग कुनै कुरा नलिइएमा आम मानिसमा राजा कमजोर रहेछन् भन्ने पर्दछ र उसको परलोक पनि बिग्रन्छ ।

**स्वादानाद्वर्णसंसर्गात्त्वबलानां च रक्षणात् ।**
**बलं संजायते राज्ञः स प्रेत्येह च वर्धते ॥१७२॥**

न्यायपूर्ण तरिकाले धन लिँदा, वर्णव्यवस्थाका नियम पालना गराउँदा र कमजोरको रक्षा गर्दा राजाको बल बढ्दछ र परलोक पनि सुध्रन्छ ।

**तस्माद्यम इव स्वामी स्वयं हित्वा प्रियाप्रिये ।**
**वर्तेत याम्यया वृत्त्या जितक्रोधो जितेन्द्रियः ॥१७३॥**

यसकारण राजाले यमराजले जस्तै गरी रिसलाई काबुमा राख्दै, इन्द्रियलाई जिती आफ्नो व्यक्तिगत लाभहानीतिर मतलब नगरी सबैमाथि समान व्यवहार गर्नु पर्दछ ।

**यस्त्वधर्मेण कार्याणि मोहात्कुर्यान्नराधिपः ।**
**अचिरात्तं दुरात्मानं वशे कुर्वन्ति शत्रवः ॥१७४॥**

जुन राजा अधर्मपूर्वक मोहका वशमा परी काम गर्ने गर्दछ, त्यस्तो दुष्ट चित्तको राजालाई चाँडै नै शत्रुहरूले आफ्नो वशमा पार्दछन् ।

**कामक्रोधौ तु संयम्य योऽर्थान् धर्मेण पश्यति ।**
**प्रजास्तमनुवर्तन्ते समुद्रमिव सिन्धवः ॥१७५॥**



जुन राजा काम र क्रोधलाई जिती धर्मपूर्वक विवादलाई सल्टाउने गर्दछ, नदीहरूले समुद्रलाई पछ्याएजस्तै प्रजाहरू उसलाई पछ्याउने गर्दछन् ।

**यः साधयन्तं छन्देन वेदयेद्धनिकं नृपे ।**
**स राज्ञा तच्चतुर्भागं दाप्यस्तस्य च तद्धनम् ॥१७६॥**

लिएको ऋण माग्न जाँदा "म त राजाको मान्छे किन तिर्ने ?" भनी ऋणीले भनेको कुरा साहूले राजासमक्ष जाहेरी गरे त्यो ऋणीबाट  साहूको पूरा पैसा उठाई साहूलाई दिलाउनू र उसलाई पच्चीस प्रतिशत दण्ड पनि तिराउनू ।

**कर्मणापि समं कुर्याद्धनिकायाधमर्णिकः ।**
**समोऽवकृष्टजातिस्तु दद्याच्छ्रेयांस्तु तच्छनैः ॥१७७॥**

तल्लोजातकाले लिएको ऋण तिर्न नसके काम गर्दै तिर्नू । माथिल्लो वा बराबर जातकाले

ऋण तिर्न नसके बिस्तारै तिर्नू ।

**अनेन विधिना राजा मिथो विवदतां नृणाम् ।**
**साक्षिप्रत्ययसिद्धानि कार्याणि समतां नयेत् ॥१७८॥**

यसरी, विवाद गर्ने झगडियाहरुलाई राजाले साछी, प्रमाण आदिका आधारमा
समान भावले हेरी सही सही निर्णय गर्नू ।

**कुलजे वृत्तसंपन्ने धर्मज्ञे सत्यवादिनि ।**
**महापक्षे धनिन्यार्ये निक्षेपं निक्षिपेद्बुधः ॥१७९॥**

कुलिन, सदाचारी, धार्मिक, सत्यवादी, प्रभावशाली र धनी मानिसलाई
बुद्धिमानले नासो लगेर राख्न दिनू ।

**यो यथा निक्षिपेद्धस्ते यमर्थं यस्य मानवः ।**

**स तथैव ग्रहीतव्यो यथा दायस्तथा ग्रहः ॥१८०॥**

जसले जसरी जसका हातबाट नासो राखिएको हो, उसले त्यसरी र त्यही हातले
झिक्नु पर्दछ । जसरी दिइएको हो त्यसरी नै लिइनु पर्दछ ।

**यो निक्षेपं याच्यमानो निक्षेप्तुर्न प्रयच्छति ।**
**स याच्यः प्राड्विवाकेन तन्निक्षेप्तुरसन्निधौ ॥१८१॥**

जसले राखेको नासो फिर्ता माग्न जाँदा दिँदैन । उसँग राजकर्मचारीले एक्लै गएर नासो माग्नू ।

**साक्ष्यभावे प्रणिधिभिर्वयोरूपसमन्वितैः ।**
**अपदेशैश्च संन्यस्य हिरण्यं तस्य तत्त्वतः ॥१८२॥**

कर्मचारीले माग्दा पनि उसले नासो राखेको कुरा अस्वीकार गरेमा तथा नासो राख्ने बेलामा

कोही साछी पनि बसेको छैन भने राजकर्मचारीलाई नै नासो राख्नेले बताए बमोजिमकै सामान लगी त्यो साहूकोमा नासो राख्न लगाउनू र पछि माग्न पठाउनू ।

**स यदि प्रतिपद्येत यथा न्यस्तं यथाकृतम् ।**
**न तत्र विद्यते किंचिद्यत्परैरभियुज्यते ॥१८३॥**

साहूले सरकारी कर्मचारीले राख्न दिएको नासो माग्दा जस्तातस्तै फर्काए, उसमाथि नासो पचायो भनी लगाइएको अभियोग झूटो ठान्नू ।

**तेषां न दद्याद्यदि तु तद्धिरण्यं यथाविधि ।**
**उभौ निगृह्य दाप्यः स्यादिति धर्मस्य धारणा ॥१८४॥**

यदि साहू सरकारी कर्मचारीको नासो फिर्ता गर्दैन भने उसलाई दुबै नासो फिर्ता गर्न लगाउनू । यही नै कानुनी (धर्मको) निर्णय हो ।



**निक्षेपोपनिधी नित्यं न देयौ प्रत्यनन्तरे ।**
**नश्यतो विनिपाते तावनिपाते त्वनाशिनौ ॥१८५॥**

नासो वा भाँडो सहित राख्न दिएको नासो, नासो राख्ने व्यक्तिको नासोको बारेमा केही नभनी मृत्यु भएमा वा उ कतै हराएमा वा कतै लुकेमा उसका हकदारलाई लगेर नदिनू, नष्ट भएसरह मानिन्छ , बाँचेको अवस्थामा उसलाई दिनै पर्दछ ।

**स्वयमेव तु यौ दद्यान्मृतस्य प्रत्यनन्तरे ।**
**न स राज्ञाभियोक्तव्यो न निक्षेप्तुश्च बन्धुभिः ॥१८६॥**

नासो राख्ने व्यक्ति परेपछि उसका हकदारलाई लगेर कुनै नासो दिइन्छ भने पनि राजाले टाउको नदुखाउनू ।

**अच्छलेनैव चान्विच्छेत्तमर्थं प्रीतिपूर्वकम् ।**
**विचार्य तस्य वा वृत्तं साम्नैव परिसाधयेत् ॥१८७॥**

सापटी दिएको रकम वा नासो सम्भव भएसम्म सम्झाएर बुझाएर वा साम, दाम, दण्ड भेदका नीति अपनाएर लिनू ।

**निक्षेपेष्वेषु सर्वेषु विधिः स्यात्परिसाधने ।**
**समुद्रे नाप्नुयात्किञ्चिद्यदि तस्मान्न संहरेत् ॥१८८॥**

यो विधि सबै खाले साछी नराखिएका नासोसम्बन्धी विवाद सुल्झाउनका लागि हो । केही चिह्न लगाएर नासो राखिएकोमा केही झिकिएको छैन भने नासो राख्नेलाई दोष लगाउन मिल्दैन ।

**चौरैर्हृतं जलेनोढं अग्निना दग्धमेव वा ।**
**न दद्याद्यदि तस्मात्स न संहरति किंचन ॥१८९॥**



राखिएको नासोबाट आफूले केही झिकिएको छैन भने चोरले चोरेर लगे, पानी डुबेर नासिए, आगोले जले नासो फिर्ता दिन पर्दैन ।

**निक्षेपस्यापहर्तारमनिक्षेप्तारमेव च ।**
**सर्वैरुपायैरन्विच्छेच्छपथैश्चैव वैदिकैः ॥१९०॥**

नासो चार्ने र नासो नराखी राखेको छ भन्दै माग्न खोज्ने दुबैलाई राजाले सबै धार्मिक र व्यवहारिक उपाय अपनाई तह लगाउनू ।

**यो निक्षेपं नार्पयति यश्चानिक्षिप्य याचते ।**
**तावुभौ चौरवच्छास्यौ दाप्यौ वा तत्समं दमम् ॥१९१॥**

अर्काको नासो नफर्काउने र नराखी माग्ने दुबै चोरसरह दण्डनीय हुन्छन् र दाबी

गरिएको नासो सरह जरिबाना तिर्न योग्य हुन्छन् ।

**निक्षेपस्यापहर्तारं तत्समं दापयेद्दमम् ।**
**तथोपनिधिहर्तारमविशेषेण पार्थिवः ॥१९२॥**

नासो वा भाँडो सहित राख्न दिएको नासो पचाउन खोज्नेलाई
त्यही नासो सरह जरिवाना तिराउनू ।

**उपधाभिश्च यः कश्चित्परद्रव्यं हरेन्नरः ।**
**ससहायः स हन्तव्यः प्रकाशं विविधैर्वधैः ॥१९३॥**

“तँ सँग राजा रिसाएका छन्, आएर धन लैजान्छन्, मलाई दे, सुरक्षित हुन्छ” आदि जस्ता कुरा
गरी झुक्याएर अर्काको धनमाल लैजाने व्यक्ति उसका सहयोगी
सहित मृत्युदण्ड पाउन योग्य हुन्छ ।



**निक्षेपो यः कृतो येन यावांश्च कुलसन्निधौ ।**
**तावानेव स विज्ञेयो विब्रुवन्दण्डमर्हति ॥१९४॥**

जसले जसका सामु जे कुरा नासो राख्न दिएको छ पछि त्यसको परिमाणमा विवाद उत्पन्न भए
साछीले जेजति भन्दछ त्यही सही हुन्छ । नमाने दण्डनीय हुन्छ ।

**मिथो दायः कृतो येन गृहीतो मिथ एव वा ।**
**मिथ एव प्रदातव्यो यथा दायस्तथा ग्रहः ॥१९५॥**

एकान्तमा लिइएको र दिइएको नासो एकान्तमा नै लेनदेन गर्न उपयुक्त हुन्छ ।
जसरी दिइएको हौ त्यसैगरी फिर्ता लिइनु पर्दछ ।

**निक्षिप्तस्य धनस्यैवं प्रीत्योपनिहितस्य च ।**
**राजा विनिर्णयं कुर्यादक्षिण्वन्न्यासधारिणम् ॥१९६॥**

नासो वा उपभोग गर्न मायाले दिइएको कुरामा हुने विवादमा
राजाले दिनेको चित्त नदुखाई निर्णय गर्नू ।

**विक्रीणीते परस्य स्वं योऽस्वामी स्वाम्यसंमतः ।**
**न तं नयेत साक्ष्यं तु स्तेनमस्तेनमानिनम् ॥१९७॥**

अरुको सम्पत्ति उसको अनुमति नलिई बेच्ने चोरको साछी नबस्नू,
बसेका साछीलाई पनि मान्यता नदिनू ।

**अवहार्यो भवेच्चैव सान्वयः षट्शतं दमम् ।**
**निरन्वयोऽनपसरः प्राप्तः स्याच्चौरकिल्बिषम् ॥१९८॥**

यसरी अर्काको धनमाल बेच्ने व्यक्ति सम्पत्तिको मालिककै आफन्त भए उसलाई सय पण
तिराउनू । आफन्त वा सेवक पनि नभए उसलाई चोरसरह दण्ड दिनू ।



**अस्वामिना कृतो यस्तु दायो विक्रय एव वा ।**
**अकृतः स तु विज्ञेयो व्यवहारे यथा स्थितिः ॥१९९॥**

आफ्नो स्वामित्वमा नभएका धनसम्पत्तिको किनबेचलाई किनबेच नै मानिंदैन ।

**संभोगो दृश्यते यत्र न दृश्येतागमः क्वचित् ।**
**आगमः कारणं तत्र न संभोग इति स्थितिः ॥२००॥**

भोगचलन भइरहे पनि श्रोत खुलेको छैन भने त्यस्तो भोगचलनलाई मान्यता दिइन्न ।
भोगचलन नभई श्रोत प्रमाण हुन्छ ।

**विक्रयाद्यो धनं किञ्चिद्गृह्णीयात्कुलसन्निधौ ।**
**क्रयेण स विशुद्धं हि न्यायतो लभते धनम् ॥२०१॥**

धेरैका सामुन्ने जो वस्तुको मोल तिरेर किन्दछ त्यो शुद्ध र न्यायपूर्ण
तरिकाले सम्पत्ति जोडेको हुन्छ ।

**अथ मूलमनाहार्यं प्रकाशक्रयशोधितः ।**
**अदण्ड्यो मुच्यते राज्ञा नाष्टिको लभते धनम् ॥२०२॥**

कुनै सामान चोरेर बेचिएकोमा त्यो चोर मरेमा वा कतै विदेशतिर भागेमा चोरिएको सामान किन्ने व्यक्ति दोषी हुँदैन, सामानको धनीले आधा मूल्य तिरेर आफ्नो सामान लैजानू ।

**नान्यदन्येन संसृष्टरूपं विक्रयमर्हति ।**
**न चासारं न च न्यूनं न दूरेण तिरोहितम् ॥२०३॥**

मिसावट गरेर, बिग्रेका चिजलाई राम्रो छ भनेर, तौल कम गरेर र पर छोपिएर
राखिएका कुरा बेच्न हुँदैन ।



**अन्यां चेद्दर्शयित्वान्या वोढुः कन्या प्रदीयते ।**
**उभे ते एकशुल्केन वहेदित्यब्रवीन्मनुः ॥२०४॥**

पैसा लिएर गरिने विवाहमा पैसा लिनेबेलामा एउटी कन्यालाई देखाई विवाह गर्ने बेलामा अर्कीलाई बिहे गरेर दिइएको अवस्थामा त्यही पैसाले ती दुबै कन्यालाई त्यही एउटै केटासँग विवाह गर्न लगाउनू भनी मनुले बताएका छन् ।

**नोन्मत्ताया न कुष्ठिन्या न च या स्पृष्टमैथुना ।**
**पूर्वं दोषानभिख्याप्य प्रदाता दण्डमर्हति ॥२०५॥**

मानसिकरूपमा कमजोर कुष्ठरोग भएकी कन्या जसले परपुरुषसँग संसर्ग समेत गरिसकेकी छे, त्यस्ती कन्यालाई झुक्याएर विवाह गराउने पुरुष राजाबाट दण्डित हुन योग्य हुन्छ ।

**ऋत्विग्यदि वृतो यज्ञे स्वकर्म परिहापयेत् ।**
**तस्य कर्मानुरूपेण देयोंऽशः सह कर्तृभिः ॥२०६॥**

यज्ञमा नियुक्त ऋत्विज् केही काम गरिसकेपछि बाध्यतावश यज्ञ गर्न पाउँदैन वा सक्दैन भने सो कर्म गराए बापत नीजलाई पनि त्यसपछि सो कर्म गराउने अरु ऋत्विज्लाई दिएझैं केही दक्षिणा दिनु पर्दछ ।

**दक्षिणासु च दत्तासु स्वकर्म परिहापयन् ।**
**कृत्स्नमेव लभेतांशमन्येनैव च कारयेत् ॥२०७॥**

वरण गरिसकेपछि रोग आदिले गर्दा कर्म पूरा गराउन नसक्ने ऋत्विजलाई पूरा दक्षिणा दिनू र अरु कुनै ऋत्विज् मार्फत बाँकी कर्म पूरा गराउनू ।

**यस्मिन्कर्मणि यास्तु स्युरुक्ताः प्रत्यङ्गदक्षिणाः ।**
**स एव ता आददीत भजेरन्सर्व एव वा ॥२०८॥**

जुन कर्ममा कर्मको एक अङ्गका रूपमा दक्षिणाको विधान गरिएको हुन्छ, त्यहाँ त्यो कर्म जसले गराउँदछ उसैले दक्षिणा लिनू अथवा भाग लगाएर लिनू ।



**रथं हरेत वाध्वर्युर्ब्रह्माधाने च वाजिनम् ।**
**होता वापि हरेदश्वमुद्गाता चाप्यनः क्रये ॥२०९॥**

यज्ञ शुरु गरेपछि अध्वर्युले रथको, ब्रह्मा र होताले घोडाको तथा सामवेद गाउने (उद्गाता) ले किनिएको सोम बोक्न गाडाको रक्षा गर्ने दायित्व समाल्नु पर्दछ ।

**सर्वेषामर्धिनो मुख्यास्तदर्धेनार्धिनोऽपरे ।**
**तृतीयिनस्तृतीयांशाश्चतुर्थांशाश्च पादिनः ॥२१०॥**

सबै यज्ञमा आधा दक्षिणा लिने मुख्य ऋत्विज् चार जना, त्यसको आधा लिने चार जना, त्यसको तीन भागको एक भाग लिने चार जना र त्यसको चार भागको एक भाग लिने चार जना ऋत्विज् हुन्छन् ।

**संभूय स्वानि कर्माणि कुर्वद्भिरिह मानवैः ।**
**अनेन विधियोगेन कर्तव्यांशप्रकल्पना ॥२११॥**

मिलीजुली काम गर्ने मानिसहरूले (वा ऋत्विज्ले) यही विधिले वा पूर्व सहमती अनुसार आफ्नो पारिश्रमिक लिनु उचित हुन्छ ।

**धर्मार्थं येन दत्तं स्यात्कस्मैचिद्याचते धनम् ।**
**पश्चाच्च न तथा तत्स्यान्न देयं तस्य तद्भवेत् ॥२१२॥**

एकपटक धर्मकर्म वा दानदक्षिणामा खर्च भइसकेको धन दाताले पुनः त्यही धन अरु कसैका लागि खर्च गर्न सक्दैन ।

**यदि संसाधयेत्तत्तु दर्पाल्लोभेन वा पुनः ।**
**राज्ञा दाप्यः सुवर्णं स्यात्तस्यस्तेयस्य निष्कृतिः ॥२१३॥**



दान दिइसकेको कुरा घमण्ड वा लोभले फिर्ता लिने व्यक्तिलाई राजाले “सुवर्ण” दण्ड दिनू ।

**दत्तस्यैषोदिता धर्म्या यथावदनपक्रिया ।**
**अत ऊर्ध्वं प्रवक्ष्यामि वेतनस्यानपक्रियाम् ॥२१४॥**

यी मैले दिइएको कुरा फिर्ता लिने नलिने सम्बन्धी नियमका कुरा बताएँ । अब तलब नदिने सम्बन्धी कुरा बताउँदछु ।

**भृतो नार्तो न कुर्याद्यो दर्पात्कर्म यथोदितम् ।**
**स दण्ड्यः कृष्णलान्यष्टौ न देयं चास्य वेतनम् ॥२१५॥**

जुन सेवक बिरामी नहुँदा पनि जिम्मा दिएको काम घमण्डले गर्दैन उसलाई आठ “कृष्णाल” दण्ड दिनु र उसको तलब पनि नदिनू ।

**आर्तस्तु कुर्यात्स्वस्थः सन्यथाभाषितमादितः ।**
**स दीर्घस्यापि कालस्य तल्लभेतैव वेतनम् ॥२१६॥**

स्वस्थ हुँदा इमानदारीताका साथ काम गर्ने सेवकले लामो समय बिरामी हुँदा पनि सो समयको पूरै तलब पाउँदछ ।

**यथोक्तमार्तः सुस्थो वा यस्तत्कर्म न कारयेत् ।**
**न तस्य वेतनं देयमल्पोनस्यापि कर्मणः ॥२१७॥**

सेवक स्वस्थ होस् वा बिरामी, उसलाई कुनै काम ठेक्कामा दिइएको छ र उसले बीचैमा काम गर्न छाड्दछ भने उसले जति काम सकेको छ त्यसको मात्र पैसा दिनु, थोरै काम बाँकी भएपनि बाँकी कामको पैसा नदिनू ।

**एष धर्मोऽखिलेनोक्तो वेतनादानकर्मणः ।**
**अत ऊर्ध्वं प्रवक्ष्यामि धर्मं समयभेदिनाम् ॥२१८॥**



तलब नदिने सम्बन्धी कुरा बताएँ । अब सम्झौता भङ्ग गर्नेका बारेमा बताउँदछु ।

**यो ग्रामदेशसङ्घानां कृत्वा सत्येन संविदम् ।**
**विसंवदेन्नरो लोभात्तं राष्ट्राद्विप्रवासयेत् ॥२१९॥**

गाउँ, देश वा सङ्घसँग सम्झौता गरी बीचैमा लोभले काम छाड्नेलाई देशनिकाला गर्नू ।

**निगृह्य दापयेच्चैनं समयव्यभिचारिणम् ।**
**चतुःसुवर्णान्षण्निष्कांश्छतमानं च राजकम् ॥२२०॥**

यस्ता भगुवा व्यक्तिलाई समातेर राजाले चार “सुवर्ण”, छ “निष्क” र एक सय चाँदीका सिक्का जरिवाना तिराउनु पर्दछ ।

**एतद्दण्डविधिं कुर्याद्धार्मिकः पृथिवीपतिः ।**
**ग्रामजातिसमूहेषु समयव्यभिचारिणाम् ॥२२१॥**

गाउँ, जाति र समूहमा भगुवा कामदारलाई पनि राजाले यही दण्डको नियम लागु गर्नू ।

**क्रीत्वा विक्रीय वा किञ्चिद्यस्येहानुशयो भवेत् ।**
**सोऽन्तर्दशाहात्तद्द्रव्यं दद्याच्चैवाददीत च ॥२२२॥**

बिनबेच भएको सामान किन्नेलाई मन नपरे दश दिन भित्र बेच्नेलाई लगेर दिनू ।
बेच्नेले पनि सामान यथास्थितिमा भएमा फिर्ता लिन्न नभन्नू ।

**परेण तु दशाहस्य न दद्यान्नापि दापयेत् ।**
**आददानो ददश्चैव राज्ञा दण्डयः शतानि षट् ॥२२३॥**

दश दिनपछि बिक्री भएको सामान फिर्ता नलिन बिक्रेताले पाउँदछ । क्रेताले जबरजस्ती गरेका उसलाई राजाले छ सय पण दण्ड तिराउनू ।



**यस्तु दोषवतीं कन्यामनाख्याय प्रयच्छति ।**
**तस्य कुर्यान्नृपो दण्डं स्वयं षण्णवतिं पणान् ॥२२४॥**

दोष लुकाएर कन्या दिनेलाई राजाले स्वयं साठी पण दण्ड तिराउनू ।

**अकन्येति तु यः कन्यां ब्रूयाद् द्वेषेण मानवः ।**
**स शतं प्राप्नुयाद्दण्डं तस्या दोषमदर्शयन् ॥२२५॥**

निर्दोष कन्यालाई ईर्ष्यापूर्वक दोष देखाई प्रमाणित गर्न नसक्ने
मानिसलाई सय पण दण्ड तिराउनू ।

**पाणिग्रहणिका मन्त्राः कन्यास्वेव प्रतिष्ठिताः ।**
**नाकन्यासु क्वचिन्नृणां लुप्तधर्मक्रिया हि ताः ॥२२६॥**

विवाहमा पाणिग्रहण आदि गर्दा प्रयोग गरिने वेद मन्त्र अक्षता कन्याका लागि बताइएका मन्त्र हुन्, किन कि विवाहपूर्व दूषित कन्याका सबै धर्मकर्म लोप हुन्छ ।
(यसैले पनि कुनै कन्यामाथि गलत आरोप कहिल्यै नलगाउनू) ।

**पाणिग्रहणिका मन्त्रा नियतं दारलक्षणम् ।**
**तेषां निष्ठा तु विज्ञेया विद्वद्भिः सप्तमे पदे ॥२२७॥**

पाणिग्रहणका समयमा प्रयोग गरिने वेदमन्त्रहरु कन्यालाई स्त्री बनाउनका लागि प्रयोग गरिन्छन् । यी मन्त्रमध्येमा पनि सप्तपदीका मन्त्र विशेष मानिन्छन्, यसपछि विवाह विधि समाप्त भएको मानिन्छ र कन्या स्त्री हुन्छे । (मानिस सिन्दूर हाल्नुलाई विशेष मान्दछन्, सायद ती शास्त्रको मर्म नबुझ्ी कुरा गर्दछन्) ।

**यस्मिन्यस्मिन्कृते कार्ये यस्येहानुशयो भवेत् ।**
**तं अनेन विधानेन धर्मे पथि निवेशयेत् ॥२२८॥**



जुन सुकै कर्ममा पनि कर्म गरेपछि दोष देखिए त्यसलाई सुधार्न यिनै विधिको प्रयोग गर्नू र धर्मलाई स्थापना गर्नू ।

**पशुषु स्वामिनां चैव पालानां च व्यतिक्रमे ।**
**विवादं सम्प्रवक्ष्यामि यथावद्धर्मतत्त्वतः ॥२२९॥**

अब म पशुमालिक र गोठालाका बीचमा हुने विवादका विषयमा धर्मतः हुने निर्णयका बारेमा बताउँदछु ।

**दिवा वक्तव्यता पाले रात्रौ स्वामिनि तद्गृहे ।**
**योगक्षेमेऽन्यथा चेत्तु पालो वक्तव्यतां इयात् ॥२३०॥**

पशुहरु दिनमा गोठालाको र रातमा पशु-मालिकको रेखदेखमा रहन्छन् ।
यसैले यिनको सुरक्षाको दायित्व पनि यही अनुसार नै हुने गर्दछ ।

**गोपः क्षीरभृतो यस्तु स दुह्याद्दशतो वराम् ।**
**गोस्वाम्यनुमते भृत्यः सा स्यात्पालेऽभृते भृतिः ॥२३१॥**

दूध नै तलबकारूपमा दिनेगरी राखिएको गोठालोले दशवटी लैनु गाईमध्ये एउटीको दूध मालिकको आज्ञाले तलबकोरूपमा लैजानू । (कसैकसैले एउटा गाईको दूध तलबकारूपमा लैजाने गोठालोले दश वटा गाई चराउनु पर्दछ भनेर पनि यसको अर्थ लगाएका छन्) ।

**नष्टं विनष्टं कृमिभिः श्वहतं विषमे मृतम् ।**
**हीनं पुरुषकारेण प्रदद्यात्पाल एव तु ॥२३२॥**

गोठालाकै सामु गाई हराए, सर्प आदिले टोकेर मरे, कुकुर आदिले टोकेर मरे, खाल्डामा खसेर वा भीर आदिबाट लडेर मरे गोठालोले पशु-मालिकलाई त्यसको क्षतिपूर्ति दिनु पर्दछ ।

**विघुष्य तु हृतं चौरैर्न पालो दातुमर्हति ।**
**यदि देशे च काले च स्वामिनः स्वस्य शंसति ॥२३३॥**



बलपूर्वक अपहरण गरेर लगिएका पशुको क्षतिपूर्ति गोठालाले दिनु पर्दैन तर उसले नजिकै रहेका पशुधनीलाई बेलैमा खबर गर्नुपर्दछ ।

**कर्णौ चर्म च वालांश्च बस्तिं स्नायुं च रोचनाम् ।**
**पशुषु स्वामिनां दद्यान्मृतेष्वङ्गानि दर्शयेत् ॥२३४॥**

जनावर आफै मरे त्यसका कान, छाला, रौं (पुच्छर), तल्लो पेट, नसा, गोरोचन आदि पशुका अङ्ग मालिकलाई देखाउँदै दिनुपर्दछ ।

**अजाविके तु संरुद्धे वृकैः पाले त्वनायति ।**
**यां प्रसह्य वृको हन्यात्पाले तत्किल्बिषं भवेत् ॥२३५॥**

ब्वाँसो आदिले बथानबाट एक्लैपारी भेडाबाख्रालाई आक्रमण गर्दा पनि दौडेर जोगाउन नजाने गोठालो भए उ भेडाबाख्रा मारिएकोमा दोषी हुन्छ ।

**तासां चेदवरुद्धानां चरन्तीनां मिथो वने ।**
**यां उत्प्लुत्य वृको हन्यान्न पालस्तत्र किल्बिषी ॥२३६॥**

बथानमा चरिरहेको बेलामा ब्वाँसो आदिले अचानक आएर कुनै जनावर मारे त्यो दोष गोठालोलाई लाग्दैन ।

**धनुःशतं परीहारो ग्रामस्य स्यात्समन्ततः ।**
**शम्यापातास्त्रयो वापि त्रिगुणो नगरस्य तु ॥२३७॥**

गाउँको चारैतिर सय धनुष (चार सय हात) जमिन पशुका लागि चरिचरन जमिन छाड्नू अथवा तीन पटक हुत्याउँदा लठ्ठी जहाँसम्म पुग्दछ त्यति जमिन छाड्नू । शहरमा वरीपरी यसको तीन दोबर जमिन छाड्नू ।

**तत्रापरिवृतं धान्यं विहिंस्युः पशवो यदि ।**
**न तत्र प्रणयेद्दण्डं नृपतिः पशुरक्षिणाम् ॥२३८॥**



यसरी छाडिएको जग्गामा कसैले राजाको आदेश बिना खेती गर्दछ र चराउन लगिएका जनावरले त्यो खेती नष्ट गर्दछ भने गोठालो दोषी हुँदैन, राजाले उसलाई दण्ड नदिनू ।

**वृतिं तत्र प्रकुर्वीत यामुष्ट्रो न विलोकयेत् ।**
**छिद्रं च वारयेत्सर्वं श्वसूकरमुखानुगम् ॥२३९॥**

यस्ता चरिचरनका नजिकै खेतबारी हुनेले ऊँटले समेत देख्न नसक्ने गरी अग्लो पर्खाल (वा डिल बनाउनु), त्यसमाथि काँडा भएको बिरुवा लगाउनू । कुकुर, सुँगुर आदि छिर्न सक्ने प्वाल भए टाल्नू ।

**पथि क्षेत्रे परिवृते ग्रामान्तीयेऽथवा पुनः ।**
**सपालः शतदण्डार्हो विपालांश्चारयेत्पशून् ॥२४०॥**

गोठालो हुँदाहुँदै बाटो वा चरिचरन वा गाउँका छेउछाउका जमिनमा पसी जनावरले

बालीनाली नोक्सान गरे गोठालोलाई सय पण दण्ड दिनू । गोठालो
नभए जग्गाधनी आफैंले जनावर धपाउनू ।

**क्षेत्रेष्वन्येषु तु पशुः सपादं पणमर्हति ।**
**सर्वत्र तु सदो देयः क्षेत्रिकस्येति धारणा ॥२४१॥**

अरुका खेतबारीमा पसी आफ्ना जनावरले नोक्सान गर्दा सवा पण दण्ड र नोक्सान भए
अनुसारको अर्मल तिर्नु पर्दछ ।

**अनिर्दशाहां गां सूतां वृषान्देवपशूंस्तथा ।**
**सपालान्वा विपालान्वा न दण्ड्यान्मनुरब्रवीत् ॥२४२॥**

बिहाएको दश दिन नपुगेकी गाई र वृषोत्सर्ग गरेर छाडिएको साँढे कसैका खेतबारीमा छिरी
बालीनाली नोक्सान गर्दछ भने गोठालो भएपनि नभएपनि दण्ड र अर्मल
तिर्नु पर्दैन भनी मनुले बताएका छन् ।



**क्षेत्रियस्यात्यये दण्डो भागाद्दशगुणो भवेत् ।**
**ततोऽर्धदण्डो भृत्यानां अज्ञानात्क्षेत्रियस्य तु ॥२४३॥**

पशुधनीले देख्दादेख्दै भएको नोक्सानीमा नोक्सानको दश गुना र गोठालोले देख्दादेख्दै भएको
बालीनालीको नोक्सानीमा नोक्सानको पाँच गुना दण्ड तिराउनू ।

**एतद्विधानं आतिष्ठेद्धार्मिकः पृथिवीपतिः ।**
**स्वामिनां च पशूनां च पालानां च व्यतिक्रमे ॥२४४॥**

पशुधनी, गोठालो र चरिचरनका सम्बन्धमा हुने विवादमा धार्मिक राजाले यि नियम बसाउनू ।

**सीमां प्रति समुत्पन्ने विवादे ग्रामयोर्द्वयोः ।**
**ज्येष्ठे मासि नयेत्सीमां सुप्रकाशेषु सेतुषु ॥२४५॥**

दुई गाउँका बीचमा सीमासम्बन्धी विवाद उत्पन्न भए जेठ महिनाको खँडेरीले घाँस सुकेको मौकामा गई सीमा चिह्न खोजी विवाद सुल्झाउन कोशिश गर्नू ।

**सीमावृक्षांश्च कुर्वीत न्यग्रोधाश्वत्थकिंशुकान् ।**
**शाल्मलीन्सालतालांश्च क्षीरिणश्चैव पादपान् ॥२४६॥**

सीमामा लामो समय टिक्ने खालका वर, पीपल, पलाश, सिमल, साल, ताडी र दूधिला विरुवा लगाउनू ।

**गुल्मान्वेणूंश्च विविधान्शमीवल्लीस्थलानि च ।**
**शरान्कुब्जकगुल्मांश्च तथा सीमा न नश्यति ॥२४७॥**

विभिन्न थरीका झ्याङ्गिने लहराहरू, विभिन्न थरीका बाँसहरू, शमी, लहरा, ढिस्को, काँडादार वृक्ष र गुलाफका झाङ सीमानामा रोपे वा बनाए सीमा नासिँदैन ।



**तडागान्युदपानानि वाप्यः प्रस्रवणानि च ।**
**सीमासंधिषु कार्याणि देवतायतनानि च ॥२४८॥**

सीमानामा ताल, कुवा-इनार-धारा, सिँढी सहितका कुवा-इनार-पोखरी, दह-झरना र मठमन्दिर बनाउनू ।

**उपच्छन्नानि चान्यानि सीमालिङ्गानि कारयेत् ।**
**सीमाज्ञाने नृणां वीक्ष्य नित्यं लोके विपर्ययम् ॥२४९॥**

मानिसका बीचमा सीमालाई लिएर भ्रम र विवाद नहोस् भन्ने उद्देश्यले विभिन्न (निम्न) सुदृढ र गहिरा सीमा-चिह्नहरू पनि बनाउनू ।

**अश्मनोऽस्थीनि गोवालांस्तुषान्भस्म कपालिकाः ।**
**करीषमिष्टकाङ्गारांश्छर्करा वालुकास्तथा ॥२५०॥**

पत्थर, हाड, गाई (आदि जनावर) को रौं, भुस, खरानी, खप्पर, सिसा,
ईँट, अँगार, गिट्टी र बालुवा जस्ता...।

**यानि चैवंप्रकाराणि कालाद्भूमिर्न भक्षयेत् ।**
**तानि संधिषु सीमायामप्रकाशानि कारयेत् ॥२५१॥**

माटोमा चाँडै नगल्ने विविध कुराहरु सीमानामा गाडिदिनु पर्दछ ।

**एतैर्लिङ्गैर्नयेत्सीमां राजा विवदमानयोः ।**
**पूर्वभक्त्या च सततं उदकस्यागमेन च ॥२५२॥**

सीमा विवादमा राजाले यसरी सीमा निर्धारण गरी विवाद समाधान गर्नू ।
अथवा भोगचलन वा नदीको बहावलाई आधार बनाउनू ।

**यदि संशय एव स्याल्लिङ्गानामपि दर्शने ।**

**साक्षिप्रत्यय एव स्यात्सीमावादविनिर्णयः ॥२५३॥**

चिह्न आदिले पनि सीमा निश्चय गर्न नसकिए वा विवाद सल्टयाउन नसकिए,
साछीका आधारमा सीमा विवादको समाधान गर्नू ।

**ग्रामीयककुलानां च समक्षं सीम्नि साक्षिणः ।**
**प्रष्टव्याः सीमलिङ्गानि तयोश्चैव विवादिनोः ॥२५४॥**

सीमा विवादमा संलग्न दुवै पक्षाका बीचमा गाउँका बूढापाका र खानदानी मानिसलाई
साछीकारूपमा कुरा राख्न लगाउनू ।

**ते पृष्टास्तु यथा ब्रूयुः समस्ताः सीम्नि निश्चयम् ।**
**निबध्नीयात्तथा सीमां सर्वांस्तांश्चैव नामतः ॥२५५॥**

यसरी सोद्धा तीनले जे बताउँदछन्, त्यसैलाई सीमा निर्धारण मानी कागजमा
लेख्नू र सबैलाई सही गराई मुचुल्का उठाउनू ।

**शिरोभिस्ते गृहीत्वोर्वीं स्रग्विणो रक्तवाससः ।**
**सुकृतैः शापिताः स्वैः स्वैर्नयेयुस्ते समञ्जसम् ॥२५६॥**

सीमा निर्धारणमा संलग्न हुने ती साछीले रातो वस्त्र र रातो माला लगाई माटाको डल्लो शिरमा
राखी सत्यताको किरिया खानू ।
(तिनले जहाँ लगेर त्यो डल्लो खसाल्दछन् त्यही सीमा हुन्छ) ।

**यथोक्तेन नयन्तस्ते पूयन्ते सत्यसाक्षिणः ।**
**विपरीतं नयन्तस्तु दाप्याः स्युर्द्विशतं दमम् ॥२५७॥**

धर्म र न्यायपूर्वक साछीले कुरा राखे ती पापबाट बच्दछन्, झूटो बोले तीनलाई
राजाले दुई सय पण दण्ड तिराउनू ।



**साक्ष्यभावे तु चत्वारो ग्रामाः सामन्तवासिनः ।**
**सीमाविनिर्णयं कुर्युः प्रयता राजसन्निधौ ॥२५८॥**

यस्ता साछी नपाइए वरपरका चार गाउँका जमिन्दारहरू मार्फत राजाका सामु सीमाको
छिनोफानो गर्नू ।

**सामन्तानामभावे तु मौलानां सीम्नि साक्षिणाम् ।**
**इमानप्यनुयुञ्जीत पुरुषान्वनगोचरान् ॥२५९॥**

यस्ता बूढापाका वा जमिन्दार मार्फत पनि सीमा निर्धारण गर्न नसकिए वा त्यस्ता व्यक्ति नभए
वनमा घुमफिर गर्ने मानिसलाई साछी बनाउनू ।

**व्याधांश्छाकुनिकान्गोपान्कैवर्तान्मूलखानकान् ।**
**व्यालग्राहानुञ्छवृत्तीनन्यांश्च वनचारिणः ॥२६०॥**

जनावर मारेर जीवन चलाउने शिकारी, जनावर समाएर जीवन चलाउने मानिस, गोठाला, माझी, खानीका श्रमिक, सर्प आदि समाउने मानिस र शिलाखोजेको अन्नले प्राण धान्ने (जोगी, सन्यासी आदि) मानिसलाई सीमा विवादमा साछी बनाउनू ।

**ते पृष्टास्तु यथा ब्रूयुः सीमासंधिषु लक्षणम् ।**
**तत्तथा स्थापयेद्राजा धर्मेण ग्रामयोर्द्वयोः ॥२६१॥**

तीनले जहाँ जस्तो भन्दछन् राजाले त्यही ठाउँलाई दुई गाउँको सीमाना निर्धारण गर्नू ।

**क्षेत्रकूपतडागानामारामस्य गृहस्य च ।**
**सामन्तप्रत्ययो ज्ञेयः सीमासेतुविनिर्णयः ॥२६२॥**



गाउँ भित्रको जग्गा, पानीपँधेरो, पोखरी, बगैंचा, घरघडेरी, पुल आदिको सीमा विवादको निर्णय गर्दा त्यही गाउँका प्रतिष्ठित मानिसलाई मात्र साछी बनाउनु पर्दछ ।

**सामन्ताश्चेन्मृषा ब्रूयुः सेतौ विवादतां नृणाम् ।**
**सर्वे पृथक्पृथग्दण्डया राज्ञा मध्यमसाहसम् ॥२६३॥**

पुलसम्बन्धी सीमा विवादमा पक्षपातपूर्वक साछी बस्ने गाउँका प्रतिष्ठित मानिसलाई राजाले मध्यमसाहसको दण्ड दिनू ।

**गृहं तडागमारामं क्षेत्रं वा भीषया हरन् ।**
**शतानि पञ्च दण्डयः स्यादज्ञानाद्द्विशतो दमः ॥२६४॥**

बलजफ्ती अर्काको वा सार्वजनिक घर, तलाउ, उपवन र खेतबारी कब्जा गर्नेलाई पाँच सय पण र अनजानमा उपभोग गर्नेलाई दुई सय पण दण्ड तिराउनू ।

**सीमायामविषह्यायां स्वयं राजैव धर्मवित् ।**
**प्रदिशेद्भूमिमेतेषामुपकारादिति स्थितिः ॥२६५॥**

सीमा विवाद सुल्झाउन कुनै पनि प्रमाण उपलब्ध नभए राजाले धर्म एवं न्यायपूर्वक जता बढी नोक्सान भएको छ त्यतातिर शोधभर्ना हुने गरी सीमा विवाद सुल्झाउनु पर्दछ । (अथवा त्यो जमिन कुनै समाजिक सङ्घ-सङ्गठनलाई दिनु पर्दछ) ।

**एषोऽखिलेनाभिहितो धर्मः सीमाविनिर्णये ।**
**अत ऊर्ध्वं प्रवक्ष्यामि वाक्पारुष्यविनिर्णयम् ॥२६६॥**

सीमा विवादका सबै कुरा बताइए, अब गालीगलौचको दण्ड-विधिका बारेमा बताउँदछु ।

**शतं ब्राह्मणमाक्रुश्य क्षत्रियो दण्डमर्हति ।**
**वैश्योऽप्यर्धशतं द्वे वा शूद्रस्तु वधमर्हति ॥२६७॥**



ब्राह्मणलाई गालीगलौज गर्ने क्षत्रियलाई सय पण र वैश्यलाई डेड सयदेखि दुई सयसम्म दण्ड तिराउनू । शूद्रलाई मृत्युदण्ड दिन योग्य हुन्छ ।

**पञ्चाशद्ब्राह्मणो दण्ड्यः क्षत्रियस्याभिशंसने ।**
**वैश्ये स्यादर्धपञ्चाशच्छूद्रे द्वादशको दमः ॥२६८॥**

ब्राह्मणले क्षत्रियलाई गालीगलौज गरे पचास, वैश्यलाई गरे पच्चीस र शूद्रलाई गरे बाह्र पण दण्ड तिराउनू ।

**समवर्णे द्विजातीनां द्वादशैव व्यतिक्रमे ।**
**वादेष्ववचनीयेषु तदेव द्विगुणं भवेत् ॥२६९॥**

समान वर्णमा सामान्य भनाभन हुँदा बाह्र पण र तथानाम गालीगलौजमा त्यसको दोब्बर पण दण्ड तिराउनू ।

**एकजातिर्द्विजातींस्तु वाचा दारुणया क्षिपन् ।**
**जिह्वायाः प्राप्नुयाच्छेदं जघन्यप्रभवो हि सः ॥२७०॥**

द्विजलाई गालीगलौज गर्ने शूद्रको जिभ्रो काट्नू किन कि दुस्साहस गर्ने नीच यसैको योग्य हुन्छ ।

**नामजातिग्रहं त्वेषामभिद्रोहेण कुर्वतः ।**
**निक्षेप्योऽयोमयः शङ्कुर्ज्वलन्नास्ये दशाङ्गुलः ॥२७१॥**

घमण्ड गरी द्विजको नाम, गोत्र आदि अपमानजनक तरिकाले बोल्ने शूद्रको अनुहारमा दाग बस्ने गरी दश अमल लामो तातो फलामको किलाले डामी दिनू जसले गर्दा उसको त्यो दाग अरुका लागि शिक्षाप्रद हुने गरोस् ।

**धर्मोपदेशं दर्पेण विप्राणामस्य कुर्वतः ।**
**तप्तमासेचयेत्तैलं वक्त्रे श्रोत्रे च पार्थिवः ॥२७२॥**



ब्राह्मणलाई धर्मसम्बन्धी उपदेश दिने शूद्रको मुख र कानमा राजाले तात्तातो तेल हालि दिनू ।

**श्रुतं देशं च जातिं च कर्म शारीरमेव च ।**
**वितथेन ब्रुवन्दर्पाद्दाप्यः स्याद्द्विशतं दमम् ॥२७३॥**

द्विजातिले द्विजातिलाई देश, जाति, कर्म र शरीरलाई लिएर घमण्ड गर्दै मुख छाडे दुई सय पण दण्ड तिराउनू ।

**काणं वाप्यथवा खञ्जमन्यं वापि तथाविधम् ।**
**तथ्येनापि ब्रुवन्दाप्यो दण्डं कार्षापणावरम् ॥२७४॥**

कानो, लँगडो आदि विकलाङ्गलाई होच्याएर बोल्नेलाई एक कार्षापण दण्ड तिराउनू ।

**मातरं पितरं जायां भ्रातरं तनयं गुरुम् ।**
**आक्षारयञ्छतं दाप्यः पन्थानं चाददद्गुरोः ॥२७५॥**

माता, पिता, पत्नी, दाजुभाइ, छोरा र गुरुलाई मुख छाडे सय पण दण्ड तिराउनू ।

**बाह्मणक्षत्रियाभ्यां तु दण्डः कार्यो विजानता ।**
**बाह्मणे साहसः पूर्वः क्षत्रिये त्वेव मध्यमः ॥२७६॥**

ब्राह्मण र क्षत्रियले एक आपसमा मुख छाडाछाड गरे कानुनका ज्ञाता राजाले ब्राह्मणलाई उत्तम साहस र क्षत्रियलाई मध्यम साहसको दण्ड दिनू ।

**विट्शूद्रयोरेवं एव स्वजातिं प्रति तत्त्वतः ।**
**छेदवर्जं प्रणयनं दण्डस्येति विनिश्चयः ॥२७७॥**

वैश्य र शूद्रले एक आपसमा मुख छाडाछाड गरे वैश्यलाई उत्तम साहस र शूद्रलाई मध्यम साहस दण्ड दिनू । यही नै दण्ड विधि हो ।

**एष दण्डविधिः प्रोक्तो वाक्पारुष्यस्य तत्त्वतः ।**
**अत ऊर्ध्वं प्रवक्ष्यामि दण्डपारुष्यनिर्णयम् ॥२७८॥**

यो गालीगलौजको दण्ड व्यवस्थाका बारेमा बताइयो । अब यसपछि मारपिटको दण्ड विधानका विषयमा बताइने छ ।

**येन केन चिदङ्गेन हिंस्याच्चेच्छ्रेष्ठमन्त्यजः ।**
**छेत्तव्यं तत्तदेवास्य तन्मनोरनुशासनम् ॥२७९॥**

अन्त्यजले जुन जुन अङ्गले द्विजातिलाई हिर्काउँदछ उसको त्यही त्यही अङ्ग छेदन गर्नु पर्दछ भनी मनुले भनेका छन् ।

पाणिमुद्यम्य दण्डं वा पाणिच्छेदनमर्हति ।
पादेन प्रहरन्कोपात्पादच्छेदनमर्हति ॥२८०॥

जुन अन्त्यजको हात लौरो लिएर द्विजलाई पिट्न उठ्दछ, त्यो अन्त्यजको त्यो हात छेदन गर्न योग्य हुन्छ । लात्तले हाने गोडा छेदन गराउन योग्य हुन्छ ।

सहासनमभिप्रेप्सुरुत्कृष्टस्यापकृष्टजः ।
कटया कृताङ्को निर्वास्यः स्फिचं वास्यावकर्तयेत् ॥२८१॥

ब्राह्मणसँगै बस्न खोज्ने अन्त्यजलाई कम्मरमा डामेर देश निकाला गर्नू अथवा उसको फिला क्षतविक्षत बनाउनु पर्दछ ।

अवनिष्ठीवतो दर्पाद्द्वावोष्ठौ छेदयेन्नृपः ।
अवमूत्रयतो मेढ्रमवशर्धयतो गुदम् ॥२८२॥



ब्राह्मणलाई थुक्ने अन्त्यजका राजाले दुबै ओठ छेदन गर्नू, पिसाबले अपमान गरे जननेन्द्रिय छेदन गर्नू र अपानवायुले अपमान गरे गुदद्वार छेदन गर्नू ।

केशेषु गृह्णतो हस्तौ छेदयेदविचारयन् ।
पादयोर्दाढिकायां च ग्रीवायां वृषणेषु च ॥२८३॥

अन्त्यजले द्विजको कपाल समातेर भुत्ल्याए वा मार्ने उद्देश्यले गोडा, दाह्री, घाँटी, अण्डकोष आदि समाते कुनै कुरा नसोची उसका दुवै हात छेदन गर्न लगाउनू ।

त्वग्भेदकः शतं दण्ड्यो लोहितस्य च दर्शकः ।
मांसभेत्ता तु षण्निष्कान्प्रवास्यस्त्वस्थिभेदकः ॥२८४॥

अन्त्यजले द्विजातिलाई छालामा घाउ बनाएर रगत निकाले सय पण र मासु काटे छ निष्क दण्ड तिराउनू । हाड भाँचे वा फुटाए देशनिकाला गर्नू ।

**वनस्पतीनां सर्वेषामुपभोगो यथा यथा ।**
**यथा तथा दमः कार्यो हिंसायामिति धारणा ॥२८५॥**

अन्त्यजले बनस्पती, लहरा आदि नासे, बिगो बमोजिमको दण्ड तिराउनू ।

**मनुष्याणां पशूनां च दुःखाय प्रहृते सति ।**
**यथा यथा महद्दुःखं दण्डं कुर्यात्तथा तथा ॥२८६॥**

मानिस वा पशुमाथि प्रहार हुँदा त्यसले तिनलाई भएको पीडाको अनुमानका आधारमा राजाले अपराधीलाई दण्ड दिने गर्नु पर्दछ ।

**अङ्गावपीडनायां च व्रणशोनितयोस्तथा ।**
**समुत्थानव्ययं दाप्यः सर्वदण्डमथापि वा ॥२८७॥**

कोमल अङ्गमा प्रहार हुँदा हुने पीडालाई मध्यनजर राखी त्यस्ता अङ्गमा प्रहार गर्नेलाई सोही बमोजिमको दण्ड दिनु पर्दछ ।



**द्रव्याणि हिंस्याद्यो यस्य ज्ञानतोऽज्ञानतोऽपि वा ।**
**स तस्योत्पादयेत्तुष्टिं राज्ञे दद्याच्च तत्समम् ॥२८८॥**

मालिकले थाहा पाएर वा नपाएर उसका कुनै वस्तुमा हुने क्षतिको सेवकले मालिकलाई शोधभर्ना र कारवाहीबाट बच्न राजालाई तोकिएको दण्ड पनि तिर्नु पर्दछ ।

**चर्मचार्मिकभाण्डेषु काष्ठलोष्टमयेषु ।**
**मूल्यात्पञ्चगुणो दण्डः पुष्पमूलफलेषु च ॥२८९॥**

छाला, छालाको पानी हाल्ने भाँडो आदि एवं काठ र माटाका सामानमा क्षति भए वस्तुको मूल्यको पाँच गुना दण्ड तिराउनु पर्दछ ।

**यानस्य चैव यातुश्च यानस्वामिन एव च ।**
**दशातिवर्तनान्याहुः शेषे दण्डो विधीयते ॥२९०॥**

रथ आदि वाहन चलाउनेले वा वाहनको मालिकले निम्न लिखित दश अवस्थामा बाहेक अरु अवस्थामा अपराध हुँदा दण्ड तिर्नु पर्दछ ।

**छिन्ननास्ये भग्नयुगे तिर्यक्प्रतिमुखागते ।**
**अक्षभङ्गे च यानस्य चक्रभङ्गे तथैव च ॥२९१॥**
**छेदने चैव यन्त्राणां योक्त्ररश्म्योस्तथैव च ।**
**आक्रन्दे चाप्यपैहीति न दण्डं मनुरब्रवीत् ॥२९२॥**

एक्कासी रथ भाँचिए, जुवा भाँचिए, बाटोको खराबीले गर्दा केही भए, अडिई अडिई हिँड्नाले केही भए, रथको धुरी भाँचिए, पाङ्ग्रा भाँचिए, रथका कुनै किलाकाँटा फुस्किए वा भाँचिए, रथमा नारिएका पशुको डोरी छिने, लगाम छिने र नारिएका जनावर अनियन्त्रित भए : यी कारणले कुनै दुर्घटना भए सारथीले दण्डजरिवाना तिर्नु पर्दैन ।



**यत्रापवर्तते युग्यं वैगुण्यात्प्राजकस्य तु ।**
**तत्र स्वामी भवेद्दण्ड्यो हिंसायां द्विशतं दमम् ॥२९३॥**

सारथीको गल्तीले गर्दा बाटामा अरु कसैको केही नोक्सानी भए रथको मालिकलाई दुई सय पण दण्ड तिराउनु पर्दछ ।

**प्राजकश्चेद्भवेदाप्तः प्राजको दण्डमर्हति ।**
**युग्यस्थाः प्राजकेऽनाप्ते सर्वे दण्ड्याः शतं शतम् ॥२९४॥**

सारथीको गल्तीले हुने दुर्घटनामा उसलाई दुई सय पण तिराउनू । सारथी (वा रथ) ठिक छैन भनी जान्दाजान्दै त्यही रथमा चढिन्छ भने त्यो सवारी दुर्घटना हुँदा प्रत्येक यात्रुसँग सय सय पण दण्ड असुल्नू ।

**स चेत्तु पथि संरुद्धः पशुभिर्वा रथेन वा ।**
**प्रमापयेत्प्राणभृतस्तत्र दण्डोऽविचारितः ॥२९५॥**

पशु, अन्य रथ आदिबाट बाटो अवरुद्ध हुँदा पनि बढी आत्मविश्वासले पेलेर रथ चलाई कुनै दुर्घटना भए सारथीलाई धेरै सोचविचारै नगरी उचित दण्ड दिनू ।

**मनुष्यमारणे क्षिप्रं चौरवत्किल्बिषं भवेत् ।**
**प्राणभृत्सु महत्स्वर्धं गोगजोष्ट्रहयादिषु ॥२९६॥**

चलाएको रथले कुनै मानिस मारिए हजार पण र गाई, घोडा, हात्ती र ऊँट आदि मारिए सारथीलाई पाँच सय पण दण्ड तिराउनू ।

**क्षुद्रकाणां पशूनां तु हिंसायां द्विशतो दमः ।**
**पञ्चाशत्तु भवेद्दण्डः शुभेषु मृगपक्षिषु ॥२९७॥**



सानातिना जनावर मारिए दुई सय र मृग आदि पशुपंक्षी मारिए पचास पण दण्ड तिराउनू ।

**गर्धभाजाविकानां तु दण्डः स्यात्पञ्चमाषिकः ।**
**माषकस्तु भवेद्दण्डः श्वसूकरनिपातने ॥२९८॥**

रथले कुल्चेर गधा, बाख्रा र भेडा मारिए पाँच माषा तथा कुकुर, बनेल आदि मारिए एक माषा दण्ड तिराउनू ।

**भार्या पुत्रश्च दासश्च प्रेष्यो भ्रात्रा च सोदरः ।**
**प्राप्तापराधास्ताड्याः स्यू रज्ज्वा वेणुदलेन वा ॥२९९॥**

आफ्नी पत्नी, छोरो, दास, दूत र खानदानी सेवकबाट दुर्घटना गराइएको वा भएको भए तिनलाई डोरी वा वेतको लौरोले पिट्नू ।

**पृष्ठतस्तु शरीरस्य नोत्तमाङ्गे कथंचन ।**
**अतोऽन्यथा तु प्रहरन्प्राप्तः स्याच्चौरकिल्बिषम् ॥३००॥**

यसरी पिट्दा ढाडमा पिट्नु, टाउकामा कहिल्यै नपिट्नू । पिट्दा उत्तम अङ्गमा हिर्काउनेलाई चोरसरहको दण्ड तिराउनू ।

**एषोऽखिलेनाभिहितो दण्डपारुष्यनिर्णयः ।**
**स्तेनस्यातः प्रवक्ष्यामि विधिं दण्डविनिर्णये ॥३०१॥**

मारपिटको दण्डव्यवस्था यही नै हो, अब चोरीको दण्डविधानका बारेमा बताउँदछु ।

**परमं यत्नमातिष्ठेत्स्तेनानां निग्रहे नृपः ।**
**स्तेनानां निग्रहादस्य यशो राष्ट्रं च वर्धते ॥३०२॥**

चोरलाई समातेर दण्ड दिँदै आफ्नो राज्यमा चोरी नियन्त्रण गर्ने राजाले सक्दो प्रयाश गर्नू । चोरी नियन्त्रण गर्नाले राजा र देशको इज्जत बढ्दछ ।



**अभयस्य हि यो दाता स पूज्यः सततं नृपः ।**
**सत्रं हि वर्धते तस्य सदैवाभयदक्षिणम् ॥३०३॥**

प्रजालाई अभयदान दिने राजा लोकप्रिय मात्र हुँदैन यशस्वी भई पूजिन्छ पनि । प्रजा उसका लागि मरिमेट्न तयार हुने गर्दछन् ।

**सर्वतो धर्मषड्भागो राज्ञो भवति रक्षतः ।**
**अधर्मादपि षड्भागो भवत्यस्य ह्यरक्षतः ॥३०४॥**

प्रजालाई रक्षा गर्ने राजालाई सारा प्रजाले गर्ने धर्मको छैटौं भाग प्राप्त हुन्छ भने प्रजालाई रक्षा नगर्ने राजालाई सारा प्रजाले गर्ने पापको पनि छैटौं भाग नै प्राप्त हुन्छ ।

**यदधीते यद्यजते यद्ददाति यदर्चति ।**
**तस्य षड्भागभाग्राजा सम्यग्भवति रक्षणात् ॥३०५॥**

जे जपिन्छ, जुन यज्ञ गरिन्छ, जे दान दिइन्छ र जति पूजा गरिन्छ कर्ताले गर्ने त्यो धर्मकर्मको छैटौं भाग रक्षक हुनाले गर्दा राजाले पाउँदछ, यसमा कुनै शङ्का छैन ।

**रक्षन्धर्मेण भूतानि राजा वध्यांश्च घातयन् ।**
**यजतेऽहरहर्यज्ञैः सहस्रशतदक्षिणैः ॥३०६॥**

रक्षा गर्नुपर्नेलाई रक्षा गर्दै र मार्नुपर्नेलाई मार्दै शासन गरिरहेको राजाले रातदिन लाखौं दक्षिणाले युक्त यज्ञ स्वतः गरिरहेको हुन्छ ।

**योऽरक्षन्बलिमादत्ते करं शुल्कं च पार्थिवः ।**
**प्रतिभागं च दण्डं च स सद्यो नरकं व्रजेत् ॥३०७॥**



जो रक्षा नगरी प्रजाबाट मालपोत, कर, शुल्क र जरिवाना लिन्छ
त्यो राजा मरेपछि नरक जान्छ ।

**अरक्षितारं राजानं बलिषड्भागहारिणम् ।**
**तमाहुः सर्वलोकस्य समग्रमलहारकम् ॥३०८॥**

प्रजाजनलाई रक्षा नगर्ने तर तीबाट कर आदि लिइरहने राजा संसारका सबै पापबाट ग्रस्त हुन्छ ।

**अनपेक्षितमर्यादं नास्तिकं विप्रलुम्पकम् ।**
**अरक्षितारमत्तारं नृपं विद्यादधोगतिम् ॥३०९॥**

शास्त्रका मर्यादा छाड्ने, नास्तिक, ब्राह्मणलाई दुःख दिने र प्रजालाई
संरक्षण नगर्ने राजा नरक जान्छ ।

**अधार्मिकं त्रिभिर्न्यायैर्निगृह्णीयात्प्रयत्नतः ।**
**निरोधनेन बन्धेन विविधेन वधेन च ॥३१०॥**

अधार्मिक चोर आदिलाई प्रयत्नपूर्वक समाती तीन किसिमले : रोकेर, बाँधेर (थुनेर) र हातगोडा काटेर दण्ड दिनु पर्दछ ।

**निग्रहेण हि पापानां साधूनां संग्रहेण च ।**
**द्विजातय इवेज्याभिः पूयन्ते सततं नृपाः ॥३११॥**

पापीलाई दण्ड र सज्जनलाई संरक्षण गर्नाले राजा निरन्तर त्यसरी नै पवित्र हुन्छ जसरी द्विजहरू यज्ञ आदि गर्नाले पवित्र हुन्छन् ।

**क्षन्तव्यं प्रभुणा नित्यं क्षिपतां कार्यिणां नृणाम् ।**
**बालवृद्धातुराणां च कुर्वता हितमात्मनः ॥३१२॥**



आफ्नो दबदबा कायम राख्न खोज्ने राजाले विवश भएर काम गर्ने, बालक, वृद्ध र रोगीलाई र तिनले गर्ने सानातिना गल्तीलाई क्षमा गर्नु पर्दछ ।

**यः क्षिप्तो मर्षयत्यार्तैस्तेन स्वर्गे महीयते ।**
**यस्त्वैश्वर्यान्न क्षमते नरकं तेन गच्छति ॥३१३॥**

दुःखीले आरोप लगाउँदा उत्तेजित नभई उसको दुःख हटाउन खोज्ने क्षमाशील राजा स्वर्गमा सम्मानित हुन्छ । यस विपरीत आलोचना सुन्यो कि उसलाई दण्ड दिने राजा नरकमा पर्दछ ।

**राजा स्तेनेन गन्तव्यो मुक्तकेशेन धावता ।**
**आचक्षाणेन तत्स्तेयमेवंकर्मास्मि शाधि माम् ॥३१४॥**

क्षमादान चाहने चोरले कपाल खोली दौडँदै राजालाई गएर क्षमा गर्न, सुध्रने मौका दिन र कम दण्ड दिन अनुरोध गर्नु पर्दछ ।

**स्कन्धेनादाय मुसलं लगुडं वापि खादिरम् ।**
**शक्तिं चोभयतस्तीक्ष्णां आयसं दण्डमेव वा ॥३१५॥**

काँधमा मुसल (फलाम आदिको डोलो हतियार विशेष), खयरको लठ्ठी, दुवैतिर तिखा धार भएको भाला, वा फलामको डण्डी बोकी मलाई यसैले उचित दण्ड दिनु होस् भन्दै राजा समक्ष आत्मसमर्पण गर्न पुगेको चोरलाई...।

**शासनाद्वा विमोक्षाद्वा स्तेनः स्तेयाद्विमुच्यते ।**
**अशासित्वा तु तं राजा स्तेनस्याप्नोति किल्बिषम् ॥३१६॥**

राजाले दण्ड दिएपछि वा त्यत्तिकै क्षमा दिएर छाडि दिएपछि उ चोरीको पापबाट मुक्त हुन्छ । यस विपरीत राजाबाट दण्ड वा क्षमा नपाएको चोर पापी भइरहन्छ र उसले त्यसको फल भोग्नु पर्दछ ।

**अन्नादे भ्रूणहा मार्ष्टि पत्यौ भार्यापचारिणी ।**

**गुरौ शिष्यश्च याज्यश्च स्तेनो राजनि किल्बिषम् ॥३१७॥**

भ्रूणहत्याराको अन्न खाने पुरोहित, कुलटा पत्नीलाई छुट दिने पति, शिष्यका गलत आदतलाई वास्ता नगर्ने गुरु, यज्ञ नगर्ने जजमानसँग सम्बन्ध गाँसिरहने ऋत्विज् र चोरलाई सजायँ नदिने राजा पापी हुन्छन् ।

**राजनिर्धूतदण्डास्तु कृत्वा पापानि मानवाः ।**
**निर्मलाः स्वर्गमायान्ति सन्तः सुकृतिनो यथा ॥३१८॥**

राजाबाट पापको दण्ड भोग्ने पापी मानिस, पापबाट छुटी मृत्युपछि स्वर्ग जान योग्य हुन्छ ।

**यस्तु रज्जुं घटं कूपाद्धरेद्भिन्द्याच्च यः प्रपाम् ।**
**स दण्डं प्राप्नुयान्माषं तच्च तस्मिन्समाहरेत् ॥३१९॥**

इनारमा पानी झिक्न राखिएको डोरी वा बाल्टिन आदि भाँडा चोर्ने र मानिस वा पशुपंक्षीले पानी पिउने पौशाला भत्काउने व्यक्तिलाई ती कुरा जस्ताको तस्तै पार्न लगाई एक माषा दण्ड तिराउनु ।

**धान्यं दशभ्यः कुम्भेभ्यो हरतोऽभ्यधिकं वधः ।**
**शेषेऽप्येकादशगुणं दाप्यस्तस्य च तद्धनम् ॥३२०॥**

दश कुम्भ (दुई द्रोण बराबर एक कुम्भ) धान चोर्नेलाई एघार कुम्भ धान फिर्ता गर्न लगाउनू ।

**तथा धरिममेयानां शतादभ्यधिके वधः ।**
**सुवर्णरजतादीनां उत्तमानां च वाससाम् ॥३२१॥**

सानो तराजुमा जोखिने सुन, चाँदी आदि जस्ता उत्तम वस्तु र वस्त्र चोर्नेलाई सय गुना बढी दण्ड तिराउनू ।



**पञ्चाशतस्त्वभ्यधिके हस्तच्छेदनमिष्यते ।**
**शेषे त्वेकादशगुणं मूल्याद्दण्डं प्रकल्पयेत् ॥३२२॥**

पचास पलभन्दा बढी मूल्यवान् वस्तु चोर्ने चोरका हात काट्नु पर्दछ । यसभन्दा कम तौलका यस्ता मूल्यवान् वस्तु चोर्ने चोरलाई सामानको मोलको एघार गुना दण्ड तिराउनु पर्दछ ।

**पुरुषाणां कुलीनानां नारीणां च विशेषतः ।**
**मुख्यानां चैव रत्नानां हरणे वधमर्हति ॥३२३॥**

उच्च कुलका पुरुष, अझ विशेष गरी स्त्रीका बहुमूल्य रत्न चोर्ने चोरलाई मृत्युदण्ड दिनु पर्दछ ।

**महापशूनां हरणे शस्त्राणामौषधस्य च ।**
**कालमासाद्य कार्यं च दण्डं राजा प्रकल्पयेत् ॥३२४॥**

ठूलठूला जनावर, हतियार र औषधी चोर्नेलाई समय, परिस्थिति र महत्व हेरी राजाले उचित दण्ड दिनू ।
(कुनै कुनै प्रतिमा शस्त्रका स्थानमा शास्त्र उल्लेख भएको पाइन्छ) ।

**गोषु ब्राह्मणसंस्थासु छुरिकायाश्च भेदने ।**
**पशूनां हरणे चैव सद्यः कार्योऽर्धपादिकः ॥३२५॥**

ब्राह्मणका गाईवस्तु चोर्ने, भारी बोकाउन वा जोत्न गाईवस्तुको नाथ्री छेड्ने (वा सुमर्ने) र गाईवस्तु हरण गर्नेका तुरुन्त गोडा काटि दिनू ।

**सूत्रकार्पासकिण्वानां गोमयस्य गुडस्य च ।**
**दध्नः क्षीरस्य तक्रस्य पानीयस्य तृणस्य च ॥३२६॥**

धागो (वा डोरी), कपास, मर्चा, गोबर, दही, दूध, तक्र, पानी, घाँस,...।



**वेणुवैदलभाण्डानां लवणानां तथैव च ।**
**मृण्मयानां च हरणे मृदो भस्मन एव च ॥३२७॥**

बाँस, बाँसका सामान, नुन तथा माटाका भाँडाकुँडा, माटो, खरानी चोरे,...।

**मत्स्यानां पक्षिणां चैव तैलस्य च घृतस्य च ।**
**मांसस्य मधुनश्चैव यच्चान्यत्पशुसंभवम् ॥३२८॥**

माछा, चरा, तेल, घिउ, मासु, मह र अन्य पशुजन्य वस्तु,..।

**अन्येषां चैवमादीनां मद्यानामोदनस्य च ।**
**पक्वान्नानां च सर्वेषां तन्मुल्याद्द्विगुणो दमः ॥३२९॥**

अन्य खाने कुरा, भात, सबै थरीका पकाइएका अन्न आदि चोर्नेलाई चोरिएको

वस्तुको मूल्यको दोबर दण्ड तिराउनू ।

**पुष्पेषु हरिते धान्ये गुल्मवल्लीनगेषु च ।**
**अन्येष्वपरिपूतेषु दण्डः स्यात्पञ्चकृष्णलः ॥३३०॥**

फूल, हरियो धान, झ्याँगिने लहरा, लहरा, रुख र भुसयुक्त (नकुटिएका) अनाज
चोर्नेलाई पाँच कृष्णल दण्ड तिराउनू ।

**परिपूतेषु धान्येषु शाकमूलफलेषु च ।**
**निरन्वये शतं दण्डः सान्वयेऽर्धशतं दमः ॥३३१॥**

केलाइएका अनाज, सागपात, कन्दमूल र फलफूल चोर्नेलाई सहयोगी नलिई (एक्लै) चोरे सय
पण र सहयोगी लिएर चोरे पचास पण दण्ड तिराउनू ।
(कसै कसैले अन्वयको अर्थ वंश भनी लगाएको पाइन्छ) ।



**स्यात्साहसं त्वन्वयवत्प्रसभं कर्म यत्कृतम् ।**
**निरन्वयं भवेत्स्तेयं हृत्वापव्ययते च यत् ॥३३२॥**

बलपूर्वक खोस्नु, अर्काको वस्तुमाथि उसको अनुमति बिना अधिकार जमाउनु र कुनै कुरा लिएर
फिर्ता दिन नखोज्नु पनि चोरी गर्नु सरह हो, (दण्डनीय हुन्छ) ।

**यस्त्वेतान्युपक्लृतानि द्रव्याणि स्तेनयेन्नरः ।**
**तं आद्यं दण्डयेद्राजा यश्चाग्निं चोरयेद्गृहात् ॥३३३॥**

यस्ता (श्लोक ३३२ मा बताइएका) काम गर्ने र कसैका घरबाट आगो चोर्ने चोरलाई
राजाले प्रथम साहसको दण्ड दिनू ।

**येन येन यथाङ्गेन स्तेनो नृषु विचेष्टते ।**
**तत्तदेव हरेत्तस्य प्रत्यादेशाय पार्थिवः ॥३३४॥**

चोरले चोरी गर्न जुन जुन अङ्गको प्रयोग गर्दछ भविष्यमा फेरी चोर्न नसकोस् भनी राजाले उसका ती ती अङ्ग काट्नु पर्दछ ।

**पिताचार्यः सुहृन्माता भार्या पुत्रः पुरोहितः ।**
**नादण्ड्यो नाम राज्ञोऽस्ति यः स्वधर्मे न तिष्ठति ॥३३५॥**

पिता, आचार्य, मित्र, माता, पत्नी, पुत्र र पुरोहित अदण्डनीय हुँदाहुँदै पनि आआफ्ना धर्मबाट भ्रष्ट भएका छन् भने ती राजाबाट दण्ड पाउन योग्य हुन्छन् ।

**कार्षापणं भवेद्दण्ड्यो यत्रान्यः प्राकृतो जनः ।**
**तत्र राजा भवेद्दण्ड्यः सहस्रमिति धारणा ॥३३६॥**

कुनै अपराधमा कुनै सामान्य व्यक्तिलाई कार्षापण दण्ड दिइन्थ्यो भने त्यही अपराधमा यी (श्लोक ३३५ मा उल्लेखित) व्यक्तिलाई हजार पण दण्ड तिराउनु पर्दछ । (कसै कसैले यसरी लिइएको दण्ड राजकोषमा नराख्नू पनि भनेका छन्) ।



**अष्टापाद्यं तु शूद्रस्य स्तेये भवति किल्बिषम् ।**
**षोडशैव तु वैश्यस्य द्वात्रिंशत्क्षत्रियस्य च ॥३३७॥**

चोरी गर्दा शूद्रलाई आठ गुना, वैश्यलाई सोह्र गुना र क्षत्रियलाई बत्तीस गुना पाप लाग्दछ ।

**ब्राह्मणस्य चतुःषष्टिः पूर्णं वापि शतं भवेत् ।**
**द्विगुणा वा चतुःषष्टिस्तद्दोषगुणविद्धि सः ॥३३८॥**

ब्राह्मणलाई भने चौसठ्ठी गुना, सय गुना वा एक सय अठ्ठाईस गुना पाप लाग्दछ । अथवा कर्मदोष हेरी अझ पापको मात्रा बढ्दछ । (यो काम गलत हो भन्ने ज्ञान हुनेले कुनै गलत काम गरे उ त्यही गल्ती गर्ने अरु सामान्य व्यक्तिभन्दा बढी दण्डनीय हुन्छ) ।

**वानस्पत्यं मूलफलं दार्वग्न्यर्थं तथैव च ।**
**तृणं च गोभ्यो ग्रासार्थं अस्तेयं मनुरब्रवीत् ॥३३९॥**

कतैबाट वनस्पति, कन्दमूल, फलफूल, बाल्ने दाउरा र गाईका लागि घाँस लिनुलाई चोरी मानिन्न भनी मनुले बताएका छन् ।

**योऽदत्तादायिनो हस्ताल्लिप्सेत ब्राह्मणो धनम् ।**
**याजनाध्यापनेनापि यथा स्तेनस्तथैव सः ॥३४०॥**

जुन ब्राह्मण चोरसँग धन लिएर उसका लागि यज्ञ गराउन र उसलाई वेद पढाउन खोज्दछ त्यो ब्राह्मण पनि दुष्ट र चोर समान हुन्छ भनी जान्नू ।
(कुनै पनि अपराध गर्ने व्यक्तिले पहिले दण्ड भोग्नु पर्दछ, त्यसपछि प्रायश्चित गर्नु पर्दछ अनि मात्र उ शुद्ध हुन्छ । त्यसपछि भने उसलाई कसैले कुनै अपमानजनक व्यवहार गर्न पाइन्न) ।

**द्विजोऽध्वगः क्षीणवृत्तिर्द्वाविक्षू द्वे च मूलके ।**

**आददानः परक्षेत्रान्न दण्डं दातुमर्हति ॥३४१॥**

कमजोर आर्थिक अवस्था भएको ब्राह्मणले बाटोमा हिँड्दा वरपरका अर्काका खेतबारीबाट नसोधी दुई वटा उखु, दुई वटा मूला (आदि) लिन्छ भने उसलाई दण्डित गर्नु हुँदैन ।

**असंधितानां संदाता संधितानां च मोक्षकः ।**
**दासाश्वरथहर्ता च प्राप्तः स्याच्चोरकिल्बिषम् ॥३४२॥**

अर्काका खुला छाडिएका पशुलाई बाँध्नु र अर्काले बाँधेका जनावरलाई फुकाउनु तथा अरुका दास, घोडा, रथ चोर्नु जस्ता कार्य चोरी सरह दण्डनीय हुन्छ ।

**अनेन विधिना राजा कुर्वाणः स्तेननिग्रहम् ।**
**यशोऽस्मिन्प्राप्नुयाल्लोके प्रेत्य चानुत्तमं सुखम् ॥३४३॥**

यस किसिमले दण्ड विधान कार्यान्वयन गर्न सफल हुने राजा यस लोकमा प्रख्यात भई परलोकमा उत्तम सुख भोग गर्न पाउँदछ ।

**ऐन्द्रं स्थानमभिप्रेप्सुर्यशश्चाक्षयमव्ययम् ।**
**नोपेक्षेत क्षणमपि राजा साहसिकं नरम् ॥३४४॥**

यो लोकमा परम सुख र परलोकमा इन्द्रको आसन चाहने राजाले दुस्साहस गर्ने मानिसलाई एक छिन पनि नसहनू ।

**वाग्दुष्टात्तस्कराच्चैव दण्डेनैव च हिंसतः ।**
**साहसस्य नरः कर्ता विज्ञेयः पापकृत्तमः ॥३४५॥**

अर्कालाई मुख छाड्ने, लुटपाट गर्ने, मारपिट गर्ने र बलजफ्ती गर्ने मानिस (अरुभन्दा) बढी पापी हुन्छन् ।



**साहसे वर्तमानं तु यो मर्षयति पार्थिवः ।**
**स विनाशं व्रजत्याशु विद्वेषं चाधिगच्छति ॥३४६॥**

बलजफ्ती गर्ने कार्यलाई बेवास्ता गर्ने वा माफी दिने राजा चाँडै नासिन्छ । लोकले उसलाई वास्ता गर्न छाड्दछन् ।

**न मित्रकारणाद्राजा विपुलाद्वा धनागमात् ।**
**समुत्सृजेत्साहसिकान्सर्वभूतभयावहान् ॥३४७॥**

मित्रता, धेरै धन आदि कारणले बलजफ्ती गर्नेलाई समातेर त्यक्तिकै छाड्ने वा नसमाउने नगर्नू । यसो गरिए पूरै राज्य असुरक्षित हुन पुग्दछ ।

**शस्त्रं द्विजातिभिर्ग्राह्यं धर्मो यत्रोपरुध्यते ।**
**द्विजातीनां च वर्णानां विप्लवे कालकारिते ॥३४८॥**

धर्ममा अवरोध आए वा धर्म नासिन लागे क्षत्रियले मात्र होइन
द्विज सबैले हतियार उठाउनु पर्दछ ।

**आत्मनश्च परित्राणे दक्षिणानां च संगरे ।**
**स्त्रीविप्राभ्युपपत्तौ च घ्नन्धर्मेण न दुष्यति ॥३४९॥**

आफ्नो सुरक्षार्थ, ब्राह्मणको धन सुरक्षा गर्न र स्त्री वा ब्राह्मणलाई जोगाउन द्विजले हतियार उठाएर कसैको मृत्यु भए तिनलाई कुनै पाप लाग्दैन ।

**गुरुं वा बालवृद्धौ वा ब्राह्मणं वा बहुश्रुतम् ।**
**आततायिनमायान्तं हन्यादेवाविचारयन् ॥३५०॥**

गुरु, बालक, वृद्ध र वेदज्ञ ब्राह्मणलाई आक्रमण गर्न आउने
आततायीलाई केही नसोची मारी दिनू ।



**नाततायिवधे दोषो हन्तुर्भवति कश्चन ।**
**प्रकाशं वाऽप्रकाशं वा मन्युस्तं मन्युमृच्छति ॥३५१॥**

लुकेर वा हाकाहाकी आक्रमण गर्न आउने आततायीलाई मार्ने व्यक्तिलाई कुनै पाप लाग्दैन । उसको अपराध क्षम्य हुन्छ ।

**परदाराभिमर्शेषु प्रवृत्तान्नॄन्महीपतिः ।**
**उद्वेजनकरैर्दण्डैश्छिन्नयित्वा प्रवासयेत् ॥३५२॥**

परस्त्री गमन गर्दा आनन्द मान्ने पुरुषलाई जननेन्द्रिय काट्ने जस्ता मन नै सिरिङ्ग हुने खालका दण्ड दिई देशनिकाला गर्नू ।

**तत्समुत्थो हि लोकस्य जायते वर्णसंकरः ।**
**येन मूलहरोऽधर्मः सर्वनाशाय कल्पते ॥३५३॥**

परस्त्री गमनबाट सन्तान जन्मने प्रचलन बढे त्यसले वर्णसंकरता बढ्दछ ।
वर्णसंकरताले धर्मको जरो र हाँगाबिँगा सबै नै नष्ट पार्दछ ।
यो अधर्म बढ्दै गए अन्तमा सबै थोकको विनाश हुन्छ ।

**परस्य पत्न्या पुरुषः संभाषां योजयन् रहः ।**
**पूर्वमाक्षारितो दोषैः प्राप्नुयात्पूर्वसाहसम् ॥३५४॥**

परस्त्रीसँग एकान्तमा भेट्ने र कुराकानी गर्ने पहिले देखि नै बदनाम
व्यक्तिलाई राजाले प्रथम साहसको दण्ड दिनू ।

**यस्त्वनाक्षारितः पूर्मभिभाषते कारणात् ।**
**न दोषं प्राप्नुयात्किञ्चिन्न हि तस्य व्यतिक्रमः ॥३५५॥**

कुनै विशेष प्रयोजनले यसरी कुराकानी गर्ने पहिले बदनाम नभएको व
यक्ति दोषी र दण्डनीय हुँदैन ।



**परस्त्रियं योऽभिवदेत्तीर्थेऽरण्ये वनेऽपि वा ।**
**नदीनां वापि संभेदे स संग्रहणमाप्नुयात् ॥३५६॥**

तीर्थ, निर्जन स्थल, वन, दोभान आदिमा परस्त्रीसँग एकान्तमा कुराकानी गर्ने पुरुषलाई यौन
दुर्व्यवहार गरेको (वा परस्त्री गमन गरेको, सङ्ग्रहण) मानिन्छ ।

**उपचारक्रिया केलिः स्पर्शो भूषणवाससाम् ।**
**सह खट्वासनं चैव सर्वं संग्रहणं स्मृतम् ॥३५७॥**

उपहार आदि लेनदेन गरी फकाउने, हाँसख्याल गर्ने, एक अर्काका वस्त्र-गहना आदि छुने र सँगै
खाटमा बस्ने वा सुत्नेलाई सङ्ग्रहण मानिन्छ ।

**स्त्रियं स्पृशेददेशे यः स्पृष्टो वा मर्षयेत्तया ।**
**परस्परस्यानुमते सर्वं संग्रहणं स्मृतम् ॥३५८॥**

छुन नहुने उत्तेजक अङ्गमा छुने, उत्तेजक अङ्गमा छुँदा आनन्द मान्ने जस्ता कुरा सहमती असहमती जेमा भएपनि सङ्ग्रहण मानिन्छ ।

**अबाह्मणः संग्रहणे प्राणान्तं दण्डमर्हति ।**
**चतुर्णामपि वर्णानां दारा रक्ष्यतमाः सदा ॥३५९॥**

ब्राह्मण बाहेक जसले सङ्ग्रहण गरेपनि ती मृत्युदण्डका लायक हुन्छन् ।
चारै वर्णका स्त्रीहरु सदा संरक्षणीय हुन्छन् ।

**भिक्षुका बन्दिनश्चैव दीक्षिताः कारवस्तथा ।**
**संभाषणं सह स्त्रीभिः कुर्युरप्रतिवारिताः ॥३६०॥**



भिक्षुक, कैदी, स्नातक, भान्छे आदिले परस्त्रीसँग निषेध गरिएको अवस्थामा बाहेक कुराकानी गर्न सक्दछन् ।

**न संभाषां परस्त्रीभिः प्रतिषिद्धः समाचरेत् ।**
**निषिद्धो भाषमाणस्तु सुवर्णं दण्डमर्हति ॥३६१॥**

कुराकानी गर्न प्रतिबन्ध लगाइएको अवस्थामा परस्त्रीसँग कुराकानी नगर्नू, यो नियम नमान्नेलाई एक निष्क सुवर्ण दण्ड तिराउनू ।

**नैष चारणदारेषु विधिर्नात्मोपजीविषु ।**
**सज्जयन्ति हि ते नारीर्निगूढाश्चारयन्ति च ॥३६२॥**

नाचगान गर्ने, अभिनय गर्ने र स्तुतिगान गर्ने पेसा भएका व्यक्तिले परस्त्रीसँग गर्ने घुलमेललाई निषेध गर्न हुँदैन किन कि ती त आफ्नै स्त्रीलाई समेत परपुरुषसँग

घुलमेल हुन उक्साइरहेका हुन्छन् ।

किञ्चिदेव तु दाप्यः स्यात्संभाषां ताभिराचरन् ।
प्रैष्यासु चैकभक्तासु रहः प्रव्रजितासु च ॥३६३॥

परपुरुषको चाहना राख्ने स्त्री र भिक्षुणीसँग सल्किने पुरुषलाई
केही न केही दण्ड भने दिनै पर्दछ ।

योऽकामां दूषयेत्कन्यां स सद्यो वधमर्हति ।
सकामां दूषयंस्तुल्यो न वधं प्राप्नुयान्नरः ॥३६४॥

इच्छा विपरित कन्यालाई जबरजस्ती करणी गर्नेलाई मृत्युदण्ड दिनू । कन्याको सहमतीमा सहवास भएको हो भने पनि मृत्युदण्ड बाहेकका अरु कुनै कठोर दण्ड दिनू ।

कन्यां भजन्तीमुत्कृष्टं न किञ्चिदपि दापयेत् ।

जघन्यं सेवमानां तु संयतां वासयेद्गृहे ॥३६५॥

आफूभन्दा उच्च वर्णको पुरुषसँग ससंर्ग गर्ने कन्यालाई कुनै दण्ड नदिनू तर आफूभन्दा तल्लो वर्णको पुरुषसँग संसर्ग गर्ने कन्यालाई भने सम्झाई बुझाई घरमै राख्ने गर्नू ।

उत्तमां सेवमानस्तु जघन्यो वधमर्हति ।
शुल्कं दद्यात्सेवमानः समामिच्छेत्पिता यदि ॥३६६॥

उत्तम वर्णकी कन्यालाई दूषित बनाउने पुरुष मृत्युदण्ड दिन लायक हुन्छ । समान वर्णकी कन्या दूषित गर्ने पुरुषले कन्याका पिताको सहमतिमा निश्चित दण्ड तिरी उक्त कन्यासँग विवाह गर्न सक्दछ ।

अभिषह्य तु यः कन्यां कुर्याद्दर्पेण मानवः ।
तस्याशु कर्त्ये अङ्गुल्यौ दण्डं चार्हति षट्शतम् ॥३६७॥

यदि घमण्डले चूर भएको कुनै उत्तम वर्णको पुरुष कन्याको सहमति बिना बलात्कारमा दोषी भेटिन्छ भने उसका हातका दुईवटा औंला तुरुन्त काट्नु पर्दछ र उसलाई छ सय पण दण्ड तिराउनु पर्दछ ।

**सकामां दूषयंस्तुल्यो नाङ्गुलिच्छेमाप्नुयात् ।**
**द्विशतं तु दमं दाप्यः प्रसङ्गविनिवृत्तये ॥३६८॥**

कन्याको सहमतिमा यो कार्य भएको अवस्थामा दुई औंला नकाटे पनि उसलाई दुई सय पण दण्ड भने तिराउनु नै पर्दछ ।

**कन्यैव कन्यां या कुर्यात्तस्याः स्याद्द्विशतो दमः ।**
**शुल्कं च द्विगुणं दद्याच्छिफाश्चैवाप्नुयाद्दश ॥३६९॥**

कन्याबाट कन्यालाई नै यौन दुर्व्यवहार भई उसको गुप्ताङ्ग क्षत भए यौन दुर्व्यवहार गर्ने कन्यालाई उपचारको सम्पूर्ण खर्च व्यहोर्न लगाउनू । यदि यही कारणले त्यो कन्याको विवाह नभए पीडितको जीवनभरको दायित्व उनैलाई व्यहोर्न लगाउनू ।



**या तु कन्यां प्रकुर्यात्स्त्री सा सद्यो मौण्ड्यमर्हति ।**
**अङ्गुल्योरेव वा छेदं खरेणोद्वहनं तथा ॥३७०॥**

कन्याको गुप्ताङ्गमा औंला छिराएर क्षतविक्षत बनाउने कन्याका औंला काटी, कपाल मुडी गधा माथि चढाएर शहर घुमाउनु पर्दछ ।

**भर्तारं लङ्घयेद्या तु स्त्री ज्ञातिगुणदर्पिता ।**
**तां श्वभिः खादयेद्राजा संस्थाने बहुसंस्थिते ॥३७१॥**

आफ्नो जाति, गुण र समृद्धिको धाकमा पतिको अवहेलना गर्दै परपुरुषसँग सम्बन्ध गाँस्ने स्त्रीलाई सबैका अगाडि लेराएर राजाले कुकुरलाई टोकाउन लगाउनु पर्दछ ।

**पुमांसं दाहयेत्पापं शयने तप्त आयसे ।**
**अभ्यादध्युश्च काष्ठानि तत्र दह्येत पापकृत् ॥३७२॥**

पतिको अवज्ञा गर्ने स्त्रीसँग सम्पर्क गर्ने परपुरुषलाई तताइएको फलामको रातो खाटमा सुत्न लगाउनु पर्दछ र अरु मानिसले त्यो धपधपाउँदो खाटमा उ नमर्दासम्म दाउरा थप्दै जानु पर्दछ ।

**संवत्सराभिशस्तस्य दुष्टस्य द्विगुणो दमः ।**
**व्रात्यया सह संवासे चाण्डाल्या तावदेव तु ॥३७३॥**

एक वर्ष अघिदेखि यसरी नाजायज सम्बन्ध गाँसिरहेको पुरुषलाई उल्लेखित दण्डको दोब्बर दण्ड दिनु पर्दछ । कुनै पतिता स्त्रीसँग नाजायज सम्बन्ध गाँस्ने पुरुषलाई पनि यति नै दण्ड दिनु पर्दछ ।

**शूद्रो गुप्तमगुप्तं वा द्वैजातं वर्णमावसन् ।**
**अगुप्तमङ्गसर्वस्वैर्गुप्तं सर्वेण हीयते ॥३७४॥**



असंरक्षित द्विजका स्त्रीसँग नाजायज सम्बन्ध गाँस्ने शूद्रको अङ्गभङ्ग गर्नू । संरक्षित स्त्रीका साथ यसो गरे सर्वस्व सहित मृत्युदण्ड दिनू ।

**वैश्यः सर्वस्वदण्डः स्यात्संवत्सरनिरोधतः ।**
**सहस्रं क्षत्रियो दण्ड्यो मौण्ड्यं मूत्रेण चार्हति ॥३७५॥**

एक वर्षसम्म अर्काकी स्त्री आफ्ना घरमा लेराएर राख्ने वैश्यलाई सर्वस्व सहित मृत्युदण्ड दिनू । क्षत्रियले यसो गरे हजार पण तिराउनू । शूद्रले यसो गरे मुतले भिजाई शिर मुण्डन गराउनू ।

**ब्राह्मणीं यद्यगुप्तां तु गच्छेतां वैश्यपार्थिवौ ।**
**वैश्यं पञ्चशतं कुर्यात्क्षत्रियं तु सहस्रिणम् ॥३७६॥**

असंरक्षित ब्राह्मणीसँग नाजायज सम्पर्क राख्ने वैश्यलाई पाँच सय पण र

क्षत्रियलाई एक हजार पण दण्ड तिराउनू ।

**उभावपि तु तावेव ब्राह्मण्या गुप्तया सह ।**
**विप्लुतौ शूद्रवद्दण्ड्यौ दग्धव्यौ वा कटाग्निना ॥३७७॥**

संरक्षित ब्राह्मणीसँग नाजायज सम्बन्ध गाँस्ने वैश्य वा शूद्रलाई या त मुतले भिजाएर कपाल मुण्डन गराउनु या गुन्द्रीमा बेरेर आगोमा हाली दिनू ।

**सहस्रं ब्राह्मणो दण्ड्यो गुप्तां विप्रां बलाद्व्रजन् ।**
**शतानि पञ्च दण्ड्यः स्यादिच्छन्त्या सह संगतः ॥३७८॥**

संरक्षित ब्राह्मणीलाई बलात्कार गर्ने ब्राह्मणलाई हजार पण दण्ड तिराउनू ।
सहमतीमा सम्पर्क गरिएको भए उसलाई पाँच सय पण दण्ड तिराउनू ।

**मौण्ड्यं प्राणान्तिकं दण्डो ब्राह्मणस्य विधीयते ।**

**इतरेषां तु वर्णानां दण्डः प्राणान्तिको भवेत् ॥३७९॥**

अरु वर्णकालाई मार्नु नै मृत्युदण्ड हुन्छ भने ब्राह्मणलाई शिर मुड्नु भनेको नै मृत्युदण्ड हुन्छ ।

**न जातु ब्राह्मणं हन्यात्सर्वपापेष्वपि स्थितम् ।**
**राष्ट्रादेनं बहिः कुर्यात्समग्रधनं अक्षतम् ॥३८०॥**

जघन्य र असंख्य पाप गरेपनि ब्राह्मणलाई नमार्नू सम्पत्ति नलिई देश निकाला गर्नू ।

**न ब्राह्मणवधाद्भूयानधर्मो विद्यते भुवि ।**
**तस्मादस्य वधं राजा मनसापि न चिन्तयेत् ॥३८१॥**

ब्रह्महत्या जस्तो ठूलो पृथ्वीमा अरु कुनै पाप छैन, यसैले ब्रह्महत्याका बारेमा राजाले सोच्दा पनि नसोच्नू ।

**वैश्यश्चेत्क्षत्रियां गुप्तां वैश्यां वा क्षत्रियो व्रजेत् ।**
**यो ब्राह्मण्यां अगुप्तायां तावुभौ दण्डमर्हतः ॥३८२॥**

संरक्षित वैश्यासँग सम्पर्क गर्ने क्षत्रियलाई वा संरक्षित क्षत्रिणीसँग सम्पर्क गर्ने वैश्यलाई असंरक्षित ब्राह्मणीलाई सम्पर्क गर्नेलाई तिराउने जति नै दण्ड तिराउनू ।

**सहस्रं ब्राह्मणो दण्डं दाप्यो गुप्ते तु ते व्रजन् ।**
**शूद्रायां क्षत्रियविशोः साहस्रो वै भवेद्दमः ॥३८३॥**

संरक्षित क्षत्रिया वा वैश्यासँग सम्पर्क गर्ने ब्राह्मणलाई तथा संरक्षित शूद्रालाई गमन गर्ने क्षत्रिय र वैश्यलाई एक हजार पण दण्ड तिराउनू ।

**क्षत्रियायामगुप्तायां वैश्ये पञ्चशतं दमः ।**
**मूत्रेण मौण्ड्यं इच्छेत्तु क्षत्रियो दण्डमेव वा ॥३८४॥**



असंरक्षित क्षत्रिणीलाई गमन गर्ने क्षत्रिय वा वैश्यलाई पाँच सय पण दण्ड तिराउनू र मूत्रले कपाल मुण्डन गराउनू ।

**अगुप्ते क्षत्रियावैश्ये शूद्रां वा ब्राह्मणो व्रजन् ।**
**शतानि पञ्च दण्ड्यः स्यात्सहस्रं त्वन्त्यजस्त्रियम् ॥३८५॥**

असंरिक्षत क्षत्रिणी, वैश्या र शूद्रा गमन गर्ने ब्राह्मणलाई पाँच सय पण दण्ड तिराउनू । अन्त्यजालाई गमन गर्ने ब्राह्मणलाई एक हजार पण दण्ड तिराउनू ।

**यस्यस्तेनः पुरे नास्ति नान्यस्त्रीगो न दुष्टवाक् ।**
**न साहसिक दण्डघ्नो स राजा शक्रलोकभाक् ॥३८६॥**

चोरी, बलात्कार, गालीगलौज, मारपिट र बलजफ्ती नहुने राज्यका राजा त पृथ्वीमा इन्द्रसमान हुन्छन् । यस्ता राजा नै इन्द्रपदका हकदार हुन्छन् ।

**एतेषां निग्रहो राज्ञः पञ्चानां विषये स्वके ।**
**सांराज्यकृत्सजात्येषु लोके चैव यशस्करः ॥३८७॥**

राजाले चोर, डाँका, परस्त्रीगामी, गालीगलौच गर्ने, हत्या गर्ने गरी पाँच थरीका अपराधीलाई कठोरतापूर्वक नियन्त्रण गर्नू । यिनलाई निरुत्साहित पार्नू । यसो गर्नाले राज्य विस्तार गर्न र यश कमाउन राजा सफल हुन्छ ।

**ऋत्विजं यस्त्यजेद्याज्यो याज्यं चर्त्विक्त्यजेद्यदि ।**
**शक्तं कर्मण्यदुष्टं च तयोर्दण्डः शतं शतम् ॥३८८॥**

योग्य ऋत्विज्लाई त्याग्ने जजमान र योग्य जजमानलाई त्याग्ने ऋत्विज्
दुवैलाई सय सय पण दण्ड तिराउनू ।

**न माता न पिता न स्त्री न पुत्रस्त्यागमर्हति ।**
**त्यजन्नपतितानेतान्राज्ञा दण्ड्यः शतानि षट् ॥३८९॥**



निर्दोष माता, पिता, स्त्री वा पुत्रलाई त्याग गर्ने व्यक्तिलाई छ सय पण दण्ड तिराउनू ।

**आश्रमेषु द्विजातीनां कार्ये विवदतां मिथः ।**
**न विब्रूयान्नृपो धर्मं चिकीर्षन्हितमात्मनः ॥३९०॥**

वानप्रस्थमा रहेका द्विजका बीचमा विवाद भई जाहेरी परेमा आफ्नो भलो चाहने
राजाले हस्तक्षेप गर्नु, जाहेरी नपरे मतलव नगर्नू ।

**यथार्हमेतानभ्यर्च्य ब्राह्मणैः सह पार्थिवः ।**
**सान्त्वेन प्रशमय्यादौ स्वधर्मं प्रतिपादयेत् ॥३९१॥**

जसलाई जसरी सत्कार गर्नुपर्ने हो त्यसलाई त्यसरी नै पहिले सत्कार गरी
उसको रिस मरेपछि मात्र ब्राह्मणलाई उसको धर्मका बारेमा सम्झाउनू ।

**प्रतिवेश्यानुवेश्यौ च कल्याणे विंशतिद्विजे ।**
**अर्हावभोजयन्विप्रो दण्डमर्हति माषकम् ॥३९२॥**

राजाले विशेष अवसरमा बीस जना ब्राह्मण बोलाउँदा नआउने ब्राह्मणलाई र घरमा आइरहने ब्राह्मण आउँदा घरमा नबस्ने जजमानलाई एक रजत माषा दण्ड तिराउनू ।

**श्रोत्रियः श्रोत्रियं साधुं भूतिकृत्येष्वभोजयन् ।**
**तदन्नं द्विगुणं दाप्यो हिरण्यं चैव माषकम् ॥३९३॥**

कुनै श्रोत्रिय ब्राह्मण कुनै खुशियालीका अवसरमा आफू समानका श्रोत्रियलाई भोज खुवाउँदैन भने उसलाई खुवाउन योग्य दोब्बर अन्न दिन लगाउनू र एक स्वर्ण माषा दण्ड तिराउनू ।

**अन्धो जडः पीठसर्पी सप्तत्या स्थविरश्च यः ।**
**श्रोत्रियेषूपकुर्वंश्च न दाप्याः केनचित्करम् ॥३९४॥**



अन्धा, पक्षाघात भएका, लङ्गडा, सत्तरी वर्षभन्दा माथिका र वेदपाठी ब्राह्मणका सेवामा समर्पित भएका व्यक्तिसँग राजाले कर नलिनू ।
(तिनको आर्थिक बोझ कम गर्न तिनैलाई कर उठाउने जिम्मा दिनू) ।

**श्रोत्रियं व्याधितार्तौ च बालवृद्धावकिञ्चनम् ।**
**महाकुलीनमार्यं च राजा संपूजयेत्सदा ॥३९५॥**

श्रोत्रिय, रोगी, दुःखी, बालक, वृद्ध, गरिब र अति उच्च खानदानका व्यक्तिलाई राजाले सधैं यथायोग्य आदर गर्नू, अपमान नगर्नू ।

**शाल्मलीफलके श्लक्ष्णे नेनिज्यान्नेजकः शनैः ।**
**न च वासांसि वासोभिर्निर्हरेन्न च वासयेत् ॥३९६॥**

धोबीले सिमलको फलेकमा लुगा पछार्नू । ग्राहकका लुगा नफाटुन्, नसाटियुन् र धेरै दिन आफूले राख्न पनि नपरोस् भनेर ध्यान दिनू ।

**तन्तुवायो दशपलं दद्यादेकपलाधिकम् ।**
**अतोऽन्यथा वर्तमानो दाप्यो द्वादशकं दमम् ॥३९७॥**

दश पल धागो लगेर कपडा बुनी फर्काउँदा एघार पल हुनुपर्दछ (माडा आदिका कारण) । यस्तो नभए राजाले कपडा बुन्नेलाई बाह्र पण दण्ड तिराउनू ।

**शुल्कस्थानेषु कुशलाः सर्वपण्यविचक्षणाः ।**
**कुर्युरर्घं यथापण्यं ततो विंशं नृपो हरेत् ॥३९८॥**

राजाले कर उठाउन र धनको लेनदेनको कार्यका विज्ञलाई नियुक्त गर्नू र उसलाई हुने नियमानुसारको फाइदाको बीस प्रतिशत राजाले लिनू ।



**राज्ञः प्रख्यातभाण्डानि प्रतिषिद्धानि यानि च ।**
**तानि निर्हरतो लोभात्सर्वहारं हरेन्नृपः ॥३९९॥**

निषेषित कुरा बेच्ने वा एकठाउँमा निषेध गरिएको कुरा अर्कोतिर लगेर बेच्ने ब्यापारीको राजाले सबै सामान जफत गर्नू ।
(कसैले सर्वस्व हरण गर्नू भनेर पनि अर्थ लगाएका छन्) ।

**शुल्कस्थानं परिहरन्नकाले क्रयविक्रयी ।**
**मिथ्यावादी च संख्याने दाप्योऽष्टगुणमत्ययम् ॥४००॥**

भन्सार वा कर छलेर लेराइएका सामान किनबेच गर्ने, मोलमा तलमाथि गर्ने र तौलमा तलमाथि गर्ने ब्यापारीबाट उसले यि कार्य गरी जोगाएको धनको छ गुना जरिवाना तिराउनू ।
असत्य बोलेर कमाएको धनमा आठ गुना दण्ड तिराउनू ।

**आगमं निर्गमं स्थानं तथा वृद्धिक्षयावुभौ ।**
**विचार्य सर्वपण्यानां कारयेत्क्रयविक्रयौ ॥४०१॥**

सामान लिन आउँदाजाँदा हुने खर्च एवं ढुवानी खर्च, भण्डारण खर्च तथा भाउ तलमाथि हुँदाको असर आदि समेत बिचार गरी सामानको भाउ तोक्नु पर्दछ ।

**पञ्चरात्रे पञ्चरात्रे पक्षे पक्षेऽथ वा गते ।**
**कुर्वीत चैषां प्रत्यक्षं अर्घसंस्थापनं नृपः ॥४०२॥**

राजाले हरेक पाँच पाँच दिनमा वा हरेक पन्ध्र पन्ध्र दिनमा वा हरेक महिना बजारभाउको समीक्षा गर्नु पर्दछ ।

**तुलामानं प्रतीमानं सर्वं च स्यात्सुलक्षितम् ।**
**षट्सु षट्सु च मासेषु पुनरेव परीक्षयेत् ॥४०३॥**



राजाले नापतौलका सामानको हरेक छ छ महिनामा परीक्षण गर्न लगाउनु पर्दछ ।

**पणं यानं तरे दाप्यं पौरुषोऽर्धपणं तरे ।**
**पादं पशुश्च योषिच्च पादार्धं रिक्तकः पुमान् ॥४०४॥**

राजाले बनाएको पुल उपभोग गरेबापत हरेक सवारी साधनबाट एक पण, भारी बोक्नेसँग आधा पण, पशुको एक चौथाई पण र सामान्य नागरिकसँग एक पणको आठ भागको एक भाग कर असुल्नु पर्दछ ।

**भाण्डपूर्णानि यानानि तार्यं दाप्यानि सारतः ।**
**रिक्तभाण्डानि यत्किञ्चित्पुमांसश्चापरिच्छदाः ॥४०५॥**

पुल तर्ने सवारी साधनको वजन अनुसार करका दर निर्धारण गरिनु पर्दछ । खाली सवारी साधन, दरिद्र व्यक्ति आदिबाट नगण्य कर लिनुपर्दछ वा करमा छुट दिनु पर्दछ ।

**दीर्घाध्वनि यथादेशं यथाकालं तरो भवेत् ।**
**नदीतीरेषु तद्विद्यात्समुद्रे नास्ति लक्षणम् ॥४०६॥**

लामो पुलमा कर निर्धारण गर्दा स्थान र समय हेरी गर्नुपर्दछ । कर नदीमाथि बनाइएका पुलमा मात्र लिनू । समुद्रमाथि बनाइएका पुलमा कर लिन हुन्न ।

**गर्भिणी तु द्विमासादिस्तथा प्रव्रजितो मुनिः ।**
**ब्राह्मणा लिङ्गिनश्चैव न दाप्यास्तारिकं तरे ॥४०७॥**

दुई महिनाभन्दा बढीकी गर्भिणी स्त्री, सन्यासी, ब्राह्मण, वानप्रस्थ आश्रममा रहेको व्यक्ति र ब्रह्मचारीसँग माझीले डुङ्गा तारेको पैसा नलिनू ।

**यन्नावि किञ्चिद्दाशानां विशीर्येतापराधतः ।**
**तद्दाशैरेव दातव्यं समागम्य स्वतोंऽशतः ॥४०८॥**



माझीको गल्तीले त्यसमाथि चढेका यात्रुको केही हानी नोक्सानी भए सबै माझी मिलेर क्षतिपूर्ति दिनू । डुङ्गा मालिकले यसमा केही गर्नु पर्दैन ।

**एष नौयायिनामुक्तो व्यवहारस्य निर्णयः ।**
**दाशापराधतस्तोये दैविके नास्ति निग्रहः ॥४०९॥**

माझीको गल्तीले हुने हानीनोक्सानी माझीले नै व्यहोर्नु पर्दछ । भवितव्य पर्दा उ दोषी हुँदैन ।

**वाणिज्यं कारयेद्वैश्यं कुसीदं कृषिमेव च ।**
**पशूनां रक्षणं चैव दास्यं शूद्रं द्विजन्मनाम् ॥४१०॥**

राजाले वैश्यलाई ब्यापार, ब्याजवृत्ति, कृषि र पशुपालनमा लगाउनू ।
शूद्रलाई द्विजको सेवामा लगाउनू ।

**क्षत्रियं चैव वैश्यं च ब्राह्मणो वृत्तिकर्शितौ ।**
**बिभृयादानृशंस्येन स्वानि कर्माणि कारयेत् ॥४११॥**

दुःख पाएका क्षत्रिय एवं वैश्यलाई इमान्दारीपूर्वक ब्राह्मणले घरमा पालेर राखी काम लगाउनू ।

**दास्यं तु कारयंल्लोभाद्ब्राह्मणः संस्कृतान्द्विजान् ।**
**अनिच्छतः प्राभवत्याद्राज्ञा दण्ड्यः शतानि षट् ॥४१२॥**

संस्कार गरिएका यस्ता द्विजलाई यसरी घरमा राखेर पाल्दा दासको जस्तो व्यवहार गर्ने ब्राह्मणलाई राजाले छ सय पण दण्ड तिराउनू ।

**शूद्रं तु कारयेद्दास्यं क्रीतमक्रीतमेव वा ।**
**दास्यायैव हि सृष्टोऽसौ ब्राह्मणस्य स्वयंभुवा ॥४१३॥**

किनेको वा नकिनेको शूद्रलाई ब्राह्मणले दास बनाउनु किन कि ब्रह्माले उसलाई ब्राह्मणको दास नै भनेका छन् ।

**न स्वामिना विसृष्टोऽपि शूद्रो दास्याद्विमुच्यते ।**
**निसर्गजं हि तत्तस्य कस्तस्मात्तदपोहति ॥४१४॥**

ब्राह्मणले त्यागे पनि वा मुक्त गरेपनि शूद्रको दासत्व जाँदैन, किन कि उसमा दासपन स्वभावैले हुने गर्दछ । यसैले उसलाई दासत्वबाट कसैले पनि हटाउन सक्दैन ।

**ध्वजाहृतो भक्तदासो गृहजः क्रीतदत्त्रिमौ ।**
**पैत्रिको दण्डदासश्च सप्तैते दासयोनयः ॥४१५॥**

युद्धमा जितिएका, खान नपाएर आएका, दासीसँगै आएका उसका छोरा, किनिएका, कसैले दिएका, खानदानी र दण्ड तिर्न बनेका गरी सात थरीका दास हुन्छन् ।

**भार्या पुत्रश्च दासश्च त्रय एवाधनाः स्मृताः ।**
**यत्ते समधिगच्छन्ति यस्य ते तस्य तद्धनम् ॥४१६॥**

पत्नी, पुत्र र दासलाई निर्धन भनिएको छ किन कि यिनले जेजति जे गरेर कमाउँदछन् त्यो सबै ती जसका दास हुन्छन् त्यसैको हुन्छ ।

(अर्थात् पत्नीको धनमा पतिको, पुत्रको धनमा पिताको र दासको धनमा मालिकको अधिकार हुन्छ) ।

**विस्रब्धं ब्राह्मणः शूद्राद्द्रव्योपादानमाचरेत् ।**
**न हि तस्यास्ति किञ्चित्स्वं भर्तृहार्यधनो हि सः ॥४१७॥**

ब्राह्मणले शूद्र दासले कमाएको धन लिनू किन कि उसलाई धन राख्ने अधिकार छैन ।

**वैश्यशूद्रौ प्रयत्नेन स्वानि कर्माणि कारयेत् ।**
**तौ हि च्युतौ स्वकर्मभ्यः क्षोभयेतामिददं जगत् ॥४१८॥**

राजाले वैश्य र शूद्रलाई आआफ्ना कर्ममा लगाउनु पर्दछ । यी कर्मभ्रष्ट भए भने यिनले संसारलाई नै अशान्त बनाउँदछन् ।

**अहन्यहन्यवेक्षेत कर्मान्तान्वाहनानि च ।**
**आयव्ययौ च नियतावाकरान्कोशमेव च ॥४१९॥**

राजाले रातदिन दृश्य अदृश्य कर्म, हात्ति, घोडा, वाहन, आय व्यय, सुन रत्न आदिको खजाना आदि निरीक्षण गर्ने गर्नू ।

**एवं सर्वानिमान्राजा व्यवहारान्समापयन् ।**
**व्यपोह्य किल्बिषं सर्वं प्राप्नोति परमां गतिम् ॥४२०॥**

यसरी सबै विवाद सुल्झाएर बस्ने राजा सबै पापबाट मुक्त भई मोक्ष हुन्छ ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायामष्टमोऽध्यायः ॥८॥**

✷

**मनुस्मृति, आठौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

**शुरुदेखिको श्लोकको संख्याः-१,४०६+४२०=१,८२६**

✷

## ॥ अथ नवमोऽध्यायः ॥
## (स्त्री-पुरुष समबन्ध)

**पुरुषस्य स्त्रियाश्चैव धर्मेवर्त्मनि तिष्ठतोः ।**
**संयोगे विप्रयोगे च धर्मान्वक्ष्यामि शाश्वतान् ॥१॥**

हे विप्रजन ! अब म धर्मको बाटो हिँड्ने स्त्री र पुरुषका संयुक्त र बेग्लाबेग्लै बस्ने सम्बन्धी प्राचीन परम्परागत धर्म र नियम बताउँदछु ।

**अस्वतन्त्राः स्त्रियः कार्याः पुरुषैः स्वैर्दिवानिशम् ।**
**विषयेषु च सज्जन्त्यः संस्थाप्याः आत्मनो वशे ॥२॥**

पुरुषले विषयासक्त स्त्रीलाई कहिल्यै स्वतन्त्र हुन नदिनू । दिनरात उनलाई अधिनमा राखी बढी उच्छृङ्खल हुन नदिनू ।



**पिता रक्षति कौमारे भर्ता रक्षति यौवने ।**
**रक्षन्ति स्थविरे पुत्राः न स्त्री स्वातन्त्र्यमर्हति ॥३॥**

स्त्रीलाई कुमारी हुँदा पिताले, युवती हुँदा पतिले र वृद्धावस्थामा (पति नभएमा) पुत्रले रक्षा गरिन्छ । उनी कहिल्यै स्वतन्त्र हुन हुँदैन ।

**कालेऽदाता पिता वाच्यो वाच्यश्चानुपयन्पतिः ।**
**मृते भर्तरि पुत्रस्तु वाच्यो मातुररक्षिता ॥४॥**

(सोह्र वर्षकी ?) छोरीको विवाह नगर्ने पिता, ऋतुमती हुँदा सम्भोग नगर्ने पति तथा बाबुको मृत्यु पछि आमाको रेखदख नगर्ने पुत्र यि सबै  निन्दनीय हुन्छन् ।

**सूक्ष्मेभ्योऽपि प्रसङ्गेभ्यः स्त्रियो रक्ष्या विशेषतः ।**
**द्वयोर्हि कुलयोः शोकमावहेयुररक्षिताः ॥५॥**

सानै भएपनि विग्रन सक्ने कुरामा स्त्रीलाई छुट नदिनू, कठोरताले बचाउनू ।
नबचाए पिता र पति दुबैको कुललाई उसले कलङ्कित पार्दछे ।

**इमं हि सर्ववर्णानां पश्यन्तो धर्ममुत्तमम् ।**
**यतन्ते रक्षितुं भार्यां भर्तारो दुर्बला अपि ॥६॥**

सबै वर्णले आफ्नी स्त्रीलाई नियन्त्रणमा राख्नु नै श्रेष्ठ धर्म र दायित्व हो र यो धारणाले
दुर्बल पति पनि आफ्नी स्त्रीलाई वशमा राख्न साहस बटुल्दछ ।

**स्वां प्रसूतिं चरित्रं च कुलमात्मनमेव च ।**
**स्वं च धर्मं प्रयत्नेन जायां रक्षन् हि रक्षति ॥७॥**

आफ्नी स्त्रीलाई वशमा राख्न सक्ने पुरुषले नै आफ्ना सन्तान, चरित्र, कुल, आफू
स्वयं र आफ्नो धर्मको रक्षा गर्न सक्दछ ।



**पतिभार्यां सम्प्रविश्य गर्भो भूत्वेह जायते ।**
**जायायास्तद्धि जायात्वं यदस्यां जायते पुनः ॥८॥**

पतिलाई नै पुत्ररुपमा जन्माउने हुनाले स्त्रीलाई 'जाया' भनिएको हो ।
पतीलाई पुत्र दिनु अर्को शब्दमा पतिलाई नै जन्माउनु पनि हो ।

**यादृशं भजते हि स्त्री सुतं सूते तथाविधम् ।**
**तस्मात्प्रजाविशुद्ध्यर्थं स्त्रियं रक्षेत्प्रयत्नतः ॥९॥**

स्त्री जस्तो पुरुषको सङ्गत गर्दछे त्यस्तै पुत्र जन्मने हुनाले सन्तान शुद्धताका
लागि प्रयत्नपूर्वक स्त्रीको रक्षा गर्नु पर्दछ ।

**न कश्चिद्योषितः शक्तः प्रसह्य परिरक्षितुम् ।**
**एतैरुपाययोगैस्तु शक्यास्ताः परिरक्षितुम् ॥१०॥**

बल प्रयोग गरेरै स्त्रीलाई सर्वदा दुष्टाचरण गर्नबाट जोगाउन सम्भव हुँदैन,
सम्झाउने-बुझाउने लगायतका उपाय अपनाउनु पर्दछ ।

**अर्थस्य संग्रहे चैनां व्यये चैव नियोजयेत् ।**
**शौचे धर्मेऽन्नपक्त्यां च पारिणाह्यस्य चेक्षणे ॥११॥**

प्रसन्न राख्नका लागि स्त्रीलाई पैसा जम्मा गर्ने, घरखर्च चलाउने, घर सफासुग्घर राख्ने, धर्मकार्य सफल बनाउने तथा घरका मूल्यवान वस्तुको रेखदेख गर्ने जिम्मा दिने गर्नु पर्दछ ।

**अरक्षिता गृहे रुद्धाः पुरुषैराप्तकारिभिः ।**
**आत्मानमात्मना यास्तु रक्षेयुस्ताः सुरक्षिताः ॥१२॥**

अन्य संरक्षक नहुँदा सदाचारी पुरुषका संरक्षणमा हुने स्त्री पनि सुरक्षित हुन्छे ।
यथार्थमा त आफूले आफैंलाई सुरक्षित राख्ने नै सुरक्षित हुन्छन् ।



**पानं दुर्जनसंसर्गः पत्या च विरहोऽटनम् ।**
**स्वप्नोऽन्यगेहेवासश्च नारीदूषणानि षट् ॥१३॥**

मदीरा पिउनु, दुर्जनको सङ्गत गर्नु, पतिविरह, असमय र अधिक सुत्नु, अर्काको
घरमा बस्नु र अनाहक घुम्नु यी छ थरीका स्त्री-दोष हुन् ।

**नैता रुपं परीक्षन्ते नासां वयसि संस्थितिः ।**
**सुरुपं वा विरुपं वा पुमानित्येव भुञ्जते ॥१४॥**

रुप र आयु नहेरी मर्द छ भने जस्तासुकै पुरुषसँग भोग गर्न स्त्री बेर मान्दिन ।

**पौंश्चल्याच्चलचित्ताच्च नैस्नेह्याच्च स्वभावतः ।**
**रक्षिता यत्नतोऽपीह भर्तृष्वेता विकुर्वते ॥१५॥**

चञ्चल चित्तकी र कुलटा स्त्रीले जस्तोसुकै बन्धनमा पनि आफ्नो
पतिलाई धोखा दिने बाटो निकाली हाल्दछे ।

**एवं स्वभावं ज्ञात्वाऽऽसां प्रजापतिनिसर्गजम् ।**
**परमं यत्नमातिष्ठेत्पुरुषे रक्षणंप्रति ॥१६॥**

सृष्टिको शुरुवातदेखि नै स्त्रीको यो नबदलिएको स्वभाव देखेर पुरुषले उसमाथि
नियन्त्रणका लागि विशेषतः प्रयत्नशील हुनुपर्दछ ।

**शय्यासनमलङ्कारं कामं क्रोधमनार्जवम् ।**
**द्रोहभावं कुचर्यां च स्त्रिभ्यो मनुरकल्पयत् ॥१७॥**

ब्रह्माले नै उत्तम ओछ्यान-आसन र अलङ्कारको मोह, काम, क्रोध, सोझोपनको अभाव, ईर्ष्या र द्वेष, ऋङ्गारपटार गरेर अनाहकमा घुमफिर गर्ने तथा अर्कालाई आफ्नो रुपसौन्दर्य देखाई प्रशंसा पाउने इच्छालाई स्त्रीका स्वाभाविक आदत बनाएका छन् ।



**नास्ति स्त्रीणां क्रियामन्त्रैरिति धर्मे व्यवस्थितिः ।**
**निरिन्द्रिया ह्यमन्त्राश्च स्त्रियोऽनृतमिति स्थितिः ॥१८॥**

शास्त्रानुसार संस्कारमा मन्त्रको उच्चारण गर्न नहुने कारण तिनीहरु इन्द्रियको सही प्रयोग गर्न
असमर्थ हुन्छन् वा निरिन्द्रिय हुन्छन् र अमन्त्रा हुन्छन् भनेर नै हो ।
फलतः स्त्रीको वास्तविक सत्ता नै हुँदैन ।

**तथा च श्रुतयो बह्व्यो निगीता निगमेष्वपि ।**
**स्वालक्षण्यपरीक्षार्थं तासां श्रृणुत निष्कृतीः ॥१९॥**

स्वभावैले कुलटा हुने स्त्रीका सम्बन्धमा चर्चा गर्दा वेदमा दिइएका केही उदाहरण यस्ता छन् ।

**यन्मे माता प्रलुलुभे विचरन्त्यपतिव्रता ।**
**तन्मे रेतः पिता वृक्तामित्यस्यैतन्निदर्शनम् ॥२०॥**

परपुरुषसँग सम्भोग गर्नाले अपवित्र भएको मेरो आमाको योनीलाई
मेरा पिता आफ्नो वीर्यले शुद्ध पारुन् ।

**ध्यायत्यनिष्टं यत्किञ्चित्पाणिग्राहस्य चेतसा ।**
**तस्यैष व्यभिचारस्य निह्नवः सम्यगुच्यते ॥२१॥**

शारीरिक सम्पर्क नभए पनि मानसिकरूपमा परपुरुषको चाहना गर्ने विवाहिता स्त्रीको पाप
शुद्धिका लागि प्रयोग हुने मन्त्र हो यो (श्लोक २० को मन्त्र) ।

**यादृग्गुणेनभर्त्रा स्त्री संयुज्येत यथाविधिः ।**
**तादृग्गुणा सा भवति समुद्रेणेव निम्नगाः ॥२२॥**



जसरी सागरले गुण नहेरी नदीलाई आफूमा समेट्दछ त्यसरी नै स्त्रीले पतिको
गुण नहेरी आफूलाई समर्पण गर्नुपर्दछ ।

**अक्षमाला वसिष्ठेन संयुक्ताऽधमयोनिजा ।**
**शारङ्गी मन्दपालेन जगामाभ्यर्हणीयताम् ॥२३॥**

अधम कुलमा जन्मिएकी अक्षमाला वसिष्ठसँगको विवाहले अरुन्धती भइन्, साधारण कुलकी
शारङ्गी मन्दपालसँगको विवाहले सम्मानित भइन् ।

**एताश्चान्याश्च लोकेऽस्मिन्नपकृष्टप्रसूतयः ।**
**उत्कर्षं योषिताः प्राप्ताः स्वैः स्वैर्भर्तृगुणैः शुभैः ॥२४॥**

यि र यस्ता अन्य (अन्य धेरै) अधम कुलमा जन्मिएका स्त्रीहरूले आआफ्ना
पतिका शुभ गुणले गर्दा यस लोकमा उत्कृष्टता प्राप्त गरेका छन् ।

**एषोदिता लोकयात्रा नित्यं स्त्रीपुंसयोः शुभा ।**
**प्रेत्येह च सुखोदर्कान्प्रजाधर्मान्निबोधतः ॥२५॥**

स्त्री-पुरुषको सनातन व्यवहारका बारेमा यि शुभ कुरा बताएँ । अब यो लोक र परलोकमा सुख दिने खालका सन्तानका लक्षण र धर्मका बारेमा सुन्नुहोस् ।

**प्रजनार्थं महाभागाः पूजार्हाः गृहदीप्तयः ।**
**स्त्रियः श्रियश्च गेहेषु न विशेषोऽस्ति कश्चन ॥२६॥**

स्त्रीहरू सन्तान जन्माउनका लागि उत्पन्न, शुभ, सम्माननीय र घरको शोभा हुन् । लक्ष्मी र घरका स्त्रीमा केही फरक छैन (दुवै समान हुन्, त्यसैले स्त्रीलाई गृहलक्ष्मी पनि भनिन्छ) ।

**उत्पादनमपत्यस्य जातस्य परिपालनम् ।**
**प्रत्यहं लोकयात्रायाः प्रत्यक्षं स्त्री निबन्धनम् ॥२७॥**



परिवारको मेरुदण्ड बनी सन्तान जन्माउने, जन्मिएका सन्तानको पालनपोषण गर्ने, दैनिक व्यवहार सञ्चालन गर्ने, मान्यजनको सेवा गर्ने, अतिथि सत्कार गर्ने र धर्मकर्म गर्ने कार्यका आधार वा जग नै स्त्री हुने गर्दछे ।

**अपत्यं धर्मकार्याणि शुश्रूषा रतिरुत्तमा ।**
**दाराधीनस्तथा स्वर्गः पितृणामात्मनश्च ह ॥२८॥**

स्त्रीबाट नै सन्तान, धर्मकार्यको सम्पादन, सेवा-लाभ, रति-सुख, पितृ-उद्धार र स्वर्ग पाउन सकिन्छ ।

**पतिं या नाभिचरति मनोवाग्देहसंयता ।**
**सा भर्तृलोकानाप्नोति सद्भिः साध्वीति चोच्यते ॥२९॥**

मन, वचन र कर्मले परपुरुषका सम्बन्धमा (विषयवासनाका दृष्टिले) अलिकति

पनि नसोच्ने स्त्री लोकमा पतिव्रता हुन्छे र बितेपछि पतिलोक जान्छे ।

**व्यभिचारात्तु भर्तुः स्त्री लोके प्राप्नोति निन्द्यताम् ।**
**श्रृगालयोनिं चाप्नोति पापरोगैश्च पीड्यते ॥३०॥**

कुलटा स्त्री लोकमा निन्दित हुन्छे, यौनरोगले ग्रसित हुन्छे र मरेपछि स्याल भएर जन्मन्छे ।

**पुत्रं प्रत्युदितं सद्भिः पूर्वजैश्च महर्षिभिः ।**
**विश्वजन्यमिमं पुण्यमुपन्यासं निबोधत ॥३१॥**

छोराका सम्बन्धमा पहिलेका विशिष्ट महर्षिहरूले बताएका यि सबैको भलो गर्ने खालका हितकारी बचनहरू सुन्नु होस् ।

**भर्तुः पुत्रं विजानन्ति श्रुतिद्वैधं तु भर्तरि ।**
**आहुरुत्पादकं केचिदपरे क्षेत्रिणं विदुः ॥३२॥**



स्त्रीबाट जन्मिएको पुत्र उनकै पतिको नै अंश वा प्रतिरुप हो भन्ने कुरामा त शास्त्रकारहरु एकमत छन् तर स्त्रीले परपुरुषको संसर्गबाट जन्माएको छोरो कसको हुने वास्तविक पतिको कि वीर्य सेचन गर्नेको भन्ने सम्बन्धमा भने तिनका बीचमा मतभेद देखिन्छ ।

**क्षेत्रभूता स्मृता नारी बीजभूतः स्मृतः पुमान् ।**
**क्षेत्रबीजसमायोगात्सम्भवः सर्वदेहिनाम् ॥३३॥**

स्त्रीलाई खेत र पुरुषलाई बिउ बताइएको छ । खेत र बिउको मिलनबाट नै शरीरधारी सबै प्राणीको उत्पत्ति सम्भव भएको हो ।

**विशिष्टं कुत्रचिद् बीजं स्त्रीयोनिस्त्वेव कुत्रचित् ।**
**उभयं तु समं यत्र सा प्रसूतिः प्रशस्यते ॥३४॥**

कतै बिउ त कतै खेत राम्रो हुन्छ तर जहाँ दुबै कुरा राम्रो हुन्छ त्यहाँ
उत्पादन पनि राम्रो हुने गर्दछ ।

**बीजस्य चैव योन्याश्च बीजमुत्कृष्टमुच्यते ।**
**सर्वभूतप्रसूतिर्हि बीजलक्षणलक्षिता ॥३५॥**

दुवै राम्रो हुनुपर्ने भएपनि खेत र बिउमध्ये बिउलाई नै उत्कृष्ट बताइएको छ किन कि उब्जने
चिजमा मुख्यतः बिउकै गुण-दोष देखिने गर्दछ ।

**यादृशं तूप्यते बीजं क्षेत्रे कालोपपादिते ।**
**तादृग्रोहति तत्तस्मिन्बीजं स्वैर्व्यञ्जितं गुणैः ॥३६॥**

खेतमा जस्तो बिउ छरिन्छ समय आएपछि त्यही बिउको सम्पूर्ण गुण
लिएर विरुवा उम्रने गर्दछ ।



**इयं भूमिर्हि भूतानां शाश्वती योनिरुच्यते ।**
**न च योनिगुणान् कांश्चिद्बीजं पुष्यति पुष्टिषु ॥३७॥**

अनादिकालदेखि योनीरुपमा सबै बोटविरुवा जन्माउँदे आइरहेकी धरतीले ती बोटविरुवामा
आफ्नो गुण समावेश गर्न सक्दिनन् ।

**भूमावप्येककेदारे कालोप्तानि कृषीबलैः ।**
**नानारूपाणि जायन्ते बीजानीह स्वभावतः ॥३८॥**

किसानले समय आएपछि खेतमा विभिन्न थरीका बिउ छर्दछ । समय आएपछि छरिएका ती बिउ
अनुसार नै विभिन्न थरीका विरुवा उम्रन थाल्दछन् ।

**व्रीहयः शालयोमुद्गास्तिला माषास्तथा यवाः ।**
**यथाबीजं प्ररोहन्ति लशुनानीक्षवस्तथा ॥३९॥**

सठिया धान, शालि धान, मुगी, तिल, मास, जौ, लसुन वा ऊखु जेसुकै रोपिएको भएपनि जस्तो बिउ रोपिएको हो त्यस्तै विरुवा उम्रन्छन् ।

**अन्यदुप्तं जातमन्यदित्येतन्नोपपद्यते ।**
**उप्यते यद्धि यद्बीजं तत्तदेव प्ररोहति ॥४०॥**

एक थोक रोपेर अर्को थोक उम्रदैन, जे को जस्ता बिउ रोपेको छ त्यसको त्यस्तै विरुवा उम्रन्छ ।

**तत्प्राज्ञेन विनीतेन ज्ञानविज्ञानवेदिना ।**
**आयुष्कामेन वप्तव्यं न जातु परयोषिति ॥४१॥**

यसैले बुद्धिमान, चरित्रवान, ज्ञानविज्ञानमा निपुण र दीर्घायु चाहने मानिसले अर्काको खेतमा कहिल्यै लगेर बिउ नछर्नू ।

**अत्र गाथा वायुगीताः कीर्तयन्ति पुराविदः ।**

**यतो बीजं न वप्तव्यं पुंसा परपरिग्रहे ॥४२॥**

यस सम्बन्धमा भूतकालका विज्ञहरु वायुको गाथा गाउँदै "सज्जन पुरुषले अर्काको जग्गामा लगेर बिउ नछर्नु" पनि भन्ने गर्दछन् ।

**नश्यतीषुर्यथाऽऽविद्धः खे विद्धमनुविध्यतः ।**
**तथा नश्यति वै क्षिप्रं बीजं परपरिग्रहे ॥४३॥**

जसरी अर्को शिकारीको बाणले घाइते भएको मृगलाई हानिएको आफ्नू बाण खेर जान्छ, त्यसरी नै अर्काको खेतमा बिउ रोप्नाले आफ्नो बिउ खेर जान्छ ।

**पृथोरपीमां पृथिवीं भार्यां पूर्वविदो विदुः ।**
**स्थाणुच्छेदस्य केदारमाहुः शल्यवतो मृगम् ॥४४॥**

अग्लोहोचो यो धरतीलाई सम्म बनाएको श्रेय राजा पृथुलाई जान्छ । उनले खेतीयोग्य र उर्बर बनाएका कारण र उनकै पत्नी मानिएकीले धरतीको नाम पनि पृथ्वी रहन गयो ।
अर्थात् जसले पहिले बाण हान्दछ मृग त्यसैको हुन्छ ।

**एतावानेव पुरुषो यज्जायात्मा प्रजेति ह ।**
**विप्राः प्राहुस्तथा चैतद्यो भर्ता सा स्मृताङ्गना ॥४५॥**

पति, पत्नी र पुत्रको संयुक्त रूप नै पुरुष हो । वास्तवमा पति नै पत्नी हो र पत्नी नै पुत्र हो । वेदज्ञ विद्वानहरूले यसै भनेका छन् ।
(यी तीन अन्योन्याश्रित हुन्छन्, यी तीन वटै नाताको छुट्टै अस्तित्व हुँदैन) ।

**न निष्क्रयविसर्गाभ्यां भर्तुर्भार्या विमुच्यते ।**
**एवं धर्मं विजानीमः प्राक् प्रजापतिनिर्मितम् ॥४६॥**

पतिबाट निकालिए पनि पत्नी त्यही पतिकी पत्नी भनी चिनिन्छे, पतिबाट मुक्त हुन सक्दिन । ब्रह्माले बनाएको यो सनातन धर्म हो ।



**सकृदंशो निपतति सकृत्कन्या प्रदीयते ।**
**सकृदाह ददानीति त्रीण्येतानि सतां सकृत् ॥४७॥**

धनको विभाजन, कन्यादानको सङ्कल्प र विवाह यी तीन कुराहरु जीवनमा एकपटक मात्र गरिन्छ ।

**यथा गोऽश्वोष्ट्रदासीषु महिष्यजाविकासु च ।**
**नोत्पादकः प्रजाभागी तथैवान्याङ्गनास्वपि ॥४८॥**

जसरी गाई, घोडी, ऊँट, दासी, भैंसी र बाख्रीका भालेहरु जन्मने सन्तानका स्वामी बन्न सक्दैनन् त्यसरी नै अर्काको खेतमा बिउ रोप्नेले उब्जनीको स्वामित्व पाउन सक्दैन ।

**येऽक्षेत्रिणो बीजवन्तः परक्षेत्रप्रवापिणः ।**
**ते वै सस्यस्य जातस्य न लभन्ते फलं क्वचित् ॥४९॥**

खेतधनीसँग कुनै सहमति नलिई उसको खेतमा रोपिएको बिउबाट उत्पन्न प्रतिफलमा रोप्नेको अधिकार हुँदैन ।

**यदन्यगोषु वृषभो वत्सानां जनयेच्छतम् ।**
**गोमिनामेव ते वत्सा मोघं स्कन्दितमाषभम् ॥५०॥**

आफूले पालेको साँढिले अर्काको गाईबाट सैयौं बाच्छाबाच्छी जन्माए पनि ती बाच्छाबाच्छीमा गाईको मालिककै अधिकार हुन्छ अर्थात साँढको शुक्र निष्फल हुन्छ ।

**तथैवाऽक्षेत्रिणो बीजं परक्षेत्रप्रवापिणः ।**
**कुर्वन्ति क्षेत्रिणामर्थं न बीजी लभते फलम् ॥५१॥**



आफ्नो खेत नराखी अर्काको खेतमा बिउ छर्ने गर्दा खेत बाँझो नरही खेत मालिकलाई लाभ त पुग्ला तर रोप्नेको श्रम भने व्यर्थमा खेर जान्छ ।

**फलं त्वनभिसन्धाय क्षेत्रिणां बीजिनां तथा ।**
**प्रत्यक्षं क्षेत्रणिामर्थो बीजाद्योनिर्गरीयसी ॥५२॥**

आउने आयस्ताको बाँडफाँडमा मालिक र बिउ छर्नेका बीचमा कुनै सम्झौता नभई अर्काका खेतमा लगेर बिउ छर्नु भनेको खेत मालिकको उद्देश्य पूरा गर्नु मात्र हो ।

**क्रियाभ्युपगमात्त्वेतद्बीजार्थं यत्प्रदीयते ।**
**तस्येह भागिनौ दृष्टौ बीजी क्षेत्रिक एव च ॥५३॥**

उत्पादनका सम्बन्धमा मालिक र बिउ छर्नेका बीचमा सम्झौता भएका अवस्थामा उत्पादनमा दुवैको समान हक कायम भएको पनि देखिएको छ ।

**ओघवाताहृतं बीजं यस्य क्षेत्रे प्ररोहति ।**
**क्षेत्रिकस्यैव तद्बीजं न वप्ता लभते फलम् ॥५४॥**

हावाको झोक्काले उडाएर अर्काको खेतमा पुगेको बिउबाट उत्पन्न हुने फलमा खेतको स्वामीको अधिकार हुन्छ, बिउको स्वामीको हुँदैन ।

**एष धर्मो गवाश्वस्य दास्युष्ट्राजाविकस्य च ।**
**विहङ्गमहिषीणां च विज्ञेयः प्रसवं प्रति ॥५५॥**

गाई, घोडी, दासी, उँट, बाख्री, भेडी, पंक्षी, भैंसी आदि पशुपंक्षीबाट जन्मने सन्तानका विषयमा पनि यही नियम लागु हुन्छ ।

**एतद्वः सारफल्गुत्वं बीजयोन्योः प्रकीर्तितम् ।**
**अतः परं प्रवक्ष्यामि योषितां धर्ममापदि ॥५६॥**



बिउ र खेतमा कुन प्रधान हुन्छ भन्ने कुरा बताइयो, अब स्त्रीका आपदकालीन धर्मका बारेमा बताउँदछु ।

**भ्रातुर्ज्येष्ठस्य भार्या या गुरुपत्न्यनुजस्य सा ।**
**यवीयसस्तु या भार्या स्नुषा ज्येष्ठस्य सा स्मृता ॥५७॥**

भाइका लागि भाउजू गुरुपत्नी वा माताका समान र दाजूका लागि भाईबुहारी पुत्रबुहारी सरह हुन्छे ।

**ज्येष्ठो यवीयसो भार्यां यवीयान् वाऽग्रजस्त्रियम् ।**
**पतितौ भवतो गत्वा नियुक्तावप्यनापदि ॥५८॥**

भाउजू र भाईबुहारीसँग नियोग विधिले यौन सम्पर्क गरी सन्तान जन्माउनाले पनि चारैथरी पतित हुन्छन् ।

**देवराद्वा सपिण्डाद्वा स्त्रिया सम्यङ् नियुक्तया ।**
**प्रजेप्सिताऽधिगन्तव्या सन्तानस्य परिक्षये ॥५९॥**

पतिबाट सन्तान नहुने तर सन्तानको इच्छा गर्ने स्त्रीले देवर वा
कुनै सपिण्डीसँग सम्पर्क गर्न निषेध छैन ।

**विधवायां नियुक्तस्तु घृताक्तो वाग्यतो निशि ।**
**एकमुत्पादयेत्पुत्रं न द्वितीयं कथञ्चन ॥६०॥**

विधवा भाइबुहारीले पुत्र जन्माउन चाहे, जेठाजूले शरीरमा घिउ दली मौन रहेर रातमा एउटा पुत्र नजन्मिएसम्म (गर्भ नरहँदासम्म) उनलाई सम्भोग गर्न सक्दछ ।

**द्वितीयमेके प्रजनं मन्यन्ते स्त्रीषु तद्विदः ।**
**अनिर्वृत्तं नियोगार्थं पश्यन्तो धर्मतस्तयोः ॥६१॥**



नियोग पद्धतिको नियमलाई व्यवस्थित गर्नेहरु पहिले जन्मेको पुत्रको अयोग्यतामा दोश्रो पुत्रका लागि गरिने सम्भोगलाई पनि अधर्म मान्दैनन् ।

**विधवायां नियोगार्थे निर्वृत्ते तु यथाविधि ।**
**गुरुवच्च स्नुषावच्च वर्तेयातां परस्परम् ॥६२॥**

विधिपूर्वक नियोग पद्धतिले विधवा भाउजू वा भाईबुहारीबाट सन्तान जन्माएपछि भाउजूलाई माता र भाईबुहारीलाई पुत्रबधूसमान अस्पृश्य मान्नु पर्दछ ।

**नियुक्तौ यौ विधिं हित्वा वर्तेयातां तु कामतः ।**
**तावुभौ पतितौ स्यातां स्नुषागगुरुतल्पगौ ॥६३॥**

नियोग विधिमा संलग्न हुनेहरुले यौन सुखका लागि सम्भोग गर्न थाले भने सबै पतित हुन्छन् अर्थात भाउजूसँग सुत्नेले गुरुपत्नी र भाईबुहारीसँग सुत्नेले पुत्रबुहारी गमनको पाप बोक्दछ ।

**नान्यस्मिन्विधवा नारी नियोक्तव्या द्विजातिभिः ।**
**अन्यस्मिन्हि नियुञ्जाना धर्मं हन्युः सनातनम् ॥६४॥**

द्विज विधवाले आफूभन्दा भिन्न वर्णका पुरुषसँग नियोगविधि नअपनाउनु, किनकि यसबाट जन्मने सन्तान धर्मनाशक हुन्छ ।

**नोद्वाहिकेषु मन्त्रेषु नियोगः कीर्त्यते क्वचित् ।**
**न विवाहविधावुक्तं विधवावेदनं पुनः ॥६५॥**

वास्तवमा विवाहका वेदमन्त्रमा कतै पनि नियोग विधिको उल्लेख गरिएको छैन न त विधवाको विवाहको कतै चर्चा नै गरिएको छ ।

**अयं द्विजैर्हि विद्वद्भिः पशुधर्मो विगर्हितः ।**
**मनुष्याणामपि प्रोक्तो वेने राज्यं प्रशासति ॥६६॥**



सन्तानहीन राजा वेनलाई ब्राह्मणहरुले मारेपछि उत्तराधिकारीका लागि विद्वानहरूको विरोध हुँदाहुँदै पनि त्यतिखेर नियोग विधि अपनाइएको थियो र त्यसपछि अरुका लागि यो विधि निषेध गरिएको थियो ।

**स महीमखिलां भुञ्जन् राजर्षिप्रवरः पुरा ।**
**वर्णानां संकरं चक्रे कामोपहतचेतनः ॥६७॥**

राजा वेन ठूला राजर्षि थिए र पृथ्वीका राजा थिए । बुद्धि बिग्रिएर जातपातको मर्यादा विपरितको यौनकार्यलाई प्रश्रय दिनाले उनको राज्यमा वर्णसङ्कर बढ्न थालेकाले उनी मारिए ।

**ततः प्रभृति यो मोहात्प्रमीतपतिकां स्त्रियम् ।**
**नियोजयत्यरत्यार्थं तं विगर्हन्ति साधवः ॥६८॥**

त्यसपछि मोहले सन्तानकालागि नियोगविधि गर्ने काम साधुजनद्वारा निन्दनीय हुन थालेको हो ।

**यस्याः म्रियेत कन्यायाः वाचा सत्ये कृते पतिः ।**
**तामनेन विधानेन निजो विन्देत देवरः ॥६९॥**

कुरो मात्र छिनेकी वा विवाह भई समागम नहुँदै विधवा भएकी स्त्री (भाउजू) सँग देवरले विधिपूर्वक विवाह गर्न सक्दछ ।

**यथा विध्यधिगम्यैनां शुक्लवस्त्रां शुचिव्रताम् ।**
**मिथो भजेतां प्रसवात्सकृत्सकृदृतावृतौ ॥७०॥**

अक्षता विधवा भाउजूलाई विवाह गर्न नमान्ने तर सन्तान जन्माउन मात्र इच्छा भए, विधवा भाउजूले सेतो वस्त्र लगाई पवित्रता धारण गर्नू र गर्भ नरहेसम्म सम्भोग गरी दुवै अलग हुनू ।

**न दत्त्वा कस्यचित्कन्यां पुनर्दद्याद्विचक्षणः ।**
**दत्त्वा पुनः प्रयच्छन् हि प्राप्नोति पुरुषानृतम् ॥७१॥**



कन्यालाई एकपटक कसैलाई दिने बाचा गरी फेरी अर्कोलाई नदिनु, यसरी वचन फेर्ने व्यक्ति मिथ्याभाषणको दोषी हुन्छ ।

**विधिवत्प्रतिगृह्यापि त्यजेत्कन्यां विगर्हिताम् ।**
**व्याधितां विप्रदुष्टां वा छद्मनाचोपपादिताम् ॥७२॥**

प्रेम, रोग आदि सत्य कुरा लुकाएर दिइएकी विधिपूर्वक विवाह गरेर लेराइएकी स्त्रीलाई परित्याग गर्दा कुनै दोष लाग्दैन ।

**यस्तु दोषवतीं कन्यामाख्वायोपपादयेत् ।**
**तस्य तद्वितथं कुर्यात्कन्यादातुर्दुरात्मनः ॥७३॥**

कन्याको दोष लुकाएर सज्जनलाई भिडाउन खोज्नेको चाहना भताभुङ्ग पार्न छिनेको कामकुरो पनि भाँड्नु र विवाह अमान्य गर्नुलाई शास्त्रसम्मत नै मानिन्छ ।

**विधाय वृत्तिं भार्यायाः प्रवसेत कार्यवान्नरः ।**
**अवृत्तिकर्शिता हि स्त्री प्रदुष्येत्स्थितिमत्यपि ॥७४॥**

परदेश जाँदा पत्नीको भरण-पोषणको समुचित व्यवस्था गरेर मात्र जानू, किनकि भोकप्यास र अभावले उच्च शीलस्वभावकी स्त्रीलाई पनि बाटो विराउन विवश पार्दछ ।

**विधाय प्रोषिते वृत्तिं जीवेन्नियममास्थिता ।**
**प्रोषितो त्वविधायैव जीवेच्छिल्पैरगर्हितैः ॥७५॥**

यसरी भरण-पोषणको आवश्यक व्यवस्था गरी पति परदेश गएपछि पत्नीले संयमित भई पतिव्रता नियमहरुको दृढतापूर्वक पालना गर्नू ।

**प्रोषितो धर्मकायार्थं प्रतीक्ष्योऽष्टौ नरः समाः ।**
**विद्यार्थं षड् यशोऽर्थं वा कामार्थं त्रींस्तु वत्सरान् ॥७६॥**



धर्मयात्रामा परदेशिएका पतिको आठ, पढ्न वा यश कमाउन गएका पतिको छ  र धन कमाउन गएका पतिको तीन वर्षसम्म फर्कने प्रतीक्षा गर्नु पर्दछ ।

**संवत्सरं प्रतीक्षेत द्विषन्तीं योषितं पतिः ।**
**ऊर्ध्वं संवत्सरात्त्वेनां दायं हृत्वा न संवसेत् ॥७७॥**

पत्नी आफूलाई माया नभई द्वेष गर्दछे भन्ने लागेमा एक वर्षसम्म सुध्रने आसमा बस्नु नसुध्रे दिएको वस्त्र गहना आदि लिन र उनलाई छोड्न पति स्वतन्त्र हुन्छ ।

**अतिक्रामेत्प्रमत्तं या मत्तं रोगार्तमेव वा ।**
**सा त्रीन्मासान्परित्याज्याऽविभूषणपरिच्छदा ॥७८॥**

अल्छी, नशालु वा रोगी नै भएपनि पतिको आज्ञा नमान्ने स्त्री वस्त्र र गहना लिएर तीन महिनासम्मका लागि त्याज्य हुन्छे ।

**उन्मत्तं पतितं क्लीबमबीजं पापरोगिणम् ।**
**न च त्यागोऽस्ति द्विषन्त्याश्च न च दायापवर्तनम् ॥७९॥**

पागल, पतित, नपुंसक, बीजरहित, दीर्घ रोगी र पापी पतिलाई घृणा गर्ने स्त्रीको धन फिर्ता लिनु र उनलाई परित्याग गर्नु उचित हुँदैन ।

**मद्यपाऽसाधुवृत्ता वा प्रतिकूला च या भवेत् ।**
**व्याधिता वाऽधिवेत्तव्या हिंस्राऽर्थघ्नी च सर्वदा ॥८०॥**

मदीरासेवी, दुराचारिणी, पतिलाई तिरस्कार गर्ने, दीर्घ रोगिणी, भूतप्रेतले ग्रस्त र कलहप्रिया पत्नीलाई त्यागी वा नत्यागी अर्को विवाह गर्न पुरुष स्वतन्त्र हुन्छ ।

**वन्ध्याऽष्टमेधिवेद्याऽब्दे दशमे तु मृतप्रजा ।**
**एकादशे स्त्रीजननी सद्यस्त्वप्रियवादिनी ॥८१॥**



पत्नी (उसैका कारणले) निसन्तान भए विवाहको आठ, मरेको बच्चा मात्र जन्माउने भए दश र छोरी मात्र जन्माउने भए एघार वर्षपछि अर्को विवाह गर्न पुरुष स्वतन्त्र हुन्छ । तर कर्कशा भए पुरुषले उत्तिनै खेर अर्को विवाह गर्न सक्दछ ।

**या रोगिणी स्यात्तु हिता संपन्ना चैव शीलतः ।**
**साऽनुज्ञाप्याधिवेत्तव्या नावमान्या च कर्हिचित् ॥८२॥**

दीर्घरोगी नै भएपनि पतिव्रता पत्नीको हैँला नगर्नू । अर्को विवाह गर्न चाहेमा पनि उनको अनुमति लिएर मात्र गर्नू ।

**अधिविन्ना तु या नारी निर्गच्छेद्रुषिता गृहात् ।**
**सा सद्यःसन्निरोधव्या त्याज्या वा कुलसन्निधौ ॥८३॥**

दोश्रो विवाह गरेको कारणले रिसाएर माइत जान खोज्ने जेठी पत्नीलाई सम्झाईबुझाई घरमै

राख्न खोज्नू । केही नलागे आफैंले उनलाई ससुरालीसम्म पुऱ्याई छाडेर आउनू ।

**प्रतिषिद्धे पिवेद्या तु मद्यमभ्युदयेष्वपि ।**
**प्रेक्षासमाजं गच्छेद्वा सा दण्डया कृष्णलानि षट् ॥८४॥**

पतिको अवज्ञा गरी उत्सवमा मदीरा पिउने र नाचगान, तमासा हेर्न जाने स्त्रीलाई राजाले छ कृष्णल जरिवाना गर्नू ।

**यदि स्वाश्चापराश्चैव विन्देरन्योषितो द्विजाः ।**
**तासां वर्णक्रमेण स्याज्ज्यैष्ठं पूजा च वेश्म च ॥८५॥**

सजातीय स्त्री विवाह गर्ने द्विजहरु विजातीय विवाह गर्ने द्विजहरूभन्दा क्रमशः श्रेष्ठ हुन्छन् ।

**भर्तुः शरीरशुश्रूषां धर्मकार्यं च नैत्यकम् ।**
**स्वा चैव कुर्यात्सर्वेषां नाक्स्वजातिः कथञ्चन ॥८६॥**



पतिको शरीरको सेवा र पतिका साथमा बसेर नित्य धर्मकर्म गर्ने अधिकार केवल समान वर्णका विवाहिता पत्नीलाई मात्र हुन्छ अरु वर्णकालाई हुँदैन ।

**यस्तु तत्कारयेन्मोहात्सजात्या स्थितयाऽन्यया ।**
**यथा ब्राह्मणचाण्डालः पूर्वद्रष्टस्तथैव सः ॥८७॥**

सजातीय विवाहिता पत्नीलाई छाडी विजातीय पत्नीबाट शारीरिक सेवा गराउने र विजातीय पत्नीलाई धर्मकर्ममा साथ लिने ब्राह्मण पतित र चाण्डाल नै हुन्छ ।

**उत्कृष्टायाभिरूपाय वराय सदृशाय च ।**
**अप्राप्तामपि तां तस्मै कन्यां दद्याद्यथाविधिः ॥८८॥**

उत्कृष्ट वर भेट्टिएको अवस्थामा कन्या पूर्ण युवती नहुँदा पनि विधिपूर्वक विवाह गर्नु

अनुचित हुँदैन ।

**काममामरणात्तिष्ठेद्गृहे कन्यर्तुमत्यपि ।**
**न चैवेनां प्रयच्छत्तु गुणहीनाय कर्हिचित् ॥८९॥**

रजस्वला भएकी बुढी कन्यालाई आजीवन घरमै राख्नु परेपनि राख्नू तर गुणहीन केटाका साथमा तिनको विवाह नगर्नू ।

**त्रीणि वर्षाण्युदीक्षेत कुमार्यृतुमती सती ।**
**ऊर्ध्वं तु कालादेतस्माद्विन्देत सदृशं पतिम् ॥९०॥**

कुमारीले परसरेको तीन वर्षसम्म अभिभावकले विवाह गरि दिनेछन् भनी कुर्नू । त्यसपछि कन्या आफैं आफ्नो लागि केटो खोज्न स्वतन्त्र हुन्छे ।

**अदीयमाना भर्तारमधिगच्छेद्यदि स्वयम् ।**

**नैनः किञ्चिदवाप्नोति न च यं साऽधिगच्छति ॥९१॥**

यसरी आफैंले खोजेको वरसँग विवाह गर्ने कन्या र विवाह गर्ने केटोलाई कुनै पाप लाग्दैन ।

**अलङ्कारं नाददीत पित्र्यं कन्या स्वयंवरा ।**
**मातृकं भ्रातृदत्तं वा स्तेना स्याद्यदि तं हरेत् ॥९२॥**

आफैंले केटो खोजी विवाह गर्ने कन्याले बाबुआमा वा दाजुभाइले दिएको वस्त्र, गहना आदि उपहार लिने अधिकार हुन्न, लिए चोरेको ठहर्दछ ।

**पित्रे न दद्याच्छुल्कं तु कन्यामृतुमतीं हरन् ।**
**स हि स्वाम्याददतिक्रामेदृतूनां प्रतिरोधनात् ॥९३॥**

परसरेकी छोरीलाई उपयुक्त केटा खोजी विवाह गरिदिन नसक्ने बाबुलाई छोरी लैजाने

कुनै केटाले पैसा तिर्नु पर्दैन किनकि यो बाबुको असफलताको परिणाम हो ।

**त्रिंशद्वर्षो वहेत्कन्यां हृद्यां द्वादशवार्षिकीम् ।**
**त्र्यष्टवर्षोऽष्टवर्षां वा धर्मे सीदति सत्वरः ॥९४॥**

सतीत्व जोगाउनु पर्ने जस्ता सङ्कटमा चौबीस वा तीस वर्षको केटोलाई आठ वा बाह्र वर्षकी कन्या विवाह गरेर दिन पनि हिचकिचाउनु हुँदैन ।

**देवदत्तां पतिर्भार्यां विन्दते नेच्छयात्मनः ।**
**तां साध्वीं बिभृयायान्नित्यं देवानां प्रियमाचरन् ॥९५॥**

विवाह इच्छाको होइन विधिको विधान हो जस्तीसँग विवाह भएपनि देवताकै पूजा सम्झी पुरुषले उनको उचित पालनपोषण गर्नु पर्दछ ।

**प्रजनार्थं स्त्रियः सृष्टा सन्तानार्थं च मानवाः ।**

**तस्मात्साधारणो धर्मः श्रुतौ पत्न्या सहोदितः ॥९६॥**

ईश्वरले गर्भधारण गर्न तथा सन्तान जन्माउन स्त्रीको र गर्भाधान गराउन पुरुषको सृष्टी गरेका हुन् त्यसैले वेदमा स्त्री-पुरुषको सहधर्म को विधान भएको हो ।

**कन्यायां दत्तशुल्कायां म्रियेत यदि शुल्कदः ।**
**देवराय प्रदातव्या यदि कन्याऽनुमन्यते ॥९७॥**

शुल्क दिने वरको अचानक मृत्यु भएमा उसको भाईसँग विवाह गर्न कन्या स्वतन्त्र हुन्छे ।

**आददीत न शूद्रोऽपि शुल्कं दुहितरं ददन् ।**
**शुल्कं हि गृह्णन्कुरुते छन्नं दुहितृविक्रयम् ॥९८॥**

शूद्रले पनि कन्याको विवाहमा वरपक्षसँग कुनै शुल्क लिनु हुँदैन । शुल्क लिनु भनेको

कन्या बेच्नु हो ।

**एतत्तु न परे चक्रुर्नापरे जातु साधवः ।**
**यदन्यस्य प्रतिज्ञाय पुनरन्यस्य दीयते ॥९९॥**

सनातन देखि चलेको र अहिलेसम्म कायम रहेको परम्परा अनुसार कन्यादान एकपटक मात्र गरिन्छ । एकपटक एउटालाई दिइएको कन्या फेरी अर्कोलाई दिइँदैन ।

**नानुशुश्रुम जात्वेतत्पूर्वेष्वपि हि जन्मसु ।**
**शुल्कसंज्ञेन मूल्येन छन्नं दुहितृविक्रयम् ॥१००॥**

भृगु भन्दछन्-मैले पूर्वजले कन्या बेचेको वा वरपक्षले शुल्क तिरेको कुनै घटना आजसम्म सुनेको छैन र त्यस्तो प्रचलनको कुनै प्रमाण पनि भेटिँदैन ।

**अन्योन्यस्याव्यभिचारो हि भवेदामरणान्तिकः ।**

**एष धर्मः समासेन ज्ञेयः स्त्रीपुंसयोः परः ॥१०१॥**

पतिपत्नीकारुपमा स्त्रीपुरुषले विवाह गरेर जीवनभर सम्भोग नगर्नुलाई पनि श्रेष्ठ धर्म नै सम्झनु पर्दछ ।

**तथा नित्यं यतेयातां स्त्रीपुंसौ तु कृतक्रियौ ।**
**यथा नाभिचरेतां तौ वियुक्ताावितरेतरम् ॥१०२॥**

स्त्रीपुरुषले एक पटकको विवाह-बन्धनको सम्बन्धलाई आमरण निभाउने प्रयास गर्नु पर्दछ । छुट्टै बस्न वा कुनै कुरो लुकिछिपी गर्नु हुँदैन ।

**एष स्त्रीपुंसयोरुक्तो धर्मो वो रतिसंहितः ।**
**आपद्यपत्यप्राप्तिश्च दायभागं निबोधत ॥१०३॥**

स्त्री-पुरुषका धर्म, प्रेम सम्बन्ध, सङ्कट आदिका बारेमा यि कुरा बताएँ
अब अंशबण्डाका बारेमा बताउँदछु ।

**ऊर्ध्वं पितुश्च मातुश्च समेत्य भ्रातरः समम् ।**
**भजेरन्पैतृकं रिक्थमनीशास्ते हि जीवतोः ॥१०४॥**

मातापिता बितेपछि पैतृक सम्पत्तिमा सबै छोराहरुको समान हक हुन्छ र तिनले उक्त सम्पत्ति भाग लगाउन सक्दछन् तर मातापिता जिउँदै हुँदा भाग लगाउन भने सक्दैनन् ।

**ज्येष्ठ एव तु गृह्णीयात्पित्र्यं धनमशेषतः ।**
**शेषास्तमुपजीवेयुर्यथैव पितरं तथा ॥१०५॥**

मातापिता बितेपछि पैत्रिक सम्पत्ति सबै जेठो पुत्रले लिनू र भाइबहिनी आदिलाई पितासमान संरक्षण गर्नू ।



**ज्येष्ठेन जातमात्रेण पुत्रो भवति मानवः ।**
**पितृणामनृणश्चैव स तस्मात्सर्वमर्हति ॥१०६॥**

जन्मनासाथ बाबु पुत्रवान् भनी चिनिने र पितृऋणबाट मुक्त भएको सन्तोष प्राप्त गर्ने हुनाले यही आधारमा बाबुको सम्पत्तिको वास्तविक अधिकारी जेठो छोरो नै हुन्छ ।

**यस्मिन्नृणं सन्नयति येन चानन्त्यमश्नुते ।**
**स एव धर्मजः पुत्रः कामजानितरान्विदुः ॥१०७॥**

जसको जन्मले पुरुष पितृऋण र श्राद्धतर्पणको चिन्ताबाट मुक्त भई मोक्षको ढोका खोल्दछ त्यही नै धर्मले उत्पन्न पुत्र हो । बाँकी पुत्रहरु त 'कामज पुत्र' हुन् भनिन्छ ।

**पितेव पालयेत्पुत्रान्ज्येष्ठो भ्रातृन् यवीयसः ।**
**पुत्रवच्चापि वर्तेरन् ज्येष्ठे भ्रातरि धर्मतः ॥१०८॥**

जेठोले भाइहरूलाई पुत्रवत् पालन गर्नु पर्दछ । भाइहरूले पनि दाजुलाई पितालाई जस्तै आदरसम्मान गर्नु पर्दछ ।

**ज्येष्ठः कुलं वर्धयति विनाशयति वा पुनः ।**
**ज्येष्ठः पूज्यतमो लोके ज्येष्ठः सद्भिरगर्हितः ॥१०९॥**

जेठोबाटै कुलको वृद्धि अथवा नाश हुने हुनाले संसारमा जेठो छोरालाई अत्यन्त पूज्य मानिन्छ र उसको निन्दालाई सज्जनहरु पाप मान्दछन् ।

**यो ज्येष्ठो ज्येष्ठवृत्तिः स्यान्मातेव स पितेव सः ।**
**अज्येष्ठवृत्तिर्यस्तु स्यान्न सम्पूज्यस्तु बन्धुवत् ॥११०॥**

जेठोले सदैव ज्येष्ठताको परिचय दिँदै उदारता र सहृदयता देखाई भाइहरूलाई पुत्रवत् लालनपालन गर्नू । नगरे अरु उ नातेदार भन्दा पनि निकृष्ट हुन्छ ।



**एवं सह वसेयुर्वा पृथग्वा धर्मकाम्यया ।**
**पृथग्विवर्धते धर्मस्तस्माद्धर्म्या पृथक्क्रिया ॥१११॥**

यसरी सबै दाजुभाइ सगोलमै रहन सक्दछन् । सँगै रहनबस्न नसके न्यायोचित ढङ्गले पैत्रिक सम्पत्तिको विभाजन पनि गर्न सक्दछन् ।

**ज्येष्ठस्य विंशउद्धारः सर्वद्रव्याच्च यद्वरम् ।**
**ततोऽर्धं मध्यमस्य स्यात्तुरीयं तु यवीयसः ॥११२॥**

अंशबण्डा गर्नुपूर्व सम्पत्तिको उत्कृष्ट भाग पितासँग मिलेर सम्पत्ति जोरजम्मा गर्न गरेको योगदानका लागि जेठो छोरालाई छुट्टै दिनुपर्दछ । यसलाई उद्धार भाग वा जेठाक पनि भनिन्छ । यसरी विशेष कुरा भागबण्डा गर्दा जेठोलाई बीस भागको एक भाग, माहिलोलाई चालीस भागको एक भाग, साहिँलोलाई साठी भागको एक भाग गर्दै भाग लगाउनु पर्दछ ।

**ज्येष्ठश्चैव कनिष्ठश्च संहरेतां यथोदितम् ।**
**येऽन्ये ज्येष्ठकनिष्ठाभ्यां तेषां स्यान्मध्यमं धनम् ॥११३॥**

यसरी सम्पत्ति भाग लगाउने हो भने पहिले जेठो र कान्छोलाई भाग लगाउनु पर्दछ ।
त्यसपछि अन्य भाइले बचेका धनसम्पत्ति भाग लगाउनु पर्दछ ।

**सर्वेषां धनजातानामाददीताग्र्यमग्रजः ।**
**यच्च सातिशयं किञ्चिद्दशतश्चाप्नुयाद्वरम् ॥११४॥**

पैत्रिक सम्पत्तिमा सबभन्दा उत्तम, महगो, दुर्लभ कुरा लिने अधिकार जेठो छोरालाई मात्र हुन्छ ।

**उद्धारो न दशस्वस्ति संपन्नानां स्वकर्मसु ।**
**यत्किंचिदेव देयं तु ज्यायसे मानवर्धनम् ॥११५॥**

धनसम्पत्ति भाग लगाउँदा उत्तम दश कुरा लिने अधिकार जेठो छोरालाई हुन्छ ।
दशभन्दा बढी उत्तम कुरा भए अरु भाइहरूलाई भाग लाग्दछ ।

**एकाधिकं हरेज्ज्येष्ठः पुत्रोऽध्यर्धं ततोऽनुजः ।**
**अंशमंशं यवीयांस इति धर्मो व्यवस्थितः ॥११७॥**

जेठोले अरु भाइकोभन्दा एक भाग बढी र माहिलोले आधा भाग बढी लिई बाँकी सम्पत्ति अरु
भाइले बराबर भाग लगाउनू ।

**स्वेभ्योंऽशेभ्यस्तु कन्याभ्यः प्रदद्युर्भ्रातरः पृथक् ।**
**स्वात्स्वादंशाच्चतुर्भागं पतिताः स्युरदित्सवः ॥११८॥**

भिन्न हुँदा दाजुभाइले आआफ्नो भागबाट चार भागको एकभाग दीदिबहिनीलाई दिनू ।
नदिने दाजुभाइ पतित र भ्रष्ट मानिन्छन् ।

**अजाविकं सैकशफं न जातु विषमं भजेत् ।**
**अजाविकं तु विषमं ज्येष्ठस्यैव विधीयते ॥११९॥**

जोर संख्याका दाजुभाई भिन्न हुँदा बिजोर संख्याका खुर हुने जनावरहरु भाग नलगाउनू सबै जेठोलाई दिनू ।

**यवीयाञ्ज्येष्ठभार्यायां पुत्रमुत्पादयेद्यदि ।**
**समस्तत्र विभागः स्यादिति धर्मो व्यवस्थितः ॥१२०॥**

नियोग विधिले उत्पन्न भतिजो र काकाका बीचमा बराबर अंश लगाउनू ।

**उपसर्जनं प्रधानस्य धर्मतो नोपपद्यते ।**
**पिता प्रधानं प्रजने तस्माद्धर्मेण तं भजेत् ॥१२१॥**

धनसम्पत्ति जोगाउने वा कमाउने वास्तविक र धर्मअनुसारको श्रेय त पितालाई नै जान्छ । यसैले छोराहरूले उनलाई प्रमुख मान्दै सेवा गर्नु पर्दछ ।



**पुत्रः कनिष्ठो ज्येष्ठायां कनिष्ठायां च पूर्वजः ।**
**कथं तत्र विभागः स्यादिति चेत्संशयो भवेत् ॥१२२॥**

यदि पहिली पत्नीबाट सन्तान हुनुभन्दा पहिले नै दोश्री पत्नीबाट सन्तान उत्पन्न भएका छन् भने कसरी अंशबण्डा गर्ने भनेर द्विविधा उत्पन्न भए यसरी भाग लगाउनू...।

**एकं वृषभमुद्धारं संहरेत स पूर्वजः ।**
**ततोऽपरे ज्येष्ठवृषास्तदूनानां स्वमातृतः ॥१२३॥**

जेठी पत्नीतिरको छोरोलाई एउटा साँढे बढी दिनू । त्यसपछि अरु छोराहरूले आमाको विवाह क्रम अनुसार अंश ग्रहण गर्नू ।

**ज्येष्ठस्तु जातो ज्येष्ठायां हरेद्वृषभषोडशाः ।**
**ततः स्वमातृतः शेषा भजेरन्निति धारणा ॥१२४॥**

जेठी आमाबाट जन्मेको जेठो छोरालाई सोह्र वटा साँढे बढी दिनू । बाँकी छोराहरुले आमाको विवाह क्रम अनुसार आआफ्ना भाग लिनू ।

**सदृशस्त्रीषु जातानां पुत्राणामविशेषतः ।**
**न मातृतो ज्यैष्ठ्यमस्ति जन्मतो ज्यैष्ठ्यमुच्यते ॥१२५॥**

समान वर्णका स्त्रीका सन्तानहरूले आमाको विवाह क्रम अनुसार नभई आआफ्नो जन्म क्रमका आधारमा ज्येष्ठताको क्रम निर्धारण गर्नू ।

**जन्मज्येष्ठेन चाह्वानं सुब्रह्मण्यास्वपि स्मृतम् ।**
**यमयोश्चैव गर्भेषु जन्मतो ज्येष्ठता स्मृता ॥१२६॥**



वेदमा जहाँ जेठो छोरालाई देवताको आवाहनको अधिकारका कुरा गरिएको छ तथा जहाँ जुम्ल्याहा छोरामा जेठोकान्छोको निर्णय गरिएको छ त्यहाँ जन्मलाई नै आधार मानिएको छ ।

**अपुत्रोऽनेन विधिना सुतां कुर्वीत पुत्रिकाम् ।**
**यदपत्यं भवेदस्यां तन्मम स्यात्स्वधाकरम् ॥१२७॥**

छोरा नहुनेले छोरीलाई पनि छोरो बनाउन सक्छ र विवाहमा 'यो छोरीको छोरो मेरो दत्तक पुत्र हुनेछ र त्यसले नै मेरो श्राद्ध-तर्पण आदि गर्नेछ' भनी घोषणा गर्ने अधिकार छ ।

**अनेन तु विधानेन पुरा चक्रेऽथ पुत्रिकाः ।**
**विवृद्ध्यर्थं स्ववंशस्य स्वयं दक्षः प्रजापतिः ॥१२८॥**

यसरी नै पुत्रहीन दक्षले छोरीहरुको गर्भबाट उत्पन्न पुत्रलाई आफ्ना पुत्र बनाई तीनै मार्फत आफ्नो वंश चलाएका थिए ।

**ददौ स दश धर्माय कश्यपाय त्रयोदश ।**
**सोमाय राज्ञे सत्कृत्य प्रीतात्मा सप्तविंशतिम् ॥१२९॥**

दक्षले प्रेम र सम्मानका साथ आफ्ना छोरीमध्ये दश धर्मराजलाई, तेह्र कश्यपलाई र सत्ताईस चन्द्रमालाई विवाह गरेर दिए र तीबाट उत्पन्न पुत्रलाई आफ्नो पुत्रको रुपमा अपनाएका थिए ।

**यथैवात्मा तथा पुत्रः पुत्रेण दुहिता समा ।**
**तस्यामात्मनि तिष्ठन्त्यां कथमन्यो धनं हरेत् ॥१३०॥**

शास्त्रले 'मानिस स्वयं पुत्ररुपमा जन्मन्छ' भनेको कुरा छोरीमा पनि लागु हुने भएपछि छोरी हुँदाहुँदै कसैको धन अरुले लिनु कसरी औचित्यपूर्ण हुन्छ ? ।

**मातुस्तु यौतकं यत्स्यात्कुमारीभाग एव सः ।**
**दौहित्र एव च हरेदपुत्रस्याखिलं धनम् ॥१३१॥**



अपुता स्त्रीद्वारा छोडिएको धनमा छोरीको हक हुन्छ । यसरी हेर्दा छोरीतिरको छोराको हक हुन्छ अर्थात पुत्रहीन पिताको सबै सम्पत्तिमा छोरीपट्टीको नातीको नै हक हुनपर्ने पनि हो ।

**दौहित्रो ह्यखिलं रिक्थमपुत्रस्य पितुर्हरेत् ।**
**स एव दद्याद् द्वौ पिण्डौ पित्रे मातामहाय च ॥१३२॥**

आफ्ना र आमाका मातापिताको पनि श्राद्धतर्पण तथा पिण्डदान गर्नुपर्ने दायित्व हुने हुनाले पुत्रहीन आमाका मातापिताको सम्पत्तिको स्वामी पनि छोरीको छोरो नै हुन्छ ।

**पौत्रदौहित्रयोर्लोके न विशेषोऽस्ति धर्मतः ।**
**तयोर्हि मातापितरौ सम्भूतौ तस्य देहतः ॥१३३॥**

विचार गर्ने हो भने दुवै नातीमा कुनै फरक छैन । एउटामा पिताको र अर्कोमा माताको अंश प्रधान हुन्छ फरक यत्ति हो । नत्र त दुबै एउटै मातापिताका शरीरबाट नै उत्पन्न भएका त हुन् ।

**पुत्रिकायां कृतायां तु यदि पुत्रोऽनुजायते ।**
**समस्तत्र विभागः स्याज्ज्येष्ठता नास्ति हि स्त्रियाः ॥१३४॥**

छोरीको छोरालाई धर्मपुत्र (दत्तक पुत्र) बनाएपछि आफ्नू पनि छोरो जन्मिए दुवैमा सम्पत्तिको समान वितरण गर्नू । धर्मपुत्रलाई जेठोको फाइदा नदिनू ।

**अपुत्रायां मृतायां तु पुत्रिकायां कथञ्चन ।**
**धनं तत्पुत्रिकाभर्ता हरेतैवाविचारयन् ॥१३५॥**

पुत्रकारुपमा अपनाएकी छोरी निसन्तान बितिन् भने बाबुको सम्पत्तिमा ज्वाईंको अधिकार हुन्छ सोच्नै पर्दैन ।

**अकृता वा कृता वाऽपि यं विन्देत्सदृशात्सुतम् ।**
**पौत्रा मातामहस्तेन दद्यात्पिण्डं हरेद्धनम् ॥१३६॥**



छोरीलाई पुत्र घोषणा गरेको वा नगरेको भएपनि नाति पाउँदा ज्वाईंछोरी मात्र नभै हजूरबाबु पनि पुत्रवान् भनेर चिनिन्छन् । त्यही बालकले आमाका मातापिताको पनि श्राद्धतर्पण र पिण्डदान गर्दछ । त्यसैले मामाघरका हजूरबाबुको सम्पत्तिमा उसको स्वतःसिद्ध अधिकार हुन जान्छ ।

**पुत्रेण लोकाञ्जयति पौत्रेणानन्त्यमश्नुते ।**
**अथ पुत्रस्य पौत्रेण व्रध्नस्याप्नोति विष्टपम् ॥१३७॥**

छोरो जन्मेपछि पुरुष लोकविजयी, नाती जन्मेपछि अनन्त सुख भोगी र पनाती जन्मेपछि आदित्यलोकको दिव्य सुख भोग्ने हुन्छ ।

**पुम्नाम्नो नरकाद्यस्मात्त्रायते पितरं सुतः ।**
**तस्मात्पुत्र इति प्रोक्तः स्वयमेव स्वयम्भुवा ॥१३८॥**

पितालाई नरकबाट तार्ने हुनाले छोरालाई ब्रह्माले 'पुत्र' नाम दिएका हुन् ।

'पु' को अर्थ नरक र 'त्र' को अर्थ बचाउने हुन्छ ।

**पौत्रदौहित्रयोर्लोके विशेषो नोपपद्यते ।**
**दौहित्रोऽपि ह्यमुत्रैनं संतारयति पौत्रवत् ॥१३९॥**

छोरा वा छोरीको छोरोमा कुनै विशेष फरक छैन किन कि छोरीको छोराले पनि पितृकुलका पितृको उद्धार गरेझैं मातृकुलका पितृको पनि उद्धार गर्दछ ।

**मातुः प्रथमतः पिण्डं निर्वपेत्पुत्रिकासुतः ।**
**द्वितीयं तु पितुस्तस्यास्तृतीयं तत्पितुः पितुः ॥१४०॥**

पुत्रिकापुत्रले पहिलो आमालाई, दोश्रो आमाका पितालाई, तेश्रो आमाका हजूरबालाई दिई अनि मात्र आफ्ना पितृलाई पिण्ड दिनू ।

**उपपन्नो गुणैः सर्वैः पुत्रो यस्य तु दत्त्रिमः ।**

**स हरेतैव तद्रिक्थं सम्प्राप्तोऽप्यन्यगोत्रतः ॥१४१॥**

विद्या, विनय र शील आदि गुणले सम्पन्न छ भने अर्कै गोत्रको भएपनि 'दत्तक' पुत्र धर्मपिताको सम्पत्तिको साँचो अर्थमा अधिकारी हुन्छ ।

**गोत्ररिक्थे जनयितुर्न हरेद्दत्त्रिमः क्वचित् ।**
**गोत्ररिक्थानुगः पिण्डो व्यपैति ददतः स्वधा ॥१४२॥**

दत्तक पुत्रलाई आफूलाई जन्म दिने बाबुको सम्पत्ति र गोत्रमा अधिकार हुँदैन किन कि उसले जन्मदिने पिता तथा पितृहरुलाई पिण्डदान गर्दैन ।

**अनियुक्तासुतश्चैव पुत्रिण्याप्तश्च देवरात् ।**
**उभौ तौ नार्हतो भागं जारजातककामजौ ॥१४३॥**

नियोग विधि अपनाएर वा नपनाई परपुरुषबाट छोरीले जन्माएको छोराको मावली हजूरबाबुको र आफ्नै बाबुको सम्पत्तिमा कुनै अधिकार हुँदैन किन कि यी दुवैलाई अवैध जारपुत्र नै सम्झिनु पर्दछ ।

**नियुक्तायामपि पुमान्नार्यां जातोऽविधानतः ।**
**नैवार्हः पैतृकं रिक्थं पतितोत्पादितो हि सः ॥१४४॥**

नियोग विधिको पालना राम्ररी नगरी जन्माएको सन्तान कामुकको सन्तान हुने हुनाले पतित हुन्छ र बाबुको सम्पत्तिको कुनै हालतमा उत्तराधिकारी हुँदैन ।

**हरेत्तत्र नियुक्तायां जातः पुत्रो यथौरसः ।**
**क्षेत्रिकस्य हि तद्बीजं धर्मतः प्रसवश्च सः ॥१४५॥**

नियोग विधिमा नियमानुसार स्त्रीको गर्भ र पुरुषको वीर्यबाट उत्पन्न बालक त 'औरस-पुत्र' समान हुन्छ र पिताको सम्पत्तिको पूर्ण उत्तराधिकारी हुन्छ ।



**धनं यो बिभृयाद्भ्रातुर्मृतस्य स्त्रियमेव च ।**
**सोऽपत्यं भ्रातुरुत्पाद्य दद्यात्तस्यैव तद्धनम् ॥१४६॥**

मरेको भाईकी पत्नी र सम्पत्तिमा अधिकार जमाउनेले पनि नियोग विधिले उसका सन्तान भएपछि सम्पत्ति उसलाई फर्काउनुपर्दछ ।

**याऽनियुक्ताऽन्यतः पुत्रं देवराद्वाप्यवाप्नुयात् ।**
**तं कामजमरिक्थीयं वृथोत्पन्नं प्रचक्षते ॥१४७॥**

नियोग विधि बिना देवर वा अरु कसैसँगबाट उत्पन्न पुत्र, वासनाले उत्पन्न भएकोले व्यर्थको पुत्र मानिन्छ । यस्ताको न सामाजिक मान्यता छ न त यस्ताको
पैत्रिक सम्पत्तिमा कुनै अधिकार नै हुन्छ ।

**एतद्विधानं विज्ञेयं विभागस्यैकयोनिषु ।**
**बह्वीषु चैकजातानां नानास्त्रीषु निबोधत ॥१४८॥**

समान जातका स्त्रीका समान जातिका पुरुषबाट जन्मने पुत्रहरुको अंशबण्डाका बारेमा बताएँ । अब एउटै पतिका धेरै जातका स्त्रीहरूबाट जन्मिएका पुत्रहरूको अंशबण्डाका बारेमा बताउँदछु ।

**ब्राह्मणस्यानुपूर्व्येण चतस्रस्तु यदि स्त्रियः ।**
**तासां पुत्रेषु जातेषु विभागेऽयं विधिः स्मृतः ॥१४९॥**

ब्राह्मणका चारै वर्णका पत्नी भई सबैबाट छोराको जन्म भएका अवस्थामा अंश बण्डाको विधिका बारेमा बताउँदछु ।

**कीनाशो गोवृषो यानमलङ्कारश्च वेश्म च ।**
**विप्रस्यौद्धारिकं देयमेकांशश्च प्रधानतः ॥१५०॥**



जोत्न मिल्ने साँढे, गाई, घोडा आदि वाहन, गरगहना, घर र अन्य उत्तम कुरा अलग्गै ब्राह्मणीबाट जन्मेका पुत्रलाई मात्र दिनु पर्दछ ।

**त्र्यंशं दायाद्धरेद्विप्रो द्वावंशौ क्षत्रियासुतः ।**
**वैश्याजः सार्धमेवांशमंशं शूद्रासुतो हरेत् ॥१५१॥**

ब्राह्मणबाट चार वर्णमा जन्माइएका छोराहरुलाई क्रमशः तीन, दुई, डेढ र दशौं भाग लिने अधिकार छ ।

**सर्वं वा रिक्थजातं तद्दशधा परिकल्प्य च ।**
**धर्म्यं विभागं कुर्वीत विधिनाऽनेन धर्मवित् ॥१५२॥**

अथवा धर्मात्मा पिताले ब्राह्मणी तिरको पुत्रलाई केही छुट्टै नदिई निम्नानुसार भागबण्डा गर्न पनि सक्दछ ।

**चतुरोंऽशान्हरेद्विप्रस्त्रीनंशान्क्षत्रियासुतः ।**
**वैश्यापुत्रो हरेद्व्द्व्यंशमंशं शूद्रासुतो हरेत्॥१५३॥**

सबै सम्पत्तिलाई दश भाग लगाई चार वर्णका पुत्रलाई क्रमशः चार, तीन, दुई र एक भाग दिनू ।

**यद्यपि स्यात्तु सत्पुत्रोऽप्यसत्पुत्रोऽपि वा भवेत् ।**
**नाधिकं दशमाद्दद्याच्छूद्रापुत्राय धर्मतः ॥१५४॥**

ब्राह्मणले शूद्राबाट जन्माउने पुत्रका बारेमा योग्य अयोग्य सोच्न आवश्यक छैन ।
उसलाई पिताको सम्पत्तिको दशौं भागभन्दा बढी पाउने कुनै अधिकार छैन ।

**ब्राह्मणक्षत्रियविशां शूद्रापुत्रो न रिक्थभाक् ।**
**यदेवास्य पिता दद्यात्तदेवास्य धनं भवेत्॥१५५॥**

ब्राह्मण, क्षत्रिय र वैश्यबाट शूद्रा मार्फत जन्माइने पुत्रलाई पैत्रिक सम्पत्ति
पाउने अधिकार हुँदैन । पिताले जति दिन्छन् त्यसैलाई आफ्नू अंश सम्भिनु पर्दछ ।

**समवर्णासु ये जाताः सर्वे पुत्रा द्विजन्मनाम् ।**
**उद्धारं ज्यायसे दत्वा भजेरन्नितरे समम्॥१५६॥**

द्विजका समान वर्णका पत्नीबाट जन्मने पुत्रहरुले जेठाक छुटयाएर अरु बराबर अंश पाउने
अधिकार हुन्छ ।

**शूद्रस्य तु सवर्णैव नान्या भार्या विधीयते ।**
**तस्यां जाताः समांशाः स्युर्यदि पुत्रशतं भवेत्॥१५७॥**

शूद्रको समान वर्णकी मात्र पत्नी हुने हुनाले तीबाट जन्मने पुत्रहरु सबैले बराबर अंश पाउने
अधिकार हुन्छ ।

**पुत्रान्द्वादश यानाह नृणां स्वायंभुवो मनुः ।**
**तेषां षड्बन्धुदायादाः षडदायादबान्धवाः ॥१५८॥**

निम्न बाह्र थरीका पुत्रमध्ये छ थरीका पुत्रलाई अंशियार र छ थरीका पुत्रलाई
अंश नपाउने भनी मनुले विभाजन गरेका छन् ।

**औरसः क्षेत्रजश्चैव दत्तः कृत्रिम एव च ।**
**गूढोत्पन्नोऽपविद्धश्च दायादा बान्धवाश्च षट् ॥१५९॥**

औरस, क्षेत्रज, दत्तक, कृत्रिम, गूढोत्पन्न र अपविद्ध पुत्रहरु
पैत्रिक सम्पत्तिका उत्तराधिकारी हुन्छन् ।

**कानीनश्च सहोढश्च क्रीतः पौनर्भवस्तथा ।**
**स्वयंदत्तश्च शौद्रश्च षडदायादबान्धवा ॥१६०॥**



कानीन, सहोढ, क्रीत, पौनर्भव, स्वयंदत्त र शौद्र पुत्रहरु पैत्रिक सम्पत्तिका उत्तराधिकारी हुँदैनन् ।

**यादृशं फलमाप्नोति कुप्लवैः संतरन् जलम् ।**
**तादृशं फलमाप्नोति कुपुत्रैः संतरंस्तमः ॥१६१॥**

बिग्रिएको डुङ्गाबाट सागर तर्ने कुरा सोच्नु जस्तै कुपुत्रबाट
आफ्नो सद्गतिको आशा गर्नु मूर्खता हुन्छ ।

**यद्येकरिक्थिनौ स्यातां औरसक्षेत्रजौ सुतौ ।**
**यस्य यत्पैतृकं रिक्थं स तद्गृह्णीत नेतरः ॥१६२॥**

क्षेत्रज छोरो जन्मिएपछि औरस पुत्र जन्मिए दुवैले पैत्रिक सम्पत्तिलाई बराबर भाग लगाउनू,
एकअर्काको भाग खोस्न नखोज्नू ।

**एक एवौरसः पुत्रः पित्र्यस्य वसुनः प्रभुः ।**
**शेषाणां आनृशंस्यार्थं प्रदद्यात्तु प्रजीवनम् ॥१६३॥**

वास्तवमा भन्ने हो भने पैत्रिक सम्पत्तिको औरस पुत्र नै उत्तराधिकारी हुन्छ अरु पुत्रलाई त गरी खान दयाले केही दिनु नै पर्याप्त हुन्छ ।

**षष्ठं तु क्षेत्रजस्यांशं प्रदद्यात्पैतृकाद्धनात् ।**
**औरसो विभजन्दायं पित्र्यं पञ्चममेव वा ॥१६४॥**

औरस पुत्रले पैत्रिक सम्पत्तिलाई छ भाग लगाई पाँच भाग आफूले राखी एक भाग क्षेत्रज पुत्रलाई दिनू । औरस पुत्र चाहन्छ भने बाँकी पाँच भाग पनि भाग लगाउन सक्दछ ।

**औरसक्षेत्रजौ पुत्रौ पितृरिक्थस्य भागिनौ ।**
**दशापरे तु क्रमशो गोत्ररिक्थांशभागिनः ॥१६५॥**



औरस र क्षेत्रज पुत्रका बीचमा अंशबण्डाको विधि यही हो अन्य दश थरीका पुत्रलाई भने वंशानुगत सम्पत्तिको केही भाग दिनू ।

**स्वक्षेत्रे संस्कृतायां तु स्वयं उत्पादयेद्धि यम् ।**
**तं औरसं विजानीयात्पुत्रं प्रथमकल्पितम् ॥१६६॥**

आफ्नै वर्णकी विवाहिता स्त्रीको गर्भमा आफ्नै वीर्य सेचन गरी त्यस गर्भबाट जन्मने पुत्रलाई 'औरस' पुत्र भनिन्छ ।

**यस्तल्पजः प्रमीतस्य क्लीबस्य व्याधितस्य वा ।**
**स्वधर्मेण नियुक्तायां स पुत्रः क्षेत्रजः स्मृतः ॥१६७॥**

मरेको, नपुंसक भएको वा कुनै असाध्य रोगी पुरुषको स्त्रीबाट नियोग-विधि (पतिपत्नीको सहमतीमा सार्वजनिक रुपमा घोषणा गरी शरीरमा घिउ दलेको परपुरुषबाट गर्भधारणपर्यन्त

गराइने सम्भोगको विधि) बाट जन्मने पुत्रलाई 'क्षेत्रज' पुत्र भनिन्छ ।

**माता पिता वा दद्यातां यमद्भिः पुत्रमापदि ।**
**सदृशं प्रीतिसंयुक्तं स ज्ञेयो दत्त्रिमः सुतः ॥१६८॥**

मातापिताले कुनै विपत्तिमा वा खुशीले केही लेनदेन नगरी अर्कोलाई दिएको पुत्रलाई 'दात्रिम' वा 'दत्तक' पुत्र भनिन्छ ।

**सदृशं तु प्रकुर्याद्यं गुणदोषविचक्षणम् ।**
**पुत्रं पुत्रगुणैर्युक्तं स विज्ञेयश्च कृत्रिमः ॥१६९॥**

गुणदोष केही नसोची आफ्नै जातको कुनै बालकलाई योग्य ठानी पतिपत्नीले पुत्र-रुपमा अपनाएको बालकलाई 'कृत्रिम' पुत्र भनिन्छ ।

**उत्पद्यते गृहे यस्तु न च ज्ञायेत कस्य सः ।**

**स गृहे गूढ उत्पन्नस्तस्य स्याद्यस्य तल्पजः ॥१७०॥**

कुनै घरमा उत्पन्न बालकको पिता थाहा नभए त्यसलाई 'गूढ' पुत्र भनिन्छ र त्यस्तो पुत्रलाई जसले पाल्दछ उ त्यसैको पुत्र हुन्छ ।

**मातापितृभ्यामुत्सृष्टं तयोरन्यतरेण वा ।**
**यं पुत्रं परिगृह्णीयादपविद्धः स उच्यते ॥१७१॥**

जन्माउने मातापिताले वा कुनै माता वा पिता मध्ये एकले त्यागेको वा उपेक्षा गरिएको र आवश्यकता हुनेले पालेको बालकलाई 'अपविद्ध' पुत्र भनिन्छ ।

**पितृवेश्मनि कन्या तु यं पुत्रं जनयेद्रहः ।**
**तं कानीनं वदेन्नाम्ना वोढुः कन्यासमुद्भवम् ॥१७२॥**

अविवाहिता कन्याको गर्भबाट पिताको घरमा जन्मिएको र उसको वास्तविक पतिले उक्त कन्या विवाह गरी अपनाइएको पुत्रलाई 'कानीन' पुत्र भनिन्छ ।

**या गर्भिणी संस्क्रियते ज्ञाताऽज्ञातापि वा सती ।**
**वोढुः स गर्भो भवति सहोढ इति चोच्यते ॥१७३॥**

जान-अनजानमा विवाह गरिएकी गर्भिणी कन्याबाट जन्मिएको र मन परी-नपरी अपनाइएको बालकलाई 'सहौढ' पुत्र भनिन्छ ।

**क्रीणीयाद्यस्त्वपत्यार्थं मातापित्रोर्यमन्तिकात् ।**
**स क्रीतकः सुतस्तस्य सदृशोऽसदृशोऽपि वा ॥१७४॥**

आफ्नो वंश चलाउनका लागि वास्तविक मातापितासँग मागेर वा किनेर अपनाइएको पुत्रलाई 'क्रीतक' पुत्र भनिन्छ ।



**या पत्या वा परित्यक्ता विधवा वा स्वयेच्छया ।**
**उत्पादयेत्पुनर्भूत्वा स पौनर्भव उच्यते ॥१७५॥**

पतिले छाडेकी वा विधवा स्त्रीले स्वेच्छाले परपुरुषसँग विवाहगरी जन्मिएको पुत्रलाई 'पौनर्भव' पुत्र भनिन्छ ।

**सा चेदक्षतयोनिः स्याद्गतप्रत्यागतापि वा ।**
**पौनर्भवेन भर्त्रा सा पुनः संस्कारमर्हति ॥१७६॥**

एकपटक पनि पतिसँग नसुतेकी वा एकदुई पटक सुतेर निराश भएर फर्केकी वा पतिद्वारा परित्यक्ता स्त्री आफूलाई पुत्रवती बनाउन सक्ने पुरुषसँग विवाह गर्न स्वतन्त्र हुन्छे ।

**मातापितृविहीनो यस्त्यक्तो वा स्यादकारणात् ।**
**आत्मानं स्पर्शयेद्यस्मै स्वयंदत्तस्तु स स्मृतः ॥१७७॥**

अनाथ वा आमाबाबुले छाडेको बालक स्वेच्छाले जसलाई मातापिता सम्झी बस्छ, त्यो बालक तिनको 'स्वयंदत्त' पुत्र भनेर चिनिन्छ ।

**यं ब्राह्मणस्तु शूद्रायां कामादुत्पादयेत्सुतम् ।**
**स पारयन्नेव शवस्तस्मात्पारशवः स्मृतः ॥१७८॥**

ब्राह्मणले शूद्राबाट जन्माउने सन्तानलाई जिउँदो लाश समान हुने हुनाले 'पारशव' भनिन्छ ।

**क्षेत्रजादीन्सुतानेकादश यथोदितान् ।**
**पुत्रप्रतिनिधीनाहुः क्रियालोपान्मनीषिणः ॥१८०॥**

औरसलाई छाडी बाँकी एघार थरी पुत्रलाई मातापिताको श्राद्धतर्पण र पिण्डदानको समस्या नआओस् भनेर मात्र विद्वानहरूबाट पुत्र मानिएको हो ।

**य एतेऽभिहिताः पुत्राः प्रसङ्गादन्यबीजजाः ।**

**यस्य ते बीजतो जातास्तस्य ते नेतरस्य तु ॥१८१॥**

औरस पुत्रको वर्णन गर्ने क्रममा जुन अन्य एघार थरीका पुत्रको वर्णन गरियो ती सबै वास्तवमा वीर्य सेचन गर्नेकै पुत्र हुन्छन् ।

**भ्रातृणामेकजातानामेकश्चेत्पुत्रवान्भवेत् ।**
**सर्वांस्तांस्तेन पुत्रेण पुत्रिणो मनुरब्रवीत् ॥१८२॥**

सहोदर दाजुभाइमा कुनै एकको छोरो भयो भने सबै दाजुभाइले आफूलाई पुत्रवान भएको सम्झनु पर्दछ भनेर मनुले भनेका छन् ।

**सर्वासामेकपत्नीनामेका चेत्पुत्रिणी भवेत् ।**
**सर्वास्तास्तेन पुत्रेण प्राह पुत्रवतीर्मनुः ॥१८३॥**

यसैगरी धेरै पत्नीहरुमा कुनै एउटीले छोरा पाएमा सबैले आफूलाई पुत्रवती सम्झिनु

पर्दछ भनी मनुले भनेका छन् ।

**श्रेयसः श्रेयसोऽलाभे पापीयान्रिक्थमर्हति ।**
**बहवश्चेत्तु सदृशाः सर्वे रिक्थस्य भागिनः ॥१८४॥**

औरसदेखि क्रमशः एउटा नहुँदा अर्को पुत्र पैत्रिक सम्पत्तिको उत्तराधिकारी हुन्छ ।
समान स्थितिमा सबैलाई बराबर भाग लाग्दछ ।

**न भ्रातरो न पितरः पुत्राः रिक्थहराः पितुः ।**
**पिता हरेदपुत्रस्य रिक्थं भ्रातर एव च ॥१८५॥**

छोरो हुनेको सम्पत्तिको एउटै उत्तराधिकारी त्यही छोरो हुन्छ ।
छोरो नभए त्यो सम्पत्तिमा पिता र दाजुभाइको हक लाग्दछ ।

**त्रयाणामुदकं कार्यं त्रिषु पिण्डः प्रवर्तते ।**

**चतुर्थः संप्रदातैषां पञ्चमो नोपपद्यते ॥१८६॥**

तीन थरीका पुत्र (औरस, क्षेत्रज र दत्तक) लाई जलदानको समेत अधिकार हुन्छ, चौथो कृत्रिम पुत्रलाई पिण्डदानको मात्र अधिकार हुन्छ । बाँकी दुई गूढ र अपविद्ध पुत्रलाई कुनै किसिमको पितृकार्य गर्ने अधिकार हुँदैन ।

**अनन्तरः सपिण्डाद्यस्तस्य तस्य धनं भवेत् ।**
**अत ऊर्ध्वं सकुल्यः स्यादाचार्यः शिष्य एव वा ॥१८७॥**

पुत्र नहुने पुरुषको सम्पत्तिमा क्रमशः सपिण्डी, कुल (वा परका नातेदार वा बन्धुबान्धव), आचार्य र ब्रह्मचारीको अधिकार हुन्छ ।

**सर्वेषामप्यभावे तु ब्राह्मणा रिक्थभागिनः ।**
**त्रैविद्याः शुचयो दान्तास्तथा धर्मो न हीयते ॥१८८॥**

यि कोही पनि नभए वेदज्ञ, पवित्र र संयमीत ब्राह्मणलाई उसको सम्पत्ति दिनु पर्दछ ।

**अहार्यं ब्राह्मणद्रव्यं राज्ञा नित्यमिति स्थितिः ।**
**इतरेषां तु वर्णानां सर्वाभावे हरेन्नृपः ॥१८९॥**

निसन्तान ब्राह्मणको सम्पत्ति सदाचारी ब्राह्मणहरूलाई नै बाँडेर दिनु पर्दछ ।
राजाले लिनु हुँदैन । अरु वर्णका हकदार कोही नहुनेको सम्पत्ति भने राजाले लिनू ।

**संस्थितस्यानपत्यस्य सगोत्रात्पुमाहरेत् ।**
**तत्र यद्रिक्थजातं स्यात्तत्तस्मिन्प्रतिपादयेत् ॥१९०॥**

निसन्तान मृत्यु हुने ब्राह्मणको सम्पत्ति कुनै ब्राह्मण कुमारलाई सम्झाएर तिनको पुत्र बन्न सहमत गराई उसैलाई दिनु पर्दछ ।

**द्वौ तु यौ विवदेयातां द्वाभ्यां जातौ स्त्रिया धने ।**

**तयोर्यद्यस्य पित्र्यं स्यात्तत्स गृह्णीत नेतरः ॥१९१॥**

दुई पिता र एक माताबाट जन्मने पुत्रहरुले आआफ्ना पिताको सम्पत्ति खानू । आफ्नो पिताको सम्पत्ति नभए अर्को पिताको सम्पत्ति लिने उसलाई अधिकार हुँदैन ।

**जनन्यां संस्थितायान्तु समं सर्वे सहोदराः ।**
**भजेरन्मातृकं रिक्थं भगिन्यश्च सनाभयः ॥१९२॥**

आमाको मृत्यु भएपछि आमाको कुनै सम्पत्ति छ भने सबै
छोराछोरीले बराबर भाग लगाउनु पर्दछ ।

**यास्तासां स्युर्दुहितरस्तासामपि यथार्हतः ।**
**मातामह्या धनात्किञ्चित्प्रदेयं प्रीतिपूर्वकम् ॥१९३॥**

आमाको कुनै सम्पत्ति भाग लगाउँदा भाञ्जीहरुलाई पनि स्नेहसाथ थेरथोर दिनुपर्दछ ।

**अधम्न्यध्यावाहनिकं दत्तञ्च प्रीतिकर्मणि ।**
**भ्रातृमातृपितृप्राप्तं षड्विधं स्त्रीधनं स्मृतम् ॥१९४॥**

विवाहमा अग्नी सामु दिइएको गोडधुवा आदि, विशेष समारोहमा दिइएको, प्रीतिकर्ममा पतिले दिएको, बाबु-आमा-दाजुभाईले लुकाएर वा देखाएर दिएको गरी छ प्रकारका धनलाई स्त्रीधन वा पेवा भनिन्छ ।

**अन्वाधेयं च यद्दत्तं पत्या प्रीतेन चैव यत् ।**
**पत्या जीवति वृत्तायाः प्रजायास्तद्धनं भवेत् ॥१९५॥**

विवाहमा दिइएको, नातागोताबाट दिइएको र पतिबाट स्त्रीलाई दिइएको धनमा पतिको अधिकार हुन्न केवल छोराछोरीको अधिकार हुन्छ ।



**ब्राह्मदैवार्षगन्धर्वप्राजापत्येषु यद्वसु ।**
**अप्रजायामतीतायां भर्तुरेव तदिष्यते ॥१९६॥**

ब्राह्म, दैव, आर्ष, प्राजापत्य र गन्धर्व विधिले विवाह गरिएकी स्त्रीको निसन्तान मृत्यु भएमा उनको स्त्रीधनमा लोग्नेको अधिकार हुन्छ ।

**यत्त्वस्याः स्याद्धनं दत्तं विवाहेष्वासुरादिषु ।**
**अप्रजायामतीतायां मातापित्रोस्तदिष्यते ॥१९७॥**

असुर आदि विधिले विवाह गरिएकी स्त्रीको निसन्तान मृत्यु भएमा उनको स्त्रीधनमा मातापिताको नै अधिकार हुन्छ ।

**स्त्रियान्तु यद्भवेद्वित्तं पित्रा दत्तं कथञ्चन ।**
**ब्राह्मणी तद्धरेत्कन्या यदपत्यस्य वा भवेत् ॥१९८॥**

असुर आदि विवाहमा ब्राह्मण कन्यालाई पिताले दिएको वा उनले कमाएको धनमाथि केवल उनको वा उनका सन्तानको हक लाग्दछ पतिको लाग्दैन ।

**न निर्हारं स्त्रियः कुर्युः कुटुम्बाद्बहुमध्यगात् ।**
**स्वकादपि च वित्ताद्धि स्वस्य भर्तुरनाज्ञया ॥१९९॥**

स्त्रीले कसेको लहैलहैमा वा लोभलालचमा परी पतिको आज्ञा नलिई गोप्यरूपले परिवारको वा आफ्नो धनले कुनै व्यापार-व्यवसाय गर्नु हुँदैन ।

**पत्यौ जीवति यः स्त्रीभिरलङ्कारो धृतो भवेत् ।**
**न तं भजेरन्दायादाः भजमानाः पतन्ति ते ॥२००॥**

पति जीवित हुँदै पत्नीले लगाएका कुरा र उनको पेवा धनलाई अंशबण्डा नगर्नू, उनकै स्वामित्वमा रहन दिनू । यसो नगर्नेहरु पतित मानिन्छन् ।



**अनंशौ क्लीबपतितौ जात्यन्धबधिरौ तथा ।**
**उन्मत्तजडमूकाश्च ये च केचिन्निरिन्द्रियः ॥२०१॥**

विकलाङ्ग, पागल, मूर्ख, नपुंसक, धर्म-भ्रष्ट र जातिच्यूत छोराहरुलाई पैतृक सम्पत्तिमा कुनै अधिकार हुँदैन ।

**सर्वेषामपि तु न्याय्यं दातुं शक्त्या मनीषिणा ।**
**ग्रामाच्छादनमत्यन्तं पतितो ह्यददद्भवेत् ॥२०२॥**

बुद्धिमानले उपरोक्त किसिमका दाजुभाइलाई आफ्नो सामर्थ्य अनुसार भरण-पोषण गर्नुपर्दछ । यसबाट पन्छिने व्यक्ति पतित मानिन्छ ।

**यद्यर्थिता तु दारैः स्यात्क्लीबादीनां कथञ्चन ।**
**तेषामुत्पन्नतन्तूनामपत्यं दायमर्हति ॥२०३॥**

पागल आदि पैतृक सम्पत्ति नपाउनेहरुले विवाह गरी सामान्य पुत्र जन्माएमा तथा तिनको अवस्था सामान्य भएमा तिनको अंश-भाग ती छोराहरूलाई दिनुपर्दछ ।

**यत्किञ्चित्पितरि प्रेते धनं ज्येष्ठोऽधिगच्छति ।**
**भागो यवीयसां तत्र यदि विद्यानुपालिनाम् ॥२०४॥**

पिता बितेपछि भाइहरुले सम्पत्ति सञ्चयनमा गरेको योगदानका आधारमा जेठोले आफूले लिएको जेठाकबाट केही भाग सबै भाइलाई दिनू ।

**अविद्यानां तु सर्वेषामीहातश्चेद्धनं भवेत् ।**
**समस्तत्र विभागः स्यादपित्र्य इति धारणा ॥२०५॥**

पैतृक नभई परिश्रमी भाइहरुले अर्के व्यवसाय गरी आर्जन गरेको धन व्यवसायमा संलग्न हुनेहरुले मात्र आपसी सहमतिमा बाँड्नू ।



**विद्याधनं तु यद्यस्य तत्तस्यैव धनं भवेत् ।**
**मैत्र्यमौद्वाहिकं चैव माधुपर्किकमेव च ॥२०६॥**

आफ्नो विद्याले कमाएको, मित्रले दिएको, दाइजो र मधुपर्कमा प्राप्त भएको धनमा केवल व्यक्तिविशेषको मात्र अधिकार हुन्छ ।

**भ्रातॄणां यस्तु नेहेत धनं शक्तः स्वकर्मणा ।**
**स निर्भाज्यः स्वकादंशात्किञ्चिद्दत्वोपजीविनम् ॥२०७॥**

आफ्नै पुरुषार्थले धनार्जन गर्न सक्षम कुनै दाजुभाइले अंश लिन नचाहे बाँकी दाजुभाइले उसलाई थेरथोर धन दिएर छुट्ट्याइदिनु पर्दछ ।

**अनुपघ्नन्पितृद्रव्यं श्रमेण यदुपार्जितम् ।**
**स्वयमीहितलब्धं तन्नाकामो दातुमर्हति ॥२०८॥**

पिताको धन उपयोग नगरी आफ्नै उद्यमले आर्जन गरेको धन दाजुभाइमा बाँडफाँड गर्न कुनै दाजुभाइ वाध्य हुँदैन ।

**पैतृकं तु पिता द्रव्यमनवाप्तं यदाप्नुयात् ।**
**न तत्पुत्रैर्भजेत्सार्धमकामः स्वयमर्जितम् ॥२०९॥**

अंशबण्डा भइसकेपछि हराएको वा माया मारेको कुनै धन प्राप्त हुँदा भाग लगाउन पिता वाध्य हुँदैनन्, आफू खुशि खर्च गर्न सक्दछन् ।

**विभक्ताः सह जीवन्तो विभजेरन्पुनर्यदि ।**
**समस्तत्र विभागः स्याज्ज्यैष्ठ्यं तत्र न विद्यते ॥२१०॥**

छुट्टिएपछि पुनः सगोलमा कुनै पेसा गर्ने अठोट गरेर फेरी छुट्टिनु पर्ने भए जेठोलाई विशेष भाग नभनी सबैलाई बराबरी अंश लगाउनु  पर्दछ ।



**येषां ज्येष्ठः कनिष्ठो वा हीयेतांश प्रदानतः ।**
**म्रियेतान्यतरो वापि तस्य भागो न लुप्यते ॥२११॥**

दाजुभाइमध्ये कसैले सन्यास लिएमा वा विदेशिएमा उसको अंश नहडपी अलग्गै राख्नू र उ वा उसका उत्तराधिकारी फर्केपछि दिनू ।

**सोदर्याः विभजेरंस्तं समेत्य सहिताः समम् ।**
**भ्रातरो ये च संसृष्टाः भगिन्यश्च सनाभयः ॥२१२॥**

कुनै दाजुभाइले सन्यास लिएमा वा उसको मृत्यु भएमा उसको भाग छुट्टयाई बाँकी पैतृक सम्पत्तिलाई मात्र बाँकी दाजुभाई र दीदिबहिनीले बराबर भागबण्डा गर्नू ।

**यो ज्येष्ठो विनिकुर्वीत लोभाद्भ्रातृन्यवीयसः ।**
**सोऽज्येष्ठः स्यादभागश्च नियन्तव्यश्च राजभिः ॥२१३॥**

भाई ठग्ने र धोखा दिने दाजुलाई राजाले अधिकारबाट हटाई दण्ड पनि दिनू ।

**सर्व एव विकर्मस्था नार्हन्ति भ्रातरो धनम् ।**
**न चादत्त्वा कनिष्ठेभ्यो ज्येष्ठः कुर्वीत यौतकम् ॥२१४॥**

शास्त्रविरुद्ध आचरण गर्ने दाजुभाइलाई पैतृक सम्पत्तिको उत्तराधिकारी हुन अयोग्य समझिनु पर्दछ । जेठोलाई भाइहरुको भाग नदिई सबै पैतृक सम्पत्तिमा रजाईं गर्न कुनै अधिकार हुँदैन ।

**भ्रातृणामविभक्तानां यद्युत्थानं भवेत्सह ।**
**न पुत्रभागं विषमं पिता दद्यात्कथञ्चन ॥२१५॥**

सगोलको संयुक्त उद्यम व्यवसायबाट आर्जित धनसम्पत्ति कसैलाई धेरै र कसैलाई थोरै भाग लगाउनु हुँदैन, सबैको बराबर अधिकार हुन्छ ।

**ऊर्ध्वं विभागाज्जातस्तु पित्र्यमेव हरेद्धनम् ।**

**संसृष्टास्तेन वा ये स्युर्विभजेत स तैः सह ॥२१६॥**

भिन्न भएपछि जन्मेको छोराले बाबुको बाँकी सम्पत्ति मात्र पाउने अधिकार हुन्छ । यसमा बाबुसँगै बसेको छोराका साथ सम्पत्ति बाँडफाँड गर्न पनि सकिन्छ ।

**अनपत्यस्य पुत्रस्य माता दायमवाप्नुयात् ।**
**मातर्यपि च वृत्तायां पितुर्माता हरेद्धनम् ॥२१७॥**

निसन्तान मृत्यु भई पत्नी समेत जीवित नरहेको अवस्थामा उसको सम्पत्ति माथि उसकी आमाको र आमा पनि नभए हजूरआमाको अधिकार हुन्छ ।

**ऋणे धने च सर्वस्मिन्प्रविभक्ते यथाविधि ।**
**पश्चाद्दृश्येत यत्किञ्चित्तत्सर्वं समतां नयेत् ॥२१८॥**

सबै ऋण तिरेर मात्र पैतृक सम्पत्ति बराबर भाग लगाउनू ।
ऋण नतिरी भाग लगाउनु अनुचित हुन्छ ।

**वस्त्रं पत्रमलङ्कारं कृतान्नमुदकं स्त्रियः ।**
**योगक्षेमं प्रचारं च न विभाज्यं प्रचक्षते ॥२१९॥**

भिन्न हुँदा वस्त्र, वाहन, गहना, पक्वान्न, पँधेरो, स्त्री एवं दैनिक उपभोगका
सामान्य वस्तुहरु भाग नलगाउनू ।

**अयमुक्तो विभागो वः पुत्राणां च क्रियाविधिः ।**
**क्रमशः क्षेत्रजादीनां द्यूतधर्मं निबोधत ॥२२०॥**

मैले औरस आदि पुत्रको अंशबण्डाका बारेमा बताएँ, अब जुवा खेलका नियम बताउँदछु ।

**द्यूतं समाह्वयं चैव राजा राष्ट्रान्निवारयेत् ।**

**राज्यान्तकरणावेतौ द्वौ दोषौ पृथिवीक्षिताम् ॥२२१॥**

राज्यमा जुवा र बाजीमा जनावर लडाउन नदिनू ।
दुवै कुरा राजा र राज्यका लागि घातक हुन्छन् ।

**प्रकाशमेतत्तास्कर्यं यद्देवनसमाह्वयौ ।**
**तयोर्नित्यं प्रतीघाते नृपतिर्यत्नवान्भवेत् ॥२२२॥**

दुबै खेल आफैं गई वा बोलाइएर गई खेल्नु डाँका गर्नु समान हो । देशमा जुवाडे भए देवता,
असुर र मानवले सर्वस्व सिद्ध्याउने हुनाले राजाले राज्यमा
उसलाई स्थान नदिन सधैं प्रयत्न गर्नू ।

**अप्राणिभिर्यत्क्रियते तल्लोके द्यूतमुच्यते ।**
**प्राणिभिः क्रियते यस्तु सः विज्ञेयः समाह्वयः ॥२२३॥**

निर्जीव वस्तुले खेली हार्नेको भागमा जित्नेको अधिकार हुने खेल "जुवा"
र प्राणीलाई दाउमा राखी खेलिने खेल "समाह्वय" भनी जान्नू ।

**द्यूतं समाह्वयं चैव यः कुर्यात्कारयेत वा ।**
**तान्सर्वान्घातयेद्राजा शूद्रांश्च द्विजलिङ्गिनः ॥२२४॥**

द्विजको चिह्न धारण गर्ने शुद्रलाई जस्तै यि खेलका आयोजकलाई पनि
वध (वा कठोर दण्ड दिने काम) गर्नु पर्दछ ।

**कितवान्कुशीलवान्क्रूरान्पाषण्डस्थांश्च मानवान् ।**
**विकर्मस्थान्शौण्डिकांश्च क्षिप्रं निर्वासयेत्पुरात् ॥२२५॥**

जुवाडे, दुराचारी, द्रोही, पाषण्ड, धर्मशास्त्र विरोधी कार्य गर्ने र मदिरा
बेच्ने मानिसलाई तुरुन्त शहरबाट निष्कासन गर्नू ।



**एते राष्ट्रे वर्तमाना राज्ञः पच्छन्नतस्कराः ।**
**विकर्मक्रियया नित्यं बाधन्ते भद्रिकाः प्रजाः ॥२२६॥**

राजाले यि मानिसलाई आफ्नू र देशका गोप्य शत्रु नै हुन् भनी ठान्नू, किन कि यिनले आफ्ना
कुकर्म मार्फत हरपल सिधासाधा प्रजालाई पीडा दिइरहेका हुन्छन् ।

**द्यूतमेतत्पुराकल्पे दृष्टं वैरकरं महत् ।**
**तस्माद् द्यूतं न सेवेत हास्यार्थमपि बुद्धिमान् ॥२२७॥**

जुवा शत्रुता पैदा गराउने घृणित खेल हो भन्ने कुरामा इतिहास (महाभारत) साछी छ ।
अतः बुद्धिमानले मनोरञ्जनका लागि पनि यो खेललाई कहिल्यै नअपनाउनू ।

**प्रच्छन्नं वा प्रकाशं वा तन्निषेवेत यो नरः ।**
**तस्य दण्डविकल्पः स्याद्यथेष्टं नृपतेस्तथा ॥२२८॥**

खुल्लमखुल्ला वा लुकेर जुवा खेल्ने सबै जुवाडेलाई राजाले यथोचित दण्ड दिनू ।

**क्षत्रविट् शूद्रयोनिस्तु दण्डं दातुमशक्नुवन् ।**
**आनृण्यं कर्मणा गच्छेद्विप्रो दद्याच्छनैः शनैः ॥२२९॥**

दण्डजरिवाना तिर्न नसक्ने क्षत्रिय, वैश्य र शूद्र जुवाडेलाई काममा लगाई तिनको त्यही तलबबाट दण्डजरिवाना असुलउपर गर्नू । तत्काल जरिवाना तिर्न नसक्ने ब्राह्मण जुवाडेलाई अलिअलि गरेर दण्डजरिवाना तिर्न लगाउनू ।

**स्त्रीबालोन्मत्तवृद्धानां दरिद्राणां च रोगिणाम् ।**
**शिफाविदलरज्ज्वाद्यैर्विदध्यान्नृपतिर्दमम् ॥२३०॥**

स्त्री, बालक, मानसिक रोगी, वृद्ध, गरिब र रोगी जुवातासको कुलतमा फसे राजाले तिनलाई बर आदि रुखका जरा, बाँस आदिका चिर्पट वा कोर्राले पिटी लगेर जेलमा थुन्नू ।



**ये नियुक्तास्तु कार्येषु हन्युः कार्याणि कार्यिणाम् ।**
**धनोष्मणा पच्यमानास्तान्निःस्वान्कारयेन्नृपः ॥२३१॥**

जुवातास नियन्त्रण गर्न खटिएका अधिकारी कर्तव्यच्यूत भएको प्रमाणित भए सर्वस्व हरण गरी जागिरबाट निकाली दिनू ।

**कूटशासनकर्तॄंश्च प्रकृतीनां च दूषकान् ।**
**स्त्रीबालब्राह्मणघ्नांश्च हन्याद्द्विट्सेविनस्तथा ॥२३२॥**

नक्कली लालमोहर आदि बनाएर ठग्ने, नियम मिच्न उक्साउने वा भड्काउने, स्त्री-बालक-ब्राह्मणलाई मार्ने र शत्रुको सेवा गर्ने मानिसलाई मृत्युदण्ड दिनू ।

**तीरितं चानुशिष्टं च यत्र क्वचन यद्भवेत् ।**
**कृतं तद्धर्मतो विद्यान्न तद्भूयो निवर्तयेत् ॥२३३॥**

राजाले सोचविचार गरी धर्मपूर्वक गरेको अन्तिम फैसला वा त्यसको कार्यान्वयनलाई लिएर प्रश्न उठाउन नदिनू । राजाको यस्तो फैसलामा पुनर्विचार हुँदैन ।

**अमात्याः प्राड्विवाको वा यत्कुर्युः कार्यमन्यथा ।**
**तत्स्वयं नृपतिः कुर्यात्तान्सहस्रं च दण्डयेत् ॥२३४॥**

राजाले अन्तिम फैसला गरेको मुद्दामा मन्त्री, वकिल आदि मार्फत पुनरावेदन दिन खोज्ने वादी वा प्रतिवादीलाई हजार पण दण्ड तिराउनू ।

**ब्रह्महा च सुरापश्च स्तेयी च गुरुतल्पगः ।**
**एते सर्वे पृथग्ज्ञेया महापातकिनो नराः ॥२३५॥**

ब्राह्मणको हत्या गर्ने, मदिरा पिउने, चोरी वा डँकैती गर्ने र गुरुपत्नी गमन गर्ने : यी मानिस महापापी हुन् ।



**चतुर्णामपि चैतेषां प्रायश्चित्तमकुर्वताम् ।**
**शारीरं धनसंयुक्तं दण्डं धर्म्यं प्रकल्पयेत् ॥२३६॥**

यी चार महापापीले आफूले गरेको पापको प्रायश्चित नगरेको अवस्थामा यिनलाई शारीरिक एवं आर्थिक दण्ड दिनु राजाको धर्म एवं कर्तव्य हुने गर्दछ ।

**गुरुतल्पे भगः कार्यः सुरापाने सुराध्वजः ।**
**स्तेये च श्वपदं कार्यं ब्रह्महण्यशिराः पुमान् ॥२३७॥**

यिनका निधारमा तातो फलामले डामेर गुरुपत्नी गमन गरे भगको, सुरापान गरे प्याला वा मदिरा-कलशको, चोरी-डकैती गरे कुकुरको खुट्टाको र ब्रह्महत्या गरे मुर्कट्टाको चिह्न बनाइदिनू ।

**असम्भोज्याः ह्यसंयाज्याः असम्पाठ्याऽविवाहिनः ।**
**चरेयुः पृथिवीं दीनाः सर्वधर्मबहिष्कृताः ॥२३८॥**

महापापीहरू खुवाउन, वेद पढ्न, यज्ञादि गर्न र वैवाहिक सम्बन्ध गाँस्न योग्य हुँदैनन् । सबै धर्मबाट बहिष्कृत भई यी दीनहीन र पृथ्वीलाई भार बनी घुमिरहन्छन् ।

**ज्ञातिसम्बन्धिभिस्त्वेते त्यक्तव्याः कृतलक्षणाः ।**
**निर्दयाः निर्नमस्कारास्तन्मनोरनुशासनम् ॥२३९॥**

निधारमा डाम्नुको अर्थ जातबाट बहिष्कार गर्नु हो । यिनको अभिवादनको जवाफ दिन र यिनलाई दया देखाउन पनि हुँदैन ।

**प्रायश्चित्तं तु कुर्वाणाः सर्ववर्णा यथोदितम् ।**
**नाङ्क्या राज्ञा ललाटे स्युर्दाप्यास्तूत्तमसाहसम् ॥२४०॥**

आफूले गरेको पापको विधिपूर्वक प्रायश्चित गर्ने चारै वर्णका महापापीलाई भने निधारमा नडामी उत्तम साहसको दण्ड दिनू ।



**आगस्सु ब्राह्मणस्यैव कार्यो मध्यमसाहसः ।**
**विवास्यो वा भवेद्राष्ट्रात्सद्रव्यः सपरिच्छदः ॥२४१॥**

महापापी ब्राह्मणलाई मध्यम साहसको दण्ड दिनू वा उसलाई उसको सम्पत्ति सहीत विदेशतिर लखेट्नू ।

**इतरे कृतवन्तस्तु पापान्येतान्यकामतः ।**
**सर्वस्वहारमर्हन्ति कामतस्तु प्रवासनम् ॥२४२॥**

अरुहरूले पनि बाध्यतावश यस्तो महापाप गर्नुपरेका अवस्थामा तिनको सर्वस्व हरण गर्नू ।जानीजानी गरेको भए देशनिकाला गर्नू ।

**नाददीत नृपः साधुर्महापातकिनो धनम् ।**
**आददानस्तु तल्लोभात्तेन दोषेण लिप्यते ॥२४३॥**

यस्ता महापापीको धन राजा आफूले नलिनू, धन लिने लोभी राजाले
आफ्नो विनाश आफैं निम्त्याउँदछ ।

**अप्सु प्रवेश्य तं दण्डं वरुणायोपपादयेत् ।**
**श्रुतवृत्तोपपन्ने वा ब्राह्मणे प्रतिपादयेत् ॥२४४॥**

यस्ता महापापीको धन लिएपछि राजाले जलमा पखालेर त्यो धन कि वरुण-यज्ञमा
खर्च गर्नू कि त वेदज्ञ सदाचारी ब्राह्मणहरूलाई दान गर्नू ।

**ईशो दण्डस्य वरुणो राज्ञां दण्डधरो हि सः ।**
**ईशः सर्वस्य जगतो ब्राह्मणो वेदपारगः ॥२४५॥**

देवताहरूले वरुणलाई दण्डका मालिक बनाएका छन् । राजालाई पनि देवताका प्रतिनिधिका
हैसियतले अपराधीहरूलाई दण्ड दिने अधिकार हुन्छ । तर, वेदज्ञ ब्राह्मण सबैका स्वामी हुने
हुनाले उसलाई दण्ड दिने अधिकार राजालाई हुँदैन ।



**यत्र वर्जयते राजा पापकृद्भ्यो धनागमम् ।**
**तत्र कालेन जायन्ते मानवा दीर्घजीविनः ॥२४६॥**

जुन देशमा राजा पापबाट हुने कमाइलाई कठोरतापूर्वक निषेध र नियन्त्रण गर्दछन्,
त्यो देशका प्रजा स्वतः दीर्घजीवि हुन्छन् ।

**निष्पद्यन्ते च सस्यानि यथोप्तानि विशां पृथक् ।**
**बालाश्च न प्रमीयन्ते विकृतं न च जायते ॥२४७॥**

पापकर्मबाट कमाएको धनले अर्थतन्त्र चलेको छैन भने मात्र त्यो देशमा वास्तविकरूपमा
धनधान्य (श्री) को वृद्धि हुन्छ, प्रजाहरू अकालमा मर्दैनन् (मृत्युको सुल्टो गति हुन्छ)
र अन्य विकृतिहरू पनि जथाभावी मौलाउन पाउँदैनन् ।

**ब्राह्मणान्बाधमानं तु कामादवरवर्णजम् ।**
**हन्याच्चित्रैर्वधोपायैरुद्वेजनकरैर्नृपः ॥२४८॥**

जानीजानी ब्राह्मणलाई दुःख दिने, तिनलाई मारपिट गर्ने र नीच व्यक्तिलाई राजाले कठोर दण्ड दिने गर्नू ।

**यावानवध्यस्य वधे तावान्वध्यस्य मोक्षणे ।**
**अधर्मो नृपतेर्दृष्टो धर्मस्तु विनियच्छतः ॥२४९॥**

जसरी मार्न नहुनेलाई मार्दा पाप लाग्दछ त्यसरी नै मार्नुपर्नेलाई नमार्दा पनि पाप लाग्दछ । यी दुवै परिस्थिति धर्म-उल्लङ्घन हुने परिस्थिति हुन् ।

**उदितोऽयं विस्तरशो मिथो विवादमानयोः ।**
**अष्टादशसु मार्गेषु व्यवहारस्य निर्णयः ॥२५०॥**



भृगु भन्नुहुन्छ-मैले अठार थरीका मुद्दामामिला सुल्झाउने विधिका बारेमा विस्तारमा बताएँ ।

**एवं धर्म्याणि कार्याणि सम्यक्कुर्वन्महीपतिः ।**
**देशानलब्धाँल्लिप्सेत लब्धांश्च परिपालयेत् ॥२५१॥**

यसरी धर्मपूर्वक ध्यानदिएर राम्ररी काम गर्दै राजाले नपाएको उपलब्धी पाउनू र पाएका उपलब्धीलाई राम्ररी जोगाउनू ।

**सम्यङ्निविष्टदेशस्तु कृतदुर्गश्च शास्त्रतः ।**
**कण्टकोद्धरणे नित्यं आतिष्ठेद्यत्नमुत्तमम् ॥२५२॥**

राजाले उपयुक्त (धनधान्यले समृद्ध) स्थानमा शास्त्रले बताएका विधिले किल्ला बनाउनु पर्दछ । चोर, डाँका आदि देशका काँडा पन्छाउन हरदम लागिरहनु पर्दछ ।

**रक्षणादार्यवृत्तानां कण्टकानां च शोधनात् ।**
**नरेन्द्रास्त्रिदिवं यान्ति प्रजापालनतत्पराः ॥२५३॥**

सज्जनलाई रक्षा गर्दै र दुर्जनलाई दण्ड दिँदै प्रजापालनमा तत्पर
रहने राजा स्वर्गको अधिकारी हुन्छ ।

**अशासंस्तस्करान्यस्तु बलिं गृह्णाति पार्थिवः ।**
**तस्य प्रक्षुभ्यते राष्ट्रं स्वर्गाच्च परिहीयते ॥२५४॥**

प्रजासँग कर उठाउने तर तस्करहरूलाई दण्ड नदिने राजासँग जनता दिक्क हुन थाल्दछन् ।
यस्तो राजा मरेपछि स्वर्ग पनि जाँदैन ।

**निर्भयं तु भवेद्यस्य राष्ट्रं बाहुबलाश्रितम् ।**
**तस्य तद्वर्धते नित्यं सिच्यमान इव द्रुमः ॥२५५॥**



आफ्नो पुरुषार्थले देशलाई सुरक्षित र प्रजालाई समृद्ध बनाउने राजा (को यश) जलसेचन
गरिएको वृक्ष बढेझैँ बढ्दछ ।

**द्विविधांस्तस्करान्विद्यात्परद्रव्यापहारकान् ।**
**प्रकाशांश्चाप्रकाशांश्च चारचक्षुर्महीपतिः ॥२५६॥**

राजाले तस्कर, चोर, लुटेरा आदिलाई बर्दीधारी र सादा पोसाकका (गुप्तचर) गरी
दुई किसिमका मानिस खटाएर निगरानी गर्नु पर्दछ ।

**प्रकाशवञ्चकास्तेषां नानापण्योपजीविनः ।**
**प्रच्छन्नवञ्चकास्त्वेते ये स्तेनाटविकादयः ॥२५७॥**

अनेक थरी सामान बेच्ने ब्यापारी पनि चोर त चोर नै हुन् । चोरले लुकीलुकी चोर्दछ यि
हाकाहाकी चोर्दछन् । यि अवसर र अनुहार हेरेर वस्तुको मोल गर्दछन् र ग्राहकलाई लुट्दछन् ।

**उत्कोचकाश्चौपधिका वञ्चकाः कितवास्तथा ।**
**मङ्गलादेशवृत्ताश्च भद्राश्चेक्षणिकैः सह ॥२५८॥**

घुस्याहा (उत्कोचक), तर्साएर पैसा लिने (औपधिक), ठग (वञ्चक), जुवाडे (कितव), अयोग्य ज्योतिष आदि (मङ्गलादेशवृत्त), भित्री योग्यतालाई नसुहाने खालको देखावटी भलाद्मी बनी ठग्ने (भद्राश्चेक्षणिकः),...।

**असम्यक्कारिणश्चैव महामात्राश्चिकित्सकाः ।**
**शिल्पोपचारयुक्ताश्च निपुणाः पण्ययोषितः ॥२५९॥**

नचाहिँदा डर देखाई त्यसबाट बच्ने नचाहिँदा उपाय सिकाउँदै हिँड्ने (असम्यक्कारिण), हात्तीसारको मालिक वा राजाका प्रमुख अधिकारी (महामात्र), चिकित्सक, शिल्पकार, धूर्त ( निपुण) र नगरवधू (पण्ययोषित),...।

**एवमादीन्विजानीयात्प्रकाशांल्लोककण्टकान् ।**

**निगूढचारिणश्चान्याननार्यानार्यलिङ्गिनः ॥२६०॥**

ब्यापारी बाहेकका उपरोक्त व्यक्तिहरु पनि मौका पर्दा हाकाहाकी बदमासी गर्न पछि पर्दैनन् भन्ने बुझी राजाले यिनलाई पनि निगरानीमा राख्नु पर्दछ ।

**तान्विदित्वा सुचरितैर्गूढैस्तत्कर्मकारिभिः ।**
**चारैश्चानेकसंस्थानैः प्रोत्साद्य वशमानयेत् ॥२६१॥**

उल्लेखित धूर्तहरू र अन्य ठगहरूका बारेमा गुप्तचरहरू मार्फत् सूचना लिई ती माथि कडा निगरानी राख्नू । प्रमाण पाएपछि समाती कठोर दण्ड दिँदै आफ्ना (कानुनको) वशमा पार्नू ।

**तेषां दोषानभिख्याप्य स्वे स्वे कर्मणि तत्त्वतः ।**
**कुर्वीत शासनं राजा सम्यक्सारापराधतः ॥२६२॥**

राजाले हाकाहाकी र गोप्य तरिकाले पाप गर्ने सबै प्रकारका अपराधीलाई समाती तिनको अपराध अरुलाई जानकारी गराउँदै अपराधको प्रकृति हेरी आवश्यक शारीरिक र आर्थिक दण्ड दिनुपर्दछ ।

**न हि दण्डादृते शक्यः कर्तुं पापविनिग्रहः ।**
**स्तेनानां पापबुद्धीनां निभृतं चरतां क्षितौ ॥२६३॥**

पृथ्वीमा साधुका भेषमा घुम्ने दुष्टहरूलाई चिनी ती पापीलाई कठोर दण्ड नदिँदासम्म पाप, अनियमितता, दुराचार आदि माथि नियन्त्रण गर्न सम्भव नै हुँदैन ।

**सभाप्रपापूपशाला वेशमद्यान्नविक्रयाः ।**
**चतुष्पथांश्चैत्यवृक्षाः समाजाः प्रेक्षणानि च ॥२६४॥**

सभासम्मेलन हुने स्थल, पानीपँधेरो वा पानी घाट, मिठाई पसल वा खाजा-खाना आदि खाने ठाउँ, वेश्यालय, भट्टी, किराना पसल, चौबाटो, चौतारो, चटक-तमास-मेला स्थल,...।



**जीर्णोद्यानान्यरण्यानि कारुकावेशनानि च ।**
**शून्यानि चाप्यगाराणि वनान्युपवनानि च ॥२६५॥**

उजाड भएका बगैंचा, बन, शिल्पशाला, सुनसान घर वा दरबार र बगैंचा वा उपवनमा...।

**एवंविधान्नृपो देशान्गुल्मैः स्थावरजङ्गमैः ।**
**तस्करप्रतिषेधार्थं चारैश्चाप्यनुचारयेत् ॥२६६॥**

चोरी, डकैती, लुटपाट हुने सम्भावना बढी हुने हुँदा राजाले यी स्थानमा स्थायी प्रहरी चौकी, गस्ती प्रहरी, प्रहरी जाँच चौकी र गुप्तचरहरूको व्यवस्था गर्नुपर्दछ ।

**तत्सहायैरनुगतैर्नानाकर्मप्रवेदिभिः ।**
**विद्यादुत्सादयेच्चैव निपुणैः पूर्वतस्करैः ॥२६७॥**

चोरका साथी वा सहयोगी, चोरका सेवक, चोरले चोर्न प्रयोग गर्ने साधनसँग सम्बन्धित मानिस, सुध्रिएका चोर र गुप्तचरको सहयोग लिई चोर आदिलाई समाउनू ।

**भक्ष्यभोज्योपदेशैश्च ब्राह्मणानां च दर्शनैः ।**
**शौर्यकर्मापदेशैश्च कुर्युस्तेषां समागमम् ॥२६८॥**

गुप्तचर मार्फत विश्वास जितेर, उत्तम भोजन खुवाएर, कतै महात्माको दर्शन गराउन लगेर वा उसका कार्यको प्रशंसा गर्दै चोर्न लगाई सप्रमाण चोरलाई समात्नु पर्दछ ।

**ये तत्र नोपसर्पेयुर्मूलप्रणिहिताश्च ये ।**
**तान्प्रसह्य नृपो हन्यात्समित्रज्ञातिबान्धवान् ॥२६९॥**

गुप्तचरका उपायलाई समेत असफल बनाउने खालका महाधूर्त चोरलाई प्रहरी मार्फत समाती उसका साथी सहयोगी, बन्धुबान्धव सहित सबैलाई कठोर सजाय दिनु पर्दछ ।



**न होढेन विना चौरं घातयेद्धार्मिको नृपः ।**
**सहोढं सोपकरणं घातयेदविचारयन् ॥२७०॥**

समातिएका चोरलाई उसको अपराध प्रमाणित नभए दण्ड दिन हुँदैन । आफ्नै आँखाले देखेको छ भने दायाँबायाँ केही नसोची चोरलाई मृत्युदण्ड दिनु पर्दछ ।

**ग्रामेष्वपि च ये के चिच्चौराणां भक्तदायकाः ।**
**भाण्डावकाशदाश्चैव सर्वांस्तानपि घातयेत् ॥२७१॥**

राजाले चोरलाई आश्रय दिने गाउँ, आश्रयदाता, खुवाउने पियाउने, औजार भाँडाकुँडा आदि उपलब्ध गराउने र उसलाई विभिन्न प्रकारले जानकारी उपलब्ध गराउने मानिसलाई पनि कठोर सजाय दिनु पर्दछ ।

**राष्ट्रेषु रक्षाधिकृतान्सामन्तांश्चैव चोदितान् ।**
**अभ्याघातेषु मध्यस्थान् शिष्याच्चौरानिव द्रुतम् ॥२७२॥**

चोरीतस्करीमा संलग्न हुने व्यक्तिलाई आश्रय दिने वा मद्दत गर्ने सुरक्षाकर्मी, सीमा सुरक्षा बल आदि सरकारी कर्मचारीलाई पनि चोरसरह कठोर सजाय दिनु पर्दछ ।

**यश्चापि धर्मसमयात्प्रच्युतो धर्मजीवनः ।**
**दण्डेनैव तं अप्योषेत्स्वकाद्धर्माद्धि विच्युतम् ॥२७३॥**

न्याय गर्ने आसनमा बसेको कोही व्यक्ति चरित्रभ्रष्ट भएको पाइए उसलाई तुरुन्त दण्ड दिई सेवाबाट बर्खास्त गर्नुपर्दछ ।

**ग्रामघाते हिताभङ्गे पथि मोषाभिदर्शने ।**
**शक्तितो नाभिधावन्तो निर्वास्याः सपरिच्छदाः ॥२७४॥**



गाउँ लुट्ने, शहरमा आगो लगाउने र बाटामा हिँडिरहेका स्त्रीलाई अभद्र व्यवहार गर्ने मानिसलाई देखेर पनि समाउन सहयोग नगर्ने नागरिकलाई सपरिवार देशनिकाला गर्नुपर्दछ ।

**राज्ञः कोशापहर्तॄंश्च प्रतिकूलेषु च स्थितान् ।**
**घातयेद्विविधैर्दण्डैररीणां चोपजापकान् ॥२७५॥**

राजाले राजकोष चोर्ने, राजाज्ञा उल्लङ्घन गर्ने र भित्री कुरा लगेर शत्रुलाई बताउने मानिसलाई कठोर यातना दिँदै मार्नू ।

**सन्धिं भित्त्वा तु ये चौर्यं रात्रौ कुर्वन्ति तस्कराः ।**
**तेषां छित्त्वा नृपो हस्तौ तीक्ष्णे शूले निवेशयेत् ॥२७६॥**

राजाले राती करौंती लगाएर वा अरु उपायले घर फोर्ने, डाँका मार्ने आदि जस्ता जघन्य अपराध गर्नेका हात काटी शूलीमा चढाउनू ।

**अङ्गुलीर्ग्रन्थिभेदस्य छेदयेत्प्रथमे ग्रहे ।**
**द्वितीये हस्तचरणौ तृतीये वधमर्हति ॥२७७॥**

पहिलो पटक समातिएका बगलीमाराको औँला र दोश्रो पटक समातिएकाको हातगोडा काट्नू । तेश्रो पटक पनि समातिए उसलाई मृत्युदण्ड दिनू ।

**अग्निदान्भक्तदांश्चैव तथा शस्त्रावकाशदान् ।**
**सन्निधातॄंश्च मोषस्य हन्याच्चौरमिवेश्वरः ॥२७८॥**

चोरलाई आगो, भोजन, हतियार, लुगा र बास दिनेलाई तथा उसका छिमेकीलाई समेत चोरसरह कठोर सजाय दिनू ।

**तडागभेदकं हन्यादप्सु शुद्धवधेन वा ।**
**यद्वाऽपि प्रतिसंस्कुर्याद्दाप्यस्तूत्तमसाहसम् ॥२७९॥**



तालतलैया आदि सार्वजनिक सम्पत्ति भत्काउने वा मार्नेलाई मृत्युदण्ड दिनू अथवा पानीमा डुबाइ दिनू । भत्काएर बनाउन खोज्नेलाई उत्तम साहसको दण्ड दिनू ।

**कोष्ठागारायुधागार देवतागारभेदकान् ।**
**हस्त्यश्वरथहर्तॄंश्च हन्यादेवाविचारयन् ॥२८०॥**

सरकारी गोदाम, कोत, मठमन्दिर आदि फोर्ने तथा हात्ती, घोडा, रथ आदि वाहन चोर्नेलाई केही नसोची कठोर दण्ड दिनू ।

**यस्तु पूर्वनिविष्टस्य तडागस्योदकं हरेत् ।**
**आगमं वाप्यपां भिन्द्यात्स दाप्यः पूर्वसाहसम् ॥२८१॥**

पहिले नै बनेको पोखरी, ताल आदिमा एकाधिकार कायम गर्न खोज्ने तथा त्यसको पानी सुकाउने व्यक्तिलाई पूर्वसाहस दण्ड दिनू ।

**समुत्सृजेद्राजमार्गे यस्त्वमेध्यमनापदि ।**
**स द्वौ कार्षापणौ दद्यादमेध्यं चाशु शोधयेत् ॥२८२॥**

बाध्यात्मक अवस्थामा बाहेक सडकमा फोहोरमैला फाल्ने व्यक्तिलाई तुरुन्त फालेको फोहोर उठाउन लगाई दुई कार्षापण दण्ड तिराउनू ।

**आपद्गतोऽथ वा वृद्धा गर्भिणी बाल एव वा ।**
**परिभाषणमर्हन्ति तच्च शोध्यमिति स्थितिः ॥२८३॥**

आपदमा परेका वृद्ध, गर्भिणी स्त्री र बालकले बाटोमा फोहोर गरे गाली गरी उपयुक्त स्थानमा फोहोर उठाएर फाल्न लगाउनू ।

**चिकित्सकानां सर्वेषां मिथ्याप्रचरतां दमः ।**
**अमानुषेषु प्रथमो मानुषेषु तु मध्यमः ॥२८४॥**



गलत वा झूटो तरिकाले उपचारमा संलग्न हुने चिकित्सकलाई दमन गर्नू (तुरुन्त इजाजत पत्र खारेज गर्नू) । यस्ता व्यक्तिलाई पशु चिकित्सक भए प्रथम साहस र मानिसका चिकित्सक भए मध्यम साहसको दण्ड तिराउनु पर्दछ ।

**संक्रमध्वजयष्टीनां प्रतिमानां च भेदकः ।**
**प्रतिकुर्याच्च तत्सर्वं पञ्च दद्याच्छतानि च ॥२८५॥**

पुल, झण्डाको पोल, पत्थरका मूर्ति आदि भत्काउने वा भाँच्ने वा फुटाउनेलाई त्यो जस्ताको तस्तै पार्न लगाउनू र पाँच सय पण दण्ड तिराउनू ।

**अदूषितानां द्रव्याणां दूषणे भेदने तथा ।**
**मणीनामपवेधे च दण्डः प्रथमसाहसः ॥२८६॥**

उत्तम पदार्थलाई दूषित गर्ने, सही वस्तुलाई बिगार्ने र गलत तरिकाले मणि

आदि प्वाल पार्ने व्यक्तिलाई प्रथम साहस दण्ड तिराउनू ।

**समैर्हि विषमं यस्तु चरेद्वै मूल्यतोऽपि वा ।**
**समाप्नुयाद्दमं पूर्वं नरो मध्यममेव वा ॥२८७॥**

राम्रो देखाएर नराम्रो सामान भिडाउने र तौलमा गडबड गर्ने ब्यापारीलाई प्रथम वा मध्यम साहसको दण्ड दिनु पर्दछ ।

**बन्धनानि च सर्वाणि राजमार्गे निवेशयेत् ।**
**दुःखिता यत्र दृश्येरन्विकृताः पापकारिणः ॥२८८॥**

राजाले सबैले देख्ने स्थानमा चोर आदिलाई यातना दिने यातना-गृह बनाउनू, जहाँ दिइएको दण्ड आउनेजाने नागरिकले देख्न सकुन् र गलत काम गर्न डराउन् वा आफू पनि तीबाट पीडित भए शान्त्वना लिन सकुन् ।



**प्राकारस्य च भेत्तारं परिखाणां च पूरकम् ।**
**द्वाराणां चैव भङ्क्तारं क्षिप्रमेव प्रवासयेत् ॥२८९॥**

किल्लाको पर्खाल भत्काउने, किल्लाको वरिपरी बनाइएको गहिरो खाल्डो पुर्ने र घरका ढोका फोर्नेलाई जतिसक्दो चाँडो देशनिकाला गर्नू ।

**अभिचारेषु सर्वेषु कर्तव्यो द्विशतो दमः ।**
**मूलकर्मणि चानाप्तैः कृत्यासु विविधासु च ॥२९०॥**

सम्मोहन आदि तान्त्रिक विधिको प्रयोग गरी अपराध गरिए दुई सय पण तिराउनू । यस्तै किसिमका मन्त्रतन्त्र प्रयोग गरी अरुलाई हानीनोक्सानी गर्नेलाई पनि दुई सय पण नै जरिवाना गर्नू ।

**अबीजविक्रयी चैव बीजोत्कृष्टा तथैव च ।**
**मर्यादाभेदकश्चैव विकृतं प्राप्नुयाद्वधम् ॥२९१॥**

बिउबिजनमा मिसावट गरेर बेच्नेलाई तथा परम्परागत रीतिरिवाज उल्लङ्घन गर्नेलाई कठोर यातना दिनू ।

**सर्वकण्टकपापिष्ठं हेमकारं तु पार्थिवः ।**
**प्रवर्तमानं अन्याये छेदयेत्खण्डशः क्षुरैः ॥२९२॥**

अरु पापी त लुकीछिपी पाप गर्दछन् तर सुनार त आँखा अगिल्तिरै ग्राहकको आँखामा धुलो हाली चोरी गर्दछ । यस्ता धूर्त सुनारलाई चक्कुले शरीरभरी छियाछिया पार्नू ।

**सीताद्रव्यापहरणे शस्त्राणामौषधस्य च ।**
**कालमासाद्य कार्यं च राजा दण्डं प्रकल्पयेत् ॥२९३॥**



हलो आदि कृषि औजार तथा हतियार र औषधी चोर्नेलाई समय परिस्थिति र चोरीएको वस्तुको महत्व हेरी राजाले दण्ड दिनू ।

**स्वाम्यमात्यौ पुरं राष्ट्रं कोशदण्डौ सुहृत्तथा ।**
**सप्त प्रकृतयो ह्येताः सप्ताङ्गं राज्यमुच्यते ॥२९४॥**

राजा, मन्त्री, शहर, राज्य, कोष, दण्ड र मित्र यि सात कुरालाई राज्यका सात अङ्ग भनिन्छ ।

**सप्तानां प्रकृतीनां तु राज्यस्यासां यथाक्रमम् ।**
**पूर्वं पूर्वं गुरुतरं जानीयाद्व्यसनं महत् ॥२९५॥**

यी सात अङ्गमा क्रमशः अघिल्लामा सङ्कट आउनुलाई गम्भीररूपमा लिनु पर्दछ ।

**सप्ताङ्गस्येह राज्यस्य विष्टब्धस्य त्रिदण्डवत् ।**
**अन्योन्यगुणवैशेष्यान्न किञ्चिदतिरिच्यते ॥२९६॥**

जसरी त्रिखुटीको एउटा खुट्टामा समस्या हुँदा त्रिखुटीले काम गर्दैन, त्यसैगरी राज्यका यी सात अङ्गमा पनि कुनै एउटामा समस्या आए अरु अङ्गले काम गर्न छाड्दछन् । त्यसैले यी सातमध्ये कुनै पनि एक अङ्गमा समस्या आउँदा निश्चिन्त भएर नबस्नू ।

**तेषु तेषु तु कृत्येषु तत्तदङ्गं विशिष्यते ।**
**येन यत्साध्यते कार्यं तत्तस्मिन् श्रेष्ठमुच्यते ॥२९७॥**

यि सात अङ्गमध्ये जुनबेला जेको आवश्यकता पर्दछ त्यसैको उपयोगिता बढ्दछ । प्रजा पनि आफूलाई जुन बेलामा जे कुराको बढी अपेक्षा हुने गर्दछ त्यसैलाई सबभन्दा राम्रो ठान्ने गर्दछन् । (अर्थात् यी सातै अङ्गको महत्व समान हुन्छ) ।

**चारेणोत्साहयोगेन क्रिययैव च कर्मणाम् ।**

**स्वशक्तिं परशक्तिं च नित्यं विद्यात्परात्मनोः ॥२९८॥**

राजाले गुप्तचरका चाहना अनुसार बेलाबेलामा युद्ध जस्ता जोखिमयुक्त कामका लागि आफ्नो र शत्रुको बलका बारेमा समीक्षा गरिरहनु पर्दछ ।

**पीडनानि च सर्वाणि व्यसनानि तथैव च ।**
**आरभेत ततः कार्यं संचिन्त्य गुरुलाघवम् ॥२९९॥**

कुनै काम शुरु गर्नुअघि राजाले त्यो काम मा आउन सक्ने बाधा-व्यवधान, दुःख, फाइदा-बेफाइदा र महत्वका विषयमा गम्भीर विचार गर्नु पर्दछ ।

**आरभेतैव कर्माणि श्रान्तः श्रान्तः पुनः पुनः ।**
**कर्माण्यारभमाणं हि पुरुषं श्रीर्निषेवते ॥३००॥**

राजाले एउटा काम सकिएपछि तुरुन्त अर्को अर्को गर्दै काम शुरु गरि हाल्नु पर्दछ, बीचमा विश्राम लिन हुन्न किन कि कर्मठ व्यक्तिलाई नै लक्ष्मी प्राप्त हुन्छ ।

**कृतं त्रेतायुगं चैव द्वापरं कलिरेव च ।**
**राज्ञो वृत्तानि सर्वाणि राजा हि युगमुच्यते ॥३०१॥**

सत्य, त्रेता, द्वापर र कलि भनेर जुन चार युगलाई भनिन्छ वास्तवमा ती चार युग राजा (वा शाषक) का चेष्टाकै नाम हुन् । राजा जस्तो हुन्छ, उसले जे जस्ता नियम बनाएर जस्तो व्यवस्थामा शासन गर्दछ त्यही अनुसार युगका नाम हुने गर्दछन् ।

**कलिः प्रसुप्तो भवति स जाग्रद्द्वापरं युगम् ।**
**कर्मस्वभ्युद्यतस्त्रेता विचरंस्तु कृतं युगम् ॥३०२॥**

राजा डुकुलण्ठङ (निरुद्यमी) हुने युगको नाम नै कलियुग हो । राजा सक्रिय हुने युगलाई द्वापर युग भनिन्छ । राजा कर्तव्यनिष्ठ भई कर्मशील हुने युगलाई त्रेता युग भनिन्छ । राजाले शास्त्र अनुसार शासन गर्ने युगलाई सत्ययुग भनिन्छ ।



**इन्द्रस्यार्कस्य वायोश्च यमस्य वरुणस्य च ।**
**चन्द्रस्याग्नेः पृथिव्याश्च तेजोवृत्तं नृपश्चरेत् ॥३०३॥**

इन्द्र, सूर्य, वायु, यम, वरुण, चन्द्रमा, अग्नि र पृथ्वीको अंश लिएको हुनाले राजाले यिनैका गुण लिई राज्यसत्ता चलाउनु पर्दछ ।

**वार्षिकांश्चतुरो मासान्यथेन्द्रोऽभिप्रवर्षति ।**
**तथाभिवर्षेत्स्वं राष्ट्रं कामैरिन्द्रव्रतं चरन् ॥३०४॥**

इन्द्रले हरेक वर्ष चार महिना वर्षा गराएजस्तै राजाले पनि आफ्नो राज्यमा सुखसमृद्धिको वर्षा गराउनु पर्दछ ।

**अष्टौ मासान्यथादित्यस्तोयं हरति रश्मिभिः ।**
**तथा हरेत्करं राष्ट्रान्नित्यमर्कव्रतं हि तत् ॥३०५॥**

आठ महिना पृथ्वीबाट जल शोषी त्यही जल चार महिना उसैलाई फर्काउने सूर्यले जसरी नै राजाले जनताबाट कर आदि लिई तिनकै हीतमा खर्च गर्नुपर्दछ ।

**प्रविश्य सर्वभूतानि यथा चरति मारुतः ।**
**तथा चारैः प्रवेष्ठव्यं व्रतमेतद्धि मारुतम् ॥३०६॥**

जसरी नदेखिने गरी वायु सबैतिर छरिएर बहिरहने गर्दछ त्यसरी नै राजाले पनि आफ्ना गुप्तचरहरू छरेर प्रजाको मनोभावना आदि बुझिरहनु पर्दछ ।

**यथा यमः प्रियद्वेष्यौ प्राप्ते काले नियच्छति ।**
**तथा राज्ञा नियन्तव्याः प्रजास्तद्धि यमव्रतम् ॥३०७॥**



जसरी समय पुगेपछि सबैलाई समान भाव लिई यमराजले लैजान्छन् त्यसरी नै राजाले पनि अपराध हुँदा मित्र र शत्रूमा समान भाव देख्नुपर्दछ ।

**वरुणेन यथा पाशैर्बद्ध एवाभिदृश्यते ।**
**तथा पापान्निगृह्णीयाद्व्रतं एतद्धि वारुणम् ॥३०८॥**

जसरी बरुणले आफ्नो डोरीले सबैलाई वशमा पारी बाँध्दछन् त्यसरी नै राजाले पनि मायाले सज्जनलाई र दण्डले अपराधीलाई वशमा पार्नु पर्दछ ।

**परिपूर्णं यथा चन्द्रं दृष्ट्वा हृष्यन्ति मानवाः ।**
**तथा प्रकृतयो यस्मिन्स चान्द्रव्रतिको नृपः ॥३०९॥**

आफ्नो रूप र किरणले पूर्णिमाका जुनले संसारलाई नै मुग्ध बनाएजसरी राजाले पनि आफ्ना सदाचार र असल व्यवहार मार्फत मानिस (प्रजा) लाई मन्त्रमुग्ध बनाउनु पर्दछ ।

**प्रतापयुक्तस्तेजस्वी नित्यं स्यात्पापकर्मसु ।**
**दुष्टसामन्तहिंस्रश्च तदाग्नेयं व्रतं स्मृतम् ॥३१०॥**

पापीलाई छुनासाथ जलाउने अग्निले जसरी अपराधीलाई जलाउने स्वभावको राजा हुनुपर्दछ ।

**यथा सर्वाणि भूतानि धरा धारयते समम् ।**
**तथा सर्वाणि भूतानि बिभ्रतः पार्थिवं व्रतम् ॥३११॥**

जसरी पृथ्वीले सबै जीवलाई धारण गर्दछिन्, त्यसरी नै राजाले सबै प्रजालाई
समानरूपले पालपोषण गर्नु पर्दछ ।

**एतैरुपायैरन्यैश्च युक्तो नित्यं अतन्द्रितः ।**
**स्तेनान्राजा निगृह्णीयात्स्वराष्ट्रे पर एव च ॥३१२॥**

राजाले आफ्ना राज्यमा घुमिरहेका वा छिमेकी देशमा भागेर गएका अपराधी, विद्रोही आदिलाई

समाउन र दण्ड दिन सबै उपाय अपनाउन अल्छी गर्न हुँदैन ।

**परामप्यापदं प्राप्तो ब्राह्मणान्न प्रकोपयेत् ।**
**ते ह्येनं कुपिता हन्युः सद्यः सबलवाहनम् ॥३१३॥**

जस्तोसुकै अनिकाल, गरिबी वा आक्रमणमा परेपनि राजाले ब्राह्मणलाई नचिढाउनू ।
ब्राह्मण रिसाए उनले सेना, बाहन र राजालाई समेत तुरुन्त नष्ट गर्न सक्दछ ।

**यैः कृतः सर्वभक्ष्योऽग्निरपेयश्च महोदधिः ।**
**क्षयी चाप्यायितः सोमः को न नश्येत्प्रकोप्य तान् ॥३१४॥**

अग्निलाई सबै कुरा खाने, समुद्रको पानीलाई पिउन नहुने बनाउने र नासिँदै जाने चन्द्रमालाई
अमृतमय बनाउने ब्राह्मणलाई चिढाउने राजा आफू सुरक्षित छु भनी कसरी सोच्न सक्ला ?

**लोकानन्यान्सृजेयुर्ये लोकपालांश्च कोपिताः ।**
**देवान्कुर्युरदेवांश्च कः क्षिण्वंस्तान्समृध्नुयात् ॥३१५॥**

रिस उठेपछि नयाँ नयाँ लोक र लोकपालकै सृष्टि गर्न सक्ने तथा देवतालाई समेत अजेय बनाउन सक्ने ब्राह्मणलाई चिढाउने राजाले आफ्नो भलाइका बारेमा सोच्न नै सक्दैन ।

**यानुपाश्रित्य तिष्ठन्ति लोका देवाश्च सर्वदा ।**
**ब्रह्म चैव धनं येषां को हिंस्यात्ताञ्जिजीविषुः ॥३१६॥**

जसको आश्रयमा लोक र देवता सधैं रहने गर्दछन्, जसको धन भनेकै वेदज्ञान हुन्छ यस्ता ब्राह्मणलाई चिढाएर बाँच्न खोज्ने व्यक्तिभन्दा ठूलो मुर्ख अरु कोही हुनै सक्दैन ।

**अविद्वांश्चैव विद्वांश्च ब्राह्मणो दैवतं महत् ।**
**प्रणीतश्चाप्रणीतश्च यथाग्निर्दैवतं महत् ॥३१७॥**



जसरी यज्ञको अग्नि र चिताको अग्नि समानरूपले पूजनीय हुन्छ त्यसरी नै विद्वान भएपनि नभएपनि ब्राह्मण पूजनीय हुन्छ ।

**श्मशानेष्वपि तेजस्वी पावको नैव दुष्यति ।**
**हूयमानश्च यज्ञेषु भूय एवाभिवर्धते ॥३१८॥**
**एवं यद्यप्यनिष्टेषु वर्तन्ते सर्वकर्मसु ।**
**सर्वथा ब्राह्मणाः पूज्याः परमं दैवतं हि तत् ॥३१९॥**

जसरी मसानको अग्नि लाश जलाएर कहिल्यै अशुद्ध हुँदैन यज्ञ मार्फत पुनः तेजिलो हुने गर्दछ, त्यसरी नै गलत काम गरेर पनि ब्राह्मण दूषित हुँदैन देवताका कृपाले उ पवित्र हुने गर्दछ ।

**क्षात्रस्यातिप्रवृद्धस्य ब्राह्मणान्प्रति सर्वशः ।**
**ब्रह्मैव सन्नियन्तृ स्यात्क्षात्रं हि ब्रह्मसंभवम् ॥३२०॥**

विद्वान् ब्राह्मणहरूले गलत काम गर्ने ब्राह्मणलाई दण्ड दिन लाग्दा राजालाई ब्राह्मणका कृपाले मात्र क्षत्रियले उन्नति गर्न सक्दछ भनेर सम्झाउने गर्नू ।

**अद्भ्योऽग्निर्ब्रह्मतः क्षत्रं अश्मनो लोहमुत्थितम् ।**
**तेषां सर्वत्रगं तेजः स्वासु योनिषु शाम्यति ॥३२१॥**

तिनले राजालाई भन्नु कि आगो, क्षत्रिय र फलामको उत्पत्ति क्रमशः जल, ब्राह्मण र पत्थरबाट भएको हो । त्यसैले यि अन्यत्र प्रभावशाली भएपनि आफूलाई उत्पादन गर्नेका अगिल्तिर निरीह (वा शान्त) हुने गर्दछन् ।

**नाब्रह्म क्षत्रमृध्नोति नाक्षत्रं ब्रह्म वर्धते ।**
**ब्रह्मं क्षत्रं च संपृक्तमिह चामुत्र वर्धते ॥३२२॥**

साँच्चै भन्ने हो ब्राह्मण र क्षत्रिय एकअर्को बिना उन्नती गर्न नै सक्दैनन् ।
दुबै आपसी सहयोगका कारणले नै प्रगति गरी मोक्ष हुने गर्दछन् ।



**दत्त्वा धनं तु विप्रेभ्यः सर्वदण्डसमुत्थितम् ।**
**पुत्रे राज्यं समासृज्य कुर्वीत प्रायणं रणे ॥३२३॥**

युद्धमैदानमा जान लागेको राजाले सत्ता छोरालाई र अपराधीबाट असुल गरिएको दण्डको रकम ब्राह्मणहरूलाई दिनु पर्दछ । यस्तो राजा युद्धमा मारिए पनि अमर हुन्छ ।

**एवं चरन्सदा युक्तो राजधर्मेषु पार्थिवः ।**
**हितेषु चैव लोकस्य सर्वान्भृत्यान्नियोजयेत् ॥३२४॥**

यसरी राजधर्म पालना गर्दै प्रजाका हीतका लागि राजाले आवश्यकता अनुसारका पदमा योग्य र उपयुक्त सेवकहरूलाई नियुक्त गर्नुपर्दछ ।

**एषोऽखिलः कर्मविधिरुक्तो राज्ञः सनातनः ।**
**इमं कर्मविधिं विद्यात्क्रमशो वैश्यशूद्रयोः ॥३२५॥**

भृगु भन्नुहुन्छ- मैले (क्षत्रिय) राजाका सबै सनातन कर्तव्य अकर्तव्यका बारेमा बताएँ ।
वैश्य र शूद्र राजाका पनि यिनै कर्तव्य अकर्तव्य हुन् भनी सकझिनु पर्दछ ।

**वैश्यस्तु कृतसंस्कारःकृत्वा दारपरिग्रहम् ।**
**वार्तायां नित्ययुक्तः स्यात्पशूनां चैव रक्षणे ॥३२६॥**

व्रतबन्ध गरेपछि मात्र वैश्यले विवाह गर्नु र गृहस्थ बनी पशुपालन, व्यापार जस्ता आफ्ना परम्परागत व्यवसाय अपनाउनू ।

**प्रजापतिर्हि वैश्याय सृष्ट्वा परिददे पशून् ।**
**ब्राह्मणाय च राज्ञे च सर्वाः परिददे प्रजाः ॥३२७॥**



ब्रह्माले पशु सृष्टि गरी तिनको पालन-पोषण र संरक्षण गर्ने जिम्मा वैश्यलाई दिएका छन् ।
यसैगरी क्षत्रियलाई प्रजापालन गर्ने र ब्राह्मणलाई क्षत्रियलाई
मार्गदर्शन गर्ने जिम्मा दिएका छन् ।

**न च वैश्यस्य कामः स्यान्न रक्षेयं पशूनिति ।**
**वैश्ये चेच्छति नान्येन रक्षितव्या कथञ्चन ॥३२८॥**

वैश्यले परम्परागत पशु-रक्षाको दायित्व ननिभाउने कुरा सोच्नु पनि पाप हो ।
उसले नमाने पनि अन्य वर्णले यो पेसा कहिल्यै नअपनाउनू ।

**मणिमुक्ताप्रवालानां लौहानां तांतवस्य च ।**
**गन्धानां च रसानां च विद्यादर्घं बलाबलम् ॥३२९॥**

वैश्यले मणि, मोती, मुगा, वस्त्र, कपूर आदि गन्ध र नुन आदि रस-रसायनको

गुण-दोष र भाउको उतार-चढावको पूरा जानकारी राख्नू ।

**बीजानामुप्तिविच्च स्यात्क्षेत्रदोषगुणस्य च ।**
**मानयोगं च जानीयात्तुलायोगांश्च सर्वशः ॥३३०॥**

बिउ रोप्ने तरिका, खेतको गुण-दोष तथा सबै प्रकारका नापतौलका
सम्बन्धमा पनि जानकारी राख्नू ।

**सारासारं च भाण्डानां देशानां च गुणागुणान् ।**
**लाभालाभञ्च पण्यानां पशूनां परिवर्धनम् ॥३३१॥**
**भृत्यानां च भृतिं विद्याद्भाषाश्च विविधा नृणाम् ।**
**द्रव्याणां स्थानयोगांश्च क्रयविक्रयमेव च ॥३३२॥**

विभिन्न थरी र देश अनुसार उब्जनी हुने अन्नका गुण-दोष, विभिन्न धानको सस्तो-महँगो भाउ, बिक्रेयको फाइदा-बेफाइदा, पशुवृद्धिका उपाय, सेवक-कर्मचारी-अधिकारीको तलब भुक्तानको तरिका, विभिन्न धानको भण्डारन विधि, खरिदबिक्रीका तरिका र देश अनुसारका भाषा तथा चलनका सम्बन्धमा वैश्यले जानकारी राख्नू ।



**धर्मेण च द्रव्यवृद्धावातिष्ठेद्यत्नमुत्तमम् ।**
**दद्याच्च सर्वभूतानामन्नमेव प्रयत्नतः ॥३३३॥**

वैश्यले धर्म अनुसार आफ्नो धनको वृद्धि गर्न र सबैका लागि अन्न
आपूर्ति गर्न प्रयत्नशील हुनु पर्दछ ।

**विप्राणां वेदविदुषां गृहस्थानां यशस्विनाम् ।**
**शुश्रूषैव तु शूद्रस्य धर्मो नैःश्रेयसः परः ॥३३४॥**

शूद्रको एकमात्र धर्म सदाचारी एवं यशस्वी गृहस्थ ब्राह्मणको सेवा गर्नु हो ।

**शुचिरुत्कृष्टशुश्रूषुर्मृदुवागनहङ्कृतः ।**
**ब्राह्मणाद्याश्रयो नित्यमुत्कृष्टां जातिमश्नुते ॥३३५॥**

स्वच्छ-पवित्र आचार-व्यवहार गर्ने, परिश्रमी, विनम्र, अहङ्कार नभएको तथा शुद्ध मनले बाहुनको सेवामा लागिरहने शूद्र उच्च जातिसमान आदरणीय हुन्छ ।

**एषोऽनापदि वर्णानामुक्तः कर्मविधिः शुभः ।**
**आपद्यपि हि यस्तेषां क्रमशस्तन्निबोधत ॥३३६॥**

भृगु फेरी भन्नुहुन्छ-मैले हजुरहरूलाई सामान्य अवस्थाका वर्ण-धर्म बताएँ । अब यसपछि यिनका आपदकालीन धर्मका बारेमा जानकारी दिनेछु, ध्यान दिएर सुन्नु होस् ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां नवमोऽध्यायः ॥९॥**

✷

**मनुस्मृति, नवौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**



✷

**शुरुदेखिको श्लोकको संख्या:-१,८२६+३३६=२,१६२**

✷

# ॥ अथ दशमोऽध्यायः ॥
# (वर्णका आपदकालीन धर्म)

**अधीयीरँस्त्रयो वर्णाः स्वकर्मस्थाः द्विजातयः ।**
**प्रब्रूयाद् ब्राह्मणास्त्वेषां नेतराविति निश्चयः ॥१॥**

द्विजले आफ्ना कामकर्तव्य गर्दै वेद अध्ययन गर्नु पर्दछ । वेद अध्यापन गर्ने अधिकार भने ब्राह्मणलाई मात्र छ, अरुलाई छैन ।

**सर्वेषां ब्राह्मणो विद्याद्वृत्त्युपायान्यथाविधिः ।**
**प्रब्रूयादितरेभ्यश्च स्वयं चैव तथा भवेत् ॥२॥**

ब्राह्मणले सबै वर्णको शास्त्रनिर्दिष्ट जीवन-पद्धतिका विषयमा विधिपूर्वक जानी ती वर्णलाई सो कुरा बताउने गर्नाले अन्य वर्णले पनि शास्त्रसम्मत तरिकाले जीवन चलाउन सम्भव हुने गर्दछ ।



**वैशेष्यात्प्रकृतिश्रेष्ठ्यान्नियमस्य च धारणात् ।**
**संस्कारस्य विशेषाच्च वर्णानां ब्राह्मणः प्रभुः ॥३॥**

श्रेष्ठ स्वभाव, नियम पालनमा दृढता र संस्कारमा शुद्धताका कारणले नै ब्राह्मण सबै वर्णका स्वामी भएका हुन् ।

**ब्राह्मणः क्षत्रियो वैश्यस्त्रयो वर्णा द्विजातयः ।**
**चतुर्थ एकजातिस्तु शूद्रो नास्ति तु पञ्चमः ॥४॥**

बाहुन, छेत्री र वैश्य यी तीन जात द्विजाति हुन् । चौथो एउटा जात शूद्र हो । पाँचौं कुनै जात छैन ।

**सर्ववर्णेषु तुल्यासु पत्नीष्वक्षतयोनिषु ।**
**आनुलोम्येन सम्भूता जात्या ज्ञेयास्त एव ते ॥५॥**

चारै वर्णले आफू समान वर्णकी सबै कुराले पवित्र विवाहिता स्त्रीबाट जन्माएका सन्तानले आ-आफ्नो जात र वर्णलाई अघि बढाउँछन् ।

**स्त्रीष्वनन्तरजातासु द्विजैरुत्पादितान्सुतान् ।**
**सदृशानेव तानाहुर्मातृदोषविगर्हितान् ॥६॥**

द्विजले आफूभन्दा एक तह तल्लो जातका अविवाहित कन्याको गर्भबाट जन्माएका सन्तान माताको हीन-दोषका कारण पतित भनी चिनिन्छ ।

**अनन्तरासु जातानां विधिरेष सनातनः ।**
**द्व्येकान्तरासु जातानां धर्म्यं विद्यादिमं विधिम् ॥७॥**

आफूभन्दा एक अन्तर वर्ण (दुई वर्ण तल वा माथिको) सनातन विधि यस्तो छ ।
दुई अन्तर वर्ण (तीन वर्ण तल वा माथि) का विधि पनि यस्ता छन् ।



**ब्राह्मणाद्वैश्यकन्यायामम्वष्ठो नाम जायते ।**
**निषादः शूद्रकन्यायां यः पारशव उच्यते ॥८॥**

ब्राह्मणले वैश्य कन्याबाट जन्माउने सन्तान 'अम्बष्ठ' र शूद्र कन्याबाट जन्माउने सन्तानलाई 'निषाद' वा 'पारशव' भनिन्छ ।

**क्षत्रियाच्छूद्रकन्यायां क्रूराचारविहारवान् ।**
**क्षत्रशूद्रवपुर्जन्तुरुग्रो नाम प्रजायते ॥९॥**

क्षत्रिय र शूद्रकन्याबाट जन्मने बालक मिश्रित स्वभाव भएको र क्रूर हुन्छ तथा 'उग्र' भनी चिनिन्छ ।

**विप्रस्य त्रिषु वर्णेषु नृपतेवर्णयोर्द्वयोः ।**
**वैश्यस्य वर्णे चैकस्मिन् षडेतेऽपसदाः स्मृताः ॥१०॥**

ब्राह्मणले तल्ला तीन वर्णका, क्षत्रियले तल्ला दुई वर्णका र वैश्यले आफूभन्दा तल्लो एक वर्णको गरी छ थरी कन्याबाट उत्पन्न गराउने सन्तानलाई 'अपसद' भनिन्छ ।

**क्षत्रियाद्विप्रकन्यायां सूतो भवति जातितः ।**
**वैश्यान्मागधवैदेहौ राजविप्राङ्गनासुतौ ॥११॥**

छेत्रीले बाहुनीबाट जन्माएका सन्तानलाई 'सूत' तथा वैश्यले छेत्रिनी र बाहुनीबाट जन्माएका सन्तान क्रमशः 'मागध' र 'वैदेह' हुन्छन् ।

**शूद्रादायोगवः क्षेत्ता चाण्डालश्चाधमो नृणाम् ।**
**वैश्यराजन्यविप्रासु जायन्ते वर्णसङ्कराः ॥१२॥**

शूद्रले वैश्या, छेत्रिनी र बाहुनीबाट क्रमशः 'आयोगव', 'क्षत्ता' र अधम 'चाण्डाल' नामका वर्णसङ्कर सन्तान जन्माउँदछ ।



**एकान्तरे त्वानुलोम्यादम्बष्ठोग्रौ यथा स्मृतौ ।**
**क्षतृवैदेहकौ तद्वत्प्रतिलोम्योऽपि जन्मनि ॥१३॥**

एकान्तर वर्णमा सुल्टो क्रमले अम्बष्ठ र उग्र भएजस्तै उल्टो क्रमले क्षत्ता र वैदेह सन्तान जन्मन्छन् ।

**पुत्राः येऽनन्तरस्त्रीजाः क्रमेणोक्ताः द्विजन्मनाम् ।**
**ताननन्तरनाम्नस्तु मातृदोषात्प्रचक्षते ॥१४॥**

एक वर्ण तल्ला स्त्रीबाट जन्मनेको नाम बताइयो । दुई वर्ण तल्ला स्त्रीबाट जन्मनेलाई माताको वर्णहीनताले गर्दा 'अनन्तर' पनि भनिन्छ ।

**ब्राह्मणादुग्रकन्यायामावृतो नाम जायते ।**
**आभीरोंऽबष्ठकन्यायामायोगव्यां तु धिग्वणः ॥१५॥**

ब्राह्मण र उग्र स्त्रीबाट जन्मनेलाई 'आवृत्त', अम्वष्ठ स्त्रीबाट जन्मनेलाई 'आभीर' र आयोगवाबाट जन्मनेलाई 'धिग्वण' भनिन्छ ।

**आयोगवश्च क्षत्ता च चण्डालाश्चाधमो नृणाम् ।**
**प्रातिलोम्येन जायन्ते शूद्रादपसदास्त्रयः ॥१६॥**

सुल्टो क्रममा अधर्मबाट जन्मने सन्तानहरु आयोगव, क्षत्ता र चाण्डाललाई त्यसको उल्टो क्रमको संसर्गबाट जन्मने निषाद, उग्र आदिभन्दा पनि निम्न मानिन्छ ।

**वैश्यान्मागधवैदेहौ क्षत्रियात्सूत एव तु ।**
**प्रतीपमेते जायन्ते परेऽप्यपसदास्त्रयः ॥१७॥**

मागध, वैदेह र सुतलाई प्रतिलोम सन्तान हुनाले अत्यन्त तल्ला श्रेणीका मानिएको छ ।

**जातो निषादाच्छूद्रायां जात्या भवति पुल्कसः ।**

**शूद्राज्जातो निषाद्यां तु स वै कुक्कुटकः स्मृतः ॥१८॥**

निषाद र शूद्राबाट जन्मने सन्तान 'पुक्कस' हुन्छन् ।
शूद्र र निषाद-स्त्रीबाट जन्मने 'कुक्कुटक' हुन्छन् ।

**क्षत्तुर्जातस्तथोग्रायां श्वपाक इति कीर्त्यते ।**
**वैदेहकेन त्वम्बष्ठ्यामुत्पन्नो वेण उच्यते ॥१९॥**

क्षत्ता पुरुष र उग्र-स्त्रीबाट जन्मने 'श्वपाक' हुन्छन् ।
वैदेह र अम्बष्ठ-स्त्रीबाट जन्मनेलाई 'वेण' भनिन्छ ।

**द्विजातयः सवर्णासु जनयन्त्यव्रतांस्तु यान् ।**
**तान्सावित्रीपरिभ्रष्टान् व्रात्यानिति विनिर्दिशेत् ॥२०॥**

द्विजातिका स्व-वर्णका स्त्रीबाट जन्मिने सन्तान पनि संस्कार विहीन छन् भने पतित र भ्रष्ट हुन्छन् र 'व्रात्य' भनी चिनिन्छन् ।

**व्रात्यात्तु जायते विप्रात्पापात्मा भूर्जकण्टकः ।**
**आवन्त्यवाटधानौ च पुष्पधः शैख एव च ॥२१॥**

व्रात्य बाहुनका सन्तानलाई पापात्मा हुनाले 'भूर्जकण्टक' पनि भनिन्छ ।
ठाउँठाउँमा यिनलाई आवन्त्य, वाटधान, पुष्पध वा शैख पनि भन्ने गरिन्छ ।

**झल्लो मल्लश्च राजन्याद् व्रात्यान्निच्छिविरेव च ।**
**नटश्च करणश्चैव खसो द्रविड एव च ॥२२॥**

व्रात्य क्षत्रियका सन्तानहरुको झल्ल, मल्ल, लिच्छवि, नट, करण, खस र द्रविड आदि विभिन्न जात हुन्छ ।



**वैश्यात्तु जायते व्रात्यात् सुधन्वाचार्य एव च ।**
**कारुषश्च विजन्मा च मैत्रः सात्वत एव च ॥२३॥**

व्रात्य वैश्यबाट उत्पन्न सन्तान पापात्मा हुनाले सुधन्वाचार्य (मृतकको अन्तिम संस्कार गराउने), कारुप, विजन्मा, मैत्र वा सत्वत भनी चिनिन्छन् ।

**व्यभिचारेण वर्णानामवेद्यावेदनेन च ।**
**स्वकर्मणां च त्यागेन जायन्ते वर्णसङ्कराः ॥२४॥**

भिन्न वर्णका पुरुष-स्त्रीबाट जन्मने, गमन गर्न नहुने स्त्रीबाट जन्मने तथा पशुवृत्ति भएका पुरुषबाट जन्मने सन्तानलाई वर्णसङ्कर भनिन्छ ।

**सङ्कीर्णयोनयो ये तु प्रतिलोमाऽनुलोमजाः ।**
**अन्योऽन्यव्यतिषक्ताश्च तान्प्रवक्ष्याम्यशेषतः ॥२५॥**

भृगु भन्नुहुन्छ-सङ्कीर्ण जुनीबाट उल्टो वा सुल्टो क्रमले जन्मने विभिन्न सन्तानका बारेमा म अब विशेषरूपले बताउँदछु ।

**सूतो वैदेहकश्चैव चण्डालश्च नराधमः ।**
**मागधः क्षत्तृजातिश्च तथाऽऽयोगव एव च ॥२६॥**
**एते षट् सदृशान्वर्णाञ्जनयन्ति स्वयोनिषु ।**
**मातृजात्यां प्रसूयन्ते प्रवरासु च योनिषु ॥२७॥**

सूत, वैदेह, अधम, चाण्डाल, मगध, क्षत् तथा अयोगव जातका पुरुषले आफ्नै जातकी स्त्रीबाट जन्माएका सन्तानले पिताकै जात र आफूभन्दा उच्च जातका स्त्रीबाट जन्माएका सन्तानले माताको जातलाई धारण गर्दछन् ।

**यथा त्रयाणां वर्णानां द्वयोरात्माऽस्य जायते ।**
**आनन्तर्यास्वयोन्यां तु तथा बाह्येष्वपि क्रमात् ॥२८॥**



जसरी द्विजले सवर्णबाट जन्माएका सन्तान पिताका जातका र असवर्णबाट जन्माएका सन्तान माताका जातका हुन्छन् त्यसैगरी वर्णसङ्कर जातमा पनि जान्नू ।

**ये चापि बाह्यान्सबहूंस्ततोऽप्यधिकदूषितान् ।**
**परस्परस्य दारेषु जनयन्ति विगर्हितान् ॥२९॥**

निम्न जातका व्यक्तिले एकअर्का जातका स्त्रीबाट जन्माउने सन्तान पिताभन्दा पनि निम्न र निन्दनीय जातका हुन्छन् ।

**यथैव शूद्रो ब्राह्मण्यां बाह्यं जन्तुं प्रसूयते ।**
**तथा बाह्यान्तरं बाह्यश्चातुर्वर्ण्ये प्रसूयते ॥३०॥**

शूद्र र बाहुनीबाट जन्मने 'अधम' सन्तानले आफूभन्दा भिन्न जातका स्त्रीपुरुषबाट जन्माउने सन्तान अझ निकृष्ट हुँदै जान्छन् ।

**प्रतिकूलं वर्तमाना बाह्या बाह्यतरान्पुनः ।**
**हीना हीनान्प्रसूयन्ते वर्णान्पञ्चदशैव तु ॥३१॥**

निम्न तथा अधम जातमा पनि एकअर्कामा भिन्न जातबाट अझ निम्न
पन्ध्र थरी सन्तानको जन्म हुन्छ ।

**प्रसाधनोपचारज्ञमदासं दासजीवनम् ।**
**सैरिन्ध्रं वागुरावृत्तिं सूते दस्युरयोगवे ॥३२॥**

प्रसाधन कार्य (ब्यूटिशियन) गर्ने, गोडा धोइदिने वा नुहाइदिने, जाल-पाशले जीवन चलाउने,
बँधेर खेलतमाशा आदि देखाई जीवन चलाउने वा बाटो ढुकेर यात्रु लुट्ने जस्ता काम गर्ने
सैरन्ध्रिका सन्तानलाई 'आयोगव' भनिन्छ ।

**मैत्रेयकं तु वैदेहो माधूकं सम्प्रसूयते ।**
**नृन्प्रशंसत्यजस्रं यो घण्टताण्डोऽरुणोदये ॥३३॥**



आयोगव स्त्रीले वैदेह पुरुषबाट मधुरभाषी 'मैत्रेयक' जन्माउँदछे ।
यिनले सबेरै राजालाई घण्ट आदि बाजा बजाएर जगाई स्तुति गर्ने कार्य गर्दछन् ।

**निषादो मार्गवं सूते दासो नौकर्मजीविनम् ।**
**कैवर्तमिति यं प्राहुरार्यावर्तनिवासिनः ॥३४॥**

आगोगव स्त्रीले निषादबाट डुङ्गा चलाउने 'भार्गव' जातका दासलाई जन्म दिन्छिन् ।
आर्यावर्तमा यिनलाई कैवर्त, केवट वा माझी भनिन्छ ।

**मृतवस्त्रभृत्स्वनार्यासु गर्हितान्नाशनासु च ।**
**भवन्त्यायोगवीष्वेते जातिहीनाः पृथक् त्रयः ॥३५॥**

मृतकका वस्त्र प्रयोग गर्ने वा गनाउने र त्याज्य भोजन खाने निकृष्ट आयोगव

स्त्रीका बेग्लै किसिमका तीन जातका सन्तान हुन्छन् ।

**कारावरो निषादात्तु चर्मकारः प्रसूयते ।**
**वैदेहिकादन्ध्रमेदौ बहिर्ग्रामप्रतिशयौ ॥३६॥**

निषादबाट 'कारावर' चर्मकार एवं वैदेहकबाट 'अन्ध्र' र 'भेद' जाति जन्मन्छन् र यी गाउँभन्दा बाहिर एकान्तमा बस्दछन् ।

**चाण्डालात्पाण्डुसोपाकस्त्वक्सारव्यवहारवान् ।**
**आहिण्डिको निषादेन वैदेह्यामेव जायते ॥३७॥**

वैदेही र चाण्डालबाट पाण्डु 'सोपाक' जन्मन्छन् र बाँसको कामले जीवन चलाउँछन् ।
वैदेही र निषादबाट 'आहिण्डक' सन्तान जन्मन्छन् ।

**चाण्डालेन तु सोपाको मूलव्यसनवृत्तिमान् ।**

**पुस्कस्यां जायते पापः सदा सज्जनगर्हितः ॥३८॥**

पुक्कसी स्त्रीले चाण्डालसँगको विवाहबाट 'सोपाक' जाती जन्मन्छन् र यिनीहरु जल्लादको कामबाट जीवन धान्दछन् तथा समाजमा सधैं हेयका दृष्टिले हेरिन्छन् ।

**निषादस्त्री तु चाण्डालात्पुत्रमन्त्यावसायिनम् ।**
**श्मशानगोचरं सूते बाह्यानामपि गर्हितम् ॥३९॥**

निषाद स्त्री र चाण्डाल पुरुषबाट अती निम्न चाण्डाल जातिको जन्म हुन्छ ।
यिनीहरु मसानमा बस्दछन् र अभक्ष भक्षण गर्दछन् ।

**सङ्करे जातयस्त्वेताः पितृमातृप्रदर्शिताः ।**
**प्रच्छन्ना वा प्रकाशाः वा वेदितव्याः स्वकर्मभिः ॥४०॥**

भृगु भन्नुहुन्छ-माता र पिता अनुसार जन्मने विविध वर्णसङ्कर जातका बारेमा मैले बताएँ।
हजुरहरु यिनका प्रकट र गोप्य जातलाई यिनले गर्ने कर्मबाट थाहा पाउनु होस्।

**सजातिजानन्तरजाः षट् सुताः द्विजधर्मिणः।**
**शूद्राणं तु सधर्माणः सर्वेऽपध्वंसजाः स्मृताः॥४१॥**

बाहुनले बाहुनी, छेत्रिनी र वैश्याबाट, छेत्रीले छेत्री र वैश्याबाट तथा वैश्यले वैश्याबाट जन्माउने
छ थरी सन्तानहरुले पिताको वर्णलाई धारण गर्दछन्।
यसको उल्टोबाट शूद्रसमान जातको जन्म हुन्छ।

**तपोबीजप्रभावैस्तु ते गच्छन्ति युगे युगे।**
**उत्कर्षं चापकर्षं चमनुष्येष्विह जन्मतः॥४२॥**

प्रत्येक युगमा वीर्य र तप-साधनाले केही निम्न जात उच्च स्थानमा (विश्वामित्रजस्तै) र निकृष्ट
जीवन अपनाउने उच्च जात निम्न स्थानमा पुग्दछन् (ऋष्यश्रृङ्गजस्तै)।



**शनकैस्तु क्रियालोपादिमाः क्षत्रियजातयः।**
**वृषलत्वं गताः लोके ब्राह्मणादर्शनेन च॥४३॥**

तलका उच्च क्षत्रियहरु शनकका लहैलहैमा लागी आफ्नो कर्तव्य-कर्मबाट विमुख भएकाले
ब्राह्मणहरुले तिरस्कार गरि दिएकाले द्विजत्वबाट पतित भई शूद्र हुन गए।

**पुण्ड्रकाश्चौड्रद्रविडाः काम्बोजा यवनाः शकाः।**
**पारदापह्लवाश्चीनाः किराताः दरदाः खशाः॥४४॥**

पौण्ड्रक, ओड्र, द्रविड, कम्बोज, यवन, शक, पारद, पह्लव, चीन, किरात, दरद र खश-यी
कर्मलोपले गर्दा शूद्र भएका क्षत्रियका जातहरू हुन्।

**मुखबाहूरुपज्जानां या लोके जातयो बहिः ।**
**म्लेच्छवाचश्चार्यवाचः सर्वे ते दस्यवः स्मृतः ॥४५॥**

ईश्वरका मुख, हात, तिघ्रा र गोडाबाट पैदा हुने ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र तथा अन्य आर्य भाषाभाषी एवं म्लेच्छ भाषाभाषी जातिहरु आफ्ना कर्तव्य-कर्मबाट पतित भए तिनलाई 'दस्यु' भनिन्छ ।

**ये द्विजानामपसदा ये चापध्वंसजाः स्मृताः ।**
**ते निन्दितैर्वर्तयेयुर्द्विजानामेव कर्मभिः ॥४६॥**

द्विजबाट उत्पन्न अपसद र अपध्वंस पुत्रहरुले वस्त्र धुने, बढार्ने आदिजस्ता द्विज-सेवाबाट गुजारा गर्नुपर्दछ ।

**सूतानामश्वसारथ्यानाम्बष्ठानां चिकित्सनम् ।**
**वैदेहकानां स्त्रीकार्यं मागधानां वणिक्पथः ॥४७॥**



सूतले सारथी, अम्बष्ठले चिकित्सा, वैदेहले खोपी सजाउने र मागधले व्यापार गरी जीविका चलाउनू ।

**मत्स्यघातो निषादानां त्वष्टिस्त्वायोगवस्य च ।**
**मेदान्ध्रचुञ्चुमद्गूनामारण्यपशुहिंसनम् ॥४८॥**

निषादले माछा मार्ने, आयोगवले दाउरा चिर्ने तथा भेद, अन्ध्र, चुंचु र मुद्गुले जङ्गली पशु मार्ने पेसा लिनू ।

**क्षत्त्रुग्रपुल्कसानां तु बिलौकोबधबन्धनम् ।**
**धिग्वणानां चर्मकार्यं वेणानां भाण्डवादनम् ॥४९॥**

क्षेत्ता, उग्र र पुक्कस जातिले दुलो र गुफामा बस्ने जानवर समाउने, बाँध्ने र मार्ने

काम गर्नू । धिग्वर्णले छालाका सामान बनाउने काम गर्नू । वेणले बाजा बजाउनू ।

**चैत्यद्रुमश्मशानेषु शैलेषूपवनेषु च ।**
**वसेयुरेते विज्ञाताः वर्तयन्तः स्वकर्मभिः ॥५०॥**

माथिका निम्न वर्णका व्यक्तिहरु आ-आफ्ना पुर्ख्यौली पेसामा पोख्त भई शहर बाहिरका चैत्य, वृक्ष, मसानघाट, वा पर्वतका घाँटीहरुमा बस्नू ।

**चण्डालश्वपचानां तु बहिर्ग्रामात्प्रतिश्रयः ।**
**अपपात्राश्च कर्तव्याः धनमेषां श्वगर्दभम् ॥५१॥**
**वासांसि मृतचैलानि भिन्नभाण्डेषु भोजनम् ।**
**कार्ष्णायसमलङ्कारः परिव्रज्या च नित्यशः ॥५२॥**

चाण्डाल र स्वपच जातिले गाऊँ-शहर बाहिर निवास बनाउनू, माटो-काँस आदिका भाँडा प्रयोग गर्नू, कुकुर-गधालाई सम्पत्ति मानेर पाल्नू, लाशको वा फाटेको पुराना कपडा लगाउनू, फलामका गहना लगाउनू र घुमक्कड जाति बन्नू ।



**न तैः समयमन्विच्छेत्पुरुषो धर्ममाचरन् ।**
**व्यवहारो मिथस्तेषां विवाहः सदृशैः सह ॥५३॥**

द्विजातिले गर्ने धार्मिक कार्यमा पतितसँग कुनै सम्पर्क नराख्नू र समान जातिमा मात्र विवाह र व्यवहार गर्ने गर्नू ।

**अन्नमेषां पराधीनं देयं स्याद्भिन्नभाजने ।**
**रात्रौ न विचरेयुस्ते ग्रामेषु नगरेषु च ॥५४॥**

द्विजले पतितलाई आफूले प्रयोग नगर्ने भाँडामा खान दिनू ।
यिनलाई रातमा गाऊँशहरमा घुम्ने अनुमति भने नदिनू ।

**दिवा चरेयुः कार्यार्थं चिह्नितराजशासनैः ।**
**अबान्धवं शवं चैव निर्हरेयुरिति स्थितिः ॥५५॥**

निकृष्ट जातिले गाऊँशहरमा पत्र राजाज्ञा लिनू । शास्त्रानुसार वेवारिसे लाशमा यिनको चाहे अनुसार उपयोगको अधिकार हुन्छ ।

**बध्यांश्च हन्युः सततं यथाशास्त्रं नृपाज्ञया ।**
**वध्यवासांसि गृह्णीयुः शय्याश्चाभरणानि च ॥५६॥**

चाण्डाल र श्वपचले शास्त्रीय विधानलाई मान्यता दिँदै राजाद्वारा मृत्युदण्ड पाएकालाई सूलीमा चढाउने काम गर्नू । मृतकका वस्त्र र आभूषणमा यिनैको अधिकार हुन्छ ।

**वर्णापेतमविज्ञातं नरं कलुषयोनिजम् ।**
**आर्यरूपमिवानार्थं कर्मभिः स्वैर्विभावयेत् ॥५७॥**



आर्य-अनार्यमा शङ्का देखिए उसको चरित्र, आचरण आदि जाँच्नू किनकि रङ्ग बदलिए पनि स्वभाव सजिलै बदलिँदैन ।

**अनार्यता निष्ठुरता क्रूरता निष्क्रियात्मता ।**
**पुरुषं व्यञ्जयन्तीह लोके कलुषयोनिजम् ॥५८॥**

असभ्य आचरण, कठोर र तुच्छ वचन, निर्मम र क्रूर व्यवहार तथा शुभकर्म गर्नमा उदासीनता देखिएमा उसको जातको कुलिनता ठीक छैन पतित कुलको हो भनेर जान्नू ।

**पित्र्यं वा भजते शीलं मातुर्वोभयमेव वा ।**
**न कथञ्चन दुर्योनिः प्रकृतिं स्वां नियच्छति ॥५९॥**

वर्णसङ्कर जात कतै बाबु गुना, कतै आमा गुना र कतैकतै दुवै गुना गएका हुन्छन् तैपनि ती आफ्नो वास्तविकता लुकाउन भने सक्दैनन् ।

**कुले मुख्येऽपि जातस्य यस्य स्याद्योनिसङ्करः ।**
**स श्रयत्येव तच्छीलं नरोऽल्पमपि वा बहु ॥६०॥**

उच्च खानदानबाट जन्मिएको वर्णसङ्कर पुत्रले केही आमाको गुण लिए पनि वीर्य प्रदान हुने हुनाले उसमा आमाको त्यो अल्प गुण दबेर पिताका दुर्गुणहरु उजागर हुने गर्दछन् ।

**यत्र त्वेते परिध्वंसा जायन्ते वर्णदूषकाः ।**
**राष्ट्रियैः सह तद्राष्ट्रं क्षिप्रमेव विनश्यति ॥६१॥**

अत्यधिक संख्यामा वर्णसङ्कर जन्माउने राज्य र त्यहाँका जनता
चाँडै नै पतित भएर नष्ट हुन्छन् ।

**ब्राह्मणार्थे गवार्थे वा देहत्यागोऽनुपस्कृतः ।**
**स्त्रीबालाभ्युपपत्तौ वा बाह्यानां सिद्धिकारणम् ॥६२॥**



पतित र नीच व्यक्ति यदि गाई, ब्राह्मण, स्त्री वा बालक आदिको रक्षार्थ आफ्नो प्राण दिन्छ भने यो त्यागले उसलाई उच्च पदमा प्रतिष्ठित गर्दछ ।

**अहिंसा सत्यमस्तेयं शौचमिन्द्रियनिग्रहः ।**
**एतं समासिकं धर्मं चातुवर्ण्येऽब्रवीन्मनुः ॥६३॥**

अहिंसा, साँचो बोल्नु, चोरी नगर्नु, पवित्र रहनु र इन्द्रिय वशमा राख्नु-यी सबै वर्णका पालनायोग्य धर्म हुन् भनी मनुले बताएका छन् ।

**शूद्रायां ब्राह्मणाज्जातः श्रेयसा चेत्प्रजायते ।**
**अश्रेयान् श्रेयसीं जातिं गच्छत्याऽऽसप्तमाद्युगात् ॥६४॥**

ब्राह्मण र शूद्राकी पुत्री पनि कहिले काहीँ आफ्नो परिवारलाई उद्धार गर्ने हुन पुग्दछे । यस्ती कन्याबाट जन्मने कन्याले सात पुस्तासम्म ब्राह्मणसँग विवाह गरे भने

अन्तिम पुस्तामा जन्मने सन्तानलाई स्वतः ब्राह्मणत्व प्राप्त हुन्छ ।

**शूद्रो ब्राह्मणतामेति ब्राह्मणश्चैति शूद्रताम् ।**
**क्षत्रियाज्जातमेवं तु विद्याद्वैश्यात्तथैव च ॥६५॥**

शूद्रले ब्राह्मणत्व प्राप्त गर्न र ब्राह्मण शूद्र बन्न सम्भव छ । यसैगरी क्षत्रिय र वैश्य पुत्रहरु पनि उत्तम वा अधम हुन सक्दछन् ।

**आचार्यायां समुत्पन्नो ब्राह्मणात्तु यदृच्छया ।**
**ब्राह्मण्यामप्यनार्यात्तु श्रेयस्त्वं क्वेति चेद्भवेत् ॥६६॥**

ब्राह्मणको वीर्य र शूद्राको गर्भ तथा शूद्रको वीर्य र ब्राह्मणीको गर्भबाट जन्मने सन्तानमा निम्नानुसार श्रेष्ठताको आधार हुन्छ ।

**जातो नार्यामनार्यायामार्यादार्यो भवेद्गुणैः ।**

**जातोऽप्यनार्यादार्यायामनार्य इति निश्चयः ॥६७॥**

आर्य बिउ तथा अनार्य क्षेत्रबाट उत्पन्न बालक धेरथोर आर्य गुणको हुन सक्ला तर अनार्य बिउ र आर्य क्षेत्रबाट उत्पन्न बालकमा उत्कृष्टता खोज्नु व्यर्थ छ, यो कटु सत्य हो ।

**तावुभावप्यसंस्कार्याविति धर्मो व्यवस्थितः ।**
**वैगुण्याज्जन्मतः पूर्व उत्तरः प्रतिलोमतः ॥६८॥**

आर्य वीर्य र अनार्य क्षेत्र वा अनार्य वीर्य र आर्य क्षेत्रबाट उत्पन्न हुनेको उपनयन संस्कार गर्न शास्त्रले अधिकार दिँदैन किन कि पहिलोमा जाती-हीनता र दोश्रोमा प्रतिलोमको दोष हुन्छ ।

**सुबीजं चैव सुक्षेत्रे जातं सम्पद्यते यथा ।**
**तथाऽऽर्याज्जात आर्यायां सर्वं संस्कारमर्हति ॥६९॥**

असल बिउ राम्रो जमिनमा रोप्दा राम्रो उत्पादन भएझैं आर्यको वीर्य र गर्भबाट जन्मने बालक नै सुपात्र हुनाले उपनयन संस्कारको अधिकारी हुन्छ ।

**बीजमेके प्रशंसन्ति क्षेत्रमन्ये मनीषिणः ।**
**बीजक्षेत्रे तथैवान्ये तत्रेयं तु व्यवस्थितिः ॥७०॥**

विद्वानहरू कोही बिउलाई त कोही खेतलाई प्रमुख मान्दछन् । कोही दुवैलाई प्रधान पनि मान्दछन् । यस सम्बन्धमा यस्तो व्यवस्था छ :- ।

**अक्षेत्रे बीजमुत्सृष्टमन्तरैव विनश्यति ।**
**अबीजकमपि क्षेत्रं केवलं स्थण्डिलं भवेत् ॥७१॥**

बाँझोमा रोपिएको बिउ नउम्री भित्रभित्रै कुहिन्छ । जग्गा अब्बल नै किन नहोस् त्यसमा बिउबिजन छरिएन भने त्यो बाँझिन पुग्दछ । यसरी हेर्दा बिउ र खेत दुवै महत्वपूर्ण देखिन्छन् ।



**यस्माद्बीजप्रभावेण तिर्यग्जा ऋषयोऽभवन् ।**
**पूजिताश्च प्रशस्ताश्च तस्माद्बीजं प्रशस्यते ॥७२॥**

तर, बिउको तेजले मृगयोनिबाट उत्पन्न भएका ऋष्यश्रृङ्ग पूज्य एवं प्रशंसनीय ऋषि भएको देख्दा भने बिउको महत्वलाई कम आँकलन गर्न भने सकिन्न ।

**अनार्यमार्यकर्माणमार्यं चानार्यकर्मिणम् ।**
**संप्रधार्याब्रवीद्धाता न समौ नासमाविति ॥७३॥**

यस बाहेक, ब्रह्माले श्रेष्ठ कर्म गर्ने अनार्य र निकृष्ट कर्म गर्ने आर्यलाई न समान मानेका छन् न त असमान नै । (कर्म मात्र जातको आधार होइन, गुण र स्वभाव पनि जातको आधार हुन्छ) ।

**ब्राह्मणाः ब्रह्मयोनिस्थाः ये स्वकर्मण्यवस्थिताः ।**
**ते सम्यगुपजीवेयुः षट्कर्माणि यथाक्रमम् ॥७४॥**

ब्राह्मणको वीर्य र ब्राह्मणीको गर्भबाट उत्पन्न तथा आफ्नो निर्धारित कर्ममा तत्पर ब्राह्मणले निम्न छ वटा कर्मलाई विधिपूर्वक पालना गर्नु पर्दछ ।

**अध्यापनमध्ययनं यजनं याजनं तथा ।**
**दानं प्रतिग्रहश्चैव षट्कर्माण्यग्रजन्मनः ॥७५॥**

पढाउनु र पढ्नु, यज्ञ गर्नु र गराउनु, दान दिनु र लिनुः यी ब्राह्मणका छ कर्म हुन् ।

**षण्णां तु कर्मणामस्य त्रीणि कर्माणि जीविका ।**
**याजनाध्यापने चैव विशुद्धाच्च प्रतिग्रहः ॥७६॥**

यी छ कर्ममध्ये ब्राह्मणले पढाउने, यज्ञ गराउने र दान लिने कामलाई विशुद्ध (शास्त्र-सम्मत) तरिकाले आफ्नो वृत्ति (पेसा) बनाउनु  पर्दछ ।

**त्रयो धर्मा निवर्तन्ते ब्राह्मणात्क्षत्रियं प्रति ।**

**अध्यापनं याजनं च तृतीयश्च प्रतिग्रहः ॥७७॥**

ब्राह्मणका छ कर्ममध्ये वेद पढनु, यज्ञ गर्नु र दान दिनु : यी तीन कुरा क्षत्रियका लागि पनि निर्धारित धर्म हुन् ।

**वैश्यं प्रति तथैवैते निवर्तेरन्निति स्थितिः ।**
**न तौ प्रति हितान्धर्मान्मनुराह प्रजापतिः ॥७८॥**

मनुका अनुसार ब्रह्माले वैश्यका लागि पनि वेदाध्ययन गर्नु, यज्ञ गर्नु र दान दिनु मुख्य कर्म बताएका छन् ।

**शस्त्रास्त्रभृत्त्वं क्षत्रस्य वणिक्पशुकृषिर्विशः ।**
**आजीवनार्थं धर्मस्तु दानमध्ययनं यजिः ॥७९॥**

शस्त्रास्त्र धारण गर्नु क्षत्रियको तथा व्यापार, पशुपालन र कृषि वैश्यका पेसा हुन् ।
वेदाध्ययन गर्नु, यज्ञ गर्नु र दान दिनु यिनका सामान्य धर्म हुन् ।

**वेदाभ्यासो ब्राह्मणस्य क्षत्रियस्य च रक्षणम् ।**
**वार्ताकर्मैव वैश्यस्य विशिष्टानि स्वकर्मसु ॥८०॥**

ब्राह्मणका लागि वेदाभ्यास, क्षत्रियका लागि रक्षाकर्म र वैश्यकालागि व्यापार-व्यवसाय विशिष्ट कर्म हुन् ।

**अजीवंस्तु यथोक्तेन ब्राह्मणः स्वेन कर्मणा ।**
**जीवेत्क्षत्रियधर्मेण स ह्यस्य प्रत्यनन्तरः ॥८१॥**

ब्राह्मणले आफ्ना लागि निर्धारण गरिएका कर्मबाट जीवन धान्न नसक्ने अवस्था आएमा क्षत्रिय-कर्म गरेर जीवन चलाउन सक्दछ ।



**उभाभ्यामप्यजीवंस्तु कथं स्यादिति चेद्भवेत् ।**
**कृषि गोरक्षमास्थाय जीवेद्वैश्यस्य जीविकाम् ॥८२॥**

उपरोक्त दुईवटै कर्मबाट पनि जीवन चलाउन नसक्ने अवस्था आएमा ब्राह्मणले कृषि, पशुपालन र व्यापार अर्थात् वैश्यकर्म अपनाई जीवन चलाओस् ।

**वैश्यवृत्त्यापि जीवंस्तु ब्राह्मणः क्षत्रियोऽपि वा ।**
**हिंसाप्रायां पराधीनां कृषिं यत्नेन वर्जयेत् ॥८३॥**

सङ्कटमा वैश्य-पेसा अपनाउने ब्राह्मण र क्षत्रियले पनि हिंसाग्रस्त र अर्काको अधिनको कृषिकर्म अपनाउनु भने हुँदैन ।

**कृषिं साध्विति मन्यन्ते सा वृत्तिः सद्भिगर्हिता ।**
**भूमिं भूमिशयांश्चैव हन्ति काष्ठमयोमुखम् ॥८४॥**

कोही कृषिलाई उत्कृष्ट भन्दछन् त कोही हिंसात्मक हुनाले त्याज्य मान्दछन् ।
त्याज्य मान्नेको विचारमा कृषि पेसामा प्रयोग हुने औजार आदिले जीवको नाश हुन्छ ।

**इदं तु वृत्तिवैकल्यात्त्यजतो धर्मनैपुणम् ।**
**विट् पण्यमुद्धृतोद्धारं विक्रेयं वित्तवर्धनम् ॥८५॥**

आफ्नो लागि निर्धारित कर्म गरेर जीवन वृत्ति चलाउन नसक्ने ब्राह्मण र क्षत्रियले हेराफेरी, भूट र मोलतोलमा गडबढी गर्ने जस्ता खराब काम नगरी धनको वृद्धि गर्ने व्यापारको काम वा वस्तुको खरिदबिक्रीको काम अपनाउन पनि सक्दछन् ।

**सर्वान् रसानपोहेत कृतान्नं च तिलैः सह ।**
**अश्मनो लवणं चैव पशवो ये च मानुषाः ॥८६॥**
**सर्वं च तान्तवं रक्तं शाणक्षौमाविकानि च ।**
**अपि चेत्स्युररक्तानि फलमूले तथौषधिः ॥८७॥**
**अपः शस्त्रं विषं मांसं सोमं गन्धांश्च सर्वशः ।**

**क्षीरं क्षौद्रं दधि घृतं तैलं मधु गुडं कुशान् ॥८८॥**
**अरण्यांश्च पशून्सर्वान्दंष्ट्रिणश्च वयांसि च ।**
**न नीलिं च लाक्षां च सर्वांश्चैकशफांस्तथा ॥८९॥**

सङ्कटकालमा वैश्यवृत्ति वा व्यापार-व्यवसाय गर्ने ब्राह्मण वा क्षत्रियले रस-रसायन, पाकेको अन्न, तील, सिधे नुन, घरपालुवा पशु, सनका रङ्गिन कपडा, रेशमी कपडा , ऊनी कपडा , रङ्गिन कपडा, सेतो कपडा, फलफूल, कन्दमूल, औषधि, पानी, हतियार, विष, मासु, सोमलता, अत्तर आदि सबै प्रकारका गन्ध, दूध, मह, घिउ, तेल, शखर र कुशको व्यापार गर्नु भने हुँदैन ।

**काममुत्पाद्य कृष्यां तु स्वयमेव कृषीवलः ।**
**विक्रीणीत तिलान् शूद्रान्धर्मार्थमचिरस्थितान् ॥९०॥**

बैश्यले आफैंले खेती गरी उत्पादन गरेको र धेरै दिनदेखि सुरक्षित राखेको तील कुनै धर्मकर्मका लागि शूद्रलाई सित्तैमा दिन भने सकिन्छ ।

**भोजनाभ्यञ्जनाद्दानाद्यदन्यत्कुरुते तिलैः ।**
**कृमिभूतः श्वविष्ठायां पितृभिः सह मज्जति ॥९१॥**

खान, मालिश गर्न र दानगर्न भन्दा भिन्न कामका लागि तिल बेच्ने ब्राह्मण वा क्षत्रिय आफू स्वयं त कुकुरको गुहूमा सलबलाउने किरा बन्छ बन्छ, आफ्ना पितृलाई पनि सँगसँगै डुबाउँदछ ।

**सद्यः पतति मांसेन लाक्षया लवणेन च ।**
**त्र्यहेण शूद्रो भवति ब्राह्मणः क्षीरविक्रयात् ॥९२॥**

मासु, लाहा तथा नुनको ब्यापार गर्नाले ब्राह्मण तुरुन्त पतित हुन्छ एवं दूध बेच्नाले तीन दिनमा नै शूद्र हुन्छ ।

**इतरेषां तु पण्यानां विक्रयादिह कामतः ।**
**ब्राह्मणः सप्तरात्रेण वैश्यभावं नियच्छति ॥९३॥**



यस बाहेकका कुरा आफूखुशी बेच्ने ब्राह्मण सात रातमै वैश्य हुन पुग्दछ ।

**रसा रसैर्निमातव्या न त्वेव लवणं रसैः ।**
**कृतान्नं चाकृतान्नेन तिला धान्येन तत्समाः ॥९४॥**

तरल पदार्थ तरल पदार्थसँग विनिमय गर्नू । नुनसँग तरल पदार्थको विनिमय नगर्नू । केलाएका अन्न नकेलाएका अन्नसँग विनिमय गर्नू । तील त्यति नै बराबरको धानसँग साट्न सकिन्छ ।

**जीवेदेतेन राजन्यः सर्वेणाप्यनयं गतः ।**
**न त्वेव जायसीं वृत्तिमभिमन्येत कर्हिचित् ॥९५॥**

सङ्कटमा क्षत्रियले वैश्यको वृत्ति अपनाउन त सक्दछ तर ब्राह्मणको वृत्ति अपनाउने छुट उसलाई छैन ।

**यो लोभादधमो जात्या जीवेदुत्कृष्टकर्मभिः ।**
**तं राजा निर्धनं कृत्वा क्षिप्रमेव प्रवासयेत्॥९६॥**

लोभ वा अहङ्कारले उच्च जातिको वृत्ति अपनाउनेलाई राजाले सर्वस्व जफत गरी देशनिकाला गर्नु पर्दछ ।

**वरं स्वधर्मे विगुणः परधर्मात्स्वधिष्ठितात् ।**
**परधर्मेण जीवन्हि सद्यः पतति जातितः ॥९७॥**

स्व-धर्म सानो र सारहीन लागे पनि अरुको भन्दा उत्कृष्ट हुने हुनाले आचरणीय हुन्छ । परधर्मले मानिस आफ्नो जातिबाट तुरुन्त पतित हुन्छ ।

**वैश्योऽजीवन्स्वधर्मेण शूद्रवृत्त्याऽपि वर्तयेत् ।**
**अनाचरन्नकार्याणि निवर्तेत न शक्तिमान्॥९८॥**



आफ्नो लागि निर्धारित धर्मले जीविका चलाउन नसके वैश्यले तीनै वर्णको सेवा गर्न सक्दछ तर वर्ण-धर्म अपनाउनबाट भने उसले जोगिन प्रयास गर्नु पर्दछ ।

**अशक्नुवंस्तु शुश्रूषां शूद्रः कर्तुं द्विजन्मनाम् ।**
**पुत्रदारात्ययं प्राप्तो जीवेत्कारुककर्मभिः ॥९९॥**

द्विजको सेवा गरेर परिवारको पेट पाल्न नसक्ने शूद्रले काठको मूर्ति बनाउने काम गरेर (सिकर्मी भएर) जीवन गुजारा गर्नू ।

**यैः कर्मभिः प्रचरितैः शुश्रूष्यन्ते द्विजातयः ।**
**तानि कारुककर्माणि शिल्पानि विविधानि च ॥१००॥**

शूद्र जेजस्ता प्रचलित कर्म द्विजको सेवा गर्दछ ती कर्मलाई र अन्य शिल्पकर्मलाई पनि कारुककर्म भनिन्छ ।

**वैश्यवृत्तिमनातिष्ठन्ब्राह्मणः स्वे पथि स्थितः ।**
**आवृत्तिकर्षितः सीदन्निमं धर्मं समाचरेत् ॥१०१॥**

सङ्कटमा पनि आफ्नो धर्ममा रही वैश्यकर्म नगर्ने ब्राह्मण, पात्र-कुपात्र सबैबाट दान लिन पूर्ण स्वतन्त्र हुन्छ ।

**सर्वतः प्रतिगृह्णीयाद्ब्राह्मणस्त्वनयं गतः ।**
**पवित्रं दुष्यतीत्येतद्धर्मतो नोपपद्यते ॥१०२॥**

आपदमा परेको ब्राह्मणले सबैसँग दान लिनू, किन कि पवित्रतामा धर्मले दोष लगाएको पाइन्न ।

**नाध्यापनाद्याजनाद्वा गर्हिताद्वा प्रतिग्रहात् ।**
**दोषो भवति विप्राणां ज्वलनांबुसमा हि ते ॥१०३॥**

सङ्कटमा निन्दितलाई पढाउन र निन्दितबाट दानलिन दोष हुँदैन किनकि अग्नि र जलझैं ब्राह्मण पवित्र हुन्छ ।

**जीवितात्ययमापन्नो योऽन्नमत्ति ततस्ततः ।**
**आकाशमिव पङ्केन न स पापेन लिप्यते ॥१०४॥**

प्राण जाने अवस्थामा जसले जहाँ गएर जोसुकैको अन्न खाएपनि उ आकाश हिलोबाट लिप्त नभएझैं पापमा लिप्त हुँदैन ।

**अजीगर्तः सुतं हन्तुमुपासर्पद्बुभुक्षितः ।**
**न चालिप्यत पापेन क्षुत्प्रतीकारमाचरन् ॥१०५॥**

अजीगर्तले भोकाएर खाने कुरा केही नपाई आफ्नै छोरो मारेर खाने निश्चय गर्दा पनि उनले दोष-पापले ग्रस्त हुनु परेन ।

**श्वमांसमिच्छन्नार्त्तोऽत्तुं धर्माधर्मविचक्षणः ।**
**प्राणानां परिरक्षार्थं वामदेवो न लिप्तवान् ॥१०६॥**

पापपुण्यको अन्तरका ज्ञाता महर्षि वामदेवले विपतमा प्राण रक्षार्थ कुकुरको मासुखाने निश्चय गर्दा पनि उनी दोषी भएनन् ।

**भरद्वाजः क्षुधार्तस्तु सपुत्रो विजने वने ।**
**बह्वीर्गाः प्रतिजग्राह वृधोस्तक्ष्णोः महातपाः ॥१०७॥**

निर्जन वनमा छोरासँगै बसिरहेका भारद्वाजले भोकले व्याकुल भई 'वृधु' नामको सिकर्मीका गाईहरु अपहरण गरी मार्दा पनि उनी कुनै दोष-पापको भागी बनेनन् ।

**क्षुधार्त्तश्चात्तुमभ्यागाद्विश्वामित्रः श्वजाघनीम् ।**
**चण्डालहस्तादादाय धर्माधर्मविचक्षणः ॥१०८॥**



पापपुण्यका ज्ञाता विश्वामित्रले भोकमा चाण्डालको हातबाट कुकुरको तिघ्राको मासु खाँदा पनि उनलाई कुनै दोष लागेन ।

**प्रतिग्रहाद्याजनाद्वा तथैवाध्यापनादपि ।**
**प्रतिग्रहः प्रत्यवरः प्रेत्य विप्रस्य गर्हितः ॥१०९॥**

निन्दितलाई पढाउनु र यज्ञ गराउनुभन्दा तीबाट दान लिनु निकृष्ट कार्य हुने हुनाले ब्राह्मणले यस्ताको दान लिनबाट बच्नू ।

**याजनाध्यापने नित्यं क्रियते संस्कृतात्मनाम् ।**
**प्रतिग्रहस्तु क्रियते शूद्रादप्यन्त्यजन्मनः ॥११०॥**

यस्तो दान लिनाले यो लोक र परलोक समेत बिग्रने हुनाले अध्यापन र यज्ञ दक्षिणाबाट मात्र ब्राह्मणले सन्तोष लिनू ।

**जपहोमैरपैत्येनो याजनाध्यापनैः कृतम् ।**
**प्रतिग्रहनिमित्तं तु त्यागेन तपसैव च ॥१११॥**

पढाउने र यज्ञ गराउने अधिकारी सुसंस्कृत र शुद्ध विप्र नै भएकाले पतित भएपनि सङ्कटमा पढाउँदा यज्ञ गराउँदा लाग्ने दोष हटाउन ब्राह्मणले (विशेष) जप, होम र तप गर्नु पर्दछ ।

**शिलोञ्छमप्याददीत विप्रोऽजीवन्यतस्ततः ।**
**प्रतिग्रहाच्छिलः श्रेयांस्ततोऽप्युञ्छः प्रशस्यते ॥११२॥**

धर्मवृत्तिबाट जीवन चलाउन नसक्ने हुँदा धर्मविरुद्धका काम गर्नुभन्दा त धान शिला खोजी जीवन धान्नु श्रेयस्कर हुन्छ ।

**सीदद्भिः कुप्यमिच्छद्भिर्धनं वा पृथिवीपतिः ।**
**याच्यः स्यात्स्नातकैर्विप्रैरदित्संस्त्यागमर्हति ॥११३॥**



अन्न अभावले भोको र परिवार पाल्ने चिन्ताले पीडित भएको स्नातकले सहायताका लागि राजालाई गुहार्नू । राजाले पनि के बुझ्न जरुरी हुन्छ भने स्नातक ब्राह्मणको गुहार सुनिएन भने अधर्मी र त्याज्य होइन्छ ।

**अकृतं च कृतात्क्षेत्राद्गौरजाविकमेव च ।**
**हिरण्यं धान्यमन्नं च पूर्वं पूर्वमदोषवत् ॥११४॥**

अन्न, धान, सुन, पशु, जोतिएको खेत र नजोतिएको खेत ग्रहण गर्नमा क्रमशः कम दोष हुन्छ ।

**सप्त वित्तागमा धर्म्या दायो लाभः क्रयो जयः ।**
**प्रयोगः कर्मयोगश्च सत्प्रतिग्रह एव च ॥११५॥**

अंश, पैत्रिक गाडधन, सस्तो किनी महँगोमा बेची कमाएको, युद्ध जितेर शत्रुबाट प्राप्त क्षतिपूर्ति, ब्याज तथा कृषिको आय, तलब र मित्र तथा नातेदारबाट प्राप्त हुने

सम्पत्ति धर्मको अनुकूल मानिन्छ ।

**विद्या शिल्पं भृतिः सेवा गोरक्ष्यं विपणिः कृषिः ।**
**धृतिर्भैक्षं कुसीदं च दश जीवनहेतवः ॥११६॥**

विद्या, शिल्प, सेवा, चाकडी, गाईपालन, व्यापार, कृषि, घरजग्गाको भाडा, ब्याज र भीख-यि जीवन चलाउने साधन हुन् ।

**ब्राह्मणः क्षत्रियो वाऽपि वृद्धिं नैव प्रयोजयेत् ।**
**कामं तु खलु धर्मार्थं दद्यात्पापीयसेऽल्पिकाम् ॥११७॥**

ब्राह्मण र क्षत्रियले ब्याजबाट धन कमाउने कुरा नसोच्नू । सङ्कटमा पनि धर्मकार्यका लागि खाँचोपरेका व्यक्तिसँग नाममात्रको ब्याज लिनू ।

**चतुर्थमाददानोऽपि क्षत्रियो भागमापदि ।**

**प्रजा रक्षन्परं शक्त्या किल्बिषात्परिमुच्यते ॥११८॥**

आपत्कालमा नीच मानिसलाई सदइएको धनमा पच्चीस प्रतिशत ब्याज लिने क्षत्रिय (राजा), पाएको ब्याजलाई सत्कार्यमा खर्च गर्दछ र निष्ठापूर्वक प्रजापालनमा लाग्दछ भने उ दोषमुक्त हुन्छ ।

**स्वधर्मो विजयस्तस्य नाहवे स्यात्पराङ्मुखः ।**
**शस्त्रेण वैश्यान् रक्षित्वा धर्म्यमाहारयेद्बलिम् ॥११९॥**

युद्ध जित्नु क्षत्रिय राजाको धर्म हो । युद्धबाट भाग्नु कायरता र पाप हो । शास्त्र अनुसार प्रजालाई समुचित तरिकाले पालनपोषण गर्ने राजालाई मात्र प्रजासँग कर लिने वास्तविक अधिकार हुन्छ ।

**धान्येऽष्टमं विशां शुल्कं विंशं कार्षापणावरम् ।**
**कर्मोपकरणाः शूद्राः कारवः शिल्पिनस्तथा ॥१२०॥**

सङ्कटकालमा वैश्यको अनाजमा बीसमा आठ कर लिन सकिन्छ । श्रमजीवि शूद्र, कालिगढ र शिल्पकारसँग सङ्कटकालमा पनि कर नलिनू ।

**शूद्रस्तु वृत्तिमाकांक्षन्क्षत्रमाराधयेदिति ।**
**धनिनं वाऽप्युपाराध्य वैश्यं शूद्रो जिजीविषेत् ॥१२१॥**

आजीविकाको पेसा अपनाउन इच्छुक शूद्रले कुनै छेत्री वा कुनै धनी वैश्यको आश्रय लिई त्यसबाट प्राप्त धनले सन्तोष लिनु पर्दछ ।

**स्वगार्थमुभयार्थं वा विप्रानाराधयेत्तु सः ।**
**जात ब्राह्मणशब्दस्य सा ह्यस्य कृतकृत्यता ॥१२२॥**



यो लोकमा यश र परलोकमा सद्गति चाहने शूद्रले थोरै आम्दानी भई जीवन धान्न कठीन भए पनि ब्राह्मणको सेवा गर्न नछाड्नू ।

**विप्रसेवैव शूद्रस्य विशिष्टं कर्म कीर्त्यते ।**
**यदतोऽन्यद्धि कुरुते तद्भवत्यस्य निष्फलम् ॥१२३॥**

शुद्रका लागि ब्राह्मणको सेवा गर्नु सर्वोत्तम धार्मिक अनुष्ठान हो र यही नै उसको जीवनको सफलता हो । यो बाहेक उद्दारा गरिएका सबै थोक निष्फल हुन्छन् ।

**प्रकल्प्य तस्य तैर्वृत्तिः स्वकुटुम्बाद्यथार्हतः ।**
**शक्तिं चावेक्ष्य दाक्ष्यं च भृत्यानां च परिग्रहम् ॥१२४॥**

शूद्रलाई काममा राख्दा कार्यशक्ति, रुचि, इमानदारिता, आर्थिकस्तर, परिवार संख्या र कामको समयका आधारमा उसलाई उचित तलब दिनु पर्दछ ।

**उच्छिष्टमन्नं दातव्यं जीर्णानि वसनानि च ।**
**पुलाकाश्चैव धान्यानां जीर्णाश्चैव परिच्छदाः ॥१२५॥**

द्विजले खाई बाँकी रहेको अन्न, पुराना कपडा , कुट्दा खसेको धान तथा पुराना भाँडाहरु घरकार्य गर्ने शूद्रलाई दिनू ।

**न शूद्रे पातकं किञ्चिन्न च संस्कारमर्हति ।**
**नास्याधिकारो धर्मेऽस्ति न धर्मात्प्रतिषेधनम् ॥१२६॥**

द्विजको घर-सेवा गर्ने शूद्र कुनै पापबाट आक्रान्त हुँदैन त्यसैले शुद्धिको प्रश्नै उठ्दैन । उसले द्विजले गर्ने धार्मिक कार्यमा सरिक हुने अधिकार नभएकोले शास्त्रमा उसले गर्न नहुने कुरा लेखिएकै छैन ।

**धर्मेप्सवस्तु धर्मज्ञाः सतां धर्ममनुष्ठिताः ।**
**मन्त्रवर्जं न दुष्यन्ति प्रशंसां प्राप्नुवन्ति च ॥१२७॥**



धर्ममा रुचि राख्ने र धर्मको मर्म जान्ने शूद्रले वेदमन्त्रको उच्चारण नगरी कुनै धार्मिक कार्य गरेपनि उसलाई दोष लाग्दैन बरु प्रशंसित नै हुन्छ ।

**यथा यथा हि सद्वृत्तमातिष्ठत्यनसूयकः ।**
**तथा तथेमं चामुं च लोकं प्राप्नोत्यनिन्दितः ॥१२८॥**

ईर्ष्या-द्वेष नराखी सहजरुपले सेवामा समर्पित रहने शूद्र यसलोकमा प्रशंसाको र परलोकमा सद्गतिको अधिकारी हुन्छ ।

**शक्तेनापि हि शूद्रेण न कार्यो धनसञ्चयः ।**
**शूद्रो हि धनमासाद्य ब्राह्मणानेव बाधते ॥१२९॥**

शुद्रले सक्षम हुँदा पनि धन सञ्चय नगर्नु मति बिग्रन्छ । ब्राह्मणसँग द्रोह गर्नाले

उसकै अझ पतन हुँदै जान्छ ।

**एते चतुर्णां वर्णानां आपद्धर्माः प्रकीर्तिताः ।**
**यान्सम्यगनुतिष्ठन्तो व्रजन्ति परमां गतिम् ॥१३०॥**

चारै वर्णका आपदकालीन धर्मका बारेमा यी कुरा बताइए ।
यिनलाई राम्ररी पालन गरिए मोक्ष प्राप्त हुन्छ ।

**एष धर्मविधिः कृत्स्नश्चातुर्वर्ण्यस्य कीर्तितः ।**
**अतः परं प्रवक्ष्यामि प्रायश्चित्तविधिं शुभम् ॥१३१॥**

यी चारैवर्णका कर्मविधि बताइए । अब यसपछि पवित्र प्रायश्चितका विधि बताउनेछु ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां दशमोऽध्यायः ॥१०॥**



**मनुस्मृति, दशौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

**शुरुदेखिको श्लोकको संख्याः-२,१६२+१३१=२,२९३**

# ॥ अथैकादशोऽध्यायः ॥
## (प्रायश्चित)

**सान्तानिकं यक्ष्यमाणमध्वगं सार्ववेदसम् ।**
**गुर्वर्थं पितृमात्रर्थं स्वाध्यायार्थ्युपतापिनः ॥१॥**

सन्तानका लागि मात्र विवाह गर्ने, यज्ञयागादि गर्न चाहने, तीर्थ जान भनेपछि जति हिँड्नु परे पनि हिँड्न खोज्ने, सबै वेद राम्ररी जान्ने, गुरु-माता-पिताका आवश्यकता पूरा गर्न तत्पर हुने, नित्य वेदाध्ययन गर्ने र दीर्घरोगी,...।

**नवैतान्स्नातकान्विद्याद्ब्राह्मणान्धर्मभिक्षुकान् ।**
**निःस्वेभ्यो देयमेतेभ्यो दानं विद्याविशेषतः ॥२॥**

यि नौ प्रकारका स्नातकहरूलाई धर्मभिक्षुक ब्राह्मण भनी जान्नू । यदि यी गरिब छन् भने प्राप्त गरेको विद्या अनुसार यिनलाई दान दिनु पर्दछ ।

**एतेभ्यो हि द्विजाग्र्येभ्यो देयमन्नं सदक्षिणम् ।**
**इतरेभ्यो बहिर्वेदि कृतान्नं देयमुच्यते ॥३॥**

यी द्विजश्रेष्ठलाई दक्षिणा सँगसँगै अन्न पनि दिनु पर्दछ । अरुलाई भने वेदीभन्दा बाहिर पकाएको अन्न दिनु भनिएको छ ।

**सर्वरत्नानि राजा तु यथार्हं प्रतिपादयेत् ।**
**ब्राह्मणान्वेदविदुषो यज्ञार्थं चैव दक्षिणाम् ॥४॥**

राजाले यज्ञ सम्पन्न गर्नका लागि वेदविज्ञ ब्राह्मणहरूलाई सबै खालका रत्न यथायोग्य दक्षिणामा दान दिनू ।

कृतदारोऽपरान्दारान्भिक्षित्वा योऽधिगच्छति ।
रतिमात्रं फलं तस्य द्रव्यदातुस्तु सन्ततिः ॥५॥

विवाहितले भिक्षामा पाएका अन्य स्त्रीबाट जन्मने सन्तान अंशको अधिकारी हुन सक्दैन,
यस्ता स्त्री रति सुखका लागि मात्र हुन्छन् ।

धनानि तु यथाशक्तिः विप्रेषु प्रतिपादयेत् ।
वेदवित्सु विविक्तेषु प्रेत्य स्वर्गं समश्नुते ॥६॥

आफ्नो क्षमता अनुसार वेदविज्ञ र विरक्त ब्राह्मणहरूलाई प्रशस्त धन दान
दिनु पर्दछ, यसो गर्नाले मृत्युपछि स्वर्ग पाइन्छ ।

यस्य त्रैवार्षिकं भक्तं पर्याप्तं भृत्यवृत्तये ।
अधिकं वाऽपि विद्येत स सोमं पातुमर्हति ॥७॥



तीन वर्ष वा सोभन्दा केही बढी समयसम्म परिवारलाई पाल्न पुग्ने
सम्पत्ति राख्ने (हुने) ब्राह्मणले सोमयज्ञ गर्न सक्दछ ।

अतः स्वल्पीयसि द्रव्ये यः सोमं पिबति द्विजः ।
स पीतसोमपूर्वोऽपि न तस्याप्नोति तत्फलम् ॥८॥

यसभन्दा कम अवधिलाई पुग्ने धन हुनेले सोमयज्ञ गरे उसले उक्त यज्ञको फल पाउँदैन र त्यस
अघि उसले गरेका अरु यज्ञका फल पनि सिद्धयाउँदछ ।

शक्तः परजने दाता स्वजने दुःखजीविनि ।
मध्वापातो विषास्वादः स धर्मप्रतिरूपकः ॥९॥

सोमयज्ञ शुरु गर्नुपूर्व परिवारको भरण-पोषणको यथेष्ट व्यवस्था गरी चिन्ता मुक्त
हुनु पर्दछ । परिवारलाई भोकै राखी यज्ञ गर्नु पाप हो ।

**भृत्यानामुपरोधेन यत्करोत्यौर्ध्वदैहिकम् ।**
**तद्भवत्यसुखोदर्कं जीवतश्च मृतस्य च ॥१०॥**

आफन्तको दुख हटाउन मद्दत गर्नुको सट्टा अरुलाई दान दिँदै हिँड्ने मानिसले अमृतलाई लत्याउँदै विष पिए सरह हुन्छ । आश्रित जनलाई अभावमा पिल्स्याएर उनीहरूको आवश्यकता पूर्ति नगरी गरिने दानले न त यसलोकमा यश मिल्छ न त परलोकमा कल्याण नै हुन्छ ।

**यज्ञश्चेत्प्रतिरुद्धः स्यादेकेनाङ्गेन यज्वनः ।**
**ब्राह्मणस्य विशेषेण धार्मिके सति राजनि ॥११॥**

राजा धार्मिक हुँदाहुँदै क्षत्रिय आदि जजमानले अझ विशेषतः ब्राह्मणले गर्न लागेको यज्ञको कुनै एक विधि कुनै द्रव्य नभएका कारण रोकिन गए...।

**यो वैश्यः स्याद्बहुपशुर्हीनक्रतुरसोपमः ।**
**कुटुम्बात्तस्य तद्द्रव्यमाहरेद्यज्ञसिद्धये ॥१२॥**



धेरै गाई, साँढे आदि भएर पनि यज्ञ र सोमयज्ञ नगर्ने वैश्यका घरबाट यज्ञ समाप्त गर्न नपुगेका धनद्रव्य लिएर आउनू ।

**आहरेत्त्रीणि वा द्वे वा कामं शूद्रस्य वेश्मनः ।**
**न हि शूद्रस्य यज्ञेषु कश्चिदस्ति परिग्रहः ॥१३॥**

यज्ञका दुई तीनवटै अङ्ग पूरा गर्न समस्या भए शूद्रका घरबाट पनि द्रव्य लिनू । उसै पनि उसको धन कहिल्यै यज्ञ आदिमा खर्च हुने त होइन यसरी लिँदा उसलाई पनि धर्म नै हुन्छ ।

**योऽनाहिताग्निः शतगुरयज्वा च सहस्रगुः ।**
**तयोरपि कुटुम्बाभ्यामाहरेदविचारयन् ॥१४॥**

यसैगरी जो अग्निहोत्री छ, सय गाई बराबरको धन जोसँग छ र जसले यज्ञ गरेको छैन यस्तासँग

तथा हजार गाई हुने कुटुम्बसँग पनि केही नसोची यज्ञ सम्पन्न गर्न नपुगे धन लिनू ।

**आदाननित्याच्चादातुराहरेदप्रयच्छतः ।**
**तथा यशोऽस्य प्रथते धर्मश्चैव प्रवर्धते ॥१५॥**

जसले दान त प्रशस्त लिन्छ तर दान दिँदैन उसले दिन नमानेपनि जबरजस्ती उसको धन लिनू ।
यसो गर्दा उसको यश र धर्म दुबै बढ्दछ ।

**तथैव सप्तमे भक्ते भक्तानि षडनश्नता ।**
**अश्वस्तनविधानेन हर्तव्यं हीनकर्मणः ॥१६॥**

सबैथोक भएर पनि तीन तीन दिन भोकै बस्नेका घरबाट एक दिनलाई पुग्ने कुरा छाडी बाँकी सबै धन जबरजस्ती लिन कुनै शङ्कोच नमान्नू ।
(अश्वस्तन-एक दिनका लागि मात्र पुग्ने गरी अन्न आदि जोरजाम गर्ने) ।



**खलात्क्षेत्रादगाराद्वा यतो वाप्युपलभ्यते ।**
**आख्यातव्यं तु तत्तस्मै पृच्छते यदि पृच्छति ॥१७॥**

यस्ता (श्लोक १७) सँग खलो, खेत, घर आदि जहाँजहाँबाट जे जे लिन सकिन्छ लिनू ।
उसका सेवक आदिले सोधखोज गरे "छ छ छाक खान नपर्ने तेरा महा कञ्जुस मालिकलाई एक दिनलाई पुग्ने त छाडिदिएकै छौं क्यारे" भन्नू ।

**ब्राह्मणस्वं न हर्तव्यं क्षत्रियेण कदाचन ।**
**दस्युनिष्क्रिययोस्तु स्वं अजीवन्हर्तुमर्हति ॥१८॥**

यस्तो अवस्थामा पनि ब्राह्मणको धन भने कहिल्यै नलिनु, बरु अभावमा क्षत्रियले बसीबसी खान पल्केकाको र डाँकाको धन लिनू ।

योऽसाधुभ्योऽथमादाय साधुभ्यः संप्रयच्छति ।
स कृत्वा प्लवमात्मानं संतारयति तावुभौ ॥१९॥

जसले असज्जनको धन लिएर सज्जनलाई दिन्छ उसले आफूलाई डुङ्गा बनाएर दुवैलाई तार्दछ ।

यद्धनं यज्ञशीलानां देवस्वं तद्विदुर्बुधाः ।
अयज्वनां तु यद्वित्तमासुरस्वं तदुच्यते ॥२०॥

विद्वानहरूले सधैं यज्ञ गर्नेको धनलाई "देव धन" र यज्ञ नगर्नेको धनलाई "आसुर धन" भनेका छन् ।

न तस्मिन्धारयेद्दण्डं धार्मिकः पृथिवीपतिः ।
क्षत्रियस्य हि बालिश्यादुब्राह्मणः सीदति क्षुधा ॥२१॥



छ छाक भोकै हुने ब्राह्मणले अरुको धन जबरजस्ती लिँदा उसलाई दण्ड नदिनू । उ यसरी भोकै हुनुको कारण आखिर राजा आफैं नै त हो ।

तस्य भृत्यजनं ज्ञात्वा स्वकुटुम्बान्महीपतिः ।
श्रुतशीले च विज्ञाय वृत्तिं धर्म्यां प्रकल्पयेत् ॥२२॥

यस्ता ब्राह्मणका परिवारको योग्यता, सदाचार आदि बुझी राजा आफैंले उनीहरूको जीविका चल्ने व्यवस्था मिलाई दिनू ।

कल्पयित्वास्य वृत्तिं च रक्षेदेनं समन्ततः ।
राजा हि धर्मषड्भागं तस्मात्प्राप्नोति रक्षितात् ॥२३॥

यस्ता ब्राह्मणको आजीविका सुनिश्चित गरी दिनाले उसले जेजति धर्मकर्म गर्दछ त्यसको छैटौं भाग राजालाई नै प्राप्त हुन्छ ।

**न यज्ञार्थं धनं शूद्राद्विप्रो भिक्षेत कर्हिचित् ।**
**यजमानो हि भिक्षित्वा चण्डालः प्रेत्य जायते ॥२४॥**

ब्राह्मणले शूद्रसँग धन लिएर कहिल्यै यज्ञ नगर्नू, यसरी यज्ञ गरेमा उ अर्को जन्ममा चाण्डाल भएर जन्मन्छ ।

**यज्ञार्थमर्थं भिक्षित्वा यो न सर्वं प्रयच्छति ।**
**स याति भासतां विप्रः काकतां वा शतं समाः ॥२५॥**

यज्ञका खातिर जोरजम्मा गरिएको धन सबै खर्च नगर्ने व्यक्तिले सय वर्षसम्म कौवा आदिको योनीमा जन्मदै भौंतारिई रहनु पर्दछ ।

**देवस्त्वं ब्राह्मणस्त्वं वा लोभेनोपहिनस्ति यः ।**

**सः पापात्मा परोलोके गृध्रोच्छिष्टे न जीवति ॥२६॥**

लोभमा देवता र ब्राह्मणको धन हरण गर्नेले अर्को जन्ममा काग र गिद्धको जुठो खाई जीवन बिताउनु पर्दछ ।

**इष्टिं वैश्वानरीं नित्यं निर्वपेदब्दपर्यये ।**
**क्लृप्तानां पशुसोमानां निष्कृत्यर्थमसंभवे ॥२७॥**

वर्षभरी सोमयज्ञ गर्न नपाउने (नसक्ने) ब्राह्मणले यज्ञ गर्नाका लागि शूद्रसँग धन लिई पाप कमाउँदछ भने उसको प्रायश्चित वैश्वानर यज्ञ गर्नाले हुन्छ ।

**आपत्कल्पेन यः धर्मं कुरुतेऽनापदि द्विजः ।**
**सः नाप्नोति फलं तस्य परत्रेति विचारितम् ॥२८॥**

बुद्धिमानहरुले विचार गरी भनेका छन् कि आपदमा गर्न भनी दिइएका धर्मका सुविधाहरु सामान्य स्थितिमा प्रयोग गर्नाले यस लोक र परलोक दुवैतिर कुनै फल पाइँदैन ।

**विश्वैश्च देवैः साध्यैश्च ब्राह्मणैश्च महर्षिभिः ।**
**आपत्सु मरणाद्भीतैर्विधेः प्रतिनिधिः कृतः ॥२९॥**

किन कि सबै देवता, साध्य, ब्राह्मण र महर्षिले सङ्कटकालमा मृत्यु भयले गर्दा नै आपद्कालीन धर्म (छूट) को व्यवस्था गरेका हुन् ।

**प्रभुः प्रथमकल्पस्य योऽनुकल्पेन वर्तते ।**
**न साम्परायिकं तस्य दुर्मतेर्विद्यते फलम् ॥३०॥**

समर्थले सामान्य परिस्थितिमा धर्मकर्म गर्दा पनि आपत्कालीन अनुष्ठानको आश्रय लिएमा कुनै फल पाउँदैन ।



**न ब्राह्मणो वेदयेत किंचिद्राजनि धर्मवित् ।**
**स्ववीर्येणैव ताञ्छिष्यान्मानवानपकारिणः ॥३१॥**

ब्राह्मणले सानाठूला उजुरी राजालाई नगरी सकेसम्म आफैं समाधान गर्नेतिर लाग्नू, दुष्टलाई ब्रह्मतेजले तर्साउने गर्नू ।

**स्ववीर्याद्राजवीर्याच्च स्ववीर्यं बलवत्तरम् ।**
**तस्मात्स्वेनैव वीर्येण निगृह्णीयादरीन्द्विजः ॥३२॥**

आफ्नू र राजाको तागतमध्ये आफ्नै तागत बलियो हुन्छ, त्यसैले ब्राह्मणले आफ्नै तागतले शत्रूलाई वशमा गर्नू ।

**श्रुतीरथर्वाङ्गिरसीः कुर्यादित्यविचारयन् ।**
**वाक्शस्त्रं वै ब्राह्मणस्य तेन हन्यादरीन्द्विजः ॥३३॥**

ब्राह्मणले दुराचारीलाई पाठ पढाउन अर्थवेदका मन्त्र उच्चारण गर्नू ।
यही वचन (श्राप) शस्त्र हो र यसैले शत्रुलाई वशमा पार्नू ।

**क्षत्रियो बाहुवीर्येण तरेदापदात्मनः ।**
**धनेन वैश्यशूद्रौ तु जपहोमैर्द्विजोत्तमः ॥३४॥**

सङ्कटबाट पार हुन क्षत्रियले आफ्नो बाहुबलको, वैश्य र शूद्रले धनको तथा
ब्राह्मणले जप र यज्ञको सहायता लिनू ।

**विधाता शासिता वक्ता मैत्री ब्राह्मण उच्यते ।**
**तस्मै नाकुशलं ब्रूयान्न शुष्कां गिरमीरयेत् ॥३५॥**



ब्राह्मण विधाता, शासक र वक्ता भएका कारण सबै वर्णको मित्र हो ।
अतः उसका सम्बन्धमा कुनै अनुचित र अप्रिय वचन नबोल्नू ।

**न वै कन्या न युवतिर्नाल्पविद्यो न बालिशः ।**
**होता स्यादग्निहोत्रस्य नार्त्तो नासंस्कृतस्तथा ॥३६॥**

कन्या, युवती, अलिकति मात्र पढेका, मूर्ख (मुढे बल गर्ने), रोगी र संस्कारहीन
व्यक्तिलाई अग्निहोत्रको होता नबनाउनू ।

**नरके हि पतन्त्येते जुह्वन्तः स च यस्य तत् ।**
**तस्माद्वैतानकुशलो होता स्याद्वेदपारगः ॥३७॥**

यस्ता बनाउनु नहुने व्यक्तिलाई होता बनाइए होता बन्ने र जजमान दुवैथरी नरकमा पर्दछन् ।

यसैले श्रौतकर्ममा दक्ष र वेदज्ञ ब्राह्मणलाई नै होता बनाउनू ।

**प्राजापत्यमदत्त्वाऽश्वमग्न्याधेयस्य दक्षिणाम् ।**
**अनाहिताग्निर्भवति ब्राह्मणो विभवे सति ॥३८॥**

धन भएर अश्वमेध नगर्ने र प्रजापतिलाई दक्षिणा नदिने ब्राह्मण अनाहिताग्नि (दक्षिणा प्राप्त नगर्ने) हुन्छ फलतः जजमानले यज्ञ-यागादिको फल पाउँदैन ।

**पुण्यान्यन्यानि कुर्वीत श्रद्दधानो जितेन्द्रियः ।**
**न त्वल्पदक्षिणैर्यज्ञैर्यजेतेह कथञ्चन ॥३९॥**

श्रद्धालु र जितेन्द्रिय जजमानले यथेष्ट दक्षिणा दिन नसक्ने अवस्थामा अन्य पुण्यकर्म गर्नू तर थोरै दक्षिणाको यज्ञ कहिल्यै नगर्नू ।

**इन्द्रियाणि यशः स्वर्गमायुः कीर्त्तिं प्रजाः पशून् ।**
**हन्त्यल्पदक्षिणो यज्ञस्तस्मान्नाल्पधनो यजेत् ॥४०॥**

अल्प दक्षिणाको यज्ञले इन्द्रिय, यश, स्वर्ग, आयु, कीर्ति, सन्तान र पशुधनको हानी हुन्छ । अल्प दक्षिणाले ब्राह्मण दुखी हुन्छ, उसको मन रुन्छ र यजमानको लोक-परलोक बिग्रन्छ ।

**अग्निहोत्र्यपविध्याग्नीन्ब्राह्मणः कामकारतः ।**
**चान्द्रायणं चरेन्मासं वीरहत्यासमं हि तत् ॥४१॥**

अग्निहोत्री ब्राह्मणले बिहानबेलुकी होम नगरे वा गर्न नसके एक महिनासम्म चान्द्रायण व्रत गर्नू । किन कि यो पुत्रहत्या गर्नु सरहको पाप हुन्छ ।

**ये शूद्रादधिगम्यार्थमग्निहोत्रमुपासते ।**
**ऋत्विजस्ते हि शूद्राणां ब्रह्मवादिषु गर्हिताः ॥४२॥**

जो शूद्रसँग धन लिएर अग्निहोत्र गर्ने गर्दछन्, ती शूद्रकै ऋत्विज् मानिन्छन् र ब्रह्मवादीहरूबाट निन्दित हुन्छन् ।

**तेषां सततमज्ञानां वृषलाग्न्युपसेविनाम् ।**
**पदा मस्तकमाक्रम्य दाता दुर्गाणि संतरेत् ॥४३॥**

शूद्रसँग धन लिएर आफ्नो नित्य यज्ञ गर्ने गराउने ब्राह्मणको टाउकोमा अपमान र दुर्गति तथा शूद्रको भागमा सद्गति प्राप्त हुन्छ ।

**अकुर्वन्विहितं कर्म निन्दितं च समाचरन् ।**
**प्रसज्जन्निन्द्रियार्थेषु प्रायश्चित्तीयते नरः ॥४४॥**

गर्ने कर्म नगर्ने र गर्न नहुने कर्म गर्ने तथा इन्द्रिय र विषयमा आशक्त हुने व्यक्तिको उद्धारको उपाय भनेको त प्रायश्चित नै हो ।



**अकामतः कृते पापे प्रायश्चित्तं विदुर्बुधाः ।**
**कामकारकृतेऽप्याहुरेके श्रुतिनिदर्शनात् ॥४५॥**

कोही अनजानको पापको मात्र प्रायश्चित हुन्छ भन्दछन् भने कोही जानीनजानी गरिएका सबै पापको प्रायश्चित हुन्छ भन्दछन् ।

**अकामतः कृतं पापं वेदाभ्यासेन शुद्ध्यति ।**
**कामतस्तु कृतं मोहात्प्रायश्चित्तैः पृथग्विधैः ॥४६॥**

अनजानमा हुन गएको पाप वेदाभ्यासले नाश हुन्छ भने जानीजानी गरिएको पापको प्रायश्चितको लागि बेग्लै विधान छ ।

**प्रायश्चित्तीयतां प्राप्य दैवात्पूर्वकृतेन वा ।**
**न संसर्गं व्रजेत्सद्भिः प्रायश्चित्तेऽकृते द्विजः ॥४७॥**

संयोग र पूर्वजन्मको फलबाट आउने दुर्बुद्धि भएको मानिसले गर्नुपर्ने बेलामा पनि प्रायश्चित नगरी, शुद्ध नबनी सज्जनको सङ्गत गर्ने कुनै अधिकार  हुँदैन ।

**इह दुश्चरितैः केचित्केचित्पूर्वकृतैस्तथा ।**
**प्राप्नुवन्ति दुरात्मानो नराः रुपविपर्ययम् ॥४८॥**

अहिले कुकर्मी र अहिले सदाचारी हुँदाहुँदै पनि पूर्वजन्मका पापका कारण रुपको विपर्यता आदिले अपमानित र निन्दित हुन्छन् ।

**सुवर्ण चौरः कौनख्यं सुरापः श्यामदन्तताम् ।**
**ब्रह्महा क्षयरोगित्वं दोश्चर्म्यं गुरुतल्पगः ॥४९॥**



सुन चोरको नङ र मदीरा पिउनेको दाँत कालोमैलो हुन्छ, ब्रह्महत्या गर्नेलाई क्षयरोग र  गुरुपत्नी गमन गर्नेलाई चर्मरोग हुन्छ ।

**पिशुनः पौतिनासिक्यं सूचकः पूतिवक्त्रताम् ।**
**धान्यचौरोऽङ्गहीनत्वमाातिरैक्यं तु मित्रकः ॥५०॥**

कुरा लाउनेको नाक दुर्गन्धित हुन्छ, भूटो निन्दा गर्नेको मुख बाङ्गो हुन्छ, धान चोर्ने अपाङ्ग र खाद्यमिसावट गर्ने अधिकाङ्ग भएको हुन्छ ।

**अन्नहर्तामयावित्वं मौक्यं वागपहारकः ।**
**वस्त्रापहारकः श्वेत्र्यं पङ्गुतामश्वहारकः ॥५१॥**

अन्न चोर्ने मन्दाग्निको रोगी, वाणी चोर्ने लाटो, वस्त्र चोर्ने श्वेतकुष्ठी र घोडा चोर्ने लङ्गडो हुन्छ ।

**एवं कर्मविशेषेण जायन्ते सद्विगर्हिताः ।**
**जडमूकान्धबधिरा विकृताकृतयस्तथा ॥५२॥**

यसरी गरेका कर्मअनुसार मानिस सज्जनमा निन्दित, जड, लाटो, अन्धो, बहिरो र विकृत अनुहारका भएर जन्मन्छन् ।

**चरितव्यमतो नित्यं प्रायश्चित्तं विशुद्धये ।**
**निन्द्यैर्हि लक्षणैर्युक्ताः जायन्तेऽनिष्कृतैनसः ॥५३॥**

प्रायश्चित गर्नेले पनि अर्को जन्ममा निकृष्ट जन्मको दण्ड भोग्नु निश्चित छ त्यसैले पाप गर्दै नगर्नु, गरेपनि प्रायश्चित गर्नू ।

**ब्रह्महत्या सुरापानं स्तेयं गुर्वङ्गनागमः ।**
**महान्ति पातकान्याहुः संसर्गश्चापि तैः सह ॥५४॥**



ब्रह्महत्या, सुरापान, चोरी र गुरुपत्नीगमन महापाप हुन् ।
यी पापगर्नेको सङ्गत गर्ने पनि महापापी नै हुन्छन् ।

**अनृतं च समुत्कर्षे राजगामि च पैशुनम् ।**
**गुरोश्चालीकनिर्बन्धः समानि ब्रह्महत्यया ॥५५॥**

ठूलो हुन झूट बोल्नु, राजालाई कुरा लगाउनु र गुरुलाई गलत सूचना दिनु ब्रह्महत्या समानका महापाप हुन् ।

**ब्रह्मोज्झता वेदनिन्दा कौटसाक्ष्यं सुहृद्वधः ।**
**गर्हितानाद्ययोर्जग्धिः सुरापानसमानि षट् ॥५६॥**

वेदको अध्ययन नगरी निन्दा गर्नु, झूटो साछी बस्नु, विश्वासघात गर्नु, लसुन आदि खानु र अभक्ष खानु यी छ कर्म सुरापान समानका महापाप हुन् ।

**निक्षेपस्यापहरणं नराश्वरजतस्य च ।**
**भूमिवज्रमणीनां च रुक्मस्तेयसमं स्मृतम् ॥५७॥**

अर्काको नासो, दास, घोडा, चाँदी, भूमि, हिरामोति वा पंक्षी चोर्नु सुन
चोर्नु समानका महापाप हुन् ।

**रेतः सेकः स्वयोनिषु कुमारीष्वन्त्यजासु च ।**
**सख्युः पुत्रस्य च स्त्रीषु गुरुतल्पसमं विदुः ॥५८॥**

सहोदरा, कुमारी, चाण्डाल्नी, मित्रकी पत्नी र पुत्रवधूको गमन
गुरुपत्नी गमन सरहको महापाप हो ।

**गोवधोऽयाज्यसंयाज्यं पारदार्यात्मविक्रयाः ।**
**गुरुमातृपितृत्यागःस्वाध्यायाग्न्योः सुतस्य च ॥५९॥**



गाई मार्नु, कुपात्रको यज्ञ गराउनु, परस्त्रीगमन गर्नु, आत्माको बिक्री गर्नु,
गुरु-माता-पिता-पुत्र-स्वध्याय-यज्ञ परित्याग गर्नु, ... ।

**परिवित्तिताऽनुजेऽनूढे परिवेदनमेव च ।**
**तयोर्दानं च कन्यायास्तयोरेव च याजनम् ॥६०॥**

दाजुभन्दा पहिले विहे गर्नु, एकैपटक एउटी कन्यालाई दाजुभाईलाई दिनु, एकैपटक
जेठोकान्छोको घरमा यज्ञ गराउनु,... ।

**कन्याया दूषणं चैव वार्धुष्यं व्रतलोपनम् ।**
**तडागारामदाराणामपत्यस्य च विक्रयः ॥६१॥**

छोरी-गमन गर्नु, ब्याज लिनु (वैश्यलाई छुट छ) , आफ्नो वा अरुको व्रत भङ्ग गर्नु,

तलाउ-उपवन-पत्नी- -सन्तानको बिक्री गर्नु,..., ।

**व्रात्यता बान्धवत्यागो भृताध्यापनमेव च ।**
**भृताच्चाध्ययनादानमपण्यानां च विक्रयः ॥६२॥**

समयमा ब्रतवन्ध नगर्नु, बन्धुवान्धवलाई त्याग्नु, पैसा लिएर पढाउनु, पैसा दिएर पढ्नु, बेच्न नहुने कुरा बेच्नु,...।

**सर्वाकारेस्वधिकारो महायन्त्रप्रवर्तनम् ।**
**हिंसौषधीनां स्त्र्याजीवोऽभिचारो मूलकर्म च ॥६३॥**

धातुका खानि कब्जा गर्नु, ठूला यन्त्र चलाउनु, जडीबूटी नास्नु, महिलाको कमाइमा बाँच्नु, सम्मोहनको प्रयोग गर्नु,...।

**इन्धनार्थमशुष्काणां द्रुमाणामवपातनम् ।**
**आत्मार्थं च क्रियारम्भो निन्दितान्नादनं तथा ॥६४॥**

दाउराका लागि हरीयो रुख काट्नु, देव-पूजाको उद्देश्य नराखी आफ्नो लागि मात्र पकाउनु वा खानु, निन्दित अन्न खानु,.. ।

**अनाहिताग्निता स्तेयमृणानामनपक्रिया ।**
**असच्छास्त्राधिगमनं कौशीलव्यस्य च क्रिया ॥६५॥**

यज्ञयागादिको परित्याग गर्नु, चोर्नु, ऋण खानु, निन्दित शास्त्रको अध्ययन गर्नु, नाच-गान-बजानको धन्दा गर्नु,...।

**धान्यं कुप्यपशुस्तेयंमद्यपस्त्रीनिषेवणम् ।**
**स्त्रीशूद्रविट्क्षत्रवधो नास्तिक्यं चोपपातकम् ॥६६॥**

धान-सुनचाँदी बाहेकका धातु तथा पशुको चोरी गर्नु, जँडयाहा स्त्रीको सङ्गत गर्नु,
क्षत्री-वैश्य-शूद्र-स्त्री हत्या गर्नु र नास्तिक हुनु : यी सबै उपपाप हुन्।

**ब्राह्मणस्य रुजःकृत्यं घ्रातिरघ्रेयमद्ययोः ।**
**जैह्म्यं च मैथुनं पुंसि जातिभ्रंशकरं स्मृतम्॥६७॥**

ब्राह्मणलाई पिटेर, मदिरादि गनाउने पदार्थ चाखेर, कुटिलताले र पुरुष-समलिङ्गी यौनक्रियाले
मानिस मनुषत्वबाट झर्दछ ।

**खराश्वोष्ट्रमृगेभानामजाविकवधस्तथा ।**
**सङ्करीकरणं ज्ञेयं मीनाहिमहिषस्य च॥६८॥**

गधा, घोडा, ऊँट, मृग, हात्ती, बोका, भेडा, माछा, सर्प र राँगोको वध
गर्नाले मानिस वर्णसङ्कर हुन्छ ।



**निन्दितेभ्यो धनादानं वाणिज्यं शूद्रसेवनम् ।**
**अपात्रीकरणं ज्ञेयमसत्यस्य च भाषणम्॥६९॥**

निन्दितबाट लिने दान, वैश्य बाहेकले गर्ने व्यापार, शूद्रको चाकरी र
असत्यभाषणले मानिस अयोग्य हुन्छ ।

**कृमिकीटवयोहत्या मद्यानुगतभोजनम् ।**
**फलैधः कुसुमस्तेयमधैर्यं च मलावहम्॥७०॥**

कीराफटयाङ्ग्रा-पशुहत्या, मद्यसँगै मासु भक्षण, फलफूल-इन्धन-फूलको चोरी र उत्ताउलोपनले
मानिसलाई मलिन बनाउँदछ ।

**एतान्येनांसि सर्वाणि यथोक्तानि पृथक्पृथक् ।**
**यैर्यैर्व्रतैरपोह्यन्ते तानि सम्यङ्निबोधत ॥७१॥**

यि र अन्य बेग्लाबेग्लै बताइएका ब्रह्महत्या आदि गरिएका पाप जुन् जुन व्रतले नाश हुन्छ, अब त्यो कुरा बताउँदछु सुन्नुहोस् ।

**ब्रह्महा द्वादशसमाः कुटीं कृत्वा वने वसेत् ।**
**भैक्ष्याश्यात्म विशुद्ध्यर्थं कृत्वा शवशिरोध्वजम् ॥७२॥**

(क) शरीरमा खप्परको चिह्न कुँदी बाह्र वर्षसम्म वनमा कुटी बनाएर बसी भिक्षा मागेर जीवन निर्वाह गर्नू ।

**लक्ष्यं शस्त्रभृतां वास्याद्विदुषामिच्छयात्मनः ।**
**प्रास्येदात्मानमग्नौ वा समिद्धे त्रिरवाक् शिराः ॥७३॥**



(ख) कुनै धर्मात्मा हतियारधारीका हातबाट मारिनु । (ग) टाउको तल गोडामाथि पारी बलिरहेको आगोमा तीन पटक होमिनु ।

**यजेत वाऽश्वमेधेन स्वर्जिता गोसवेन वा ।**
**अभिजिद्विश्वजिद्भ्यां वा त्रिवृताग्निष्टुताऽपि वा ॥७४॥**

(घ) अश्वमेध, स्वर्जित, गोसवन, अभिजित, विश्वजित, त्रिवृत वा अग्निष्ठत्मध्ये कुनै एक यज्ञ गर्नु ।

**जपन्वाऽन्यतमं वेदं योजनानां शतं व्रजेत् ।**
**ब्रह्महत्यापनोदायमितभुङ् नियतेन्द्रियः ॥७५॥**

(ङ) जितेन्द्रीय एवं निराहारी वा अल्पाहारी भएर कुनै एक वेदको उच्चारण गर्दै

सय योजन पैदल हिँड्नु ।

**सर्वस्वं वेदऽविदुषे ब्राह्मणयोपयादयेत् ।**
**धनं वा जीवनायालं गृहं वा सपरिच्छदम् ॥७६॥**

(च) धन, घर लगायतका आफ्ना सारा श्रीसम्पत्ति कुनै वेदज्ञ ब्राह्मणलाई समर्पित गर्नु ।

**हविष्यभुग्वाऽनुसरेत्प्रतिस्रोतः सरस्वतीम् ।**
**जपेद्वा नियताहारस्त्रिर्वै वेदस्य संहिताम् ॥७७॥**

(छ) सरस्वती नदीको मुहानतर्फ अल्पाहार गर्दै र वेदपाठ गर्दै जानु ।

**कृतववपनो निवसेद्ग्रामान्ते गोव्रजेऽपि वा ।**
**आश्रमे वृक्षमूले वा गोब्राह्मणहिते रतः ॥७८॥**



(ज) बाह्र वर्षसम्म कपाल खौरी गाऊँ बाहिर गौशाला वा रुखमुनि वा कुनै शुद्ध र पवित्र स्थानमा बसेर गाई र ब्राह्मणको सेवा गर्नु ।

**ब्राह्मणार्थे गवार्थे वा सद्यः प्राणान्परित्यजेत् ।**
**मुच्यते ब्रह्महत्यायाः गोप्ता गोर्ब्राह्मणस्य च ॥७९॥**

(झ) गाई वा ब्राह्मणको रक्षाका लागि आफ्नो ज्यान दिनु । यस्तो अवसर मिलेमा त तत्काल ब्रह्महत्याको पापबाट मुक्त हुन्छ ।

**त्र्यवरं प्रतिरोद्धा वा सर्वस्वमविजित्य वा ।**
**विप्रस्य तन्निमित्ते वा प्राणलाभेऽपि मुच्यते ॥८०॥**

(ञ) एउटै ब्राह्मणको तीन पटक वा तीन जना ब्राह्मणको एक पटक चोरिएका धन चोरबाट

ब्राह्मणलाई दिलाउनु (ट) ब्राह्मणको धन जोगाउँदा प्राण दिनु (ठ) ज्यान फालेर तिनको धनरक्षा गर्नु । यी उपायमध्ये कुनै एक गर्नाले ब्रह्महत्याको पाप विमोचन हुन्छ ।

**एवं दृढव्रतो नित्यं ब्रह्मचारी समाहितः ।**
**समाप्ते द्वादशे वर्षे ब्रह्महत्यां व्यपोहति ॥८१॥**

यसरी दृढतापूर्वक संयमित भई ब्रह्मचर्य व्रत बस्दै बाह्र वर्ष बितेपछि ब्रह्महत्याको पापबाट उ शुद्ध हुन्छ ।

**शिष्ट्वा वा भूमिदेवानां नरदेवसमागमे ।**
**स्वमेनोऽवभृथस्नातो हयमेधे विमुच्यते ॥८२॥**

अश्वमेध गरी ब्राह्मण, मान्यजन र राजासामु अपराध कबुल गरी पश्चातापको चाहनाले अवभृथ गर्दा पनि मोचन हुन्छ ।
(अवभृथ-यज्ञको सफलतासूचक अन्तिममा गरिने स्नान) ।

**धर्मस्य ब्राह्मणो मूलं अग्रं राजन्य उच्यते ।**
**तस्मात्समागमे तेषामेनो विख्याप्य शुध्यति ॥८३॥**

ब्राह्मण धर्मको जरा र क्षत्रिय धर्मको टुप्पो हो । यसैले यी दुबै भएका ठाउँमा गई पाप बताए (तिनले बताए बमोजिम गरेपछि) पछि शुद्ध हुन्छ ।

**ब्रह्मणः संभवेनैव देवानामपि दैवतम् ।**
**प्रमाणं चैव लोकस्य ब्रह्मात्रैव हि कारणम् ॥८४॥**

ब्राह्मण सावित्रीबाट जन्म पाएपछि देवताका पनि देवता हुन्छन्,
उनी नै लोकका प्रमाण हुन् भनी वेदले बताएको छ ।

**तेषां वेदविदो ब्रूयुस्त्रयोऽप्येनः सुनिष्कृतिम् ।**
**स तेषां पावनाय स्यात्पवित्रं विदुषां हि वाक् ॥८५॥**

पापीले तीन सदाचारी वेदाभ्यासी ब्राह्मणसामु आफ्नू पाप कबुल गरी प्रायश्चितको उपाय सोधी तिनले बताए अनुसारको प्रायश्चित गर्नाले पनि उ पापबाट छुट्दछ ।

**अतोऽन्यतममास्थाय विधिं विप्रः समाहितः ।**
**ब्रह्महत्याकृतं पापं व्यपोहत्यात्मवत्तया ॥८६॥**

उल्लेखित उपायमध्ये कुनै एक उपाय पूर्ण निष्ठाका साथ गर्ने
साधक ब्रह्महत्याको पापबाट मुक्त हुन्छ ।

**हत्वा गर्भमविज्ञातमेतदेव व्रतं चरेत् ।**
**राजन्यवैश्यौ चेजानावात्रेयीमेव च स्त्रियम् ॥८७॥**



अनजानमा गरिने गर्भ, गर्भिणी स्त्री, क्षत्रिय र वैश्यको हत्या ब्रह्महत्या समान हुन्छ र यसबाट मुक्त हुन ब्रह्महत्याकै प्रायश्चित गर्नु पर्दछ ।

**उक्त्वा चैवानृतं साक्ष्ये प्रतिरभ्य गुरुं तथा ।**
**अपहृत्य च निःक्षेपं कृत्वा च स्त्रीसुहृद्वधम् ॥८८॥**

भूटो साछी बस्नु, गुरुको विरोध गर्नु, नासो खानु तथा स्त्री-मित्रको हत्या गर्नु पनि ब्रह्महत्यासरह भएकोले प्रायश्चित पनि त्यही अनुसार गर्नु पर्दछ ।

**नयं विशुद्धिरुदिता प्रमाप्याकामतो द्विजम् ।**
**कामतो ब्राह्मणवधे निष्कृतिर्न विधीयते ॥८९॥**

अनजानमा हुने ब्रह्महत्याको त प्रायश्चित हुन्छ तर जानीजानी गरेको

ब्रह्महत्याबाट मुक्ति पाउन सम्भव छैन ।

**सुरां पीत्वा द्विजो मोहादग्निवर्णां सुरां पिबेत् ।**
**तथा स काये निर्दग्धे मुच्यते किल्विषात्ततः ॥९०॥**

सुरा पिउने द्विजले उम्लिरहेको सुरा पिउनु त्यसबाट हुने जलनले सुरापानको पाप छुट्दछ ।

**गोमूत्रमग्निवर्णं वा पिबेदुदकमेव च ।**
**पयो घृतं वाऽऽमरणाद्गोशकृद्रसमेव वा ॥९१॥**

उम्लिरहेको गहुँत वा जल पिउनु वा केवल दूध, घिउ वा गोबरको रस खाएर बाँच्नू ।

**कणान्वा भक्षयेदब्दं पिण्याकं वा सकृन्निशि ।**
**सुरापानापनुत्त्यर्थं बालवासा जटी ध्वजी ॥९२॥**



वर्ष दिनसम्म दिनको एक पटक रातमा कनिका वा तिल मात्र खानू, कम्बल ओढ्नू, कपाल पाल्नू र सुरा पिएकोले यसो गरेको भन्दै हिँड्नू, दोष मेटिन्छ ।

**सुरा वै मलमन्नानां पाप्मा च मलमुच्यते ।**
**तस्माद् ब्राह्मणराजन्यौ वैश्यश्च न सुरां पिबेत् ॥९३॥**

सुरा अन्नको मल हो । मल पापको अर्को नाम हो त्यसैले द्विजले सुरा नपिउनू ।

**गौडी पैष्टी च माध्वी च विज्ञेया त्रिविधा सुरा ।**
**यथैवैका तथा सर्वाः न पातव्याः द्विजोत्तमैः ॥९४॥**

सखर, तिक्खर-गुलियो र महुवाबाट बनेको गरी तीन थरी सुरा हुन्छ । यी सबै उस्तै मलरुप हुन्, त्यसैले यसबाट बनेको सुरा द्विजातिले नपिउनू ।

**यक्षरक्षः पिशाचान्नं मद्यं मांसं सुरासवम् ।**
**तद् ब्राह्मणेन नात्तव्यं देवानामश्नता हवि ॥९५॥**

मासु, मदिरा, सुरा र आसव; यक्ष, राक्षस र पिशाचका लागि हुनाले देवतालाई आहुति दिने बाहुनले यसको सेवन कहिल्यै नगर्नू ।

**अमेध्ये वा पतेन्मत्तो वैदिकं वाप्युदाहरेत् ।**
**अकार्यमन्यत्कुर्याद्वा ब्राह्मणो मदमोहितः ॥९६॥**

सुरापान गर्ने ब्राह्मण नाली आदिमा पर्दछ वा जथाभावी बोल्दछ वा अरु कुनै अकृत्य गर्दछ, त्यसैले उ सुरापान नगरोस् ।

**यस्य कायगतं ब्रह्म मद्येनाप्लाव्यते सकृत् ।**
**तस्य व्यपैति ब्राह्मण्यं शूद्रत्वं च स गच्छति ॥९७॥**


जुन बाहुनको शरीरमा रहेको ब्राह्मणत्व सुरापानको चपेटामा एक पटक पर्दछ, त्यसले उसको ब्राह्मणत्व नष्ट पारी उसलाई शूद्रत्वमा पुऱ्याउँदछ ।

**एषा विचित्राऽभिहिता सुरापानस्य निष्कृतिः ।**
**अत ऊर्ध्वं प्रवक्ष्यामि सुवर्णस्तेयनिष्कृतिम् ॥९८॥**

यो मदिरापानको पापबाट छुटकारा पाउने अचम्म खालको विधि बताएँ । अब सुनचोरीको प्रायश्चित विधि बताउँदछु ।

**सुवर्णस्तेयकृद्विप्रो राजानमभिगम्य तु ।**
**स्वकर्म ख्यापयन् ब्रूयान्मां भवाननुशास्त्विति ॥९९॥**

सुन चोर द्विजले “सुन चोरेँ” भन्दै न्यायाधिश समक्ष गएर आफूलाई दण्ड दिन अनुरोध गर्नू ।

**गृहीत्वा मुसलं राजा सकृद्धन्यात्तु तं स्वयम् ।**
**वधेन शुध्यति स्तेनो ब्राह्मणस्तपसैव तु ॥१००॥**

राजाले उक्त चोर ब्राह्मणलाई लठ्ठीले पिट्नू । तपस्वी शुद्ध र पूज्य ब्राह्मण भएपनि चोरेपछि पिटिन्छ । तिनको शुद्ध हुने उपाय नै पिटाई खानु हो ।

**तपसाऽपनुनुत्सुस्तु सुवर्णस्तेयजं मलम् ।**
**चीरवासा द्विजोऽरण्ये चरेद् ब्रह्महणो व्रतम् ॥१०१॥**

नपिटिई तपले नै चोरीको पापमोचन चाहने ब्राह्मणले बनमा गई चोरजस्तै वेश बनाई ब्रह्महत्याका कुनै एक प्रायश्चित गर्नू ।

**एतैर्व्रतैरपोहेत पापं स्तेयकृतं द्विजः ।**
**गुरुस्त्रीगमनीयं तु व्रतैरेभिरपानुदेत् ॥१०२॥**



यी सुनचोरीका प्रायश्चित विधि बताइए । अब गुरुपत्नीगमनको प्रायश्चित विधि बताउँदछु ।

**गुरुतल्प्यभिभाष्यैनस्तल्पे स्वप्यादयोमये ।**
**सूर्मी ज्वलन्तीं वाश्लिष्येन्मृत्युना स विशुद्ध्यति ॥१०३॥**

गुरुपत्नी गामीले उक्त कुरा बताउँदै हिँडी फलामको ओछ्यानमा फलामको तातोरातो स्त्रीलाई अँगालो हाली सुतेर प्राण त्याग्नू ।

**स्वयं वा शिश्नवृषणावुत्कृत्याधाय चाञ्जलौ ।**
**नैर्ऋतीं दिशमातिष्ठेदानिपातादजिह्मगः ॥१०४॥**

अथवा आफूले आफ्नो जननेन्द्रिय र अण्डकोष काटी हातमा लिएर नढलीन्जेलसम्म नैऋत्य दिशातिर सिधा जानू ।

**खट्वाङ्गी चीरवासा वा श्मश्रुलो विजने वने ।**
**प्राजापत्यं चरेत्कृच्छ्रमब्दमेकं समाहितः ॥१०५॥**

अथवा आफ्नो निधारमा स्त्री जननेन्द्रियको चिह्न डाम्नू, एक वर्षसम्म बोक्रा लगाउनू, कपाल-नङ-जुँगा-दाऱ्ही पाल्नू र प्राजापत्य व्रत गर्नू ।

**चान्द्रायणं वा त्रीन्मासानभ्यस्येन्नियतेन्द्रियः ।**
**हविष्येण यवाग्वा वा गुरुतल्पापनुत्तये ॥१०६॥**

इन्द्रियलाई संयमित पारी तीन महिनासम्म चान्द्रायण व्रत बस्नु र होमयोग्य वस्तु, जाउलो वा खिचडी खाएर जीवन धान्नू ।

**एतैर्व्रतैरपोहेयुर्महापातकिनो मलम् ।**
**उपपातकिनस्त्वेवं एभिर्नानाविधैर्व्रतैः ॥१०७॥**



यी व्रत बस्दै महापापीले आफ्नू पाप हटाउनू । उपपापीले पनि यी र अन्य अनेक प्रकारका व्रत बसी पाप पखाल्नू ।

**उपपातकसंयुक्तो गोघ्नो मासं यवान्पिबेत् ।**
**कृतपापो वसेद्गोष्ठे कर्मणा तेन संवृतः ॥१०८॥**

गोहत्याराले एक महिनासम्म जौको रस खाई गाईको छाला ओढी गौशालामा जीवन बिताउनू, उसको पाप नाश हुन्छ ।

**चतुर्थकालमश्नीयादक्षारलवणं मितम् ।**
**गोमूत्रेणाचरेत्स्नानं द्वौ मासौ नियतेन्द्रियः ॥१०९॥**

दुई महिनासम्म जितेन्द्रिय रही, नित्य गहुँतले नुहाई, रातको प्रथम प्रहरमा खल्लो

कुरा थोरै खाने गर्नाले पनि गोहत्याको प्रायश्चित हुन्छ ।

**दिवानुगच्छेद्गास्तास्तु तिष्ठन्नूर्ध्वं रजः पिबेत् ।**
**शुश्रूषित्वा नमस्कृत्य रात्रौ वीरासनो वसेत्॥११०॥**

यस बाहेक गोहत्याराले दिनमा गाईका पछिपछि हिँडिरहनू, गाई उभिँदा उभिनू हिँड्दा हिँड्नू । यसरी गाईको खुरको धुलो खाँदै दिन बिताएर रातमा गाईलाई नमस्कार गर्दै रक्षार्थ 'वीरासन' मुद्रामा सतर्क भई बस्नु पर्दछ ।

**तिष्ठन्तीष्वनुतिष्ठेत्तु व्रजन्तीष्वप्यनुव्रजेत् ।**
**आसीनासु तथासीनो नियतो वीतमत्सरः ॥१११॥**

यसरी गाई सँगै हिँड्दा नरिसाई, अल्छी नगरी पूरै दृढता, सतर्कता र निष्ठाले गाईको सेवा गर्नु पर्दछ ।



**आतुरामभिशस्तां वा चौरव्याघ्रादिभिर्भयैः ।**
**पतितां पङ्कलग्नां वा सर्वप्राणैर्विमोचयेत्॥११२॥**

प्रायश्चित कर्ताले रोगी, चोर वा बाघ आदिबाट त्रसित, दुर्बल भई पल्टेकी वा धापमा फँसेकी गाईको सबै प्रकारले सेवा र रक्षा गर्नु पर्दछ ।

**उष्णे वर्षति शीते वा मारुते वाति वा भृशम् ।**
**न कुर्वीतात्मनस्त्राणां गोरकृत्वा तु शक्तितः ॥११३॥**

रक्षा गर्ने बखतमा जाडो, गर्मी, वर्षा वा आँधीबेरी आएमा पहिले गाईको रक्षा गर्न पहल गर्नु पर्दछ ।

**आत्मनो यदि वाऽन्येषां गृहे क्षेत्रेऽथवा खले ।**
**भक्षयन्तीं न कथयेत्पिबन्तं चैव वत्सकम् ॥११४॥**

आफ्नो वा अर्काको बालीनाली खाइरहेकी वा बाच्छाबाच्छीलाई दूध पियाइरहेकी गाईको जानकारी कसैलाई दिनु हुँदैन ।

**अनेन विधिना यस्तु गोघ्नो गामनुगच्छति ।**
**स गोहत्याकृतं पापं त्रिभिर्मासैर्व्यपोहति ॥११५॥**

यी नियमले मन लगाएर तीन महिनासम्म गाईको सेवा गर्ने साधक गोहत्याको पापबाट मुक्त हुन्छ ।

**वृषभैकदशा गाश्च दद्यात्सुचरितव्रतः ।**
**अविद्यमाने सर्वस्वं वेदविद्भ्यो निवेदयेत् ॥११६॥**



गोहत्याको प्रायश्चित गर्न व्रत बस्न चाहनेले वेदनिपुण सदाचारी ब्राह्मणलाई एउटा साँढे र दश वटी गाई वा आफ्नो सबै सम्पत्ति दान गरोस् ।

**एतदेव व्रतं कुर्युरुपपातकिनो द्विजाः ।**
**अवकीर्णिवर्जं शुद्ध्यर्थं चान्द्रायणमथापि वा ॥११७॥**

अवकीर्णि बाहेकका अन्य उपपाप गर्ने द्विजले पनि पापबाट शुद्ध हुन यही गो-व्रत गर्नू अथवा चान्द्रायण व्रत गर्नू ।

**अवकीर्णी तु काणेन गर्दभेन चतुष्पथे ।**
**पाकयज्ञविधानेन यजेत निर्ऋतिं निशि ॥११८॥**

स्वेच्छाले वीर्यपात गर्नेले कानु गधा चढी चौबाटोमा गई सो कुरा भन्नू र निर्ऋतिको

प्रसन्नताको लागि पाकयज्ञको विधिले होम गर्नू ।

**हुत्वाऽग्नौ विधिवद्धोमानन्ततश्च समेत्य वा ।**
**वातेन्द्रगुरुवह्नीनां जुहुयात्सर्पिषाहुतिः ॥११९॥**

लज्जित हुँदै अग्नि प्रज्वलित गरी विधिपूर्वक मरुत, इन्द्र, बृहस्पति र अग्निका लागि घिउको होम गर्नू र अपराध समापनार्थ प्रार्थना गर्नू ।

**कामतो रेतसः सेकं व्रतस्थस्य द्विजन्मनः ।**
**अतिक्रामं व्रतस्याहुर्धर्मज्ञाः ब्रह्मवादिनः ॥१२०॥**

आश्रमको ब्रह्मचारीले स्वेच्छाले वीर्यपात गर्नु मुनीजनको विचारमा व्रत खण्डन गर्नु र ठूलो पाप गर्नु भएकोले यसको प्रायश्चित गर्नु अनीवार्य छ ।

**मारुतं पुरहूतं च गुरुं पावकमेव च ।**
**चतुरो व्रतिनोऽभ्येति ब्राह्मं तेजोऽवकीर्णिनः ॥१२१॥**

वासनाशक्त भई वीर्यपात गर्ने ब्रह्मचारीको तेज इन्द्र, वायु, बृहस्पति, अग्नि आदि देवता कहाँ पुग्ने हुनाले व्यक्ति निर्वीर्य र निस्तेज हुन जान्छ ।

**एतस्मिन्नेनसि प्राप्ते वसित्वा गर्दभाजिनम् ।**
**सप्तागारांश्चरेद्भैक्षं स्वकर्म परिकीर्तयन् ॥१२२॥**

सो तेज पुनः प्राप्त गर्न दुष्कर्मको प्रचार गर्दै आफूलाई कलङ्कित सम्झी गधाको छाला ओढी सात घरको भिक्षाले जीवन चलाउनु पर्दछ ।

**तेभ्यो लब्धेन भैक्षेण वर्तयन्नेककालिकम् ।**
**उपस्पृशंस्त्रिषवणमब्देन स विशुद्ध्यति ॥१२३॥**

एक वर्षसम्म सो भिक्षा दिनमा एक पटक खानू, दिनहुँ तीनै समय नुहाउनू, सन्ध्योपासना गर्नू तथा सत्यनिष्ठ र जितेन्द्रिय रहनू, दोष मेटिन्छ ।

**जातिभ्रंशकरं कर्म कृत्वाऽन्यतममिच्छया ।**
**चरेत्सान्तपनं कृच्छ्रं प्राजापत्यमनिच्छया ॥१२४॥**

स्वेच्छाले कसैले जातिभ्रष्ट हुने पाप गरे सान्तपन कृच्छ्र तथा नजानी गरे प्राजापत्य व्रत बस्नू ।

**सङ्करापात्रकृत्यासु मासं शोधनमैन्दवः ।**
**मलिनीकरणीयेषु तप्तः स्याद्यावकैस्त्र्यहम् ॥१२५॥**

सङ्करीकरण र अपात्रीकरणको दोष मेटाउन चान्द्रायण तथा मलिनीकरणको दोष मेटाउनका लागि तीन दिनसम्म तातो घिउ वा दूधमात्र खानू ।
(सङ्करीकरण-बाहुनले छेत्रिनीबाट सन्तान जन्माउनु, अपात्रीकरण-कुमारी कन्यालाई दूषित बनाउनु, मलिनीकरण- परस्त्रीगमन गर्नु) ।



**तुरीयो ब्रह्महत्यायाः क्षत्रियस्य वधे स्मृतः ।**
**वैश्येऽष्टमांशो वृत्तस्थे शूद्रे ज्ञेयस्तु षोडशः ॥१२६॥**

असल स्वभावको क्षत्रियको हत्या गर्ने ब्राह्मणले ब्रह्महत्याको एक चौथाई प्रायश्चित गर्नू । यस्ता वैश्यको र शूद्रको हत्या गरे क्रमशः ब्रह्महत्याको आठौं र सोह्रौं भाग प्रायश्चित गर्नू ।

**अकामतस्तु राजन्यं विनिपात्य द्विजोत्तमः ।**
**वृषभैकसहस्रा गा दद्यात्सुचरितव्रतः ॥१२७॥**

नचाहँदा नचाहँदै अनजानमा क्षत्रिय मार्ने ब्राह्मणले नियमपूर्वक व्रत बसी एउटा साँढे र एक हजार गाई दान गर्नु पर्दछ ।

**त्र्यब्दं चरेद्वा नियतो जटी ब्रह्महणो व्रतम् ।**
**वसन्दूरतरे ग्रामाद्वृक्षमूलनिकेतनः ॥१२८॥**

क्षत्रियको हत्या गर्ने ब्राह्मणले गाउँको टाढा रुखमुनि कुटी बनाई जटा पाली मुनिझैँ नियममा बसी जीवन बिताउनू ।

**एतदेव चरेदब्दं प्रायश्चित्तं द्विजोत्तमः ।**
**प्रमाप्य वैश्यं वृत्तस्थं दद्याद्वैकशतं गवाम् ॥१२९॥**

भूलले सदाचारी वैश्य मार्ने ब्राह्मणले गाउँ बाहिर रुखमुनि कुटी बनाई जटा पाली मुनि बनी एक वर्ष बिताएर सय गाई दान गर्नू ।

**एतदेव व्रतं कृत्स्नं षण्मासाञ्छूद्रहा चरेत् ।**
**वृषभैकादशा वाऽपि दद्याद्विप्राय गाः सिताः ॥१३०॥**



शूद्र मार्ने ब्राह्मणले गाउँबाहिर रुखमुनि कुटीमा जटा पाली मुनिझैँ छ महिना बिताई वेदपाठी बाहुनलाई एउटा साँढे र एघार वटा सेता गाई दिनू ।

**मार्जारनकुलौ हत्वा चाषं मण्डूकमेव च ।**
**श्वगोधोलूककाकांश्च शूद्रहत्याव्रतं चरेत् ॥१३१॥**

बिरालो, न्याहुरीमुसो, नीलकण्ठ चरा, भ्यागुतो, कुकुर, गोही, लाटोकोसेरो र काग मार्नेले पनि शूद्र मार्नेले सरह व्रत बस्नू ।

**पयः पिबेत्त्रिरात्रं वा योजनं वाऽध्वनो व्रजेत् ।**
**उपस्पृशेत्स्रवन्त्यां वा सूक्तं वाऽब्दैवतं जपेत् ॥१३२॥**

अथवा तीन दिनसम्म पानीमात्र पिएर, दैनिक एक योजन हिँडेर र तीन नै तीन पटक नुहाई वरुणस्तोत्र जप्नाले पनि शुद्ध हुन्छ ।

**अभ्रिं कार्ष्णायसीं दद्यात्सर्पं हत्वा द्विजोत्तमः ।**
**पलाकभारकं षण्ढे सैसकं चैकमाषकम् ॥१३३॥**

अनजानमा सर्प मार्ने लगभग दश किलो धान र दश ग्राम पिँधेको सीसा दान गर्नाले शुद्ध हुन्छ ।

**घृतकुम्भं वराहे तु तिलद्रोणं तु तित्तिरौ ।**
**शुके द्विहायनं वत्सं क्रौञ्चं हत्वा त्रिहायनम् ॥१३४॥**

सुँगुर, तित्रो, सुँगा र गाईको बाछो वा कन्याङकुरुङ मारे क्रमशः एक भाँडो घिउ, चार किलो तिल, दुई वर्षे र तीन वर्षे बाछोको दान गर्नू ।

**हत्वा हंसं बलाकां च बकं बर्हिणमेव च ।**
**वानरं श्येनभासौ च स्पर्शयेद् ब्राह्मणाय गाम् ॥१३५॥**



हाँस, सारस, बकुल्लो, मुजुर, बाँदर, बाज, गिद्ध वा कालिज मारे वेदपाठी ब्राह्मणलाई गाई दान गरी पाउ छुँदै क्षमा माग्नू ।

**वासो दद्याद्धयं हत्वा पञ्चनीलान्वृषान्गजम् ।**
**अजमेषानड्वाहं खरं हत्वैकहायनम् ॥१३६॥**

घोडा मारेमा वस्त्र, हात्ती मारेमा पाँच वटा नीला साँढे, भेडाबाख्रा मारेमा साँढे र गधा मारेमा एक वर्षे बाछो दान गर्नू ।

**क्रव्यादांस्तु मृगान्हत्वा धेनुं दद्यात्पयस्विनीम् ।**
**अक्रव्यादान्वत्सतरीमुष्ट्रं हत्वा तु कृष्णलम् ॥१३७॥**

मांसाहारी जनावर मारे लैनु गाई, शाकाहारी जनावर मारे बाछो र ऊँट मारेमा एक तोला सुन दान गर्नू ।

**जीन कार्मुकबस्तावीन्पृथग्दद्याद्विशुद्धये ।**
**चतुर्णामपि वर्णानां नारीर्हत्वाऽनवस्थिताः ॥१३८॥**

चारै वर्णका स्त्रीको अनजानमा वा भावावेशमा हत्या भए छालाको थैलो, धनुष, बोको र भेडो दान दिनू ।

**दानेन वधनिर्णेकं सर्पादीनामशक्नुवन् ।**
**एकैकशश्चरेत्कृच्छ्रं द्विजः पापानुपत्तये ॥१३९॥**

दान दिन नसक्ने सर्प आदिको हत्या गर्ने द्विजले कृच्छ्र व्रत गरी प्रायश्चित गर्नू ।

**अस्थिमतां तु सत्वानां सहस्रस्य प्रमापणे ।**
**पूर्णे चानस्यनस्थ्नां तु शूद्रहत्याव्रतं चरेत् ॥१४०॥**



हाड हुने हजारौं साना वा हाड नहुने असंख्य (एक गाडा) ससाना जीव हत्यामा शूद्र हत्याको प्रायश्चित गर्नू ।

**किञ्चिदेव तु विप्राय दद्यादस्थिमतां वधे ।**
**अनस्थ्नां चैव हिंसायां प्राणायामेन शुद्ध्यति ॥१४१॥**

हाड हुने साना जीवहत्या हुन गए ब्राह्मणलाई श्रद्धाले दान दिनाले र हाड नहुने साना जीवहत्या हुन गए प्राणायामले शुद्धि हुन्छ ।

**फलदानां तु वृक्षाणां छेदने जप्यमृक्शतम् ।**
**गुल्मवल्लीलतानां च पुष्पितानां च वीरुधाम् ॥१४२॥**

फल फल्ने वृक्ष, झाडी, लता, लहरा आदि काटे प्रायश्चितका लागि ऋग्वेदको अघमर्षण (पापनाशक) मन्त्र सय पटक जप्नू ।

**अन्नाद्यजानां सत्त्वानां रसजानां च सर्वशः ।**
**फलपुष्पोद्भवानां च घृतप्राशो विशोधनम् ॥१४३॥**

अनाज, फलफूल तथा फूलमा हुने कीरा आदि जीवको अनजानमा हुने हत्याको प्रायश्चितका लागि सो दिन केवल घिउ मात्र खानू ।

**कृष्टजानामोषधीनां जातानां च स्वयं वने ।**
**वृथालम्भेऽनुगच्छेद्गां दिनमेकं पयोव्रतः ॥१४४॥**

धान वा जडीबूटी त्यत्तिकै उखेले वा कुल्चिए प्रायश्चितका लागि एक दिन दूध मात्र पिउनू र पूरा दिन गाईको पछिपछि हिँडिरहनू ।

**एतैर्व्रतैरपोह्यं स्यादेनो हिंसासमुद्भवम् ।**
**ज्ञानाज्ञानकृतं कृत्स्नं शृणुतानाद्यभक्षणे ॥१४५॥**



यी प्रायश्चित गरी थाहा पाई वा नपाई गरिएका हिंसाजन्य पापबाट मुक्त हुनु पर्दछ । अब यसपछि अभक्ष्य भक्षणका प्रायश्चितका बारेमा बताउँदछु, सुन्नुहोस् ।

**अज्ञानाद्वारुणीं पीत्वा संस्कारेणैव शुद्ध्यति ।**
**मतिपूर्वमनिर्देश्यं प्राणान्तकमिति स्थितिः ॥१४६॥**

अज्ञानमा मदिरा पिए फेरी उपनयन गर्नू । तर, जानीजानी पिए त प्राण त्याग नै शुद्धिको एक मात्र उपाय हो ।

**अपः सुराभाजनस्था मद्यभाण्डस्थितास्तथा ।**
**पञ्चरात्रं पिबेत्पीत्वा शङ्खपुष्पीश्रृतं पयः ॥१४७॥**

मदिरा हाल्ने भाँडाकुँडाले पानी पिइएमा पनि पाँच दिनसम्म सेतो अपराजिता

ढड्याएको पानी पिउनु पर्दछ ।

**स्पृष्ट्वा दत्त्वा च मदिरां विधिवत्प्रतिगृह्य च ।**
**शूद्रोच्छिष्टाश्च पीत्वाऽऽपः कुशवारि पिबेत्त्र्यहम् ॥१४८॥**

मदिरा छोए, दिए वा लिए उसले प्रायश्चित गर्न तीन दिनसम्म शूद्रको जुठो पानी र विधिपूर्वक बनाइएको कुशको काँढापानी पिउनू ।

**ब्राह्मणस्तु सुरापस्य गन्धमाघ्राय सोमपः ।**
**प्राणानप्सु त्रिरायम्य घृतं प्राश्य विशुद्ध्यति ॥१४९॥**

सोमयज्ञले शुद्ध ब्राह्मणले मदिरा पिउनेलाई तीन चोटी सुँघ्नु, तीन चोटी जल छर्कनू र तीन प्राणायाम गराई घिउ खुवाउनु शुद्ध हुन्छ ।

**अज्ञानात्प्राश्य विण्मूत्रं सुरासंस्पृष्टमेव च ।**
**पुनः संस्कारमर्हन्ति त्रयो वर्णाः द्विजातयः ॥१५०॥**

द्विजले नजानी मलमूत्र को सेवन वा सुरास्पर्श गरे फेरी उपनयन गराउनु पर्दछ नगरे त्यस्तालाई शूद्र नै भनिन्छ ।

**वपनं मेखलादण्डो भैक्ष्यचर्या व्रतानि च ।**
**निवर्तन्ते द्विजातीनां पुनः संस्कारकर्मणि ॥१५१॥**

प्रायश्चितार्थ फेरी उपनयन गराउने द्विजले मुण्डन, मेखला-दण्ड, भिक्षा, व्रत नगरी उपनयन संस्कारले जनै मात्र फेरे पुग्दछ ।

**अभोज्यानां तु भुक्त्वाऽन्नं स्त्रीशूद्रोच्छिष्टमेव च ।**
**जग्ध्वा मांसमभक्ष्यं च सप्तरात्रं यवान्पिबेत् ॥१५२॥**

पतितको अन्न, स्त्री र शूद्रको जुठो र मासु आदि अभक्ष्य खानेले सात दिन जाउलोमात्र खाई प्रायश्चित गर्नू ।

**शुक्तानि च कषायांश्च पीत्वा मेध्यान्यपि द्विजः ।**
**तावद्भवत्यप्रयतो यावत्तन्न व्रजत्यधः ॥१५३॥**

अमिलो र टर्रो सडेको पदार्थ खाने व्यक्ति मलमूत्रमार्फत यि वस्तु शरीरबाट बाहिर नगएसम्म अशुद्ध हुन्छ ।

**विड्वराहखरोष्ट्राणां गोमायोः कपिकाकयोः ।**
**प्राश्य मूत्रपुरीषाणि द्विजश्चान्द्रायणं चरेत् ॥१५४॥**

अनजानमा सुँगुर, गधा, ऊँट, स्याल, बाँदर वा कागको मलमूत्र खाने द्विजले चान्द्रायण व्रत बस्नु पर्दछ ।



**शुष्काणि भुक्त्वा मांसानि भौमानि कवकानि च ।**
**अज्ञातं चैव सूनास्थमेतदेव व्रतं चरेत् ॥१५५॥**

सुकेको वा वधशालामा यताउता छरिएको मासु वा च्याउ अनजानमा खानेले पनि चान्द्रायण व्रत बस्नु पर्दछ ।

**क्रव्यादसूकरोष्ट्राणां कुक्कुटानां च भक्षणे ।**
**नर काकखराणां च तप्तकृच्छ्रं विशोधनम् ॥१५६॥**

बाज, सुँगुर, ऊँट, कुखुरो, भाले काग र गधाको मासु अनजानमा खाएमा शुद्धताका लागि तप्तकृच्छ्र व्रत बस्नु पर्दछ ।

**मासिकान्नं तु योऽश्नीयादसमावर्तको द्विजः ।**
**स त्रीण्यहान्युपवसेदेकाहं चोदके वसेत् ॥१५७॥**

मासिकको अन्न खाने ब्रह्मचारीले तीन दिन उपवास गर्नू र एक दिन जलमा बस्नू ।

**ब्रह्मचारी तु योऽश्नीयान्मधु मांसं कथञ्चन ।**
**स कृत्वा प्राकृतं कृच्छ्रं व्रतशेषं समापयेत् ॥१५८॥**

केही गरी ब्रह्मचारीले मद्य वा मासु खाएमा प्राकृत-कृच्छ्र व्रत बसी बाँकी व्रत समाप्त गर्नाले शुद्ध हुन्छ अर्थात एक दिन जलमा बसिरहनु पर्दैन ।

**विडालकाकाखूच्छिष्टं जग्ध्वा श्वनकुलस्य च ।**
**केशकीटावपन्नं च पिबेद्ब्रह्मसुवर्चलाम् ॥१५९॥**



बिरालो, काग, मुसा, कुकुर र न्याहुरीको जुठो तथा रौं र कीरा परेको खाना खानेले ब्रह्मसुवर्चला नामक बुटीको काढापानी खानू ।

**अभोज्यमन्नं नात्तव्यमात्मनः शुद्धिमिच्छता ।**
**अज्ञानभुक्तं तूत्तार्यं शोध्यं वाप्याशु शोधनैः ॥१६०॥**

शुद्धता चाहनेले अभोज्य नखानू । खाई तुरुन्त थाहा भए छाद्नू वा दिसा लाग्ने, पेट सफा गर्ने वस्तुको काढापानी खानू ।

**एषोऽनाद्यादनस्योक्तो व्रतानां विविधो विधिः ।**
**स्तेयदोषापहर्तॄणां व्रतानां श्रूयतां विधिः ॥१६१॥**

भृगु भन्नुहुन्छ-अनेक थरी अभक्ष्य खाएका विविध प्रायश्चितका बारेमा बताएँ, अब चोरीको दोष हटाउने उपायका बारेमा बताउँदछु ।

**धान्यान्नधनचौर्याणि कृत्वा कामाद् द्विजोत्तमः ।**
**स्वजातीयगृहादेव कृच्छ्राब्देन विशुद्ध्यति ॥१६२॥**

सजातीयका घरबाट योजना बनाई धान आदि अन्न र धनसम्पत्ति चोर्ने द्विज एक वर्षसम्म कृच्छ्र व्रत बस्नाले शुद्ध हुन्छ ।

**मनुष्याणां तु हरणे स्त्रीणां क्षेत्रगृहस्य च ।**
**कूपवापीजलानां च शुद्धिश्चान्द्रायणं स्मृतम् ॥१६३॥**

पुरुष, स्त्री, खेत, घर तथा कुवा वा पोखरीको पानी चोरेको वा हरणको प्रायश्चित चान्द्रायण व्रत हो ।

**द्रव्याणामल्पहाराणां स्तेयं कृत्वाऽन्यवेश्मनि ।**
**चरेत्सान्तपनं कृच्छ्रं तन्निर्यात्यात्मशुद्धये ॥१६४॥**



अल्पाहारका वस्तु (काँक्रा, मूला आदि) चोर्ने चोर सान्तपन व्रत बस्नाले शुद्ध हुन्छ ।

**भक्ष्यभोजापहरणे यानशय्यासनस्य च ।**
**पुष्पमूलफलानां च पञ्चगव्यं विशोधनम् ॥१६५॥**

भक्ष्य भोज्य पदार्थ, वाहन, आसन, फूल, कन्दमूल र फलफूल चोरी गरेको प्रायश्चित चोरेको सामान फर्काउनु र पञ्चगव्य खानु हो ।

**तृणकाष्ठद्रुमाणां च शुष्कान्नस्य गुडस्य च ।**
**चैलचर्मामिषाणां च त्रिरात्रं स्यादभोजनम् ॥१६६॥**

घाँस, दाउरा, रुख, अन्न, सखर, कपडा, छाला र मासु चोरीको तीन दिन तीन रात निराहार बस्नाले प्रायश्चित हुन्छ ।

**मणिमुक्ताप्रवालानां ताम्रस्य रजतस्य च ।**
**अयःकांस्योपलानां च द्वादशाहं कणान्नता ॥१६७॥**

मणि, मोति, मुँगा, तामा, चाँदी, फलाम, काँस र पत्थर चोरीको प्रायश्चितका लागि बाह्र दिनसम्म कनिका खाएर बस्नू ।

**कार्पासकीटजीर्णानां द्विशफैकशफस्य च ।**
**पक्षिगन्धौषाधीनां च रज्वाश्चैव त्र्यहं पयः ॥१६८॥**

कपास, रेशम, ऊन, एक वा दुई खुरे जनावर, चरा, गन्ध र डोरी चोरीको प्रायश्चितका लागि तीन दिन पानी मात्र पिई उपवास बस्नु पर्दछ ।

**एतैर्व्रतैरपोहेत पापं स्तेयकृतं द्विजः ।**
**अगम्यागमनीयं तु व्रतैरेभिरपानुदेत् ॥१६९॥**



चोरी गर्ने द्विजले यी बताइएका विधिले आफ्नो पाप भगाउनू र अगम्या स्त्री गमन गर्नेले यस पछि बताइने विधिले प्रायश्चित गर्नू ।

**गुरुतल्पव्रतं कुर्याद्रेतः सिक्त्वा स्वयोनिषु ।**
**सख्यु पुत्रस्य च स्त्रीषु कुमारीष्वन्त्यजासु च ॥१७०॥**

सहोदरा, मित्रकी पत्नी, पुत्रवधु, कुमारी र चाण्डाल्नी गमन गर्नेले गुरुपत्नी गमनकै प्रायश्चित गर्नू ।

**पैतृष्वसेयीं भगिनीं स्वस्त्रीयां मातुरेव वा ।**
**मातुश्च भ्रातुराप्तस्य गत्वा चान्द्रायणं चरेत् ॥१७१॥**

बाबुआमाका दिदीबहिनीका छोरीहरु र आमाका दाजुभाईका छोरीहरु गमन

गर्नेले चान्द्रायण व्रत गर्नु पर्दछ ।

**एतास्तिस्रस्तु भार्यार्थे नोपयच्छेत्तु बुद्धिमान् ।**
**ज्ञातित्वेनानुपेयास्ताः पतति ह्युपयन्नधः ॥१७२॥**

बुद्धिमान मानिसले यी तीन स्त्रीलाई पत्नी कहिल्यै नबनाउनू ।
नातेदार हुनाले यी विवाहका लागि अयोग्य हुन्छन् ।
यी सँग विवाह गर्ने पतित हुन्छ ।

**अमानुषीषु पुरुषः उदक्यायामयोनिषु ।**
**रेतः सिक्त्वा जले चैव कृच्छ्रं सान्तपनं चरेत् ॥१७३॥**

मानिस बाहेकका स्त्रीजात (गाई, भैंसी आदि), रजस्वला र जलमा विर्यपात गर्नेले
कृच्छ्र सान्तपन व्रत बस्नू ।



**मैथुनं तु समासेव्य पुंसि योषिति वा द्विजः ।**
**गोयानेऽप्सु दिवा चैव सवासाः स्नानमाचरेत् ॥१७४॥**

पुरुषका साथ समलिङ्गी मैथुन गरेमा तथा बैलगाडामा, पानीमा र दिनमा कुनै स्त्रीका साथ मैथुन
गरेमा द्विजले सवस्त्र स्नान गर्नू ।

**चाण्डालान्त्यस्त्रियो गत्वा भुक्त्वा प्रतिगृह्य च ।**
**पतत्यज्ञानतो विप्रःज्ञानात्साम्यं तु गच्छति ॥१७५॥**

चाण्डाल र अछुत स्त्रीसँग थाहा नपाई सँगै सुत्ने, सँगै खाने र तीसँग दान लिने व्यक्ति पतित
हुन्छ ।जानीजानी गरे सोही जातमा मिल्दछ ।

**विप्रदुष्टां स्त्रियं भर्त्ता निरुन्ध्यादेकवेश्मनि ।**
**यत्पुंसः परदारेषु तच्चैनां चारयेद्व्रतम् ॥१७६॥**

परपुरुषसँग यौनाचार गर्ने पत्नीलाई घरमा थुनेर राख्नू र परस्त्री गमन गर्ने पुरुषलाई गर्नुपर्ने प्रायश्चित गर्न लगाउनू ।

**सा चेत्पुनः प्रदुष्येत्तु सदृशेनोपमन्त्रिता ।**
**कृच्छ्रं चान्द्रायणं चैव तदस्याः पावनं स्मृतम् ॥१७७॥**

एकपटक प्रायश्चित गरेर पुनः परपुरुषसँग यौन सम्पर्क गर्ने स्त्रीको शुद्धता कृच्छ्र चान्द्रायण व्रत गर्नाले हुन्छ ।

**यत्करोत्येकरात्रेण वृषली सेवनाद् द्विजः ।**
**भैक्ष्यभुग्जपन्नित्यं त्रिभिर्वर्षैर्व्यपोहति ॥१७८॥**



एक रात शूद्रासँग सुत्ने द्विजले तीन वर्षसम्म भिक्षाको अन्नले पेट भर्ने र निरन्तर गायत्री जप गर्ने गर्नु पर्दछ ।

**एषा पापकृतामुक्ता चतुर्णामपि निष्कृतिः ।**
**पतितैः संप्रयुक्तानामिमाः शृणुत निष्कृतीः ॥१७९॥**

यी चारै वर्णका पापबाट मुक्त हुने उपाय बताइए । अब यससँग घुलमेल गर्नेहरूको प्रायश्चितका बारेमा बताउँदछु ।

**संवत्सरेण पतति पतितेन सहाचरन् ।**
**याजनाध्यापनाद्यौनान्न तु यानासनाशनात् ॥१८०॥**

एक वर्षसम्म पतितसँगै बसेर यज्ञ गर्ने, पढाउने र यौन सम्पर्क राख्ने द्विज पनि

पतित हुन्छ । तर, सँगसँगै सवारीमा हिँड्दा, बस्दा वा खाँदा यो दोष लाग्दैन ।

**यो येन पतितेनैषां संसर्गं याति मानवः ।**
**स तस्यैव व्रतं कुर्यात्तत्संसर्गविशुद्धये ॥१८१॥**

जुन पापले सङ्गत गरिएको व्यक्ति पतित भएको हो त्यही पापको प्रायश्चित गर्नाले सङ्गत कर्ता शुद्ध हुन्छ ।

**पतितस्योदकं कार्यं सपिण्डैर्बान्धवैर्बहिः ।**
**निन्दितेऽहनि सायाह्ने ज्ञात्यृत्विग्गुरुसन्निधौ ॥१८२॥**

पतित सपिण्डीको श्राद्ध-तर्पण सूर्यग्रहण लागेको वा बादलले ढाकेको जस्ता निन्दनीय दिन पारेर साँझमा गाउँ बाहिर गएर पुरोहित वा गुरुको उपस्थितिमा गर्नुपर्दछ ।

**दासी घटमपां पूर्णं पर्यस्येत्प्रेतवत्पदा ।**
**अहोरात्रं उपासीरन्नशौचं बान्धवैः सह ॥१८३॥**

पतितलाई तर्पण गर्ने दासीले जलले भरिएको घडाबाट दक्षिणतिर फर्की जल गोडामा खसाल्नू । पतितका आफन्तका साथ एक दिन आशौच बार्नू ।

**निवर्तेरंश्च तस्मात्तु संभाषणसहासने ।**
**दायाद्यस्य प्रदानं च यात्रा चैव हि लौकिकी ॥१८४॥**

आफन्तले पतितसँग उ जिउँदो हुँदै सम्बन्ध तोड्नू । उसँग बोल्नु हुँदैन, उसँग उठबस गर्नु हुँदैन, उसकोमा आवतजावत गर्नु हुँदैन र उसलाई पैतृक सम्पत्तिको बाँडफाँडमा सहभागी बनाउनु हुँदैन ।

**ज्येष्ठता च निवर्तेत ज्येष्ठवाप्यं च यद्वसु ।**
**ज्येष्ठांशं प्राप्नुयाच्चास्य यवीयान्गुणतोऽधिकः ॥१८५॥**

पतित जेठोलाई जेठेकको अधिकार हुँदैन त्यसपछिको भाई जेठो हुन्छ ।
त्यो साँच्चिनै गुणी भए त साँचो अर्थमै ज्येष्ठ बन्दछ ।

**प्रायश्चित्ते तु चरिते पूर्णकुम्भमपां नवम् ।**
**तेनैव सार्धं प्रास्येयुःस्नात्वा पुण्ये जलाशये ॥१८६॥**

पतित भई प्रायश्चित गरेकोलाई अपनाउन चाहनेले उसँगै कुनै पवित्र तलाउमा
स्नान गरी सँगसँगै जलपूर्ण नयाँ घडा विसर्जन गर्नू ।

**स त्वप्सु तं घटं प्रास्य प्रविश्य भवनं स्वकम् ।**
**सर्वाणि ज्ञातिकार्याणि यथापूर्वं समाचरेत् ॥१८७॥**



घडा विसर्जन पछि पतितले घरभित्र पसी वर्ण अनुसार गर्नुपर्ने नित्य धर्मकर्म पालना गर्नू ।

**एतदेवं विधिं कुर्याद्योषित्सु पतितास्वपि ।**
**वस्त्रान्नपानं देयं तु वसेयुश्च गृहान्तके ॥१८८॥**

पतित स्त्रीका साथ पनि यही विधि गर्नू । अर्थात उसको भरणपोषण गर्नू तर
आफ्ना नजिक पर्न नदिई अलग राख्नू ।

**एनस्विभिरनिर्णिक्तैर्नार्थं किञ्चित्सहाचरेत् ।**
**कृतनिर्णेजनांश्चैत्तान्न जुगुप्सेत कर्हिचित् ॥१८९॥**

पापी र पतितसँग प्रायश्चित नगर्दासम्म कुनै सम्बन्ध नराख्नू तर प्रायश्चित
गरिसकेकोलाई कुनै भेदभाव वा निन्दा पनि नगर्नू ।

**बालघ्नांश्च कृतघ्नांश्च विशुद्धानपि धर्मतः ।**
**शरणागतहन्तृंश्च स्त्रीहन्तृंश्च न संवसेत् ॥१९०॥**

प्रायश्चितले शुद्ध भएपनि बाल हत्यारा, कृतघ्न, शरणागतलाई मार्ने र स्त्रीलाई छलकपट गर्ने वा मार्नेसँग सम्बन्ध नराख्नू ।

**येषां द्विजानां सावित्री नानूच्येत यथाविधि ।**
**तांश्चारयित्वा त्रीन्कृच्छ्रान्यथाविध्युपनाययेत् ॥१९१॥**

विधिपूर्वक गायत्री-दीक्षा नलिने द्विजले प्रायश्चितका लागि तीन कृच्छ्र व्रत बसी नियमानुसार व्रतबन्ध गर्नु पर्दछ ।

**प्रायश्चित्तं चिकीर्षन्ति विकर्मस्थास्तु ये द्विजः ।**
**ब्राह्मणाः च परित्यक्तास्तेषामप्येतदादिशेत् ॥१९२॥**



अवेदज्ञ र व्यर्थ काम गर्ने पतित ब्राह्मणले सुध्रन खोजे तीन कृच्छ्र व्रत गरेर प्रायश्चित गर्न लगाउनू ।

**यद्गर्हितेनार्चयन्ति कर्मणा ब्राह्मणाः धनम् ।**
**मत्स्योत्सर्गेण शुध्यन्ति जपेन तपसैव च ॥१९३॥**

निन्दित कर्म गरेर धन आर्जन गर्ने व्यक्ति त्यस्तो धन त्याग्नाले (दान गर्नाले) र जपतप गर्नाले शुद्ध हुन्छ ।

**जपित्वा त्रीणि सावित्र्याः सहस्राणि समाहितः ।**
**मासं गोष्ठे पयः पीत्वा मुच्यतेऽसत्प्रतिग्रहात् ॥१९४॥**

अधर्मको धन लिने ब्राह्मणले शुद्धताको प्रायश्चित गर्न एक महिना गोठमा बसी

दिनहुँ तीन हजार पल्ट गायत्री जपी दूधमात्र पिउनु पर्दछ ।

**उपवासकृशं तं तु गोव्रजात्पुनरागतम् ।**
**प्रणतं प्रतिपृच्छेयुः साम्यं सौम्येच्छसीति किम् ॥१९५॥**

गोठबाट फर्की नमस्काररत ब्राह्मणलाई ज्ञानी र सत्यनिष्ठ ब्राह्मणले 'के तिमि साँच्चिनै म जस्तै बन्न चाहन्छौ ?' भनी सोध्नू ।

**सत्यमुक्त्वा तु विप्रेषु विकिरेद्यवसं गवाम् ।**
**गोभिः प्रवर्तिते तीर्थे कुर्युस्तस्य परिग्रहम् ॥१९६॥**

शुद्धता चाहनेले विनम्रतापूर्वक उत्तर दिई गाईलाई घाँस खुवाउनु र उत्कृष्टले उसलाई पवित्र तीर्थमा लगी पवित्र भएको घोषणा गर्नू ।

**व्रात्यानां याजनं कृत्वा परेषामन्त्यकर्म च ।**
**अभिचारमहीनं च त्रिभिः कृच्छ्रैर्व्यपोहति ॥१९७॥**

व्रात्यबाट यज्ञादि, अन्त्येष्टि र विधि रहित अभिचार (मारण, मोहन आदि) गराउने ब्राह्मण तीन कृच्छ्र व्रतले शुद्ध हुन्छ ।

**शरणागतं परित्यज्य वेदं विप्लाव्य च द्विजः ।**
**संवत्सरं यवाहारस्तत्पापमसेधति ॥१९८॥**

शरणमा पर्नेको त्याग र कुपात्रलाई वेद पढाएर हुने पापको प्रायश्चित एक वर्षसम्म जौको आहार मात्र खानाले हुन्छ ।

**श्वश्रृगालखरैर्दष्टो ग्राम्यैः क्रव्याद्भिरेव वा ।**
**नराश्वोष्ट्रवराहैश्च प्राणायामेन शुध्यति ॥१९९॥**

कुकुर, स्याल, गधा, मानिस, घोडा, ऊँट, सुँगुर र ग्रामीण
मांसाहारीले टोके प्राणायामले शुद्धी हुन्छ ।

**षष्ठान्नकालता मासं संहिताजप एव वा ।**
**होमाश्च शाकलाः नित्यमपाङ्क्त्यानां विशोधनम् ॥२००॥**

जात बहिष्कृत शुद्ध हुन चाहने द्विजले तीन दिन उपवास बसी एक महिना केवल साँझमा खाँदै
वेदसंहिता पाठ र यज्ञादि गरिरहनू ।

**उष्ट्रयानं समारुह्य खरयानं तु कामतः ।**
**स्नात्वा तु विप्रो दिग्वासा प्राणायामेन शुध्यति ॥२०१॥**

स्वेच्छाले ऊँट वा गधा चढ्ने ब्राह्मण नाङ्गै नुहाएर प्राणायाम गरेपछि शुद्ध हुन्छ ।

**विनाद्भिरप्सु वाऽप्यार्त्तः शारीरं सन्निषेव्य च ।**
**सचैलो बहिराप्लुप्य गामालभ्य विशुध्यति ॥२०२॥**

ग्रीष्म ऋतुमा सरोवर सुकेमा गाउँ बाहिरको तलाउमा सवस्त्र नुहाई पृथ्वीलाई प्रणाम गरे शुद्धता
चाहने ब्राह्मण शुद्ध हुन्छ ।

**वेदोदितानां नित्यानां कर्मणां समतिक्रमे ।**
**स्नातकव्रतलोपे च प्रायश्चित्तमभोजनम् ॥२०३॥**

वेदले बताएका नित्य कर्म टुट्न गएमा वा ब्रह्मचर्य व्रत टुट्न गएमा
उपवासले नै प्रायश्चित हुन्छ ।

**हुङ्कारं ब्राह्मणस्योक्त्वा त्वङ्कारं च गरीयसः ।**
**स्नात्वानश्नन्नहः शेषमभिवाद्य प्रसादयेत् ॥२०४॥**

साधारण ब्राह्मणलाई 'तिमि' र वेदज्ञलाई 'तँ' भने प्रायश्चितका लागि
नुहाएर उपवास बसी सेवाले तिनलाई खुशी पार्ने प्रयत्न गर्नू ।

**ताडयित्वा तृणेनापि कण्ठे वावध्य वाससा ।**
**विवादे च विनिर्जित्य प्रणिपत्य प्रसादयेत् ॥२०५॥**

ब्राह्मणलाई छेस्काले मात्रै हिर्काए, कपडाको पासोले ताने, कुनै पीडा दिए, बाँधे वा गाली गरे
प्रायश्चित गर्न सेवा-प्रणामले प्रसन्न पार्नू ।

**अवगूर्य त्वब्दशतं सहस्रमभिहत्य च ।**
**जिघांसया ब्राह्मणस्य नरकं प्रतिपद्यते ॥२०६॥**

ब्राह्मणलाई मार्न भनी लौरो उभ्काउनेले सय र पिट्नेले हजार वर्षसम्म
नरकमा परी कठोर दुःख झेल्नु पर्दछ ।



**शोणितं यावतः पांसून्संगृह्णाति महीतले ।**
**तावत्यब्दसहस्राणि तत्कर्ता नरके वसेत् ॥२०७॥**

ब्राह्मणका शरीरबाट निक्लेको रगतले भिजेको धूलोका कण जति नै
वर्षसम्म हिर्काउनेले नरकमा बस्नु पर्छ ।

**अवगूर्य चरेत्कृच्छ्रमतिकृच्छ्रं निपातने ।**
**कृच्छ्रातिकृच्छ्रौ कुर्वीत विप्रस्योत्पाद्य शोणितम् ॥२०८॥**

ब्राह्मणलाई हिर्काउन लौरो उभ्काउनेले कृच्छ्र, हिर्काउनेले अतिकृच्छ्र र
रगत नै बगाउनेले दुवै व्रत बसी प्रायश्चित गर्नू ।

**अनुक्तनिष्कृतीनां तु पापानामपनुपत्तये ।**
**शक्तिं चावेक्ष्य पापं च प्रायश्चित्तं प्रकल्पयेत् ॥२०९॥**

अरु प्रायश्चित नबताइएका पापको प्रायश्चित पापको मात्रा र दण्ड सहने पापीको शरीरको सामर्थ्यलाई हेरेर निर्धारण गर्नू ।

**यैरभ्युपायैरेनांसि मानवो व्यपकर्षति ।**
**तान्वोऽभ्युपायान्वक्ष्यामि देवर्षिपितृसेवितान् ॥२१०॥**

भृगु भन्नुहुन्छ-जुन उपायले मानिस पाप पखाल्दछन्, देवता, ऋषि र पितृले गरेका (बताउका) ती व्रतका उपाय म अब बताउँदछु ।

**त्र्यहं प्रातस्त्र्यहं सायं त्र्यहमद्यादयाचितम् ।**
**त्र्यहं परं च नाश्नीयात्प्राजापत्यं चरन्द्विजः ॥२११॥**



प्राजापत्य कृच्छ्र व्रत गर्नेले तीन दिन बिहान मात्र, तीन दिन बेलुका मात्र, तीनदिन नमागी जे भेटिन्छ त्यही खाएर र तीन दिन उपवास बसी बाह्र दिन बिताउनू ।

**गोमूत्रं गोमयं क्षीरं दधि सर्पिकुशोदकम् ।**
**एकरात्रोपवासश्च कृच्छ्रं सान्तपनं स्मृतम् ॥२१२॥**

दिनमा पञ्चगव्य वा कुशपानी खाई रातभर पूर्ण उपवास बसेर गरिने व्रतलाई 'कृच्छ्र सान्तपन व्रत' भनिन्छ ।

**एकैकं ग्रासमश्नीयात् त्र्यहाणि त्रीणि पूर्ववत् ।**
**त्र्यहं चोपवसेदन्त्यमतिकृच्छ्रं चरन् द्विजः ॥२१३॥**

अतिकृच्छ्र व्रतीले तीन दिन बिहान र तीन दिन बेलुका एक गाँस खानू, तीन दिन

नमागीकन भेटिए खानू र तीन दिन उपवास बसी बाह्र दिन बिताउनू ।

**तप्तकृच्छ्रं चरन् विप्रो जलक्षीर घृतानिलान् ।**
**प्रतित्र्यहं पिबेदुष्णान् सकृत्स्नायी समाहितः ॥२१४॥**

स्थीर मनले स्नान गरी तीन दिन तातो पानी, तीन दिन तातो दूध, तीन दिन तातो घिउ र बाँकी तीन दिन तातो हावा खाएर बाह्र दिनसम्म गरिने व्रतलाई 'तप्तकृच्छ्र व्रत' भनिन्छ ।

**यतात्मनोऽप्रमत्तस्य द्वादशाहमभोजनम् ।**
**पराका नाम कृच्छ्रोऽयं सर्वपापापनोदनः ॥२१५॥**

बाऱ्है दिनसम्म निराहार बसी गरिने व्रत 'पराक कृच्छ्र व्रत' हो र यो व्रतले सबै पापबाट मुक्ति दिलाउँदछ ।

**एकैकं ह्रासयेत्पिण्डं कृष्णे शुक्ले च वर्धयेत् ।**
**उपस्पृशंस्त्रिषवणमेतच्चान्द्रायणं स्मृतम् ॥२१६॥**

एक महिनासम्म दिनहुँ तीन पटक नुहाई कृष्णपक्षको औंशीदेखि दिनहुँ एक, एक गाँस घटाउँदै र शुक्लपक्षको परेवादेखि दिनहुँ एक, एक गाँस बढाउँदै भोजन गरी गरिने व्रत 'चान्द्रायण व्रत' हो ।

**एतमेव विधिं कृत्स्नमाचरेद्यवमध्यमे ।**
**शुक्ल पक्षादिनियतश्चरंश्चान्द्रायणं व्रतम् ॥२१७॥**

'चान्द्रायण व्रत' विधिलाई शुक्लपक्षको परेवादेखि बढाउँदै लगी कृष्णपक्षमा घटाउँदै लग्दा जौ जस्तै बीच भागमा मोटो हुने 'यवमध्याख्य चान्द्रायणव्रत' हुन्छ ।

**अष्टावष्टौ समश्नीयात्पिण्डान्मध्यंदिने स्थिते ।**
**नियतात्मा हविष्याशी यतिचान्द्रायणं चरन् ॥२१८॥**

मध्यदिनमा केवल आठ गाँस खाएर बसिने चान्द्रायण व्रतलाई 'यति चन्द्रायण व्रत' भनिन्छ ।

**चतुरः प्रातरश्नीयात् पिण्डान् विप्रः समाहितः ।**
**चतुरोऽस्तमिते सूर्ये शिशुचान्द्रायणं स्मृतम् ॥२१९॥**

बिहान चार गाँस र बेलुकी चार गाँस खाएर बसिने चान्द्रायण व्रतलाई 'शिशु चान्द्रायण व्रत' भनिन्छ ।

**यथा कथं चित्पिण्डानां तिस्रोऽशीतीः समाहितः ।**
**मासेनाश्नन्हविष्यस्य चन्द्रस्यैति सलोकताम् ॥२२०॥**



स्वस्थ चित्तले तयार पारिएको हवि दिनको आठ भाग (गाँस) का दरले एक महिनासम्म खाने व्यक्ति चन्द्रलोक जान्छ ।

**एतद्रुद्रास्तथादित्या वसवश्चाचरन्व्रतम् ।**
**सर्वाकुशलमोक्षाय मरुतश्च महर्षिभिः ॥२२१॥**

यो "चान्द्रायण व्रत" रुद्र, आदित्य, वसु, मरुत आदिले ऋषिहरूसँग सबै पाप नाश गर्नका लागि बसेका थिए ।

**महाव्याहृतिभिर्होमः कर्तव्यः स्वयमन्वहम् ।**
**अहिंसा सत्यमक्रोधमार्जवं च समाचरेत् ॥२२२॥**

चान्द्रायणमा महाव्याहृतिले होम गर्नू र व्रतभर अहिंसा, अक्रोध, सरलता र सत्यपालना गर्नू ।

**त्रिरहस्त्रिर्निशायां च सवासो जलमाविशेत् ।**
**स्त्रीशूद्रपतितांश्चैव नाभिभाषेत कर्हिचित् ॥२२३॥**

दिन र रातमा तीन, तीन पटक सवस्त्र जलमा डुबुल्की लगाउनू तथा शूद्र, पतित र स्त्रीसँग सम्बन्ध नराख्नू ।

**स्थानासनाभ्यां विहरेदशक्तोऽधः शयीत वा ।**
**ब्रह्मचारी व्रती च स्याद्गुरुदेवद्विजार्चकः ॥२२४॥**

चान्द्रायण व्रतमा सुत्न हुन्न । रातदिन आसनमा उठबस गरिरहनू । रोगी र दुर्बलका लागि खाली भुईंमा सुत्ने छुट छ । व्रतालुले ब्रह्मचारी र जितेन्द्रिय बनी देवता, गुरु र ब्राह्मणको सेवामा समय बिताउनू ।

**सावित्रीं च जपेन्नित्यं पवित्राणि च शक्तितः ।**
**सर्वेष्वेव व्रतेष्वेवं प्रायश्चित्तार्थमादृतः ॥२२५॥**

व्रत बस्नेले शक्ति अनुसार गायत्री वा अन्य वेदमन्त्रको जप गर्नू ।
प्रायश्चितका लागि बसिने सबै व्रत श्रद्धाले बस्नु पर्दछ ।

**एतैर्द्विजातयः शोध्या व्रतैराविष्कृतैनसः ।**
**अनाविष्कृतपापांस्तु मन्त्रैर्होमैश्च शोधयेत् ॥२२६॥**

व्रतमा पाप जति बढीलाई बतायो त्यती चाँडै मुक्त हुइन्छ ।
नभए प्रतिदिन मन्त्र-जप र होमले आफूलाई शुद्ध बनाउनू ।

**ख्यापनेनानुतापेन तपसाऽध्ययनेन च ।**
**पापकृन्मुच्यते पापात्तथा दानेन चापदि ॥२२७॥**

पापीले आफ्नो पापलाई सार्वजनिक गर्नाले, साँचो मनले प्रायश्चित गर्नाले तथा तप-स्वध्यायले उ पापबाट मुक्त हुन्छ ।

**यथा यथा नरोऽधर्मं स्वयं कृत्वाऽनुभाषते ।**
**तथा तथा त्वचेवाहिस्तेनाधर्मेण मुच्यते ॥२२८॥**

सर्पले जसरी सजिलै काँचुली फेर्दछ त्यसरी नै पापीले पापको प्रचारले सजिलै पापबाट मुक्त हुन्छ ।

**यथा यथा मनस्तस्य दुष्कृतं कर्म गर्हति ।**
**तथा तथा शरीरं तत्तेनाधर्मेण मुच्यते ॥२२९॥**

आफूले गरेको पापकर्म प्रति पापी जति बढी पछुताउँदछ त्यति चाँडै उसले पापको दोषबाट छुटकारा पाउँदछ ।



**कृत्वा पापं हि सन्तप्य तस्मात् पापात्प्रमुच्यते ।**
**नैवं कुर्यां पुनरिति निवृत्त्या पूयते तु सः ॥२३०॥**

पापी पश्चातापले, गरेको नीचकर्मप्रति आफैंलाई धिक्कार्नाले र आयन्दा त्यस्तो पापकर्म नगर्ने प्रण गर्नाले पापको दोषबाट मुक्त हुन्छ ।

**एवं सञ्चिन्त्य मनसा प्रेत्य कर्मफलोदयम् ।**
**मनोवाङ्मूर्त्तिभिर्नित्यं शुभं कर्म समाचरेत् ॥२३१॥**

कर्मको फल दुवै लोकमा अवश्य भोग्नु पर्दछ भन्ने सोची सधैं तन, मन र वचनले शुभकर्म गर्न नै ध्यान दिनु पर्दछ ।

**अज्ञानाद्यदि वा ज्ञानात्कृत्वा कर्म विगर्हितम् ।**
**तस्माद्विमुक्तिमन्विच्छन्द्वितीयं न समाचरेत् ॥२३२॥**

थाहा पाएर वा नपाएर पापकर्म गरी प्रायश्चित गर्ने व्यक्तिले फेरी अर्को पापकर्म नगर्ने वा नगरिने तर्फ सचेत रहनु पर्दछ ।

**यस्मिन्कर्मण्यस्य कृते मनसः स्यादलाघवम् ।**
**तस्मिंस्तावत्तपः कुर्याद्यावतुष्टिकरं भवेत् ॥२३३॥**

पापबाट छुटकारा पाउन कठिन साधनाका उपाय नै अपनाउनु किनकि कष्टले नै सन्तोष र पुनः पाप नगर्ने प्रेरणा प्राप्त हुन्छ ।

**तपोमूलमिदं सर्वं दैवमानुषकं सुखम् ।**
**तपोमध्यं बुधैः प्रोक्तं तपोन्तं वेददर्शिभिः ॥२३४॥**



देवता र मानिसको सबै सुखको शुरु, मध्य र अन्त भनेकै तप हो भनेर वेदविज्ञहरूले बताएका छन् ।

**ब्राह्मणस्य तपो ज्ञानं तपः क्षत्रस्य रक्षणम् ।**
**वैश्यस्य तु तपो वार्ता तपः शूद्रस्य सेवनम् ॥२३५॥**

ब्राह्मणको तप स्वाध्याय, क्षत्रियको तप प्रजापालन एवं रक्षा, वैश्यको तप व्यापार एवं कृषि र शूद्रको तप द्विजको सेवा हो ।

**ऋषयः संयतात्मानः फलमूलानिलाशनाः ।**
**तपसैव प्रपश्यन्ति त्रैलोक्यं सचराचरम् ॥२३६॥**

जितेन्द्रिय भई फलफूल, कन्दमूल र हावा खाई तपस्या गर्ने महात्माहरु तपस्याकै

शक्तिले खुलेको दिव्य आँखाले सम्पूर्ण जगतलाई वास्तविकरुपमा देख्न सक्षम हुन्छन् ।

**औषधान्यगदा विद्या दैवी च विविधा स्थितिः ।**
**तपसैव प्रसिध्यन्ति तपस्तेषां हि साधनम् ॥२३७॥**

औषधीमा रोग नाश गर्ने शक्ति, विद्यामा दिव्य गुण र देवतामा दैवी शक्ति हुनुको कारण तप नै हो ।

**यद्दुस्तरं यद्दुरापं यद्दुर्गं यच्च दुष्करम् ।**
**सर्वन्तत् तपसा साध्यं तपो हि दुरतिक्रमम् ॥२३८॥**

तपले नै तर्न नसक्नेलाई तर्न सक्ने, पाउन नसकिनेलाई सुलभ बनाउने र गर्न नसकिनेलाई सरल बनाउने गर्दछ ।



**महापातकिनश्चैव शेषाश्चाकार्यकारिणः ।**
**तपसैव सुतप्तेन मुच्यन्ते किल्बिषात्ततः ॥२३९॥**

महापापी वा अन्य दुष्कर्म कर्ताहरु पनि तपद्वारा दोषमुक्त हुन्छन् ।

**कीटाश्चाहिपतङ्गाश्च पशवश्च वयांसि च ।**
**स्थावराणि च भूतानि दिवं यान्ति तपोबलात् ॥२४०॥**

कीरा, सर्प, चरा, पशु तथा स्थावर वृक्ष आदि पनि तपले जडताबाट मुक्त भई स्वर्ग पुग्न सक्दछन् ।

**यत्किंचिदेनः कुर्वन्ति मनोवाक्कर्मभिर्जनाः ।**
**तत्सर्वं निर्दहन्त्याशु तपसैव तपोधनाः ॥२४१॥**

तपस्वी मानिसका तन, मन र वचनले गरेका सबै पापहरु अग्निमा डढेर गई निर्मल हुन्छ ।

**तपसैव विशुद्धस्य ब्राह्मणस्य दिवौकसः ।**
**इज्याश्च प्रतिगृह्णन्ति कामान्संवर्धयन्ति च ॥२४२॥**

देवताहरु पनि तप गरेर शुद्ध भएको ब्राह्मणले दिएको होम स्वीकार
गर्दछन् र तिनको चाहना पुरा गर्दछन् ।

**प्रजापतिरिदं शास्त्रं तपसैवासृजत्प्रभुः ।**
**तथैव वेदानृषयस्तपसा प्रतिपेदिरे ॥२४३॥**

प्रजापतिले पनि तपले नै यो शास्त्र बनाए ।
ऋषिहरूले पनि तपबाट नै वेदहरूको ज्ञान पाए ।

**इत्येतत्तपसो देवा महाभाग्यं प्रचक्षते ।**
**सर्वस्यास्य प्रपश्यन्तस्तपसः पुण्यमुद्भम् ॥२४४॥**

तपको विलक्षण शक्ति र त्यसले दिने उत्कृष्ट फललाई देखेर देवताहरु तपको महिमा वर्णन गरेर
अघाउँदैनन् र मनुष्यलाई पनि तप गरेर देवत्व प्राप्त गर्न अनुरोध गर्दछन् ।

**वेदाभ्यासोऽन्वहं शक्त्या महायज्ञक्रियाक्षमा ।**
**नाशयन्त्याशु पापानि महापातकजान्यपि ॥२४५॥**

नित्य यथाशक्ति वेद पढी पञ्च महायज्ञ गर्नाले र सहनशील हुनाले ठूलो पापको सन्ताप पनि
तत्काल नष्ट हुन्छ ।

**यथैधस्तेजसा वह्निः प्राप्तं निर्दहति क्षणात् ।**
**तथा ज्ञानाग्निना पापं सर्वं दहति वेदवित् ॥२४६॥**

अग्निले दाउराको थुप्रो भष्म पारेझैं वेद-ज्ञानरुपी अग्निले सबै पाप तत्काल भस्म पार्दछ ।

**इत्येतदेनसामुक्तं प्रायश्चित्तं यथाविधि ।**
**अत ऊर्ध्वं रहस्यानां प्रायश्चित्तं निबोधत ॥२४७॥**

भृगु भन्नुहुन्छ-यसरी देखिने पापका प्रायश्चित विधि मैले बताएँ ।
अब गुप्त पापका प्रायश्चिका बारेमा सुन्नुहोस् ।

**सव्याहृतिप्रणवकाः प्राणायामास्तु षोडश ।**
**अपि भ्रूणहणं मासात्पुनंत्यहरहः कृताः ॥२४८॥**

भ्रूणहत्या जस्ता गोप्य पाप "ॐ" कार र व्याहृति मन्त्रको जप गर्दै सोह्र
पटक प्राणायाम गर्नाले महिना दिनमै नाश हुन्छ ।



**कौत्सं जप्त्वाप इत्येतद्वासिष्ठं च प्रतीत्यृचम् ।**
**माहित्रं शुद्धवत्त्यश्च सुरापोऽपि विशुध्यति ॥२४९॥**

मदिरा पिएपनि कुत्सवसिष्ठ आदिले बनाएका शिवका स्तुतिपरक मन्त्रहरु जप्नाले दोष मेटिन्छ र व्यक्ति शुद्ध हुन्छ ।
(ऋग्वेद १/ ९७, ७/८०१, ८/९५/७) ।

**सकृज्जप्त्वाऽस्य वामीयं शिवसङ्कल्पमेव च ।**
**अपहृत्य सुवर्णं तु क्षणाद्भवति निर्मलः ॥२५०॥**

सुन चोरेको पापको प्रायश्चितका लागि 'अस्य वामीय' ऋचा जपी अनि
'शिवसङ्कल्प.' (यजुर्वेद) मन्त्र जप गर्नाले शुद्ध हुन्छ ।

**हविष्यन्तियमभ्यस्य न तमं ह इतीति च ।**
**जपित्वा पौरुषं सूक्तं मुच्यते गुरुतल्पगः ॥२५१॥**

गुरुपत्नी गमनको प्रायश्चितका लागि हविष्या..,न तमंहोन., इति ने मनः
तथा सहस्रशीर्षा मन्त्र जप्नू ।
(ऋग्वेद १०।५५, २।२३।५ वा १०।१२६।१।), (१०।११९।१) र १०।९०।१-१६।)

**एनसां स्थूलसूक्ष्माणां चिकीर्षन्नपनोदनम् ।**
**अवेत्य च जपेदब्दं यत्किञ्चेदमितीति च ॥२५२॥**

सानाठूला पापको प्रायश्चितका लागि एक वर्षसम्म निरन्तर “हेव्य वरुण नमोभिः (१।२४।१४)” वा “यत्किञ्चेदं वरुण देव्यै जेन (७।८९।५)” आदि मन्त्र जप्नू ।

**प्रतिगृह्याप्रतिग्राह्यं भुक्त्वा चान्नं विगर्हितम् ।**
**जपंस्तरेत्समन्दीयं पूयते मानवस्त्र्यहात् ॥२५३॥**

अयोग्य व्यक्तिबाट दान लिए वा निन्दित अन्न खाए तीन दिनसम्म “तत्समन्दी धावति (ऋ ९।५८।१४)” प्रभृति मन्त्र जप गर्नाले प्रायश्चित हुन्छ ।

**सोमारौद्रं तु बह्वेना समामभ्यस्य शुध्यति ।**
**स्रवन्त्यामाचरन्स्नानमर्यम्णामिति च तृचम् ॥२५४॥**

धेरै पाप गर्नेले पाप मोचनका लागि “सोमारुद्रा धारये थाः (ऋ.६।७४।१४), “अर्यम्णा-मिति” तथा “स्रवत्यामोचरन्” मन्त्र एक महिनासम्म जप गर्नू ।

**अब्दार्धमिन्द्रमित्येतदेनस्वी सप्तकं जपेत् ।**
**अप्रशस्तं तु कृत्वाऽप्सु मासमासीत भैक्षभुक् ॥२५५॥**

जलमा दुष्कर्म गर्नेले "इन्द्रं मित्रं (ऋ१।१०६।१७)" आदि सात मन्त्र पाँच महिनासम्म जपी भिक्षा मागेको अन्नले जीवन निर्वाह गर्नू ।

**मन्त्रैश्शाकलहोमीयैरब्दं हुत्वा घृतं द्विजः ।**
**सुगुर्वप्यहन्त्येनो जप्त्वा वा नम इत्यृचम् ॥२५६॥**

कात्यायन श्रौतसूत्र, सोमयागनिरुपणम् दशको आठौं कण्डिकामा "शाकलाधानं देवकृतस्येति प्रतिमन्त्रम्" भनिएको पाइन्छ । यसैले यजुर्वेदको आठौं अध्यायको तेऱ्हौं "देवकृतस्यैनसो..... " आदि आठ मन्त्र शाकल होमीय हुन् । यी मन्त्र जप्दै एक वर्ष घिउ होम गर्नाले वा यजुर्वेदकै सोऱ्हौं अध्यायको "नमक्आशवे... " भन्ने तेऱ्हौं मन्त्र वा ऋग्वेदको "नमो मित्रस्य वरुणस्य (१०।३७।१)" भन्ने मन्त्र एक वर्षसम्म जप गर्नाले ठूलाभन्दा ठूला पापबाट पनि मुक्ति पाइन्छ ।

**महापातकसंयुक्तोऽनुचच्छेद्गाः समाहितः ।**
**अभ्यस्याब्धं पावमानीर्भैक्षाहारो विशुध्यति ॥२५७॥**



महापापीहरु (कतै उपपातकी उल्लेख छ) पनि एक वर्षसम्म गाई चराउने, पवमानीय मन्त्र (ऋ.९।१।१ देखि ९।११४।४ सम्म) पाठ गर्ने र भिक्षा मागेर खाने गर्नाले पापबाट मुक्त हुन्छन् ।

**अरण्ये वा त्रिरभ्यस्य प्रयतो वेदसंहिताम् ।**
**मुच्यते पातकैः सर्वैः पराकैः शोधितस्त्रिभिः ॥२५८॥**

वनमा रहेर वेद मन्त्र पढ्दै तीन किसिमका पराक व्रतले भित्रबाहिर शुद्ध भएर प्राण त्याग्नेहरु पापबाट मुक्त हुन्छन् ।

**त्र्यहं तूपवसेद्युक्तस्त्रिरह्नोऽभ्युपयन्नपः ।**
**मुच्यते पातकैः सर्वैस्त्रिर्जपित्वाऽघमर्षणम् ॥२५९॥**

तीन दिन उपवास बसी प्रत्येक दिन तीन पटक स्नान गर्नाले र जलमै उभिएर ऋग्वेदको

अघमर्षण मन्त्र तीन पटक जप गर्ने गर्नाले सबै पापबाट मुक्ति मिल्दछ ।

**यथाश्वमेधः क्रतुराट् सर्वपापोपनोदनः ।**
**तथाऽघमर्षणं सूक्तं सर्वपापोपनोदनम् ॥२६०॥**

अघमर्षण सूक्तले अश्वमेध यज्ञले जस्तै सबै पापबाट छुटाउँछ ।

**हत्वा लोकानपीमांस्त्रीनश्नन्नपि यतस्ततः ।**
**ऋग्वेदं धारयन्विप्रो नैनः प्राप्नोति किञ्चन ॥२६१॥**

तीनै लोकमा हत्या-हिंसा गरी उपद्रव फैलाउने र जे पायो तेही भोजन गर्ने व्यक्तिको पाप पनि ऋग्वेदको पाठबाट नाशिन्छ, केही बाँकी रहँदैन ।

**ऋक्संहितां त्रिरभ्यस्य यजुषां च समाहितः ।**

**साम्नां च सरहस्यानां सर्वपापैः प्रमुच्यते ॥२६२॥**

ऋग्वेद, यजुर्वेद, सामवेदका साथमा उपनिषदहरु समाहित चित्त भएर तीन पटक वा बारम्बार पढिरहनाले सबै पापबाट छुटकारा पाइन्छ ।

**यथा महाह्रदं प्राप्य क्षिप्रं लोष्टं विनश्यति ।**
**तथा दुश्चरितं सर्वं वेदे त्रिवृत्ति मज्जति ॥२६३॥**

जसरी ठूलो नदीमा माटाको ढिस्को चाँडै गल्छ त्यसरी नै वेदको तीन पटकको पाठले पापको थुप्रो गल्दछ ।

**ऋचो यजूंषि चान्यानि सामानि विविधानि च ।**
**एष ज्ञेयस्त्रिवृद्वेदो यो वेदैनं स वेदवित् ॥२६४॥**

तीन वेद् बाहेकका अन्य ग्रन्थको पनि अध्ययन गरी ज्ञान लिनू ।
तीनै वेदका ज्ञाता नै वेदविद् हो ।

**आद्यं यत्त्र्यक्षरं ब्रह्म त्रयी यस्मिन् प्रतिष्ठिताः ।**
**सःगुह्योऽन्यस्त्रिवृद्वेदो यस्तं वेद सःवेदवित्॥२६५॥**

तीनै वेदको शुरुको तीन अक्षरले बनेको 'ओ३म्' मै तीनै वेद समाहित छन् । ॐ तीनै वेदका गोप्य मन्त्र र परमात्मा बोधक हुनाले उसैको प्रतिक र प्रतिनिधि हो । यो तथ्यलाई जान्ने र मनन गर्ने व्यक्तिले वेद र परमात्माको रहस्य मात्र जान्ने होइन कि आफै ब्रह्मरुप हुन्छ ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां एकादशोऽध्यायः ॥८॥**

**मनुस्मृति, एघारौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

**शुरुदेखिको श्लोकको संख्याः-२,२९३+२६५=२,५५८**

# ॥ अथ द्वादशोऽध्यायः ॥

## (कर्मयोग)

**चातुवर्णस्य कृत्स्नोऽयमुक्तो धर्मस्त्वयानघ ।**
**कर्मणां फलनिर्वृत्तिं शंस नस्तत्त्वतः पराम् ॥१॥**

ऋषिहरू भन्नु हुन्छ-हजुरले चारै वर्णका धर्म बताएर हामीलाई कृतार्थ गर्नु भयो । अब हामी कर्मका शुभ अशुभ फल तथा पापबाट छुटकारा पाउने उपाय पनि हजुरका मुखबाट सुन्न चाहन्छौं ।

**स तानुवाच धर्मात्मा महर्षीन्मानवो भृगुः ।**
**अस्य सर्वस्य श्रृणुत कर्मयोगस्य निर्णयम् ॥२॥**

ऋषिहरूका कुरा सुनेपछि मनु पुत्र भृगु भन्नुहुन्छ-ल अब कर्मयोगका बारेमा पनि सबै कुरा बताउँदछु ध्यान दिएर सुन्नुहोस् ।

**शुभाशुभफलं कर्म मनोवाग्देहसम्भवम् ।**
**कर्मजा गतयो नृणामुत्तमाधममध्यमाः ॥३॥**

मानिसले आफूले मन, बचन र कर्मले गरेका कार्यको आधारमा पाप र धर्मको फल भोगी सकेपछि उत्तम, मध्यम र नीच योनिमा जन्म लिन्छ ।

**तस्येह त्रिविधस्यापि त्र्यधिष्ठानस्य देहिनः ।**
**दशलक्षणयुक्तस्य मनः विद्यात्प्रवर्तकम् ॥४॥**

मन, वचन र शरीरले गर्ने कर्मका आधारमा उत्तम, मध्यम र अधम योनी प्राप्त हुन्छ । दश वटै इन्द्रियलाई मनले नियन्त्रण गर्दछ ।

**परद्रव्येष्वभिध्यानं मनसाऽनिष्टचिन्तनम् ।**
**वितथाभिनिवेशश्च त्रिविधं कर्म मानसम् ॥५॥**

अर्काको धन खाने तथा अर्काको अहीत गर्ने इच्छा गर्नु र परलोकमा अविश्वास गर्नु यी तीन थरी कर्महरु मनले सोचिने पापकर्म हुन् ।

**पारुष्यमनृतं चैव पैशुन्यं चापि सर्वशः ।**
**असम्बद्धप्रलापश्च वाङ्मयं स्याच्चतुर्विधम् ॥६॥**

कठोर वचन बोल्नु वा गाली गर्नु, भ्रूटो बोल्नु, निन्दा गर्नु वा कुरा लगाउनु र बकम्फुसे गफ गर्नु-यी चार वाणीद्वारा गरिने पाप हुन् ।

**अदत्तानामुपादानं हिंसा चैवाविधानतः ।**
**परदारोपसेवा च शारीरं त्रिविधं स्मृतम् ॥७॥**



न्यायले अर्काको धन लिनु, शास्त्रीय बाहेकका विधिले जीवको प्राण लिनु र परस्त्रीहरण वा गमन गर्नु-यी शरीरमार्फत गरिने पाप हुन् ।

**मानसं मनसैवायमुपभुङ्क्ते शुभाशुभम् ।**
**वाचाऽवाचा कृतं कर्म कायेनैव च कायिकम् ॥८॥**

मानिसको मन, वचन र शरीरमध्ये जुन साधनबाट शुभ-अशुभ कर्म हुन गएको छ त्यसै साधनले त्यसको फल भोग्नु पर्दछ ।
(उदाहरणका लागि शरीरबाट भएको पापका कारण कानो, बहिरो आदि हुनुपर्दछ, बचनबाट पाप भए लाटो, लठेब्रो आदि हुनुपर्दछ र मनले गरेको भए दुर्बल, तेजहीन आदि हुनु पर्दछ ) ।

**शरीरजैर्कर्मदोषैर्याति स्थावरतां नरः ।**
**वाचिकैः पक्षिमृगतां मानसैरन्त्यजातिताम् ॥९॥**

शरीरले पाप गरे वृक्ष आदि जडको, वाणीले गरे पशुपंक्षीको र मनले गरे नीच योनिमा जन्मनु पर्दछ ।

**वाग्दण्डोऽथ मनोदण्ड कायादण्डस्तथैव च ।**
**यस्यैते निहिता बुद्धौ त्रिदण्डीति स उच्यते ॥१०॥**

बुद्धि पुऱ्याएर मन, वचन र शरीरबाट काम लिने वा यी तीनलाई नियन्त्रण गर्नेलाई त्रिदण्डी (वाग्दण्डी, मनोदण्डी तथा कायादण्डी) भनिन्छ ।

**त्रिदण्डमेतन्निक्षिप्य सर्वभूतेषु मानवः ।**
**कामक्रोधौ तु संयम्य ततः सिद्धिं निगच्छति ॥११॥**

मन, वचन र शरीरलाई नियन्त्रण गर्ने वा कामक्रोध प्रति संयम अपनाउने व्यक्तिलाई सिद्धि प्राप्त हुन्छ ।



**योऽस्यात्मानः कारयिता तं क्षेत्रज्ञं प्रचक्षते ।**
**यःकरोति तु कर्माणि स भूतात्मोच्यते बुधैः ॥१२॥**

कर्म गर्न प्रवृत्त गराउनेलाई 'क्षेत्रज्ञ' र कर्म गर्नमा प्रवृत्त हुनेलाई 'भूतात्मा' भन्दछन् ।

**जीव संज्ञोऽन्तरात्मान्यः सहजः सर्वदेहिनाम् ।**
**येन वेदयते सर्वं सुखं दुःखं च च जन्मसु ॥१३॥**

सबैप्राणीको अन्तस्करण तथा अन्तरात्माको रुपमा रहने तथा सबै जन्ममा गरिएको पापपुण्यको शुभ-अशुभ फल र सुख-दुःख भोग्नेलाई 'जीव' भनिन्छ ।

**तावुभौ भूतसम्पृक्तौ महान्क्षेत्रज्ञ एव च ।**
**उच्चावचेषु भूतेषु स्थितं तं व्याप्य तिष्ठतः ॥१४॥**

पृथ्वी, वायु आदि पाँच महाभूतमा समाविष्ट भएका महान र क्षेत्रज्ञ पनि सबै सूक्ष्म-स्थूल भूतमा रहेको परमात्माकै आश्रयमा रहन्छन् ।

**उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृतः ।**
**यो लोकत्रयमाविश्य विभर्त्यव्यय ईश्वरः ॥१५॥**

परमात्मा भनिने उत्तम पुरुष क्षेत्रज्ञ र भूतात्मा भन्दा बेग्लै हो । परमात्मा नै तीन लोकमा प्रविष्ट, सर्व समर्थ, अविनाशी र सारा सृष्टीलाई धारण गर्ने हुन् ।

**असंख्याः मूर्त्तयस्तस्य निष्पतन्ति शरीरतः ।**
**उच्चावचानि भूतानि सततं चेष्टयन्ति याः ॥१६॥**

पञ्चमहाभूत परमात्माको शरीररुप हो । यसै शरीररुपी पञ्चमहाभूतको समूहबाट असंख्य शरीर प्रकट हुन्छन् र उत्कृष्ट तथा निकृष्ट योनिमा जन्म लिने प्राणीहरुलाई निरन्तर कार्यशील बनाई राख्दछन् ।



**पञ्चभ्य एव भूतेभ्यः प्रेत्य दुष्किृतिनां नृणाम् ।**
**शरीरं यातनार्थीयमन्यदुत्पद्यते ध्रुवम् ॥१७॥**

पापी मनुष्य पञ्चमहाभूतका पञ्चतन्मात्राको दुरुपयोगबाट हुने पापले अनेक दुःख सहँदै विभिन्न योनिमा पटकपटक जन्मन्छ ।(पञ्चमहाभूत-पृथ्वी, जल, वायु, अग्नि र आकाश । पञ्चतन्मात्रा-गन्ध, रस, स्पर्श, रुप र शब्द) ।

**तेनानूभूय ता यामीः शरीरेणेह यातनाः ।**
**तास्वेव भूतमात्रासु प्रलीयन्ते विभागशः ॥१८॥**

पापात्मा जीव नयाँनयाँ योनिमा उत्पन्न भएर आफूले गरेको पापको दण्डका लागि यमलोकको कठीन यातना भोग गर्दछ र फेरी पञ्चमहाभूतमा बिलीन भएर आफ्नो अस्तित्व नै गुमाउँदछ ।

सोऽनूभूयासुखादर्कान्दोषान्विषयसङ्गजान् ।
व्यपेतकल्मषाऽभ्येति तावेवोभौ महौजसौ ॥१९॥

पापकर्ममा लिप्त जीव निषिद्ध विषगभोगमा रमाउँदछ र त्यही कारणले दुःख भोग गर्दछ । दण्ड भोगिसकेपछि पापबाट मुक्त भएर 'महान' र 'क्षेत्रज्ञ'मा प्राप्त हुन्छ ।

तौ धर्मं पश्यतस्तस्य पापं चातन्द्रितौ सह ।
याभ्यां प्राप्नोति सम्पृक्तः प्रेत्येह च सुखासुखम् ॥२०॥

यि 'क्षेत्रज्ञ' र 'महान' एक साथ सतर्कतापूर्वक रहेर साक्षीका रुपमा जीवात्माले गरिरहेको त्यो शुभ-अशुभ कर्मलाई नियाल्दछन्, जुन कर्मले जीवात्माले यस लोकमा तथा परलोकमा सुख अथवा दुःख भोग गर्दछ ।

यथाचरति धर्मं स प्रायशोऽधर्ममल्पशः ।
तैरेव चावृतो भूतैः स्वर्गे सुखमुपाश्नुते ॥२१॥



जीवले पापभन्दा धर्म धेरै ग्रहण गरे पाप कम हुन्छ र पञ्चमहाभूतले घेरिएको त्यो जीवले स्वर्गको सुख भोगगर्न थाल्दछ ।

यदि तु प्रायशोऽधर्मं सेवते धर्ममल्पशः ।
तैर्भूतैः सः परित्यक्तो यामीः प्राप्नोति यातनाः ॥२२॥

अधर्म बढी भएमा धर्मको पल्ला हलुका हुन गई पञ्चमहाभूतले उसलाई परित्याग गर्दछन् र यमलोकको कष्टकारक यातना भोग्न विवश हुन्छ ।

यामीस्ताः यातनाः प्राप्य स जीवे वीतकल्मषः ।
तान्येव पञ्चभूतानि पुनरप्येति भागशः ॥२३॥

यम-यातना भोगिसकेपछि निष्पाप बनेको जीवले पञ्चमहाभूतलाई पुनः प्राप्त गर्दछ ।

**एता दृष्ट्वाऽस्य जीवस्य गतिः स्वेनैव चेतसा ।**
**धर्मतोऽधर्मतश्चैव धर्मे दध्यात्सदा मनः ॥२४॥**

यसबाट प्रमाणित हुन्छ कि धर्म गर्ने जीवको सद्गति र अधर्म गर्नेको दुर्गति हुन्छ । त्यसैले जीवले सधैं शुभकर्म गर्नमा नै आफू तत्पर रहनु पर्दछ ।

**सत्त्वं रजस्तमश्चैव त्रीन्विद्यादात्मनो गुणान् ।**
**यैर्व्याप्येमान्स्थितो भावान्महान्सर्वानशेषतः ॥२५॥**

जीवात्माका सत्व, रज र तम गरी तीन गुण हुन्छन् । यी गुणले व्याप्त भएर सारा जगत सबै भावको समग्ररुपमा ग्रहण गर्दछ ।

**यो यदैषां गुणो देहे साकल्येनातिरिच्यते ।**
**तं तदा तद्गुणप्रायं तं करोति शरीरिणम् ॥२६॥**



जसको शरीरमा जुन गुण बढी हुन्छ त्यसलाई त्यही गुण विशेषको लक्षण भएको मानिस वा जीव मानिन्छ ।

**सत्त्वं ज्ञानं तमोऽज्ञानं रागद्वेषौ रजः स्मृतम् ।**
**एतद्व्याप्तमिदेतेषां सर्वभूताश्रितं वपुः ॥२७॥**

आत्मा-परमात्माको यथार्थ ज्ञान हुनु सत्व, नहुनु तम तथा राग र द्वेष हुनु रजोगुण हो । सबै प्राणीमा यिनै गुण व्याप्त हुन्छ र जसमा जुन गुण बढी छ त्यसलाई त्यही गुणको मानिन्छ ।

**तत्र यत्प्रीतिसंयुक्तं किञ्चिदात्मनि लक्षयेत् ।**
**प्रशान्तमिव शुद्धाभं सत्त्वं तदुपधारयेत् ॥२८॥**

तीन मध्ये जुन गुण अपनाउँदा मनमा प्रसन्नता र शान्ति हुन्छ, शुद्ध प्रकाशको झझल्को मिल्दछ तथा अपनाउनका लागि मनमा लालसा जाग्दछ त्यसलाई नै सत्वगुण भनी जान्नू ।

**यत्तु दुःखसमायुक्तमप्रीतिकरमात्मनः ।**
**तद्रजोऽप्रतितं विद्यात्सततं हर्तृ देहिनाम् ॥२९॥**

जुन गुणले दुःखको अनुभूति दिन्छ, अपनाउनाले आत्मालाई अप्रिय लाग्दछ तथा मन र इन्द्रियलाई परमात्माबाट हटाएर विषयमा भुलाउँदछ त्यसलाई रजोगुण भनी जान्नू ।

**यत्तु स्यान्मोहसंयुक्तमव्यक्तं विषयात्मकम् ।**
**अपैतर्क्यमविज्ञेयं तमस्तदुपधारयेत् ॥३०॥**

मोहले युक्त, अप्रकट, विषयप्रति उन्मुख गराउने र तर्क बुद्धिलाई अस्वीकार गर्ने गुण तमोगुण हो ।

**त्रयाणामपि चैतेषां गुणानां यः फलोदयः ।**
**अग्र्यो मध्यो जघन्यश्च तं प्रवक्ष्याम्यशेषतः ॥३१॥**



भृगु भन्नुहुन्छ- अब म यि तीन गुण (सत्व, रज र तम) का क्रमशः उत्तम, मध्यम र अधम फलका बारेमा सबै कुरा बताउनेछु ।

**वेदाभ्यासस्तपो ज्ञानं शौचमिन्द्रियनिग्रहः ।**
**धर्मक्रियाऽत्मचिन्ता च सात्त्विकं गुणलक्षणम् ॥३२॥**

वेदको अभ्यास, तप, ज्ञान, पवित्रता, अधिनस्त-इन्द्रिय, धार्मिक आचरण र शरीर हुन्छ आत्मा नाश हुँदैन भन्ने जानकारी सत्व गुणका लक्षण हुन् ।

**आरम्भरुचिताऽधैर्यमसत्कार्यपरिग्रहः ।**
**विषयोपसेवा चाजस्रं राजसं गुणलक्षणम् ॥३३॥**

नित्य नयाँ काम शुरु गर्ने रुचि, फल प्राप्तीमा शीघ्रता र अधैर्यता, असत् कार्यमा बानी तथा विषयभोगमा आसक्ति रजोगुणका लक्षण हुन् ।

**लोभः स्वप्नोऽधृतिः क्रौर्यं नास्तिक्यं भिन्नवृत्तिता ।**
**याचिष्णुता प्रमादश्च तामसं गुणलक्षणम् ॥३४॥**

लोभ, धेरै निन्द्रा, उत्ताउलोपन, दयामायाको अभाव, आत्मा-परमात्माको अस्तित्वमा अविश्वास, शास्त्रको अवज्ञा, दुराचार, मगन्ते स्वभाव तथा प्रमाद र अल्छीपन तमोगुणका लक्षण हुन् ।

**त्रयाणामपि चैतेषां गुणानां त्रिषु तिष्ठताम् ।**
**इदं सामासिकं ज्ञेयं क्रमशो गुणलक्षणम् ॥३५॥**

यि तीन (सत्व, रज र तम) गुण र यी अन्तर्गतका धर्मका लक्षण संक्षेपमा क्रमशः यस्ता छन्:- ।

**यत्कर्म कृत्वा कुर्वंश्च करिष्यंश्चैव लज्जति ।**
**तज्ज्ञेयं विदुषा सर्वं तामसं गुणलक्षणम् ॥३६॥**

जुन कर्म गर्दा, सोच्दा वा गरि सकेपछि लाज हुन्छ वा गर्दा लुकीछिपी गर्नु पर्दछ त्यो कर्म विद्वानको विचारमा तमोगुणी कर्म हो ।



**येनास्मिन्कर्मणा लोके ख्यातिमिच्छति पुष्कलाम् ।**
**न च शोचत्यसम्पत्तौ तद्विज्ञेयं तु राजसम् ॥३७॥**

जुन कर्म गर्नाले संसारमा यश र कीर्ति पाइन्छ र नगर्नाले पछुतो वा शोक हुन्छ त्यस्तो कर्मलाई रजोगुणी कर्म भनिन्छ ।

**यत्सर्वेणेच्छति ज्ञातुं यन्न लज्जति चाचरन् ।**
**येन तुष्यति चात्माऽस्य तत्सत्त्वगुणलक्षणम् ॥३८॥**

जुन कर्म गर्दाखेरी सबैलाई बताएर गर्न मन लाग्छ, लाज र आत्मग्लानीको सट्टा गर्व र गौरव महशुस हुन्छ, आत्मालाई अचम्मको आनन्द र सन्तोष मिल्दछ त्यो सत्वगुणी कर्म हो ।

**तमसो लक्षणं कामो रजसस्त्वर्थ उच्यते ।**
**सत्त्वस्य लक्षणं धर्मः श्रैष्ठ्यमेषां यथोत्तरम् ॥३९॥**

तमोगुणको मुख्य लक्षण कामुकता, रजोगुणको मुख्य लक्षण धनमा आशक्ति हुनु र सत्वगुणको मुख्य लक्षण धर्म हो । यी गुणहरु क्रमशः श्रेष्ठ हुन्छन् ।

**येन यांस्तु गुणेनैषां संसारान्प्रतिपद्यते ।**
**तान्समासेन वक्ष्यामि सर्वस्यास्य यथाक्रमम् ॥४०॥**

भृगु भन्नुहुन्छ-यी तीन गुण अपनाउँदा पाइने फलका बारेमा अर्थात् कर्मगतिका बारेमा संक्षेपमा क्रमैले बताउँदछु ।

**देवत्वं सात्त्विका यान्ति मनुष्यत्वं च राजसाः ।**
**तिर्यक्त्वं तामसाः नित्यमित्येषा त्रिविधा गतिः ॥४१॥**



सत्वगुण अपनाउनेले देवयोनि, रजोगुण अपनाउनेले मनुष्ययोनि र तमोगुण अपनाउनेले पशुपंक्षीयोनि प्राप्त गर्दछ । यसरी तीन गन्तव्य अनुसार जीवले तीन थरी गुण अपनाउँदछ ।

**त्रिविधा त्रिविधैषा तु विज्ञेया गौणिकी गतिः ।**
**अधमा मध्यमाग्र्या च कर्मविद्या विशेषतः ॥४२॥**

जीवले गुणअनुसार प्राप्त गर्ने उपरोक्त तीन योनि पनि कर्मका आधारमा उत्तम, मध्यम र अधम गरी तीन किसिमका हुन्छन् ।

**स्थावराः कृमिकीटाश्च मत्स्याः सर्पाः सकच्छपाः ।**
**पशवश्च मृगाश्चैव जघन्या तामसी गतिः ॥४३॥**

वृक्ष-वनस्पति आदि जड योनि तथा कीराफटयाङ्ग्रा, माछा, सर्प, कछुवा र शिकार गरेर मारिने मृगजस्ता पशुयोनि तमोगुणको प्रभावबाट प्राप्त हुने अधम योनि हुन् ।

**हस्तिनश्च तुरङ्गाश्च शूद्रा म्लेच्छाश्च गर्हिताः ।**
**सिंहा व्याघ्रा वराहाश्च मध्यमा तामसी गतिः ॥४४॥**

हात्ती, घोडा, शूद्र, म्लेच्छ, सिंह, बाघ, बँदेल आदि योनि तमोगुणको प्रभावबाट प्राप्त हुने मध्यम योनि हुन् ।

**चारणाश्च सुपर्णाश्च पुरुषाश्चैव दाम्भिकाः ।**
**रक्षांसि च पिशाचाश्च तामसीषूत्तमा गतिः ॥४५॥**

आश्रयदाताको स्तुति गर्ने भाट जाति, सुँगा-गरुड-कोकिल आदि चरा, घमण्डी पुरुष, हिंस्रक पुरुष तथा दुराचारी पुरुष आदिको योनि तमोगुणबाट प्राप्त हुने उत्तम योनि हो ।

**झल्लाः मल्लाः नटाश्चैव पुरुषाः शस्त्रवृत्तयः ।**
**द्यूतपानप्रसक्ताश्च जघन्या राजसी गतिः ॥४६॥**



झल्ल, मल्ल, नट, शस्त्रोपजीवि, जुवाडे तथा जँड्याहा रजोगुणबाट प्राप्त हुने अधम योनि हुन् ।

**राजानः क्षत्रियाश्चैव राज्ञां चैव पुरोहिताः ।**
**वादयुद्धप्रधानाश्च मध्यमा राजसी गतिः ॥४७॥**

राजा, क्षत्रिय (सैनिक), राज-पुरोहित, तर्क गर्नमा कुशल पण्डित तथा युद्धप्रिय व्यक्ति रजोगुणबाट प्राप्त हुने मध्यम योनि हुन् ।

**गन्धर्वाः गुह्यका यक्षाः विबुधानुचराश्च ये ।**
**तथैवाप्सरसः सर्वाः राजसीषूत्तमा गतिः ॥४८॥**

गन्धर्व, गुह्यक (किन्नर), यक्ष, देवताका द्वारपाल तथा सबै अप्सराको योनि रजोगुणबाट प्राप्त हुने उत्तम योनि हुन् ।

**तापसा यतयो विप्रा ये च वैमानिका गणाः ।**
**नक्षत्राणि च दैत्याश्च प्रथमा सात्त्विकी गतिः ॥४९॥**

तपस्वी, संन्यासी, ब्राह्मण, विमानचारी देवगण, नक्षात्र तथा सबै
दैत्य योनि सत्वगुणबाट प्राप्त हुने अधम योनि हुन् ।

**यज्वान ऋषयो देवा वेदो ज्योतींषी वत्सराः ।**
**पितरश्चैव साध्याश्च द्वितीया सात्त्विकी गतिः ॥५०॥**

यज्ञ र जपतप गर्ने ऋषि, देवता, वेद, नक्षत्र, दिन, पितृ तथा साध्य देवताको योनि सत्वगुणबाट प्राप्त हुने मध्यम योनि हुन् ।

**ब्रह्मा विश्वसृजो धर्मो महानव्यक्तमेव च ।**
**उत्तमां सात्त्विकीमेतां गतिमाहुर्मनीषिणः ॥५१॥**



ब्रह्मा, सृष्टिको आरम्भको ब्रह्माण्ड, धर्म, महतत्व, तथा प्रकृतिको योनि सत्वगुणबाट प्राप्त हुने उत्तम योनि हुन् भनी बताइएको छ ।

**एष सर्वः समुद्दिष्टस्त्रिःप्रकारस्य कर्मणः ।**
**त्रिविधस्त्रिविधः कृत्स्नः संसारः सार्वभौतिकः ॥५२॥**

तीन गुण र त्यस अनुसारका कर्मका आधारमा हुने संसारका सबै प्राणीको स्थितिको सृष्टिलाई 'त्रिविद सृष्टि' भनिएको छ ।

**इन्द्रियाणां प्रसङ्गेन धर्मस्यासेवनेन च ।**
**पापान्संयान्ति संसारानविद्वांसो नराधमाः ॥५३॥**

इन्द्रियका वशमा भएपछि धर्मको उपेक्षा हुन थाल्दछ र प्राणीहरु अनेक प्रकारका निम्न-योनिमा जन्मलिई दुःखकष्ट भोगिरहने गर्दछन् ।

**यां यां योनिं तु जीवोऽयं येन येनेह कर्मणा ।**
**क्रमशो याति लोकेऽस्मिंस्तत्तत्सर्वं निबोधत ॥५४॥**

भृगु भन्नुहुन्छ-कुन कुन कर्म गर्नाले कुन कुन योनिमा जीव जन्म लिन पुग्दछ, अब म यसका बारेमा सबै कुरा बताउँदछु ।

**बहून्वर्षगणान्घोरान्नरकान्प्राप्य तत्क्षयात् ।**
**संसारान्प्रतिपद्यन्ते महापातकिनस्त्विमान् ॥५५॥**

महापापीहरु आफूले गरेको दुष्ट कर्मले गर्दा कैयौं वर्षसम्म नरकमा दुःख भोगी पाप कट्टा भएपछि विभिन्न योनिमा जन्म लिन्छन् ।

**श्वसूकरखरोष्ट्राणां गोजाविमृगपक्षिणाम् ।**
**चण्डालपुक्कसानां च ब्रह्महा योनिमृच्छति ॥५६॥**



ब्रह्महत्या गर्ने मानिस कुकुर, गधा, साँढे, सुँगुर, ऊँट, बोको, भेडो, मृग, चरा, चाण्डाल वा पुक्कस भई जन्मन पुग्दछ ।

**कृमिकीटपतङ्गानां विड्भुजां चैव पक्षिणाम् ।**
**हिंस्राणां चैव सत्त्वानां सुरापी ब्राह्मणो व्रजेत् ॥५७॥**

मदिरा पिउने ब्राह्मणले कीराफटयाङ्ग्रा, पुतली, विष्ठा खाने काग आदि चरा वा सिंह-बाघ आदि हिंसक जनावर भई जन्मनु पर्दछ ।

**लूताहिसरटानां च तिरश्चां चाम्बुचारिणाम् ।**
**हिंस्राणां च पिशाचानां स्तेनो विप्रः सहस्रशः ॥५८॥**

चोरी गर्ने ब्राह्मण हजारौं पटक माकुरा, कमिला, सर्प, छेपारो, जलचर, लामखुट्टे तथा जीव हिंसा गर्ने पिशाच भई जन्मनु पर्दछ ।

**तृणगुल्मलतानां च क्रव्यादां दंष्ट्रिणामपि ।**
**क्रूरकर्मकृतां चैव शतशो गुरुतल्पगः ॥५९॥**

गुरुपत्नी गामी मांसाहारी हिँस्रक पशु, क्रूर पिशाच वा राक्षस एवं घाँस, बुट्यान, लहरा भई सैयौँपल्ट जन्म लिन्छ ।

**हिंस्रा भवन्ति क्रव्यादाः कृमयोऽमेध्यभक्षिणः ।**
**परस्परादिनः स्तेनाः प्रेताऽन्त्यस्त्रीनिषेविणः ॥६०॥**

हिँसा गर्ने मानिस मांसाहारी पशु भएर, अभक्ष्य खाने मानिस कीराफट्याङ्ग्रा भएर, चोर आपसमा खाइने माछादि भएर र निम्न जातका स्त्रीभोगी चाण्डाल भएर जन्म लिन्छन् ।

**संयोगं पतितैर्गत्वा परस्यैव च योषितम् ।**
**अपहृत्य च विप्रस्वं भवति ब्रह्मराक्षसः ॥६१॥**



पतितको सङ्गत गर्नेले, परस्त्री सम्भोग गर्नेले र ब्रह्मस्व चोर्नेले ब्रह्मराक्षस भई जन्म लिनु पर्दछ ।

**मणिमुक्ताप्रवालानि हृत्वा लोभेन मानवः ।**
**विविधानि च रत्नानि जायते होमकर्तृषु ॥६२॥**

लोभले मणि, मुँगा, मोती, हिरा आदि मूल्यवान रत्न चोर्ने व्यक्ति बलिको पशु भई जन्मन्छ ।

**धान्यं हृत्वा भवत्याखुः कांस्यं हंसो जलं प्लवः ।**
**मधु दंशः पयः काको रसं श्वा नकुलो घृतम् ॥६३॥**

धानचोर मुसा, काँसचोर हाँस, जलचोर भ्यागुतो, महचोर भिँगा, दूधचोर काग, घिउचोर कुकुर र रसचोर न्याहुरीमुसो हुन्छन् ।

**मांसं गृधो वसां मद्गुस्तैलं तैलपकः खगः ।**
**चीरीवाकस्तु लवणं बलाका शकुनिर्दधिः ॥६४॥**

मासु चोरे गिद्ध, बोसो चोरे जलकाग, तेल चोरे तेल पिउने चरा, नुन चोरे चीरीवाक (तिखो स्वरले कराउने कीरा, झ्याउँकिरी) र दही चोरे पोथी बकुल्लो भएर जन्मनु पर्दछ ।

**कौशेयं तित्तिरिर्हृत्वा क्षौमं हृत्वा तु दर्दुरः ।**
**कार्पासतान्तवं क्रौञ्चो गोधा गां वाग्गुदो गुडम् ॥६५॥**

नक्कली रेशमका कपडा चोरे तित्रो र सक्कली रेशमका कपडा चोरे भ्यागुतो, कपासका कपडा चोरे सारस, गाई चोरे गोही र सखर चोरे वाग्गुद (?) नामक चरा हुन्छ ।

**छुच्छुन्दरिः शुभान्गन्धान्पत्रशाकं तु बर्हिणः ।**
**श्वावित्कृतान्नं विविधमकृतान्नं तु शल्यकः ॥६६॥**



अत्तरादि सुगन्ध चोरे छुचुन्द्रो, सागपात चोरे मुजुर, पाकेको अन्न चोरे स्याल र काँचो अन्न चोरे शरीरभरी काँडा हुने चरा हुन्छ ।

**बको भवति हृत्वाऽग्निं गृहकारी ह्युपस्करम् ।**
**रक्तानि हृत्वा वासांसि जायते जीवजीवकः ॥६७॥**

आगो चोरे बकुल्ला, कुट्ने पिँध्ने साधन चोरे माकुरो र रङ्गिन कपडा चोरे चकोर भई जन्मनु पर्दछ ।

**वृको मृगेभं व्याघ्रोऽश्वं फलमूलं तु मर्कटः ।**
**स्त्रीमृक्षः स्तोकको वारि यानान्युष्ट्रः पशूनजः ॥६८॥**

मृगहात्ती चोर ब्वाँसो, घोडा चोर बाघ, फलफूल एवं कन्दमूल चोर बाँदर, स्त्री चोर भालु, पानी चोर चातक, सवारी चोर ऊँट र पशु चोर बोको हुन्छ ।

यद्वा तद्वा परद्रव्यमपहृत्य बलान्नरः ।
अवश्यं याति तिर्यक्त्वं जग्ध्वा चैवाऽहुतं हविः ॥६९॥

अरुलाई काम नलाग्ने वस्तु चोरे र होम नगरी अन्न खानेले चरा भई जन्मनु पर्दछ ।

स्त्रियोऽप्येतेन कल्पेन हृत्वा दोषमवाप्नुयुः ।
एतेषामेव जन्तूनां भार्यात्वमुपयान्ति ताः ॥७०॥

पुरुषले जस्तै स्त्रीहरुले पनि पापकर्मका कारण विभिन्न जातका
स्त्री योनिमा जन्म लिई दण्ड भोग्नु पर्दछ ।

स्वेभ्यः स्वेभ्यस्तु कर्मेभ्यश्च्युताः वर्णाः ह्यनापदि ।
पापान्संसृत्य संसारान्प्रेष्यतां यान्ति दस्युषु ॥७१॥



चारै वर्णले निर्धारित कर्म नगरे नीच योनिमा जन्म लिई शत्रुको सेवा गर्न पनि बाध्य हुन्छन् ।
आपदकालमा कर्म परित्याग गर्दा कुनै दोष लाग्दैन ।

वान्ताश्युल्कामुखः प्रेतो विप्रः धर्मास्वकाच्च्युतः ।
अमेध्यकुणपाशी च क्षत्रियः कूटपूतनः ॥७२॥

सामान्य अवस्थामा कर्म-कर्तव्यको उपेक्षा गर्ने चार वर्णका मानिस क्रमशः वमन खाने मुखबाट आगोको ज्वाला निकाल्ने प्राणी, लाश र दिसा खाने गनाउने नाक भएका प्राणी,... ।

मैत्राक्षज्योतिकः प्रेतो वैश्यो भवति पूयभुक् ।
चैलाशकश्च भवति शूद्रो धर्मात्स्वकाच्च्युतः ॥७३॥

पीप खाने मैत्राक्ष ज्योतिक नामको प्रेत तथा प्राणी एवं लुगामा पर्ने जुम्रा खाने चैलाशक नामक प्रेत भई जन्मन पुग्दछन् ।

**यथा यथा निषेवन्ते विषयान्विषयात्मकाः ।**
**तथा तथा कुशलता तेषां तेषूपजायते ॥७४॥**
**तेऽभ्यासात्कर्मणां तेषां पापानामल्पबुद्धयः ।**
**सम्प्राप्नुवन्ति दुःखानि तासु तास्विह योनिषु ॥७५॥**

विषयमा सुखको अनुभव गर्नेहरु यसैमा झनझन आसक्त हुँदै जान्छन् र यसैलाई साँचो सुख र जीवनको सफलता मानेर संलग्न हुँदै जान्छन् । विषय भोग यिनको सरल जीवनशैली बन्दछ र यसैका कारण यी मृत्युपछि विभिन्न योनिमा जन्म लिन र नाना थरीका दुःख भोग गर्न विवश हुन्छन् ।

**तामिस्रादिषु चोग्रेषु नरकेषु विवर्तनम् ।**
**असिपत्रवनादीनि बन्धनच्छेदनानि च ॥७६॥**

पापी दुष्टहरुले 'तामिस्र", 'अन्ध-तामिस्र' वा 'असिपत्रवन' नामका नरकमा परेर विभिन्न यातना सहनु पर्दछ ।



**विविधाश्चैव सम्पीडाः काकोलूकश्च भक्षणम् ।**
**करम्भबालुकातापान् कुम्भीपाकांश्च दारुणान् ॥७७॥**

'कुम्भीपाक' नरकमा दुष्टहरुले कौवा, उल्लु आदिको ठुँगाई र तातो बालुवामा भुटिएर दुःख सहनु पर्दछ ।

**सम्भवांश्च वियोनिषु दुःखप्रायासु नित्यशः ।**
**शीतातपाभिघातांश्च विविधानि भयानि च ॥७८॥**

पापी पिडादायी निकृष्ट योनिमा जन्म लिँदै दुःख भोग गर्दछ र जाडो, गर्मी र वर्षा ऋतुका दुःख खप्दै विभिन्न भयबाट घेरिने गर्दछ ।

**असकृद्गर्भवासेषु वासं जन्म च दारुणाम् ।**
**बन्धनानि च कष्टानि परप्रेष्यत्वमेव च ॥७९॥**

पापीहरु जन्मने-मर्ने गरिरहने हुनाले पटकपटक गर्भवास, मृत्युको पिडा, जन्मदाको दुःख, अपमान एवं जेलनेल सम्मका कष्ट सहनु पर्दछ ।

**बन्धु प्रियवियोगांश्च संवासं चैव दुर्जनैः ।**
**द्रव्यार्जनं च नाशं च मित्रामित्रस्य चार्जनम् ॥८०॥**

पापीले आफन्तको वियोग, दुर्जन सङ्गत र सहवास, जीवन धान्न कठिनाई, मित्राभाव र शत्रु वृद्धि आदि दुःख पनि भेल्नु पर्दछ ।

**जरां चैवाप्रतिकारां व्याधिभिश्चोपपीडनम् ।**
**क्लेशांश्च विविधांस्तांस्तान्मृत्युमेव च दुर्जयम् ॥८१॥**



पापीलाई बूढो हुँदा पनि विभिन्न खालका दीर्घ रोगले सताउँदछ । अन्य अनेक थरी कठीन दुःखकष्ट सहँदै जानु पर्दछ र प्राण जाने बेलामा पनि अत्यन्त कष्ट हुन्छ ।

**यादृशेन तु भावेन यद्यत्कर्म निषेवते ।**
**तादृशेन शरीरेण तत्तत्फलमुपाश्नुते ॥८२॥**

सत्व, रज र तममध्ये जुन जुन गुणका व्यक्तिले जे जे कर्म गर्दछन् त्यसै अनुसार तिनको जीवनमा सुखदुःख र मरेपछि राम्रा-नराम्रा योनिमा जन्म हुने गर्दछ ।

**एष सर्वः समुद्दिष्टः कर्मणां वः फलोदयः ।**
**नैःश्रेयसकरं कर्म विप्रस्येदं निबोधत ॥८३॥**

भृगु भन्नु हुन्छ-मैले कर्मका फल आदिका बारेमा सबै कुरा बताएँ । अब हजुरहरू मबाट ब्राह्मणका लोक कल्याणकारी कर्मका बारेमा सुन्नु होस् ।

**वेदाभ्यासस्तपो ज्ञानमिन्द्रियाणं च संयमः ।**
**अहिंसा गुरुसेवा च निःश्रेयसकरं परम् ॥८४॥**

वेदाभ्यास, तप, ज्ञान, इन्द्रिय-दमन, अहिंसा र आचार्यको सेवा यि कर्म ब्राह्मण लगायत सबैका लागि कल्याणकारी कर्म हुन् ।

**सर्वेषामपि चैतेषां शुभानामिह कर्मणाम् ।**
**किञ्चिच्छ्रेयस्करतरं कर्मोक्तं पुरुषं प्रति ॥८५॥**

सबैका कल्याणकारी भए पनि यि छ कर्महरु ब्राह्मणका लागि विशेष कल्याणकारी कर्म हुन्छन् ।

**सर्वेषामपि चैतेषामात्मज्ञानं परं स्मृतम् ।**
**तद्ध्यग्र्यं सर्वविद्यानां प्राप्यते ह्यमृतं ततः ॥८६॥**

छ कर्ममध्ये पनि तत्व ज्ञानको महत्व अधिक छ किन कि तत्वज्ञान नै सत्यको ज्ञान र सबै ज्ञान र विद्याको आधार हो तथा मोक्षको साधन हो ।

**षण्णामेषां सर्वेषां कर्मणां प्रेत्य चेह च ।**
**श्रेयस्करतरं ज्ञेयं सर्वदा कर्म वैदिकम् ॥८७॥**

छमध्ये वेदाध्ययन सबैभन्दा महत्वपूर्ण छ किन कि यसले दुवै लोकमा निश्चित रुपले धेरै कल्याण गर्दछ ।

**वैदिके कर्मयोगे तु सर्वाण्येतान्यशेषतः ।**
**अन्तर्भवन्ति क्रमशस्तस्मिंस्तस्मिन्क्रियाविधौ ॥८८॥**

वास्तवमा वैदिक कर्मयोगमा नै ब्राह्मणका यी छ कर्मका साधना समावेश भएका हुन्छन् अर्थात एउटा कर्मलाई साधना गर्नाले सबै कर्म क्रमशः स्वतः साधना हुन थाल्दछन् ।

**सुखाभ्युदयिकं चैव नैश्रेयसिकमेव च ।**
**प्रवृत्तं च निवृत्तं च द्विविधं कर्म वैदिकम् ॥८९॥**

वैदिक कर्म पनि लोककल्याण गर्ने प्रवृत्तिमूलक र परलोकमा कल्याण गर्ने निवृत्तिमूलक गरी दुई प्रकारका हुन्छन् ।

**इह चामुत्र वा काम्यं प्रवृत्तं कर्म कीर्त्यते ।**
**निष्कामं ज्ञानपूर्वं तु निवृत्तमुपदिश्यते ॥९०॥**

लौकिक चाहनाको पूर्ति तथा स्वर्ग प्राप्तिका लागि गरिने कर्मलाई प्रवृत्तिमूलक कर्म र फलको चाहना नगरी गरिने धर्मकर्मलाई निवृत्तिमूलक कर्म भनिन्छ ।

**प्रवृत्तं कर्म संसेव्यं देवानामेति साम्यताम् ।**
**निवृत्तं सेवमानस्तु भूतान्यत्येति पञ्च वै ॥९१॥**



प्रवृत्तिमूलक कर्मले केही समयका लागि मानवले देवता समानको सुख भोग गर्न पाउँदछ भने निवृत्तिमूलक कर्मले मोक्ष प्राप्त गर्दछ ।

**सर्वभूतेषु चात्मानं सर्वभूतानि चात्मनि ।**
**समं पश्यन्नात्मयाजी स्वाराज्यमधिगच्छति ॥९२॥**

सबै प्राणीमा आफ्नै आत्मा देख्नु, आत्मामा सबै प्राणीलाई देख्नु र सबै प्राणीलाई समान देख्नुलाई आत्म यज्ञ भनिन्छ ।

**यथोक्तान्यपि कर्माणि परिहाय द्विजोत्तमः ।**
**आत्मज्ञाने शमे च स्याद्वेदाभ्यासे च यत्नवान् ॥९३॥**

ब्राह्मणले कर्तव्य कर्मगर्न नपाए पनि इन्द्रिय-दमनले संयमतापूर्वक वेदाभ्यासबाट आफ्नो चित्तलाई आराम दिन्छ भने उसको जीवन सफल नै भएको मानिन्छ ।

**एतद्धि जन्मसाफल्यं ब्राह्मणस्य विशेषतः ।**
**प्राप्यैतत्कृतकृत्यो हि द्विजो भवति नान्यथा ॥९४॥**

वास्तवमा चित्तलाई स्थिर, शान्त र कामना रहीत बनाउनु नै जीवनको उद्देश्य हो र यसको प्राप्ति नै ब्राह्मण-जीवनको सफलता हो । यो पाए सबै थोकपाइन्छ र नपाए केही पनि पाइँदैन ।

**पितृदेवमनुष्याणां वेदश्चक्षुः सनातनम् ।**
**अशक्यं चाप्रमेयं च वेदशास्त्रमिति स्थितिः ॥९५॥**

वेद नै पितृ, देवता र मनुष्यको ज्योति वा तत्वद्रष्टा साधन हो । वेदसँग साना ग्रन्थको तुलना हुन सक्दैन । यो सनातन मान्यता हो ।

**याः वेदवाह्याः स्मृतयो याश्च काश्च कुदृष्टयः ।**
**सर्वास्ताः निष्फलाः प्रेत्य तमोनिष्ठा हि ता स्मृताः ॥९६॥**



वेद विरुद्धका स्मृतिहरु प्रामाणिक नहुनाले यस्ता भ्रमपूर्ण स्मृतिहरुलाई अमान्य मान्दै अध्ययन नगर्नू । वेदविरोधी ग्रन्थको अध्ययन सर्वथा निष्फल र निरर्थक हुन्छ ।

**उत्पद्यन्ते विनश्यन्ति न्यान्यतोऽन्यानि कानिचित् ।**
**तान्यर्वाक्कालिकतया निष्फलान्यनृतानि च ॥९७॥**

वेद बाहेकका अरु ग्रन्थको अस्तित्व बेलाबेलामा आउँछ र जान्छ । यी मानवबाट रचिएका हुनाले वेदसमान कुनै पनि हालतमा हुँदैनन् । वेद त नित्य, सत्य र अन्तिम प्रमाण हो । वेद-विरुद्धका ग्रन्थ असत्य र निष्फल हुन् । वेदका बारेमा कुनै सन्देह गर्नु अनुचित हो ।

**चातुर्वर्ण्यं त्रयो लोकाश्चत्वारश्चाश्रमाः पृथक् ।**
**भूतं भवत् भविष्यं च सर्वं वेदात्प्रसिध्यति ॥९८॥**

चार वर्ण, तीन लोक, चार आश्रम र तीन कालको अस्तित्व वेदमा रहेको हुन्छ ।

**शब्दः स्पर्शश्च रूपं च रसो गन्धश्च पञ्चमः ।**
**वेदादेव प्रसूयन्ते प्रसूतिगुणकर्मतः ॥९९॥**

आँखा, कान, नाक, जिभ्रो र छाला तथा यी ज्ञानेन्द्रियको विषय क्रमशः रूप, शब्द, गन्ध, रस र स्पर्शको अनुभव पनि वेदसम्मत हुनाले प्रामाणिक हुन् ।

**बिभर्ति सर्वभूतानि वेदशास्त्रं सनातनम् ।**
**तस्मादेतत्परं मन्ये यज्जन्तोरस्य साधनम् ॥१००॥**

वेद सत्यलाई बोध गराउने र सत्य अनुसार शासन गराउने ग्रन्थ हो । यो नै धर्मको मूल भएको हुनाले सबै प्राणीलाई धारण गर्ने पालनपोषण गर्ने ग्रन्थ पनि हो । सबै प्राणीको कल्याणकारी साधन भएको हुनाले म (मनु एवं भृगु) वेदलाई स्वीकार गर्दछु ।

**सेनापत्यं च राज्यं च दण्डनेतृत्वमेव च ।**
**सर्वलोकाधिपत्यं च वेदशास्त्रविदर्हति ॥१०१॥**



शासक, प्रशासक, सेनापति, न्यायाधिश सबै अधिकारीलाई पदको वास्तविक अधिकारी हुन वेदको ज्ञान अनिवार्य हुन्छ ।

**यथा जातबलो बह्निर्दहत्यार्द्रानपि द्रुमान् ।**
**तथा दहति वेदज्ञः कर्मजं दोषमात्मनः ॥१०२॥**

जसरी दन्केको आगोले काँचो वृक्ष पनि जलाउन सक्दछ त्यसरी नै वेद-निपुणहरु आफूले गरेका ज्ञात-अज्ञात, ठूला-साना दोषहरु पनि हटाउन सक्दछन् ।

**वेदशास्त्रार्थतत्त्वज्ञो यत्र तत्राश्रमे वसन् ।**
**इहैव लोके तिष्ठन्सः ब्रह्मभूयाय कल्पते ॥१०३॥**

वेदको मर्म बुझ्ने व्यक्ति जुनसुकै आश्रममा रहने भए पनि उ यस लोकमै

मोक्ष प्राप्त गर्न सफल हुन्छ ।

**अज्ञेभ्यो ग्रन्थिनः श्रेष्ठा ग्रन्थिभ्यो धारिणो वरा ।**
**धारिभ्यो ज्ञानिनः श्रेष्ठा ज्ञानिभ्यो व्यवसायिनः ॥१०४॥**

वेद नपढ्ने, पढ्ने, अर्थ जान्ने, तत्वज्ञान जान्ने र वेद अनुसारका सदाचारी
ब्राह्मणहरु क्रमशः उत्तम हुन्छन् ।

**तपो विद्या च विप्रस्य निःश्रेयसकरं परम् ।**
**तपसा किल्विषं हन्ति विद्ययाऽमृतमश्नुते ॥१०५॥**

ब्राह्मणका लागि तप र विद्या नै कल्याणका प्रमुख साधन हुन् ।
तपले पाप पखालिन्छ र विद्याले अमृतत्व (मोक्ष) प्राप्त हुन्छ ।

**प्रत्यक्षं चानुमानं च शास्त्रं च विविधागमम् ।**

**त्रयं सुविदितं कार्यं धर्मशुद्धिमभीप्सिता ॥१०६॥**

धर्मको गोप्य रहस्य थाहा पाउन खोज्ने मानिसले प्रत्यक्ष, अनुमान र शब्दका आधारमा अनेक
थरी शास्त्रको उद्गम बिन्दु अर्थात् वेदलाई बुझ्न सक्नु पर्दछ ।

**आर्षं धर्मोपदेशं च वेदशास्त्राविरोधिना ।**
**यस्तर्केणानुसन्धत्ते सः धर्मं वेद नेतरः ॥१०७॥**

ऋषिहरुको उपदेशलाई वेद अनुकुल तर्क गर्ने तथा जुक्ति र प्रमाणले समर्थन गर्ने आस्तिकहरु नै
साँचो अर्थमा धर्मको रहस्यलाई बुझ्न सक्दछन् अरुले सक्दैनन् ।
(नकारात्मक सोच लिएर वेदलाई बुझ्न सकिन्न) ।

**नैःश्रेयसमिदं कर्म यथोदीरितमशेषतः ।**
**मानवस्यास्य शास्त्रस्य रहस्यमुपदेक्ष्यते ॥१०८॥**

भृगु भन्नुहुन्छ-मैले समग्रमा कल्याणको साधनरूपी मनुस्मृतिमा बताइएका विभिन्न विषय पूरा जानकारी गराएँ । अब म यो ग्रन्थको रहस्यका बारेमा बताउँदछु ।

**अनाम्नातेषु धर्मेषु कथं स्यादिति चेद्भवेत् ।**
**यं शिष्टाः ब्राह्मणाः ब्रूयुः धर्मः स्यादशङ्कितः ॥१०९॥**

कुनै धर्मकर्ममा कुनै शङ्का भएमा शिष्ट ब्राह्मणहरूको आचरणलाई आदर्श मानेर कुनै सङ्कोच नमानी अनुसरण गर्नू ।

**धर्मेणाधिगतो यैस्तु वेदः सपरिबृंहणः ।**
**ते शिष्टा ब्राह्मणा ज्ञेयाः श्रुतिप्रत्यक्षहेतवः ॥११०॥**

(किन कि) वेदका छ वटै अङ्ग जान्ने र सो अनुसार व्यवहार गर्ने श्रेष्ठ (शिष्ट) ब्राह्मणको वचनलाई प्रमाण मान्न कुनै शङ्का गर्नु पर्दैन ।



**दशावरा वा परिषद्यं धर्मं परिकल्पयेत् ।**
**त्र्यवरा वाऽपि वृत्तस्थाः तं धर्मं न विचालयेत् ॥१११॥**

धर्म-निर्णयमा सन्देह हुँदा दश जना श्रेष्ठ ब्राह्मणहरू वा तीन जना विद्वान अधिकारीको निर्णयलाई प्रमाण मानी त्यसको उल्लङ्घन नगर्नू ।

**त्रैविद्यो हेतुकस्तर्की नैरुक्तो धर्मपाठकः ।**
**त्रयश्चाश्रमिणः पूर्वे परिषत्स्याद्दशावरा ॥११२॥**

यस्ता दश जना श्रेष्ठ ब्राह्मणहरूमा तीन जना वेदका अधिकारी, न्यायशास्त्री, तर्कशास्त्री, धर्मशास्त्री, निरुक्तशास्त्री र तीन आश्रम (ब्रह्मचर्य, गृहस्थ र वानप्रस्थ) का प्रतिनिधि हुन् भनी जान्नू ।

**ऋग्वेदविद्यजुर्विच्च सामवेदविदेव च ।**
**त्र्यवरा परिषज्ज्ञेया धर्मसंशयनिर्णये ॥११३॥**

धर्म मा उठ्ने सन्देह मेट्न तीन वेद (ऋक, यजु, साम) का एक, एक विशेषज्ञ रहेको समिति बनाई त्यसको निर्णय मान्ने गर्नू ।

**एकोऽपि वेदविद्धर्मं यं व्यवस्येद् द्विजोत्तमः ।**
**स विज्ञेयः परो धर्मो नाज्ञानामुदितोऽयुतैः ॥११४॥**

हजारौं मूर्खहरुले भनेको भन्दा एक जना वेदज्ञ ब्राह्मणको कथन
धर्मसम्मत मानेर ग्रहण गर्ने गर्नू ।

**अव्रतानाममन्त्राणां जातिमात्रोपजीविनाम् ।**
**सहस्रशः समेतानां परिषत्वं न विद्यते ॥११५॥**



उच्च जातिका हुन् भन्दैमा व्रत नबस्ने तथा मन्त्रज्ञान नहुने हजारौं व्यक्तिले जम्मा भएर गर्ने बकवासलाई कहिल्यै कुनै पनि रुपमा धर्म मान्न हुँदैन ।

**यं वदन्ति तमोभूताः मूर्खा धर्ममतद्विदः ।**
**तत्पापं शतधा भूत्वा तद्वक्तॄमनुगच्छति ॥११६॥**

अज्ञानी र अन्धकारमा रहेको मूर्ख व्यक्तिले पाप वा अनाचारलाई धर्म मान्नु भनेको आफूले आफैंलाई अफ्न तल भास्नु हो । झूटो बोलीले बोल्नेलाई पापले सय गुना भई यातना दिन्छ ।

**एतद्वोऽभिहितं सर्वं निःश्रेयसकरं परम् ।**
**अस्मादप्रच्युतो विप्रः प्राप्नोति परमां गतिम् ॥११७॥**

भृगु भन्नुहुन्छ-हे ब्राह्मणहरू ! मैले आज हजुरहरूलाई कल्याणका उत्तम साधन बेलिविस्तार गरैं । यी साधनलाई अपनाउनाले मानिस पाप पखालिएर मोक्ष हुन्छ ।

**एवं स भगवान्देवो लोकानां हितकाम्यया ।**
**धर्मस्य परमं गुह्यं ममेदं सर्वमुक्तवान्॥११८॥**

भगवान् मनुले संसारका प्राणीको भलाइका लागि भनी यो गोप्य ज्ञान मलाई दिई
सबैलाई बाँड्न मलाई आदेश दिनु भएको छ ।

**सर्वमात्मनि संपश्येत्सच्चासच्च समाहितः ।**
**सर्वं ह्यात्मनि संपश्यन्नाधर्मे कुरुते मतिम्॥११९॥**

चित्तलाई एकाग्र गरी सत्य र असत्य दुवै आफैंमा व्याप्त भएको थाहा पाउनू ।
यो कुरा थाहा पाउने मानिस कहिल्यै पापमा लिप्त हुँदैन ।
(दानवीय र मानवीय दुवै स्वभाव मानिस भित्रै हुन्छ) ।

**आत्मैव देवताः सर्वाः सर्वमात्मन्यवस्थितम् ।**
**आत्मा हि जनयत्येषां कर्मयोगं शरीरिणाम्॥१२०॥**



आत्मामा सबै कुरा हुने हुनाले यही नै सबै देवताको प्रतिनिधि हो । आत्माले शरीरधारी जीवलाई तिनले गरेका कर्म अनुसारको शरीर बोकाउँदछ । यही नै सत्य हो र यही नै मूल तत्व हो ।

**खं सन्निवेशयेत्खेषु चेष्टनस्पर्शनेऽनिलम् ।**
**पक्तिदृष्ट्योः परं तेजः स्नेहेऽपो गां च मूर्तिषु॥१२१॥**

तत्व जान्ने व्यक्तिले आकाशलाई आकाशमा, वायु र उसका गतिविधिलाई वायुमा, तेजलाई अग्निमा, स्नेहलाई जलमा र शरीरलाई पृथ्वीमा समावेश गराउनू ।

**मनसीन्दुं दिशः श्रोत्रे क्रान्ते विष्णुं बले हरम् ।**
**वाच्यग्निं मित्रं उत्सर्गे प्रजने च प्रजापतिम्॥१२२॥**

उसले चन्द्रमालाई मनमा, दिशाहरूलाई कानमा, विष्णुलाई गतिमा, शिवलाई बलमा, अग्निलाई बाणमा, सूर्यलाई मलद्वारमा र ब्रह्मालाई जननेन्द्रियमा प्रवेश गराएको कल्पना गर्नू किन कि सबै इन्द्रिय वा अङ्ग यिनै देवताका कारण नै आआफ्ना काम गरिरहने गर्दछन् ।

**प्रशासितारं सर्वेषां अणीयांसमणोरपि ।**
**रुक्माभं स्वप्नधीगम्यं विद्यात्तं पुरुषं परम् ॥१२३॥**

यसरी इन्द्रियलाई नियन्त्रण गर्ने, सूक्ष्मभन्दा पनि परमसूक्ष्म, सुनजस्तै चम्किला र ध्यान गरेर पाउन सकिने कोही छन् भने ती परम पुरुष परमात्मा नै छन् भनी जान्नू ।

**एतमेके वदन्त्यग्निं मनुमन्ये प्रजापतिम् ।**
**इन्द्रमेके परे प्राणमपरे ब्रह्म शाश्वतम् ॥१२४॥**

यही कहिल्यै ननासिने ब्रह्मलाई नै विभिन्न विद्वानहरू अग्नि, मनु, प्रजापति, इन्द्र र प्राण आदि विभिन्न नाम दिने गर्दछन् ।



**एष सर्वाणि भूतानि पञ्चभिर्व्याप्य मूर्तिभिः ।**
**जन्मवृद्धिक्षयैर्नित्यं संसारयति चक्रवत् ॥१२५॥**

यही आत्मा नै पाँच महाभूतले बनेको जीवको शरीरमा छिरेर जन्मने, हुर्कने र नासिने खालको चक्रलाई चलाउँदछ ।

**एवं यः सर्वभूतेषु पश्यत्यात्मानमात्मना ।**
**स सर्वसमतां एत्य ब्रह्माभ्येति परं पदम् ॥१२६॥**

सबै जीवको आत्मामा परमात्माको वास हुन्छ भन्ने कुरा थाहा पाउने र सबै जीवलाई समान दृष्टिले हेर्ने मानिस ब्रह्ममा लीन हुन्छ अर्थात् मोक्ष हुन्छ ।

**इत्येतन्मानवं शास्त्रं भृगुप्रोक्तं पठन्द्विजः ।**
**भवत्याचारवान्नित्यं यथेष्टां प्राप्नुयाद्गतिम् ॥१२७॥**

मनुले बताएको र पुनः भृगु ऋषिले अन्य ऋषिहरूलाई बताएको यो मनुस्मृति राम्ररी अध्ययन गर्ने द्विज सदाचारी भएर मोक्ष पाउनका लागि योग्य हुन्छ ।

**इति मानवे धर्मशास्त्रे भृगुप्रोक्तायां संहितायां द्वादशोऽध्यायः ॥१२॥**

**मनुस्मृति, बाह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।**

**शुरुदेखिको श्लोकको संख्याः-२,५५८+१२७=२,६८५**

## ॥ समाप्तैषामनुसंहिताः ॥

**नेपालको बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३, चारघर टोलमा जन्म भई हाल काठमाडौं जिल्ला, गोकर्णेश्वर न.पा., वडा नं.७, दक्षिणढोकामा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको मनुस्मृतिको नेपाली भावानुवाद पूर्ण भयो ।**



शूभं भूयात् !

सबैको कल्याण होस् !